ग्रन्थको नाम : औपनिषद पुरुष

लेखक : श्रीशरत्कुमार भट्टराई

सर्वाधिकार : @ लेखकमा सुरक्षित

प्रकाशक : श्रीराजर्षिजनकस्मृतिकोष
विजयचोक, प्रयागमार्ग,
बत्तीसपुतली–९, काठमाडौं ।
फोन : ४११००५८

प्रकाशन मिति : वि.सं. २०७२

प्रकाशित सङ्ख्या : ३०० प्रति

मूल्य : रू. ६००।–

कम्प्युटर सेटिङ्ग : श्रीखड्गप्रसाद खनाल

मुद्रक : एलायन्स प्रिन्टर्स एण्ड
मिडिया हाउस प्रा.लि.
सरस्वतीनगर, काठमाडौं ।

ISBN : 9789937-2-9955-8

# प्रकाशकको भनाइ

यस कोषले आफ्नो स्रोत र साधनले भ्याएसम्म आध्यात्मिक विषयका अझ त्यसमा पनि विशेषरूपमा भक्ति र ज्ञानका विषयमा लेखिएका ग्रन्थहरू प्रकाशन गर्दै आएको छ। यस २०७२ सालमा पनि श्रीशरत्कुमार भट्टराईज्यूले लेख्नुभएका ग्रन्थहरूमध्ये औपनिषद पुरुष ग्रन्थ प्रकाशन गर्न पाएकोमा यस कोषलाई अपार खुशी लागेको छ।

यो ग्रन्थ जिज्ञासु मुमुक्षुहरूका लागि अत्यन्त पठनीय हुनेछ भन्ने यस कोषले ठानेको छ। किनभने लघुप्रस्थानत्रयी, बृहत्प्रस्थानत्रयी, आकरग्रन्थ, वेद, पुराण, रामायण, महाभारत, प्रकरणग्रन्थ, विवरणग्रन्थ, वार्तिक, विवरण आदि अद्वैतवेदान्तपरक धेरै ग्रन्थहरूको अध्ययन, मनन र आलोडन गरेर सूक्ष्मसारका रूपमा यस ग्रन्थको प्रणयन भएको देखिन्छ। यस परिप्रेक्ष्यमा अद्वैतवेदान्तको परम्परामा यस ग्रन्थको अत्यन्त महत्त्वपूर्ण स्थान हुनसक्ने आशा गर्न सकिन्छ। यसको अध्ययनबाट अद्वैतवेदान्तका स्पष्ट हुन नसकेका धेरै कुराहरूमा पाठकहरू अझै स्पष्ट हुनुहुनेछ भन्ने यो कोष ठान्दछ। यस्तो महत्त्वपूर्ण ग्रन्थको प्रकाशनको अभिभारा पाएकोमा यो कोष लेखकप्रति हार्दिक कृतज्ञता प्रकट गर्दछ। अतः यो ग्रन्थ सबैका लागि सङ्ग्रहणीय र पठनीयसमेत हुनेछ भन्ने कोषले विश्वास गरेको छ। धन्यवाद। ॐ ब्रह्मार्पणमस्तु।

२०७२ साल, श्रावण
पुत्रदा एकादशी

श्रीराजर्षिजनकस्मृतिकोष

# एक वेदान्तीको आन्तरयात्रा

शरत्कुमार भट्टराईज्यूको वेदान्तयात्रा छात्र जीवनको मध्यदेखि प्रारम्भ भएको देखिन्छ। उहाँ बाल्यावस्थादेखि नै सुसंस्कारित मातापिता, गुरुमाता, दाजु र दिदी बहिनीहरू समेतबाट सिर्जित कविताको श्रवण गर्दै कवितामय वातावरणमा शैशवकाल व्यतीत गर्नुभएका संवेदनशील व्यक्ति हुनुहुन्छ। विश्वको सर्वोच्च शिखर सगरमाथाको अति पावन उत्सङ्गबाट निःसृत तथा कलकल निनाद गर्दै अनवरत प्रवाहित पतितपावनी दूधकोशीको तटमा अवस्थित रावा लामीडाँडा नामक गाउँको ब्रह्ममय आध्यात्मिक वातावरण भएको ब्राह्मणबस्तीमा जन्मनु भएका र सुसंस्कृत ब्राह्मणहरूबाट संस्थापित, सञ्चालित र वैदिक सनातन धर्मनिष्ठ विद्वान् गुरुहरूको अत्यन्त कडा अनुशासनमा रहेर शैशव अवस्थामा संस्कृतविद्या अध्ययन गर्नुभएका उहाँ अन्तर्मुखी व्यक्ति हुनुहुन्छ।

अगाडिको अध्ययनका लागि रावा खार्पामा संस्थापित भाषापाठशाला र आबाल ब्रह्मचारी षडानन्दद्वारा भोजपुर जिल्लाको दिङ्लामा प्रतिष्ठापित संस्कृतविद्यालयमा अध्ययन गर्दै उच्च अध्ययनका लागि काठमाडौँ आएपछि उहाँले आफ्नो बाल्यकालदेखिकै रुचि अनुरूप साहित्य विषय लिएर अध्ययन शुरु गर्नुभयो। उच्च कक्षामा प्रवेश हुने वेलामा श्रद्धेय परम गुरुको निर्देशन अनुसार अद्वैत वेदान्तको कक्षामा प्रविष्ट भएर माथिल्लो तहसम्म गुरुमुखी भएर अध्ययन गर्ने अप्राप्य मौका अनायास गुरुकृपाद्वारा उहाँले प्राप्त गर्नुभयो।

पारलौकिक पराविद्याको अध्ययनका साथसाथै अपराविद्याको पनि यथाशक्ति अध्ययन गरेपछि उहाँ झन्डै तीन दशक जति

व्यावहारिक जगत्मा लाग्नुभयो। त्यो समय उहाँको व्यावहारिक ज्ञान आर्जन गर्ने समय रह्यो। यस अन्तरालमा उहाँले कविता, काव्य, यात्रासाहित्य, निबन्ध, समीक्षा, भजन र अन्त्यमा आफ्नै जीवनीसमेत दर्जनौँ पुस्तकहरूको लेखन र प्रकाशन गरी आफ्नो लेखकीय धर्मको पूर्ण पालन गर्दै नेपाली साहित्यको श्रीवृद्धिमा पनि सहयोग पुऱ्याउनु भएको देखिन्छ। शैशव अवस्थामा कला र साहित्य जस्ता अत्यन्त संवेदनापूर्ण दुई विधाहरूबाट शुरु भएको उहाँको जीवनयात्रा युवा अवस्थामा पुग्दा साहित्य अवशिष्ट रहेर कला चाहिँ अद्वैत वेदान्तका रूपमा विवर्तित वा परिवर्तित भएको उहाँको अनुस्मृतिबाट देखिन्छ।

व्यावहारिक वा लौकि कार्यबाट निवृत्त हुनुभन्दा पहिलेदेखि नै ज्ञानकर्म समुच्चयवादीजस्तो भएर उहाँले दुवै कार्य साथसाथै सम्पादन गर्नुभएको बुझिन्छ। व्यावहारिक धरातलमा रहँदारहँदै पनि भगवद्भक्तिको संस्कार र अद्वैत वेदान्तको अध्ययनले उहाँलाई पारमार्थिक अर्थात् अद्वैत वेदान्तको धरातलतर्फ फर्काएर ल्यायो। त्यसपछि भने उहाँले लौकिक सिर्जना तर्फ कलम चलाउन क्रमशः शिथिल पार्दै बिस्तारै पारमार्थिक सिर्जनातर्फ लेखनीलाई परावर्तन गर्नुभएको कुरा उहाँकै अनुस्मृतिबाट थाहा हुन्छ।

बाल्यकालमा आफ्नी प्रातःस्मरणीया माता र गुरुमाता समेतबाट भगवद्भक्तिको संस्कार पाउनु भएका भट्टराईज्यूको बाल्य र शैशवकाल भगवद्भक्तिमय भएको उहाँका कृतिहरूबाट थाहा पाइन्छ। यसै परिप्रेक्ष्यमा [१]ज्ञानको साधन भक्ति भएको र भक्तिका लागि कल्पित द्वैत अद्वैतभन्दा पनि सुन्दर हुन्छ भन्ने आचार्यहरूको विचार समेतबाट झन् उत्प्रेरित उहाँले सर्वप्रथम अहैतुकी भक्तिपरक श्रीमद्भागवत-

---

१ भक्तिर्ज्ञानाय कल्पते। भक्त्यर्थं कल्पितं द्वैतमद्वैतादपि सुन्दरम्।

– भक्तिशास्त्र

महापुराणका केही श्लोकहरू र बोधप्रसङ्गहरूको समछन्दमा र विषम छन्दमा समेत अनुवाद गरेर तिनैका सङ्ग्रहका रूपमा 'ज्ञान र भक्ति २०६३' तथा 'रासपञ्चाध्यायी २०६४' नामक ग्रन्थहरूको लेखन र प्रकाशन समेत गर्नुभयो।

उहाँको वेदान्त अध्ययन र लेखन बिस्तारै सघन हुँदै गयो। भक्ति र ज्ञानपरक अनूदित ग्रन्थहरूका साथसाथै मौलिक ग्रन्थहरूको प्रणयन गर्ने क्रममा प्रतिज्ञावाक्यका रूपमा २०६५ सालमा निबन्धसङ्ग्रहका रूपमा 'ब्रह्मसाक्षात्कार' नामक ग्रन्थ पाठकहरू समक्ष आएको हो भन्ने उक्त ग्रन्थको अध्ययनबाट थाहा हुन्छ।

[२]प्रतिज्ञामात्रले कुनै पनि वस्तुको सिद्धि हुँदैन, अतः सिद्धिका लागि त्यस वस्तुको लक्षण र प्रमाण पनि चाहिन्छ भन्ने न्याय अनुसार 'ब्रह्मसाक्षात्कार' नामक ग्रन्थ र प्रतिज्ञा पूरा गर्नका लागि लक्षण र प्रमाणहरूका ग्रन्थ उपनिषद्हरू र ब्रह्मसूत्र समेतको सङ्क्षिप्त अनुवाद गरेर विद्वान्हरूसमक्ष उहाँले प्रस्तुत गर्नुभयो। ब्रह्मका स्वरूप र तटस्थ लक्षणहरूसमेत दिएर जिज्ञासु पाठकहरूका निमित्त ब्रह्माभ्यासका साधनका रूपमा उहाँले आफ्नू दोस्रो मौलिक ग्रन्थ 'परम सत्य २०६९' प्रस्तुत गर्नुभयो। यसै अन्तरालमा सहायक ग्रन्थका रूपमा 'मणिरत्नमाला', 'अध्यास' र 'चतुःसूत्री', 'वेदान्तपरिभाषासार', 'श्रीकृष्णाय वयन्नुमः' जस्ता अनुपम अनूदित गद्यपद्यात्मक ग्रन्थहरू प्रकाशन भइसकेका देखिन्छन्। छोटो समयमा नै त्यतिविधि अनुपम ग्रन्थहरूको लेखन र प्रकाशन गर्न सक्नुलाई उहाँको अद्वैत वेदान्तप्रतिको समर्पण भावको प्रतीकका रूपमा लिन सकिन्छ।

प्रतिज्ञालाई पूरा गर्न ब्रह्मका लक्षण र प्रमाणहरूलाई दर्शाउने ग्रन्थका रूपमा 'परमसत्य' जिज्ञासु मुमुक्षु समक्ष प्रस्तुत गरेपछि उहाँ

---

२ लक्षणप्रमाणाभ्यां वस्तुसिद्धिर्न तु प्रतिज्ञामात्रेण। – न्यायसिद्धान्तः

चुपचाप लागेर, हात बाँधेर, सन्तुष्ट भएर बसेको देखिनुहुन्न । उहाँको अध्ययन, लेखन र ब्रह्माभ्याससमेत पूर्ववत् अक्षुण्ण र अझ तीव्रतररूपमा आफ्नू स्वास्थ्य र उमेर समेतलाई अतिक्रमण गर्दै चलिरह्यो । फलस्वरूप 'अध्यास' र 'अद्वैतसिद्धि' जस्ता अद्वैत वेदान्तका चूडान्त अनुपम दुरूह ग्रन्थहरू र 'अन्तिम उपदेश' को प्रणयन र प्रकाशनका साथै उहाँले तेस्रो मौलिक ग्रन्थ 'ब्रह्मविद्या २०७०' समेतको लेखन, प्रकाशन र लोकार्पण समेत गर्ने पुनीत कार्य गर्नुभयो ।

यसरी मोक्षका साधनभूत विभिन्न आर्ष ग्रन्थहरूको अनवरत अध्ययन, मनन र त्यसै अध्ययन समेतबाट परिष्कृत एवं परिपाक भएर निःसृत ग्रन्थहरूको प्रणयनका सन्दर्भमा 'अजातवाद'का साथै [३]अक्षरब्रह्मबोधक प्रकृष्ट चारौँ मौलिक ग्रन्थ 'पराविद्या' २०७१ प्रकाशित भयो । यो ग्रन्थ अद्वैत वेदान्तका गूढ, गहन र आजसम्म जिज्ञासु पाठकहरू अध्येताका समक्ष आउन नसकेका अत्यन्त महत्त्वपूर्ण विषयहरूमा लिखित निबन्धहरूको अनुपम सङ्ग्रह हो ।

ब्रह्मसाक्षात्कार गराउने [४]वेदान्त सूत्रको प्रतिज्ञावाक्यलाई समेत आत्मसात् गर्दै अत्यन्त दुरूह, मोक्षका साक्षात्साधन भएका महावाक्यहरूको खोजी, विश्लेषण र निक्र्यौलपूर्वक अन्तिम प्रमाणभूत श्रुतिका अकाट्य प्रमाणहरू समेत वहन गर्दै उहाँको 'पराविद्या' स्पष्ट विवेचनाका साथ विद्वान् चिन्तक समक्ष झुल्कियो । स्वाध्यायको अर्थ र महत्ता जस्ता धेरै विचारणीय विषयहरूको एकीकृत पुञ्जीभूत यस ग्रन्थलाई उहाँका अहिलेसम्मका रचनाहरूमध्येको उत्कृष्टतर भन्नु पर्दछ ।

---

३ अथ परा यया तदक्षरमधिगम्यते । – मुण्डकोपनिषद् १।१।५

४ अथातो ब्रह्मजिज्ञासा । – वेदान्तसूत्र १।१।१।१

[5]वेदान्तको नाम नै उपनिषद् प्रमाण हो । उपनिषद्को गुरुमुखी भएर अध्ययन नगरेको र आफैँ अध्ययन गरेको कुनै पनि जिज्ञासु मुमुक्षु ब्रह्मज्ञानको मार्गमा प्रवृत्त हुनसक्तैन र कुनै मुमुक्षुले ब्रह्मसाक्षात्कार गर्न पनि सक्तैन । उपनिषद्को ज्ञान नभईकन कुनै पनि मनुष्य गुरु, आचार्य, उपदेष्टा, विद्वान्, सन्न्यासी र महात्मा पनि हुनसक्तैन । कुनै [6]मनुष्यले सम्पूर्ण लौकिक, पारलौकिक, वेद, पुराण समेतका शास्त्रहरू आफैँ अध्ययन गरेर जानेको त छ तर आधिकारिक गुरुबाट अद्वैत वेदान्तको गौरवमय परम्परा अर्थात् सम्प्रदाय अनुसार अध्ययन गरेको छैन भने त्यस्तालाई अज्ञानी मूर्खजस्तै ठानेर जिज्ञासु मुमुक्षुले त्यागिदिनुपर्दछ भनेर श्रीशङ्कराचार्यले भन्नुभएको छ ।

उपर्युक्त अनुसार त्यस्तो अज्ञ मान्छे वेदान्तको उपदेष्टा, गुरु समेत बन्न सक्तैन अर्थात् योग्य हुँदैन र वेदान्तको चर्चा, शास्त्रार्थ आदि समेतमा पनि सहभागी हुन योग्य ठहर्दैन । यसै कुराको ज्वलन्त प्रतीकका रूपमा अनूदित अपरोक्षानुभूतिलाई साथ लिएर भट्टराईद्वारा प्रणीत अद्वैतवेदान्तपरक ग्रन्थहरूको शृङ्खलामा उत्कष्टतम पाँचौँ मौलिक ग्रन्थ 'औपनिषद पुरुष' २०७२ प्रकाशित भएको छ । जुन ग्रन्थरत्न तपाईंका हातमा अहिले उपस्थित पनि छ । यस ग्रन्थभित्र सङ्ग्रहित सबै निबन्धहरू श्रुतिप्रमाणमा आधारित, अनुसन्धानपूर्ण, विवेचनायुक्त छन् र पठनीय पनि छन् । ती लेखहरू मध्येमा ग्रन्थको संज्ञा नै भएर आएको 'औपनिषदं पुरुषं ब्रूहि' नामक निबन्ध प्रत्येक मुमुक्षु, जिज्ञासु र अद्वैत वेदान्तका अध्येताहरूले समेत मनोयोगपूर्वक अध्ययन गर्नु अति आवश्यक छ । किनभने उपनिषद् अध्ययन नै

---

५ वेदान्तो नाम उपनिषत्प्रमाणम् । – औपनिषद पुरुषः ।

६ तस्माद् असम्प्रदायवित् सर्वशास्त्रविद् अपि मूर्खवद् एव उपेक्षणीयः ।
– गीता १३।२ शा.भा.

नगरी मोक्षमार्गका पथिक बनेका मुमुक्षुहरू र उपदेष्टाहरूका लागि यो आँखा खोल्ने परम अञ्जन वा औषधि बन्न सक्तछ यदि जिज्ञासा र मुमुक्षा भएमा ।

ब्रह्मविद्याको लेखनका शृङ्खलामा उहाँद्वारा प्रणयन हुने ग्रन्थहरूको यस अन्तिम पुष्पमा वेदान्तसूत्रको [७]अन्तिमसूत्रको तात्पर्यलाई द्योतन गर्ने नामकरण गरेर अत्यन्त उत्कृष्टतम निबन्धहरूको सङ्ग्रहात्मक ग्रन्थ 'ऋते ज्ञानान्नमुक्तिः' जिज्ञासु पाठकहरूसमक्ष प्रकृष्ट गहन अन्धकारलाई चिर्दै प्रकाशका साथ चाँडै प्रकाशित हुने तथ्य मैले थाहा पाएको छु । ग्रन्थको पाण्डुलिपि तयार भएर हाल उत्टङ्कण पनि भइरहेको छ भन्ने पनि मलाई थाहा हुन आएको छ । यो श्रुति प्रमाणमा आधारित अत्यन्त उत्कृष्ट र अनुपम निबन्धहरूको सङ्ग्रह हुनेछ । भट्टराईज्यूका अद्वैतवेदान्त सम्बन्धी ग्रन्थहरूको शृङ्खलामा उक्त प्रकाशोन्मुख ग्रन्थ सर्वोत्कृष्टतम र विद्वानूहरूका लागि सङ्ग्रणीय समेत हुनेछ भन्ने म विश्वास गर्दछु । उक्त ग्रन्थ यथाशीघ्र मुमुक्षु पाठकहरूसमक्ष आउन सकोस् भन्ने शुभेच्छा पनि प्रकट गर्दछु ।

अद्वैत वेदान्तको अध्येताको नाताले भट्टराईज्यूले उपर्युल्लिखित अद्वैत वेदान्तपरक ग्रन्थहरूका अतिरिक्त अरू जे जति लेख र निबन्धहरू लेख्नु भएको छ, मैले अध्ययन गरे जति सबैलाई श्रुति, स्मृति र आप्तवचन समेत खोजेर ज्यादै मिहिनेत गरेर ग्रन्थ, लेखक, स्थान र मिति समेत खोलेर अत्यत प्रामाणिक बनाउनु भएको छ । यस्तो पुनीत काम गर्ने उहाँलाई वार्धक्य र शारीरिक अस्वस्थता समेत बाधक बन्न नसकेर साधक बनेका मैले अनुभूति गरेको छु । घरको

---

७ अनावृत्तिः शब्दादनावृत्तिः शब्दात् । – ब्रह्मसूत्र ४।४।७।२२

(क) तेषां न पुनरावृत्तिः । – बृहदारण्यकोपनिषद् ६।२।१५

(ख) न च पुनरावर्तते । – छान्दोग्योपनिषद् ८।१५।१

वातावरण अनुकूल वा प्रतिकूल जे जस्तो भए पनि त्यसलाई पर पन्साएर र आफ्नू जराजीर्ण तथा रोगग्रस्त शरीरलाई साधन बनाएर दुरूह तथा आप्राप्य ग्रन्थहरू खोजी खोजी अध्ययन, मनन र विवेचन समेत गरेर जिज्ञासु, मुमुक्षु र ब्रह्माभ्यासीहरूका लागि सरल र स्पष्ट नेपाली भाषामा लेखेर सम्प्रेषण गर्न सक्नु भट्टराईजीको विशेषता हो । भविष्यमा पनि उहाँका उर्वर र सात्त्विक बुद्धिवृत्तिबाट अद्वैत वेदान्तसम्बन्धी यस्तै अनुपम ग्रन्थहरू सिर्जित भइरहने छन् भन्ने कुरामा म अत्यन्त आशावादी छु ।

अन्त्यमा म आफ्नै बारेमा केही उल्लेख गर्नु सान्दर्भिक ठान्दछु । वस्तुतः म पनि शरत्कुमार भट्टराईज्यू जस्तै अद्वैत वेदान्तको विद्यार्थी हुँ । शुरुमा हामी एक अर्कासँग परिचित थियौँ । विद्यार्थी अवस्थामा म आर्थिक, पारिवारिक र बौद्धिक दृष्टिले पनि कमजोर थिएँ । उहाँ छात्र नेताको रूपमा सङ्घर्ष गर्दै थुनामा पर्दै पनि संस्कृत र अङ्ग्रेजी दुवै थरी विद्या साथसाथै अध्ययन गरेर दुवैतर्फ स्नातक हुनुभयो । त्यसपछि उहाँले आचार्यको साथसाथै एम्.ए.को पढाइ पनि गर्नुभयो । किन्तु कमजोर भएकाले मैले भने त्यसरी पढ्न सकिनँ । आचार्य पूरै नगरी म भारततर्फ प्रवासित भएँ ।

प्रवासमा रहेर पनि मैले अद्वैत वेदान्तको अध्ययन, अभ्यास र सत्सङ्ग समेत गर्दै रहेँ । विद्वान्‌हरूसँगको सुसङ्गत र आफ्नै स्वाध्याय समेतले गर्दा ममा बिस्तारै विरक्ति जाग्दै गयो । परिणामस्वरूप सर्वप्रथम न्वारानमा पुरोहितले राखिदिएको मेरो मायिक नाम त्यागेर त्यसैको प्रतीकका रूपमा मैले आफूलाई ‘त्यागी’ नाम आफैँले दिएँ । मसँग मेरा आफ्ना भन्ने केवल मिथ्या मायिक नाम र स्वरूप थिए । प्रारब्धकर्मको अवधि समाप्त नभएसम्म रूपात्मक देह त्याग्न सम्भव नभएकाले मैले त्याग गर्न सक्ने मेरो अधीनमा रहेको मेरो नाम मात्रै थियो । अतः नामलाई त्यागेर म ‘त्यागी’ भएँ । प्रवासमा रहँदा अद्वैत वेदान्तका प्रवचन, गोष्ठी, शास्त्रार्थ र ब्रह्माभ्यास समेतमा म सहभागी

हुने गर्दथेँ । मलाई सत्सङ्गीहरूले बाबा भनेर सम्बोधन गर्न थाले र अन्ततो गत्वा अनजानमा नै म 'त्यागी बाबा' भएँ । अहिले म यसै नामबाट परिचित छु ।

मेरो घर नेपालमा नै भएको र नेपाली भएकाले म बारम्बार काठमाडौँ आइरहन्थेँ र हाल पनि त्यसै गर्दछु । काठमाडौँ बस्ता यहाँ आयोजना गरिने भागवतपुराण, वेदान्तप्रवचन, भजनकीर्तन, सत्सङ्ग आदिमा म जाने गर्दछु । मेरो यो पुरानो बानी हो । यसका अतिरिक्त नेपालमा प्रकाशित हुने वेदान्तसम्बन्धी ग्रन्थहरू पनि म खोजी खोजी पढ्ने गर्दछु । यसै सन्दर्भमा सर्वप्रथम मैले साझा प्रकाशनको पुस्तक पसलमा शरत्कुमार भट्टराईज्यूद्वारा प्रणीत 'ब्रह्मसाक्षात्कार' नामक ग्रन्थ पाएँ र किने । मलाई त्यस ग्रन्थले भट्टराईज्यूको प्रत्यभिज्ञा गरायो । मलाई विद्यार्थी अवस्थाका जल्दाबल्दा शरद् भट्टराईको सम्झना भयो ।

समयको लामो अन्तरालमा मैले उहाँलाई बिर्सिसकेको थिएँ र म पनि उहाँका लागि पूर्ण अविज्ञात थिएँ । किनभने आफ्नू नाम छोडेर म अनाम भइसकेको थिएँ । हामी दुवै जनाको कार्यक्षेत्र र समाज पनि फरक थियो । ब्रह्मसाक्षात्कारको अध्ययनपछि मैले उहाँलाई राम्रै वेदान्ती र साधक भनेर पहिलो पटक चिनेँ । उहाँका प्रकाशित ग्रन्थहरू म खोजी खोजी पढ्न थालेँ । उहाँले आयोजना गर्ने सभाहरूमा र विभिन्न ग्रन्थ र जनक पत्रिकाको लोकार्पण समारोहमा समेत म खोजी खोजी जान थालेँ । म त्यस्ता सभामा अपरिचित भएर नै जाने गर्दछु । म उहाँ जस्तै वृद्ध र विरूप भइसकेको छु । मलाई उहाँले चिन्ने कुरै भएन । मेरो रूप र नाम दुवै बदलिएका छन् । म आफ्नू परिचय कसैलाई दिन्न । किनभने मेरो परिचय नै छैन । म सबैका लागि अविज्ञात मान्छे हुँ ।

भट्टराईज्यूसँग उहाँकै कृतिले मलाई परिचित गराए । तर म भने उहाँका लागि पूर्ण अपरिचित छु । वर्षैपिच्छे अनवरतरूपमा प्रकाशित

भइरहने उहाँका ग्रन्थहरूले मलाई प्रभावित बनाउँदै लगेका छन् । त्यस बेलाका वेदान्तका विद्यार्थीहरूमध्ये उहाँले मात्रै अद्वैत वेदान्त पढाइको सार्थक बनाउनु भयो, अरू हामीहरू हरायौं ।

भट्टराईज्यू साहित्य, वेदान्त, सार्वजनिक प्रशासन, कानून आदि धेरै विषयहरूमा ज्ञान राख्नु हुन्छ । केही समयसम्म उहाँ अध्ययनको प्रवाहबाट अन्तर्धान भए जस्तो हुनुभयो । किन्तु जहाँ र जुन दायित्व वहन गरेर रहनुभएको भए तापनि उहाँ त्यस अवधिमा पनि लेख्ने र पढ्ने गरिरहनुहुन्थ्यो भन्ने प्रमाण त्यस अवधिमा प्रकाशित भएका उहाँका कृतिहरूबाट ज्ञात हुन्छ । उहाँका दर्जनौं लौकिक ग्रन्थहरूको प्रकाशनपछि भक्ति र वेदान्तका विषयमा गहन चिन्तन, अनुसन्धान र विश्लेषणयुक्त ग्रन्थहरू लगातार प्रकाशित हुन थाले । उहाँको क्षमता र अध्ययनको इयत्ता थाहा पाउन नसक्ने पूर्वाग्रहपीडित बहिर्मुखी अज्ञानीहरूले एक जना प्रशासकले यस प्रकारका गहन ग्रन्थहरू लेख्न सम्भव नभएकाले अरू विद्वान्‌हरूबाट लेखाएर आफ्ना नाममा प्रकाशन गरेको हो भन्ने धृष्टता गर्दै अनर्गल प्रचार गर्ने जस्तो निकृष्ट काम गरेको कुरा भट्टराईज्यूका सहयात्रीबाट मलाई थाहा भयो । उनको भनाइ अनुसार उहाँले अरूबाट लेखाएर आफ्ना नाममा ग्रन्थ प्रकाशन गराउनुको प्रतिकूल बरु उहाँले लेखिदिएका कविता र लेखहरूबाट धेरै जना उहाँका मित्रहरू कवि र लेखक भएका छन् । कवितामा प्रथम, द्वितीय समेत भएर राष्ट्रप्रमुखका हातबाट पुरस्कृत समेत भएका छन् अरे । अतः क्षमता र ज्ञान कति छ भन्ने तथ्य उहाँको दुब्लो र वृद्ध शरीर हेरेर जान्न सकिँदैन । बरु जुन व्यक्तिले उहाँका अद्वैतवेदान्तसम्बन्धी ग्रन्थहरूलाई बुझेर अध्ययन गर्दछ र उहाँलाई भेटेर जिज्ञासा व्यक्त गर्दछ त्यस व्यक्तिले चिन्दछ । अन्यथा बाहिरबाट दूषित पूर्वाग्रहयुक्त स्थूल दृष्टिले हेरेर उहाँको आन्तरिक इयत्ता थाहा पाउन सकिँदैन । बरु भित्रै पसेर हेर्न सक्ने क्षमता जसमा छ त्यसैले मात्रै थाहा पाउन सक्तछ ।

भट्टराईज्यूको शास्त्रीय ज्ञान, विचार, चिन्तन, लेखनको प्रवाह, सरलता, उदारता, सहजता आदि समेत गुणहरूबाट म उहाँबाट अत्यन्त प्रभावित भएको छु । उमेर र शारीरिक अस्वस्थता समेतमाथि विजय प्राप्त गरेर दुरूह अद्वैत वेदान्त जस्तो विषयको अनवरत अध्ययन गर्नु, ब्रह्माभ्यास गर्नु, आफूले पढेर ज्ञान गरेका अद्वैत वेदान्तका अनुपम तथा गुह्य विषयहरूलाई आफ्ना ग्रन्थका माध्यमद्वारा जिज्ञासु पाठकहरूसम्म पुऱ्याइरहनु आदि पवित्र उहाँका कामबाट म अत्यन्त प्रभावित र हर्षित भएकाले मेरो भावना उहाँसम्म पुऱ्याउन म अत्यन्त इच्छुक भएँ । किन्तु अविज्ञात रहने आफ्नो व्रत भङ्ग गर्न पनि म चाहन्नथेँ । यसै कारण मैले उहाँसँग सोझै सम्पर्क राख्न सकिन र केही समयसम्म मैले आफ्नो भावना आफ्नो मनमा नै थिचेर राखिछोडेँ ।

मेरो उपर्युक्त भावनालाई अभिव्यक्त गर्ने माध्यमका रूपमा श्रीराजर्षिजनकको गत वर्षको बाह्रौँ अङ्कमा प्रकाशनार्थ मैले सम्पादकलाई पत्र र महावाक्य एक चिन्तन लेख पनि इमेलद्वारा पठाएको थिएँ । जुन जस्ताका तस्तै प्रकाशित भए । नेपालमा पहिलो पटक म अनाम अपरिचित व्यक्तिको वेदान्तपरक लेख प्रकाशित भएर विद्वान् र जिज्ञासु समक्ष पुगेकोमा मलाई खुशी लाग्यो । मेरा बारेमा विद्वान्हरूका बीचमा खोजीनिति र सकारात्मक तथा नकारात्मक टिकाटिप्पणीहरू समेत भएछन् । हुनु स्वाभाविकै थियो र भयो पनि, जे भयो राम्रै भयो ।

त्यतिले मात्रै सन्तुष्टि मलाई भएन र केही महिना अघि सस्वरूप नभएर सार्वजनिक टेलिफोनद्वारा भट्टराईज्यूसँग सम्बन्ध राख्ने प्रयास गरेँ र राखेँ पनि । छात्रावस्थाको मेरो परिचय उहाँलाई दिएँ । मेरो नाम र काम गोप्य राख्ने शर्तमा मैले आफ्नो सम्पूर्ण विवरण उहाँलाई बताएँ । लामो कुरा भयो । अत्यन्त खुशी हुँदै प्रकाशोन्मुख उहाँको पाँचौँ ग्रन्थमा मन्तव्य लेख्न उहाँले मलाई भन्नुभयो र त्यसका निमित्त

मैले तोकेको ठेगानामा औपनिषद पुरुषको पाण्डुलिपि पठाइदिनु भयो । लेखक र विद्वान् पनि केही नभएर पनि म अकिञ्चन अज्ञानीमाथि उहाँले विश्वास गरेर गुरुतर काम सुम्पनु भएकोमा मेरो योग्यता र क्षमता अनुसार टुटे फुटेका शब्दावलीमा मन्तव्य लेखेर मैले औपनिषद पुरुषमा अर्पण गरेको छु। विश्वास गरेर काम लगाउनु भएकोमा धन्यवाद सहित शुभकामना पनि व्यक्त गर्दछु।

मिति : २०७२।४।२२

उही अविज्ञात सखा
त्यागी बाबा
हाल काठमाडौँ

# भूमिका

प्रत्येक प्राणीको वर्तमान समय अत्यन्त क्षणिक हुन्छ। त्यो आँखाको एक उन्मेषमा नै समाप्त भएर जान्छ। त्यो क्षण फेरि फर्केर आउँदैन। समयको अगाडिपट्टिको सिङ समात्न सकिन्छ। तर त्यसको पछाडिपट्टिको पुच्छर समात्न सकिँदैन। यसको तात्पर्य हो, समयलाई तुरुन्तै सदुपयोग गरेर कल्याण हुने स्थायी काम गरेमा समयको सिङ समातेको अर्थात् समयलाई चिनेर सही काम गरेको ठहर्छ। तर समय गइसकेपछि पश्चात्ताप गरेर र थकथकाएर फेरि त्यस समयलाई छोप्न सकिँदैन। किनभने समयको गाई, भैँसीहरूको जस्तो अगाडिपट्टि शिरमा सिङ हुन्छ, किन्तु पछाडिपट्टि झुन्डिएको हातले सजिलै समात्न सकिने पुच्छर भने हुँदैन। त्यसै कारण समयको सिङ हुन्छ तर पुच्छर हुँदैन भनिएको हो।

समयलाई चिन्न नसक्ता सबै साधन, सुविधा, अनुकूल वातावरण, अनुकूल परिस्थिति, अत्यन्त महत्त्वपूर्ण विषयको अध्ययन, उद्भट विद्वान्को शिक्षादीक्षा र मार्गनिर्देशन पाएर पनि मैले आफ्नू अमूल्य समयको सदुपयोग गर्न सकिनँ। तथापि तीन दशक जति समय बितेर गए तापनि बाल्यकालको भक्ति र छात्र अवस्थामा गुरुमुखी भएर गरिएको अद्वैत वेदान्तको अध्ययनबाट उद्भूत संस्कारले मलाई फेरि पुरानै मानसिक धरातलमा फर्काएर ल्यायो र फलस्वरूप त्यसै संस्कारले दुई दशकभन्दा पनि बढी समयदेखि अद्वैत वेदान्तको अध्ययन, मनन र लेखनमा समर्पित भावले तल्लीन रहन प्रेरणा दियो।

त्यसै कारणले नै जस्तोसुकै परिस्थिति आइपरे पनि हाल मेरो अध्ययन र लेखन समेत रोकिएको छैन। पहिलेदेखि नै अध्ययन र लेखनको क्रममा कतिपय सन्दर्भमा सन्देह, संशय र शङ्का उत्पन्न हुँदा सम्बन्धित विषयका आधिकारिक विद्वान्हरूसँग सोधेर आफ्नू शङ्का, सन्देह र संशयका गाँठाहरू फुकाउने मेरो बानी थियो। शुरु शुरुमा मेरो अनभिज्ञताको अवस्थामा विना ननु न च उहाँहरूको उत्तर म स्वीकार गर्दथेँ। किन्तु केही बुझ्न थालेपछि उहाँहरूको उत्तरबाट मेरो सन्देहको गाँठो फुक्नुको साटो झन् कसिँदै जान थालेको र यसबाट विसंवादिभ्रमजन्य दिग्भ्रमको स्थिति उत्पन्न भएजस्तो अनुभूति अन्तःकरणमा स्फुरण भएपछि म त्यताबाट विरमत हुन पुगेँ।

अध्येता वा लेखक जुन अवस्थामा पुगेर शास्त्रहरूको अध्ययन र लेखन गर्दछ त्यसै अवस्थमा पुगेर उसका जिज्ञासाहरू शान्त गरिदिने सबै दृष्टिले समान अवस्थामा पुगेको आफूभन्दा अर्को व्यक्ति संसारमा प्राप्त गर्न मुस्किलै हुँदो रहेछ। कुनै विषयमा सन्देह उत्पन्न भयो भने त्यसको समाधान गर्ने समान अनुभूति र संवेदना भएको मानिस नपाएमा गुणहरूबाट सम्मोहित र विक्षिप्त नभएको शुद्ध सत्त्वगुणापन्न अन्तःकरण अर्थात् सात्त्विकी बुद्धिका विद्यात्मिका वृत्तिको सहायता लिएर आफ्नू सन्देहको अपसरण वा परिमार्जन गर्न सकिन्छ। अरू प्रमाणहरूको खोजी गरिरहनु पर्दैन भन्ने श्रुतिको वचन छ।

[१]कुनै संवेदनशील र आफूले स्पष्ट नबुझेको विषयमा सन्देह उत्पन्न भएमा शास्त्र र आप्तपुरुषको सहयोग लिएर सन्देह हटाउनु

१ सतां हि सन्देह पदेषु वस्तुषु प्रमाणमन्तःकरणप्रवृत्तयः।
– अभिज्ञानशाकुन्तलम्

पर्दछ। यदि त्यसबाट चित्त बुझ्नेन भने सात्त्विक अन्तःकरण भएको समझदार मुमुक्षुले आफ्नै विशुद्ध सात्त्विक अन्तःकरणका वृत्तिलाई गुरु मानेर त्यसै आधारमा निश्चय गर्नुपर्दछ। अकाट्य प्रमाण त्यही हुन्छ भन्ने महाकवि कालिदासको विचार पाइन्छ। अतः योभन्दा अन्तिम प्रमाणहरू केही पनि हुनसक्तैनन्। यही बुझेर लेखकले लेख्नुपर्दछ।

अद्वैत वेदान्तमा अन्तःकरण वा बुद्धिलाई जड मानिन्छ। चेतनतत्त्वको संसर्गाध्यासका कारणले नै जड बुद्धिलाई पनि चेतनत्वेन व्यवहार गरिन्छ। त्यस जडवृत्तिलाई कसरी प्रमाण मान्न सकिन्छ भन्ने प्रश्न पैदा हुनसक्तछ। यस प्रश्नको समाधान अद्वैतवेदान्तको प्रक्रिया अनुसार गर्नुपर्दछ। किनभने प्रत्येक चेतन प्राणीको अन्तःकरण अर्थात् बुद्धिमा बसेको साक्षीले प्राणीले गरेको र गर्ने सबै मानसिक क्रियाहरूको साक्षी भएर जाग्रत्, स्वप्न र सुषुप्ति तीनै अवस्थामा हेरिरहेको हुन्छ। त्यतिमात्रै होइन प्रत्येक प्राणीका चेतन, अर्धचेतन, अवचेतन र अचेतन मनमा रहेका सबै कुरालाई जान्ने भएकाले ईश्वरलाई अन्तःकरणको साक्षी भनिएको हो। अर्थात् [२]प्राणीले जानेर, नजानेर जुनसुकै अवस्थामा गरेको र उसले बिर्सिएको भए पनि साक्षीले सबै जान्दछ। किनभने जाग्रत् अवस्थामा सत्त्वात्मक अन्तःकरण अर्थात् बुद्धिद्वारा गरिएका क्रियाहरू, स्वप्नको अवस्थामा तैजस अन्तःकरणबाट सम्पादित प्रातिभासिक कार्यहरू, सम्पूर्ण मायिक इन्द्रियहरू र अन्तःकरणात्मक बुद्धिसमेत तामस अज्ञानका गहन अन्धकारभित्र विलीन भएर अचेतन अवस्थाका प्राणीका

२ वेद्यत्वेऽवेद्यत्वे सति सर्वं साक्षीवेद्यम्। – वेदान्तसन्दर्भ

मानसिक स्थिति पनि साक्षीलाई थाहा हुन्छ ।

आफूलाई सन्देह लागेका कुनै वस्तुको मायिक प्रमाणहरूका सहायताले र तिनै प्रमाणहरूका आधारमा निश्चय गर्ने वा निर्णय दिने विद्वानूहरूका भनाइबाट पनि जिज्ञासु मुमुक्षुको सन्देह निवृत्त हुन नसकेमा आफ्नै अन्तःकरणका वृत्तिहरूलाई प्रमाणका रूपमा ग्रहण गरेर सन्देहको समाधान गर्नुपर्दछ भन्ने महाकवि कालिदासका उपर्युक्त उक्तिमा अत्यन्त गहन वेदान्तको सिद्धान्त अन्तर्निहित भएको पाइन्छ ।

वस्तुतः अन्तःकरण अचेतन र जड भएकाले त्यसका वृत्तिहरू पनि अचेतन र जड नै हुन्छन् । अतः तिनबाट सन्देहको समाधान हुने सम्भावना छैन । वृत्तिलाई नै प्रमाण भन्नुको तात्पर्य बुद्धि उपलक्षित चेतन साक्षीलाई भनिएको हो । [३]सगुण निराकार ईश्वर प्रत्येक प्राणीका हृदय अर्थात् अन्तःकरणात्मक बुद्धिका वृत्तिमा बिम्बरूपले बसेर आफ्नै प्रतिबिम्बभूत जीवात्माको सञ्चालन गर्दछ भनेर भगवान् श्रीकृष्णले गीतामा भन्नुभएको छ ।

दर्शनको गहन विषयमा चिन्तन, मनन र लेखन गर्ने सन्दर्भमा सन्देह उत्पन्न भएमा विद्वान् गुरु, प्रामाणिक शास्त्र वा विद्वान् मित्रको सहयोगबाट मनमा पैदा भएको सन्देहको समाधान गर्न सकिन्छ । किन्तु चिन्तकको मनोभाव बुझेर सन्देहको निवृत्ति गरिदिने गुरु पाउन अत्यन्त मुस्किल छ । अथाह शास्त्रको सागरभित्र अवगाहन गरेर सन्देहको परिमार्जन गरिदिने चिन्तकले खोजेजस्तै प्रमाण पाउन ता झन् मुस्किल छ । समान स्तरको मित्रसँग बसेर विचार आदानप्रदान

---

३ ईश्वरः सर्वभूतानां हृद्देशेऽर्जुन तिष्ठति ।
भ्रामयन्सर्वभूतानि यन्त्रारूढानि मायया ॥ – गीता १८।६१

गरेर पनि चिन्तक वा लेखकका अन्तःकरणमा पैदा भएको व्यक्तै गर्न नसकिने अवर्णनीय अत्यन्त गूढ तथा मायातीत तत्त्वका बारेमा उठेको जिज्ञासा वा सन्देहको सही समाधान चित्त बुझ्दो गरी हुन असम्भव देखिन्छ। अतः यस अवस्थामा चिन्तक र लेखकले पनि बाह्य गुरु, शास्त्र र मित्र समेतको सहयोगबाट पनि आफ्नू सन्देहको समाधान नहुने देखेपछि आफ्नै अन्तःकरणका वृत्तिका शरणमा जानुभन्दा अर्को उपाय देखिँदैन।

अध्ययन, चिन्तन, शास्त्र र लेखको माध्यम वैखरी वाणीमा आधारित शास्त्रलाई मान्नै पर्दछ। त्यस्ता [४]शास्त्रहरू नित्य अर्थात् अपौरुषेय वेद, उपनिषद् आदि हुन् अथवा कृतक अर्थात् पौरुषेय स्मृति, पुराण, धर्मशास्त्र आदि नै हुन्, जसबाट मनुष्यको परलोक सप्रन सकोस्, त्यस्ता शास्त्रहरूलाई अध्येतासम्म सम्प्रेषण गर्न रचनाकारले अवलम्बन गर्ने भाषिक माध्यम लौकिकी, परकीया र [५]समाधिभाषा समेत गरेर तीनथरी भाषा हुने विधान शास्त्रहरूले नै गरेका छन्।

सामान्य संसारी मायिक विषयमा अज्ञानी संसारी मनुष्यले बुझ्ने गरी विद्वान्ले लेख लेख्नु वा बोल्नु पर्‍यो भने उनीहरूले बुझ्ने गरी उपर्युक्त भाषाहरू मध्ये लौकिकी र परकीय भाषामा लेख्नुपर्दछ र बोल्नु पर्छ। अन्यथा उनीहरूले बुझ्न सक्तैनन्। किन्तु मायातीत

---

४ प्रवृत्तिर्वा निवृत्तिर्वा नित्येन कृतकेन वा।
पुंसां येनोपदिश्येत तच्छास्त्रमभिधीयते॥ – श्लोकवार्तिक पृ.४०६

५ समाधि भाषा प्रथमा द्वितीया लौकिकी तथा।
तृतीया परकीयेति शास्त्रभाषा त्रिधा स्मृता॥ – भारद्वाजसंहिता।

अलौकिक विषयमा लेख्नु पऱ्यो भने विद्वान् लेखकले समाधि भाषाको शरण लिनु पर्दछ ।

कुनै विषयमा चिन्तन, मनन र लेखन गर्दा कुनै सन्देह उत्पन्न भएमा एवं कुनै प्रमाण नपाइएमा सर्वप्रथम बाहिरतिर छरिएका राजसिक वृत्तिहरूलाई अन्तर्मुखी बनाउनु पर्छ । मूढावस्थामा रहेका तामसिक वृत्तिहरूलाई राजसिक वृत्तिले दबाउनु पर्दछ । त्यसपछि बहिर्मुखी राजसिक वृत्तिहरूलाई सात्त्विक वृत्तिहरूद्वारा दबाएर चिन्तक वा लेखकले आफू पूर्ण अन्तर्मुख भएर आफ्नै बुद्धि वृत्तिको प्रकाशक तथा साक्षीका शरणमा जानु पर्दछ । ईश्वर अर्थात् साक्षी ब्रह्मको बिम्ब हो र त्यसै ईश्वर वा साक्षीको प्रतिबिम्ब जीव भएकाले बिम्ब स्थानीय साक्षीको अन्तिम शरणमा जीवले जानु बाहेक अर्को उपाय देखिँदैन । साक्षी नै [६]अधिष्ठान हो र अरू भ्रमांश हुन् । रजोगुण र तमोगुणका वृत्तिहरू भ्रमांशवाहक हुन् । अतः चिन्तक लेखकले अधोगामी वृत्तिहरूलाई निरोध गरेर सत्त्व गुणमा बसेर ध्यानस्थ भएर साक्षी आत्मालाई गुरु बनाएर आफ्ना सन्देहहरूको निवारण गर्दै त्यसै अवस्थामा स्थिर चित्त गरेर लेखन गर्नु पर्दछ । यस अवस्थामा बसेर व्यक्त गरिने अर्थात् लेखिने भाषालाई नै समाधि भाषा भनिएको हो ।

---

६ अधिष्ठानांशसंयुक्तो भ्रमांशमवलम्बते ।
यदा तदाह संसारीत्येवं जीवोऽभिमन्यते ॥
भ्रमांशस्थतिरस्कारादधिष्ठानप्रधानता ।
यदा तदा चिदात्माहमसङ्गोऽस्मीति बुध्यते ॥
– पञ्चदशी तृप्तिदीपप्रकरण ७।८

अत्यन्त सन्देहग्रस्त भएर चिन्तित भगवान् वेदव्यासलाई नारदमुनिले उपदेश गरेपछि उहाँले सर्वप्रथम आफ्नो बुद्धिको वृत्तिलाई निरोध गरेर पूर्ण योगावस्थामा बसेर ईश्वरको ध्यान गर्नुभयो । अर्थात् अर्को शब्दमा [७]भक्तियोगद्वारा आफ्नो मनलाई पूर्णतया एकाग्र र निर्मल बनाएर मायिक बुद्धिका वृत्तिहरूमा अर्थात् अन्तःकरणमा विराजमान ईश्वर किं वा साक्षीलाई साक्षात्कार गर्नुभयो । सम्पूर्ण सन्देह हटेपछि त्यसै योगवस्था वा समाधिको अवस्थामा रहेर उहाँले आफ्नै रचना ब्रह्मसूत्रको भाष्यभूत मोक्षको साधन भएको उत्कृष्ट अहैतुकी भक्ति र अद्वैत औपनिषद ज्ञानले आप्लावित परम उत्कृष्ट श्रीमद्भागवत महापुराणको प्रणयन गर्नुभयो । चिन्तक लेखकले पनि त्यस्तै अन्तर्मुखी भएर अर्थात् समाहित चित्त भएर आफ्नो अनुपम रचना गर्ने प्रयास गर्नुपर्दछ । त्यसो गर्न सकेमा लौकिक अर्थात् साहित्यिक रचना वा पारलौकिक भक्ति र वेदान्त जुनसुकै रचना भए पनि त्यस्तो रचना सारगर्भित, उत्कृष्ट र अनुपम हुन जान्छ ।

महाभारतयुद्धको पूर्वक्षणमा योगेश्वर भगवान् श्रीकृष्णले योगको परम अवस्थामा पुगेर अद्वैत सिद्धान्तले ओतप्रोत गीताज्ञानको उपदेश अर्जुनलाई गर्नुभएको थियो । महाभारतयुद्ध समाप्त भएर राज्यारोहण गरिसकेपछि फेरि सोही ज्ञानको उपदेश गर्न भगवान् श्रीकृष्णलाई अर्जुनले अनुरोध गर्दा केही अन्यमनस्कभावमा [८]उहाँले त्यही

---

७ भक्तियोगेन मनसि सम्यक् प्रणिहितेऽमले ।
अपश्यत्पुरुषं पूर्वं मायाञ्च तदपाश्रयाम् ॥ – भागवत १।७।४

८ न च साद्य पुनर्भूयः स्मृतिर्मे सम्भविष्यति ।
न च शक्यं पुनर्वक्तुमशेषेण धनञ्जय ॥
– महाभारत आश्वमेधिक पर्व १६।१०,११,१३

योगावस्थामा पुगेर म तिमीलाई फेरि गीताको उपदेश गर्न सक्तिन भनेको तथ्य अनुगीताबाट थाहा हुन्छ ।

वस्तुतः उक्त सिद्धान्त बिम्बभूत सगुण निराकार ईश्वर वा साक्षीदेखि लिएर बिम्बभूत सगुण साकार श्रीकृष्णसम्ममा पनि लागु हुन्छ । त्यतिमात्रै होइन सिर्जना वा रचनाको गुरुतर कार्यमा लागेका प्रतिबिम्बभूत ब्रह्माजीदेखि क्षुद्र जीवमा पनि लागु हुन्छ भन्ने मेरो व्यक्तिगत धारणा छ । उदाहरणका लागि यसै औपनिषद पुरुष ग्रन्थमा समाविष्ट प्रथम निबन्ध 'अकर्मकम्'देखि लिएर अन्तिम त्रिपन्नौँ निबन्ध 'ज्ञानं विज्ञानसहितम्' मध्येका केही निबन्धहरू फेरि लेख्नुपर्दा अहिले आएर म लेख्न सक्तिनँ । कुन अवस्थामा रहेर त्यस बेला मैले रचना गरेँ त्यो पनि व्यक्त गर्न म सक्तिनँ । समान अनुभूति भएका र सर्जकको भावना बुझ्न सक्ने संवेदनशील रसिक अध्येताले मात्रै बुझ्ने यो संवेदनायुक्त विषय हो ।

[१]वेद र वेदको शिरोभाग उपनिषद्को ज्ञान नभईकन मुमुक्षुले त्यस औपनिषद पुरुष ब्रह्मको ज्ञान गर्न सक्तैन भनेर श्रुतिले भनेको छ । उपनिषद्बाट मात्रै जान्न सकिने आत्मतत्त्व अर्थात् पुरुष भएकाले ब्रह्मलाई औपनिषद पुरुष भनिएको हो । यसै परमसत्यका प्रतीकका रूपमा यस ग्रन्थको नाम 'औपनिषद पुरुष' राखिएको हो ।

यस सन्दर्भमा यसको सङ्क्षिप्त चर्चा गर्नु सान्दर्भिक हुने ठान्दछु । एकपटक राजा जनकका दरबारमा ब्रह्मज्ञानी गुरु याज्ञवल्क्यका समुपस्थितिमा विद्वान्हरूका बीचमा जल्पकथाका आधारमा ब्रह्मचर्चा भएको पावन प्रसङ्ग बृहदारण्यकोपनिषद्को याज्ञवल्कीय काण्डमा आएको छ । त्यस सभाका सहभागीहरू मध्येका धेरैजसो विद्वान् र विदुषीहरूले विभिन्न प्रश्नहरू पूर्वपक्षीका रूपमा गुरु याज्ञवल्क्यलाई

१ नावेदविन्मनुते तं बृहन्तम् । – तैत्तिरीयब्राह्मण ३।१२९

सोधेका थिए। याज्ञवल्क्यले प्रश्न अनुरूपको उत्तर एक एक गरेर दिनुभएको थियो।

सहभागी विद्वान्हरू मध्येका अन्तिम विद्वान् शाकल्यले औपनिषद प्रमाण विनाका आकाशदेखि पातालसम्मका धेरै प्रश्नहरू सोधेर याज्ञवल्क्यलाई सताउन खोजेपछि अन्त्यमा याज्ञवल्क्यले चेतावनी सहित [10]औपनिषद पुरुषको बारेमा के जान्दछौ ? भन, अन्यथा तिम्रो मूर्धा पतन हुनेछ भन्नुभयो। तर शाकल्यले औपनिषद पुरुषका बारेमा केही पनि भन्न नसकेपछि तुरुन्तै उसको मूर्धा पतन भएको थियो र उसका अरू अवशेष समेत समाप्त भएका थिए।

उपनिषद्को उक्त आख्यायिकामा आएको गुरु याज्ञवल्क्य र शाकल्यका बीचमा भएको शास्त्रार्थमा याज्ञवल्क्यले शाकल्यलाई सोधेको औपनिषद पुरुष सम्बन्धी प्रश्नको उत्तर दिन नसकेका कारण उसको शिर विशीर्ण हुनु जस्तो ज्वलन्त घटनाबाट अद्वैत वेदान्तका अध्येता, व्याख्याता, प्रवचनकर्ता, उपदेष्टा, जिज्ञासु र मुमुक्षुहरूले यस सम्बन्धमा अत्यन्त विचार पुऱ्याउनु पर्ने देखिन्छ। त्यसै कारण उक्त उपनिषद्मा आएको यो आख्यायिका अद्वैत वेदान्तीहरूका लागि अत्यन्त पठनीय, चिन्तनीय र मननीय समेत छ। किनभने यो आख्यायिका उपनिषद् नै नपढीकन ब्रह्मचर्चा, शास्त्रार्थ र प्रश्नोत्तरमा सहभागी हुने, वेदान्तको प्रचन गर्दै हिँड्ने, आफ्नो वेदशाखा र त्यसमा पठित मुक्तिको साक्षात्कारण भएको वैदिक महावाक्य र त्यसको अर्थ समेतको कत्ति ज्ञान नभईकन ब्रह्मसाक्षात्कार गराइदिन्छु भन्दै भ्रम छर्दै हिँड्नेहरूका लागि उपनिषद्ले दिएको शिक्षा एवं चेतावनी हो।

---

१० तं त्वौपनिषदं पुरुषं पृच्छामि तं चेन्मे न विवक्ष्यसि मूर्धा ते विपतिष्यतीति। तं ह न मेने शाकल्यस्तस्य ह मूर्धा विपपातापि हास्य परिमोषिणोऽस्थीन्यापजह्रुरन्यन्मानाः। – बृहदारण्यकोपनिषद् ३।९।२६

उक्त आख्यायिकामा आएको शाकल्य एक प्रतीक हो। ऊ अज्ञानी तर ज्ञानी भएको भ्रम पालेर हिँड्नेहरूको प्रतिरूप हो। यस ग्रन्थमा समाविष्ट कुनैकुनै निबन्धहरूमा अल्पज्ञ भएर पनि बहुज्ञ सम्झने प्रमादग्रस्त वेदान्तीहरू र मोहग्रस्त भएर आत्मरतिमा डुबेका तथाकथित वेदान्तका अध्येता, उपदेष्टा र भ्रमित व्यक्तिहरूलाई आफ्नू वास्तविक योग्यता र धरातल चिन्ने प्रेरणा दिने सदुश्यले केही झर्रा, तीक्ष्ण र कटु जस्ता लाग्ने शब्दहरू जान अनजानमा पर्न गएका भए क्षमा याचना गर्दछु। किन्तु अहङ्कार नभएका सज्जन विद्वान्हरूले भने यसलाई औषधिका रूपमा ग्रहण गर्नुहुने छ भन्ने मेरो विचार छ। आद्योपान्त सबै ग्रन्थहरूको समीक्षा गर्दै यस 'औपनिषद पुरुष' ग्रन्थमा प्रत्यभिज्ञापूर्वक शुभकामना व्यक्त गर्दै सारगर्भित आशीर्वचनात्मक तथा प्रेरणाप्रद मन्तव्यद्वारा यस अकिञ्चनलाई प्रेरित गर्नु हुने अविज्ञात सखा आदरणीय त्यागी बाबाज्यूमा हार्दिक कृतज्ञता अर्पण गर्दछु।

यस ग्रन्थमा समाविष्ट निबन्धका शीर्षकहरू प्रायः उपनिषद्का मन्त्रका अंश, श्लोकका अंश, शास्त्रीय वचन, शब्द र उक्तिसमेत उद्धृत गरेर दिइएको छ। यसबाट जिज्ञासु पाठकहरूलाई बुझ्न सजिलो हुनेछ।

यस ग्रन्थको सम्पादन गरिदिएकोमा सहप्राध्यापक ध्रुवप्रसाद भट्टराईज्यूमा धन्यवाद ज्ञापन गर्दछु। अत्यन्त मिहिनेपूर्वक उत्टङ्कण गरी प्रकाशन योग्य बनाइदिनुहुने कम्प्युटर सञ्चालक खड्गप्रसाद खनालज्यूलाई हार्दिक धन्यवाद दिन्छु। धन्यवाद।

विनीत

शरत्कुमार भट्टराई

# विषयसूची

# १. अकर्मकम्

भगवान् श्रीवामनले महाराजा बलिबाट तीन पाउ जमीन दानमा प्राप्त गरेपछि विराट्रूप धारण गरेर सम्पूर्ण सृष्टि नै आफ्ना पाउबाट व्याप्त गर्नुभयो। त्यसै सन्दर्भमा वृद्धिमा प्राप्त भगवान्को चरणकमल सत्यलोक वा ब्रह्मलोक पुग्यो। त्यस ब्रह्मलोकमा वेद, उपवेद, नियम, यम, तर्क, इतिहास, वेदाङ्ग, पुराण तथा संहिताहरू मूर्तिमान् भएर निवास गर्दछन्। त्यस समयमा ब्रह्मलोकवासीहरूले पनि त्यस चरणकमलको दर्शन र वन्दन गरे। त्यस्ता पुण्यात्माहरूमा जसले [१]योगरूप वायुद्वारा ज्ञानाग्निलाई प्रज्वलित गरेर कर्ममल अर्थात् सकाम कर्मद्वारा सञ्चित वासनालाई भस्म गरेका छन्, तिनै महात्माहरू सबैले भगवान् श्रीवामनको अद्भुत पाउको दर्शन र वन्दन गर्ने सौभाग्य पाए। त्यसै चरणकमलका स्मरणका प्रभावले ती पुण्यात्माहरू कर्मद्वारा प्राप्त हुन नसक्ने ब्रह्माजीका धाममा पुग्न सफल भएको पावन प्रसङ्ग श्रीमद्भागवतमा वर्णित छ।

उपर्युक्त श्लोकमा आएको *‘अकर्मकं’* शब्दको अर्थ गर्दै श्रीधर स्वामीले *‘कर्मभिरप्राप्यम्’* अर्थात् कर्मद्वारा प्राप्त नहुने

---

१ वेदोपवेदा नियमान्विता यमास्तर्केतिहासाङ्गपुराणसंहिताः।
ये चापरे योगसमीरदीपितज्ञानाग्निना रन्धितकर्मकल्मषाः।
ववन्दिरे यत्स्मरणानुभावतः स्वायम्भुवं धाम गता अकर्मकम्॥
– भागवत ८।२१।२

भन्नुभएको छ। अब यस शब्दलाई अद्वैत वेदान्तको दृष्टि अनुसार चर्चा गर्नुपर्ने देखिन्छ। शास्त्रको भनाइ अनुसार [२]कर्मद्वारा जीवात्मा बाँधिन्छ भने ब्रह्मज्ञानद्वारा जीवात्मा मुक्त हुन्छ। त्यसैकारण बन्ध रूप कर्म ब्रह्मज्ञानी महात्माहरू गर्दैनन्। किनभने [३]जीवात्माले जुन जुन जस्तोसुकै कर्म गरे तापनि ती सबै कर्ममा कामना हुन्छ। विना काम कसैले पनि कर्म गर्दैन। प्रयोजन पूरा गर्न नै सारा प्राणी अग्रसर भइरहेका हुन्छन्। प्राणीहरूमध्येमा मनुष्य चेतनशील सामाजिक प्राणी हो। [४]जतिसुकै बुद्धु र लाटो भए पनि विना प्रयोजन र विना उद्देश्य मनुष्य प्रवृत्त नै हुँदैन।

कामना वा एषणाको मुख्य कारकतत्त्व अज्ञान हो। किनकि सम्पूर्ण प्रपञ्चको मूल कारण अज्ञान हो। अथवा यसलाई अर्को पाटोबाट पनि विश्लेषण गर्न सकिन्छ। शरीरको कारण धर्म र अधर्मयुक्त कर्मसञ्चिति हो। धर्म र अधर्मको कारण शुभ र अशुभकर्महरू हुन्। शुभ र अशुभ कर्मका कारण राग अनि द्वेषहरू हुन्। तिनको कारण राम्रो र नराम्रो भन्ने मायिक आध्यासिक बुद्धि हो। त्यसको कारण द्वैत प्रपञ्च हो र त्यसको कारण अज्ञान नै हो।

---

२ कर्मणा बध्यते जन्तुर्विद्यया च विमुच्यते।
तस्मात्कर्म न कुर्वन्ति यतयः पारदर्शिनः॥
– महाभारत शान्तिपर्व २४२।७

३ यद्यद्धि कुरुते जन्तुस्तत्तत्कामस्य चेष्टितम्। – मनुस्मृति २।४

४ प्रयोजमनुद्दिश्य न मन्दोऽपि प्रवर्तते।

वस्तुतः अज्ञानद्वारा भेदबुद्धि जन्मन्छ। भेदबुद्धिले अध्यास हुन्छ र अध्यासद्वारा नै सम्पूर्ण द्वैत कामकर्मादि हुन्छन्। अर्थात् अविद्याले, काम, कामले कर्म गरेपछि कर्म र त्यसको फल प्राप्त हुन्छ। यसरी कहिल्यै पनि समाप्त नहुने दुश्चक्रको भुमरीमा अज्ञानी कर्मी परेर जन्मजन्मान्तरसम्म घुमिरहन्छ। सारमा भन्दा [५]जहाँजहाँ व्यवहार हुन्छ, त्यहाँत्यहाँ अध्यास हुन्छ। जहाँजहाँ अध्यास हुन्छ त्यहाँत्यहाँ भेदाग्रह हुन्छ। जहाँजहाँ भेदाग्रह हुन्छ, त्यहाँत्यहाँ अज्ञान हुन्छ।

उपर्युक्त अज्ञानजन्य अध्यासिक संसार कर्मबाट नाश हुनसक्तैन। किनभने कहिल्यै समाप्त नहुने संसाररूपी कुचक्रको [६]मूल कारण अविद्या वा अज्ञान नै हो। अज्ञान नाश गर्न ब्रह्मविद्या अर्थात् ब्रह्मज्ञान नै सक्षम छ, कर्म होइन, किनभने कर्म अविद्याजन्य हो। अविद्यालाई अविद्याबाट जन्मेको मायिक कर्मले आफ्नै उपादानकारण अविद्या वा अज्ञानको नाश गर्न सक्तैन। किनभने ती दुवै सजातीय हुन्। अन्धकारले अन्धकारको नाश गर्न सक्तैन। अतः अज्ञानरूपी अन्धकारको नाश गर्न त्यसको विरोधी प्रकाशरूपी ब्रह्मज्ञान नै समर्थ छ।

श्रीधरस्वामीले भागवतमा आएको *'अकर्मकम्'* शब्दको

---

५ यत्र यत्र व्यवहारस्तत्र तत्र अध्यासः पुनर्यत्रयत्राध्यासस्तत्र तत्र भेदाग्रह, यत्र यत्र भेदाग्रहस्तत्र तत्र अज्ञानम्। – ब्रह्मसूत्र भामतीटीका

६ अज्ञानमेवास्य हि मूलकारणं तद्धानमेवात्र विधौ विधीयतो।
विद्यैव तन्नाशविधौ पटीयसी न कर्म तज्जं सविरोधमीरितम्॥
– रामगीता ९

अर्थ *'कर्मभिरप्राप्यम्'* अर्थात् सबै कर्महरूद्वारा प्राप्त नहुन योग्य भनेर गर्नुभएको छ। यो शब्द 'स्वायम्भुवं धाम' को विशेषणका रूपमा आएको छ [७]श्रीमद्भगवद्गीतामा *'अकर्म'* को अर्थ जे गरिन्छ त्यस व्यापारको नाम कर्म हो। त्यसरी गरिने कर्ममा जसले अकर्म देख्छ अर्थात् कर्मको अभाव देख्छ त्यो अकर्म भनेर श्रीशङ्कराचार्यले लेख्नुभएको छ।

उपर्युक्त अनुसार अकर्मी अर्थात् कर्मद्वारा सञ्चित भएका कर्महरू ब्रह्मज्ञानद्वारा भस्म गरेर अन्तःकरणको वृत्ति समेत समाप्त भएका ज्ञानी महात्माहरू मात्रै ब्रह्मलोक पुग्न सक्ने देखिन्छ। त्यहाँ पुगेका ज्ञानी महात्माहरू धेरै कालसम्म त्यहाँ बसेर महाप्रलयका समयमा ब्रह्मा मुक्त हुँदाखेरि ब्रह्मासँगै मुक्त हुन्छन्। तिनीहरू जन्ममरणको यस दुश्चक्रमा फेरि फर्कँदैनन् भनेर [८]शास्त्र भन्दछ।

उपर्युक्त प्रसङ्गमा ती मुक्तात्माहरू सद्योमुक्त हुन् वा क्रममुक्तिमा ब्रह्मलोक पुगेका हुन् त भन्ने जिज्ञासा उत्पन्न हुन्छ। सद्योमुक्तिमा प्राप्त हुने अर्थात् देहपात हुने बित्तिकै मुक्त हुने मुक्तात्माका [९]प्राणहरूले उत्क्रमण गर्दैनन्, ऊ पहिले ब्रह्म थियो, देहत्याग गरेपछि पनि ब्रह्म नै भइहाल्दछ भनेर एउटा

---

७ कर्मणि कर्म क्रियते इति व्यापारमात्रं तस्मिन् कर्मणि अकर्मभावं यः पश्येत्। – गीता ४।१८ शाङ्करभाष्य

८ ब्रह्मणा सह ते सर्वे सम्प्राप्ते प्रतिसञ्चरे।
परस्यान्ते कृतात्मानः प्रविशन्ति परं पदम्॥ – कूर्मपुराणम् १।१२।२६९

९ न तस्य प्राणा उत्क्रामन्ति ब्रह्मैव सन् ब्रह्माप्येति।
– बृहदारण्यकोपनिषद् ४।४।६

उपनिषद्ले भनेको छ भने अर्को उपनिषद्ले पनि [१०]ब्रह्मज्ञानीका प्राणहरूले उत्क्रमण गर्दैनन्, यहीँ नै लीन हुन्छन्, ब्रह्मज्ञानी पहिले ब्रह्म थियो र फेरि ब्रह्म भइहाल्दछ भनेको छ।

यसरी कुनै एकथरी ब्रह्मज्ञानी देहपात हुने बित्तिकै ब्रह्म भइहाल्ने र अर्को ब्रह्मज्ञानी भने प्राणोपलक्षित सत्रतत्त्वयुक्त लिङ्गशरीर लिएर अर्चिरादिमार्ग हुँदै ब्रह्मलोक पुगेर कालान्तर पछिमात्रै ब्रह्माजी मुक्त हुँदा ब्रह्मासँगै मुक्त हुने भन्ने शास्त्रीय प्रमाण देखिन आयो। सद्योमुक्त हुने र देवयान मार्गबाट क्रममुक्तिमा ब्रह्मलोक जाने दुवैथरी ज्ञानीहरूका अन्तःकरणमा जन्मजन्मान्तरदेखि सञ्चित भएर रहेका कर्म, संस्कार र कर्मवासना समेत आगोले दाउराको थुप्रोलाई डढाएझैँ [११]ब्रह्मज्ञानद्वारा भस्मसात् भएका हुनुपर्दछ, अन्यथा मुक्त हुन सम्भव छैन। किन्तु एउटै ब्रह्मज्ञानरूपी साधनद्वारा सद्योमुक्ति र क्रममुमक्तिको पार्थक्य कसरी हुनसक्तछ भन्ने जिज्ञासा पैदा हुनु स्वाभाविक देखिन्छ। किन्तु यसको उत्तर त्यति सजिलो भने अवश्य छैन।

दुवैथरी मुक्तिको कारण ब्रह्मज्ञान वा ब्रह्मसाक्षात्कार नै हो। किन्तु स्थूल कर्म वा कर्मवासना नाश भए पनि त्यसको अत्यन्त सूक्ष्मवासना अर्थात् लेशाविद्या नाश नभएसम्म

---

१० न तस्य प्राणा उत्क्रामन्त्यत्रैव समवलीयन्ते ब्रह्म सन् ब्रह्माप्येति।
– नृसिंहोत्तरतापनीयोपनिषद् ५

११ यथैधांसि समिद्धोऽग्निर्भस्मसात्कुरुतेऽर्जुन।
ज्ञानाग्निः सर्वकर्माणि भस्मसात्कुरुते तथा॥ – गीता ४।३७

सद्योमुक्ति हुनसक्तैन। देहपात हुनुभन्दा पूर्व त्यसको नाश नभएमा ज्ञानीले ब्रह्मलोक गएर त्यहाँ ब्रह्माजीबाट उपदिष्ट ब्रह्मज्ञानद्वारा सूक्ष्म संस्कार अर्थात् [१२]अविद्याको लेश समेत नाश गरेपछि क्रममुक्तिमा ब्रह्मलोक पुगेका गएका ज्ञानीहरू ब्रह्मलोकबाटै मुक्त हुन्छन्, तिनीहरूले जन्ममरणको भुमरीमा फेरि फर्कनु नपर्ने कुराको उद्घोष [१३]श्रुतिहरूले गरेका छन्।

वस्तुतः मुक्तिमा तरतमभाव छैन। मुक्तिमा तरतमभाव भएमा त्यो मुक्ति नभएर भक्ति हुने कुरा शास्त्रहरूले भनेका छन्। सद्योमुक्ति र क्रममुक्ति भन्नु पनि केवल शब्दको पार्थक्य हो, मुक्तिको पार्थक्य होइन।

भागवतमा आएको 'अकर्मकम्' शब्दले सूक्ष्मवासना अर्थात् अविद्यालेश बाँकी रहेका ज्ञानी महात्माहरू ब्रह्मलोक जान्छन् र ब्रह्माजीसँग ब्रह्मज्ञान गरेर अविद्यालेश अर्थात् सूक्ष्म वासना नाश भएपछि त्यतैबाट मुक्त हुन्छन् भन्ने ध्वनित गर्दछ। ॐ ब्रह्मार्पणमस्तु।

---

१२ अविद्यालेश शब्देन मोहाकारान्तरोक्तितः।
ज्ञानस्य प्रतिबन्धाच्च प्रबलारब्धकर्मभिः॥
लेशानुवृत्तौ तज्जन्यकर्मादिरनुवृत्तितः।
उत्पन्नात्मावबोधस्य जीवन्मुक्तिः प्रसिध्यति॥
– तत्त्वप्रदीपिका ४।१०,११

१३ क. न तेषां पुनरावृत्तिः। – बृहदारण्यकोपनिषद् ६।२।२५
ख. एतेन प्रतिपद्यमाना इमं मानवमावर्तं नावर्तन्ते।
– छान्दोग्योपनिषद् ८।१५।१

# २. अखण्डबोधकं वाक्यं महावाक्यम्

वैदिक महावाक्यको परिशीलन गर्ने क्रममा परिभाषाका रूपमा आएका वाक्यहरूको यहाँ उल्लेख गर्न लागिएको छ। जसमध्येमा एउटालाई मुख्य अभेदबोधक वाक्य, दोस्रोलाई लक्षणबोधक वाक्य र तेस्रोलाई सहायक वाक्य भन्न सकिन्छ। त्यसपछि ती परिभाषाहरूलाई सहायता पुऱ्याउने तेस्रो परिभाषा भनेको उत्प्रेरक वाक्य हो। मुख्यपरिभाषाले जीव र ब्रह्मको एकत्व देखाउँछ भने दोस्रो परिभाषाले ब्रह्मको स्वरूप र तटस्थ लक्षणहरूको प्रकाशन गरेर मुमुक्षुलाई ब्रह्मसाक्षात्कारतर्फ उन्मुख गराउँछ। सहयोगीका रूपमा सबै वेदमा आएका सृष्टिबोधक वाक्यहरूको प्रकारान्तरले अर्थ र उद्देश्य समेतबाट जीवात्मालाई अन्त्यमा ब्रह्ममा नै पर्यवसित गर्न सहयोगी हुने भन्ने नै देखिन्छ।

उपर्युक्त अनुसार उपाधिविनिर्मुक्त जीव र ब्रह्मको एकत्व प्रतिपादक वाक्यलाई [१]महावाक्य, ब्रह्मका लक्षण बताउने वाक्यलाई [२]लक्षणबोधक वाक्य र दुवैका सहायक वाक्यहरूलाई

---

१ जीवब्रह्मणोः अखण्डार्थप्रतिपादकं वाक्यं महावाक्यम्, अथवा अभेद-बोधकं वाक्यं महावाक्यम्। – सङ्क्षेपशारीरकम्

२ ब्रह्मणो लक्षणबोधकं वा स्वरूपबोधकं वाक्यमवान्तरवाक्यम्।
– सङ्क्षेपशारीरकम्

उत्प्रेरक वा [३]भविष्योन्मुखी वाक्य भनेर परिभाषित गर्नु नै शास्त्रमर्यादाको अनुकूल हुने देखिन्छ। यी परिभाषाहरू यथारूप शास्त्रहरूमा पाउन मुस्किल पर्दछ। त्यसैकारण शास्त्रका उपक्रम, उपसंहार आदि [४]षड्विधलिङ्ग तात्पर्यनिर्णयको सिद्धान्त अनुसार समग्र प्रसङ्गको तात्पर्य ग्रहण गरेर छोटो परिभाषा वा परिचय दिन सकिन्छ। यसमा त्यसै गर्ने प्रयास गरिएको छ।

१. जीव र ब्रह्मका अभेदबोधक वा अखण्डार्थबोधक-वाक्य दुईथरी हुन्छन्। ती [५]लौकिक र [६]वैदिक हुन्। त्यो उही देवदत्त नै यो देवदत्त हो भन्ने लौकिक महावाक्य हो भने तिमी ब्रह्म हौ भन्ने जीव र ब्रह्मको ऐक्य देखाउने वाक्य वैदिक महावाक्य हो। वैदिक महावाक्यहरू गुरुबाट श्रवण गरिने श्रवणात्मक महावाक्यहरू हुन्।

२. ब्रह्मको स्वरूप वा तटस्त लक्षण बताउने वैदिक वाक्यहरू अवान्तरवाक्यहरू हुन्। [७]स्वरूपबोधक भनेको ब्रह्म सत्यस्वरूप हो, ब्रह्म ज्ञानस्वरूप हो र ब्रह्म अनन्त हो आदि। किन्तु ब्रह्मको स्वरूपलक्षण नबताएर ब्रह्मका केवल [८]सृष्टि,

---

३ उत्प्रेरकं वाक्यं सहायकवाक्यम्। – भविष्यद्वृत्ति

४ उपक्रमोपसंहारावभ्यासोऽपूर्वता फलम्।
अर्थवादोपपत्ती च लिङ्गं तात्पर्यनिर्णये ॥ – बृहत्संहिता

५ सोऽयं देवदत्तः वा सोऽयं पुमान्। – सङ्क्षेपशारीरकम् १।१४९

६ (क) तत्त्वमसि – छान्दोग्योपनिषद् ६।८।७
(ख) अभयं वै जनक प्राप्तोऽसि – बृहदारण्यकोपनिषद् ४।२।४

७ सत्यं ज्ञानमनन्तं ब्रह्म। – तैत्तिरीयोपनिषद् २।१।१

८ यतो वा इमानि भूतानि जायन्ते, येन जातानि जीवन्ति, यत्प्रयन्त्यभिसंविशन्ति, तद्विजिज्ञासस्व, तद्ब्रह्म। – तैत्तिरीयोपनिषद् २।६।१

स्थिति र प्रलय आदि तटस्थ कार्यहरू बताउने वैदिक वाक्यलाई अवान्तर वाक्य भनिन्छ। अतः ब्रह्मका स्वरूपबोधक र तटस्थलक्षणबोधक समेतका सबैथरी वैदिक वाक्यहरू अवान्तरवाक्यहरू हुन्।

३. कर्म, उपासना र सृष्टिबोधक सबै वाक्यहरू भविष्यद्वृत्तिबोधक अर्थात् अन्त्यमा गएर ब्रह्ममा गौणरूपले पर्यवसित हुने वैदिक वाक्यहरू हुन् जसका लागि कर्मपरक असी प्रतिशत वाक्यहरू वेदमा छन्। यी वाक्यहरूले पहिले [९]स्वर्गादि फल देखाएर सकाम कर्म गर्न प्रेरणा दिन्छन्। त्यसबाट कर्मीको अन्तःकरण क्रमशः शुद्ध हुँदै गएर निष्काम कर्मतर्फ ऊ प्रवृत्त हुन्छ। चित्त शुद्ध हुँदै गएपछि चित्तको विक्षेप दोष हटाउन उपासक मनलाई ब्रह्म ठानेर [१०]भगवदुपासनातर्फ लाग्दछ। उपासना बताउने सोह्र प्रतिशत मन्त्रहरू वेदमा छन्। चित्त शुद्ध भएर विक्षेप हटेपछि मात्रै कर्मी [११]साधनचतुष्टय सम्पन्न भएर ब्रह्मज्ञानका लागि जिज्ञासु श्रोत्रियब्रह्मनिष्ठ गुरुसमक्ष जान्छ र गुरुबाट वैदिक महावाक्य श्रवण गरेर सधैँका लागि मुक्त हुन्छ। त्यसैकारण वेदका कर्मपरक, उपासनापरक र [१२]सृष्टिपरक वाक्यहरूलाई मोक्षका

---

९ स्वर्गकामो यजेत। – ताण्डि १६।१५।५

१० मनो ब्रह्मेत्युपासीत – छान्दोग्योपनिषद्। ३।१८।१

११ परीक्ष लोकान्कर्मचितान्ब्राह्मणो निर्वेदमायान्नास्त्यकृतः कृतेन
तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्॥
– कठोपनिषद् १।२।१२

१२ तत्सृष्ट्वा तदेवानुप्राविशत्। – तैत्तिरीयोपनिषद् २।६।१

लागि परम्परया साधन वा मोक्षका लागि सहायक वा गौणवाक्यहरू हुन् भनिएको हो ।

वेदका उत्पत्तिबोधक अर्थात् संसार सृष्टि गरेर ब्रह्मले त्यसैमा प्रवेश गर्‍यो भन्ने आदि वाक्यहरू जे जति आएका छन् र तिनले पहिले कर्मकाण्डपरक वाक्यहरूमा जीव र [१३]परमात्माको पृथक्त्व जुन देखाइएका छन्, ती वाक्यहरू मुख्य नभएर भविष्यद्वृत्तिद्वारा गौण हुन् । त्यस्तो भनाइलाई मुख्य मान्नु उचित होइन भन्ने कुरा गौडपादाचार्यको देखिन्छ । अतः सृष्टिबोधक अर्थात् उत्पत्तिबोधक द्वैत जस्ता देखिने वाक्यहरू व्यवहारमा चामल पकाउनु नभनेर भात पकाउनु भनेजस्तै [१४]गौणसिद्धार्थपरक वा सिद्धार्थबोधक वाक्यहरू हुन्, किन्तु ती वाक्यहरू साक्षात् ब्रह्मबोधक नभएर क्रमिकरूपमा परम्परया ब्रह्मलाई बोध गराउन सहयोग पुर्‍याउने भएकाले गौण वाक्यहरू हुन् ।

यसरी वेदमा आएका तीनथरी वाक्यहरूको प्रयोजन साक्षात् र परम्परया गरेर जीव र ब्रह्मको ऐक्यप्रतिपादन गर्ने नै देखिन्छ । किन्तु उपर्युक्त [१५]अखण्डार्थबोधक वाक्य संसर्ग र विशिष्टजन्य-

---

१३ जीवात्मनोः पृथक्त्वं यत्प्रागुत्पत्तेः प्रकीर्तितम् ।
भविष्यद्वृत्त्या गौणं तन्मुख्यत्वं हि न युज्यते ॥
– माण्डूक्यकारिका ३।१४

१४ अनोदनेषु तण्डुलेषु यथोदनव्यवहारो गौणः, तथाऽद्वितीये द्वैतव्यवहारो गौण एव । – मा.का. ३।१४ को टिप्पणी

१५ संसर्गो वा विशिष्टो वा वाक्यार्थो नात्र सम्मतः ।
अखण्डैकरसत्वेन वाक्यार्थो विदुषां मतः ॥ – वाक्यवृत्ति : ३८

वाक्य हुनुहुँदैन । यस सम्बन्धमा कर्मकाण्डप्रवीण पूर्वमीमांसकहरूले पूर्वमीमांसाको द्वितीय अध्यायस्थ प्रथमपादको चौधौँ अधिकरणमा आएको [१६]भेद र संसर्गजन्य वाक्यार्थ हो भन्ने शाबरभाष्यको वाक्यांशको व्याख्या गर्दै वार्तिककारले व्यक्तिपदार्थपक्षमा संसर्ग पनि पदार्थका अन्तर्गत आउँछ भनेकाले *'शुक्लो गौः'* यसमा कृष्ण र अश्वादिको व्यावृत्तिमात्रै हुन्छ, किन्तु जाति पदार्थ पक्षमा स्वरूपतः अभिहित शुक्लत्व तथा गोत्वको परस्पर संसर्ग नै वाक्यार्थ हो भनेका छन् । पूर्वमीमांसकहरूले उक्त कुरा भनेका भए तापनि [१७]उत्तरमीमांसामा भने यस कुराको विवक्षा छैन । किनभने उत्तरमीमांसामा अखण्ड तथा अद्वितीय ब्रह्ममा भेद र संसर्ग सम्भव छैन । भेद अर्थात् विशिष्ट र संसर्गद्वारा शून्य एक अखण्ड वस्तुलाई नै वाक्यार्थ मानिन्छ भनेर आचार्य श्रीशङ्करको *'संसर्गो वा विशिष्टो वा'* भन्ने मत भएको हुँदा संसर्गजन्य वाक्य स्वीकार्य देखिँदैन ।

त्यति मात्रै होइन, सूत्रकार भगवान् बादरायणले [१८]ब्रह्मसूत्रमा अखण्डैकरस ब्रह्ममा वेदान्तवाक्यहरूको प्रामाण्य स्थापित गर्नुभएको छ । तदनुसार नै भाष्यकारले पनि संसर्गरहित वाक्य नै अखण्डार्थबोधक हो भन्नुभएको हो । यसैमा

---

१६ भेदःसंसर्गो वा वाक्यार्थः । – पूर्वमीमांसा २।१।१४ शाबरभाष्य

१७ यत्कर्मकाण्डनिपुणैरुदितं पुरस्तात्, वाक्यार्थलक्षणमदः पुनरत्र नेष्टम् ।
भेदादिवर्जितमखण्डमुशन्ति यस्मात्, श्रीबादरायणमतानुगता महान्तः ॥
– सङ्क्षेपशारीरकम् १।१४६

१८ तत्तु समन्वयात् । – ब्रह्मसूत्र १।१।४

*'वाक्यप्रतिपाद्यत्व'* छ तर पूर्वमीमांसोक्त *'भेदः संसर्गो वा वाक्यार्थः'* मा छैन ।

पूर्वमीमांसा र उत्तरमीमांसामा सामान्यतया वाक्यहरू समानजस्ता नै देखिन्छन् तापनि वाक्यार्थमा भने विलक्षणता देखापर्दछ । वस्तुतः जुन वाक्यहरू भेदादिरूप अर्थलाई बुझाउन समर्थ हुन्छन्, ती वाक्यहरू अखण्डार्थबोधक वाक्यभन्दा [१९]विलक्षणार्थक नै हुन्छन् । किनभने संसारभरिका सबै भाषाका सबै वाक्यहरू अखण्डार्थक नै हुनुपर्दछ भन्ने हाम्रो आग्रह किमार्थ छँदैछैन । हाम्रो भनाइ यत्तिमात्रै हो, जुन पनि *'गामानय'* आदि लौकिक वाक्यहरू र *'अग्निहोत्रं जुहोति'* आदि वैदिक वाक्यहरू छन्, ती सबै भिन्नार्थक वा संसृष्टार्थका बोधक हुनसक्तछन्, त्यसमा हामी अद्वैतवादीहरूको कत्ति पनि विमति छैन, त्यो आफ्ना स्थानमा उचित नै हो। किन्तु ती सबै भिन्नार्थक र संसृष्टार्थक वाक्यहरूको पनि अन्तिम बोद्धव्य वा ज्ञाप्य वस्तु भनेको अखण्डार्थबोधक ब्रह्म नै हो । त्यसभन्दा बाहेक [२०]मोक्षका लागि अरू बोद्धव्य वा गन्तव्य वस्तु छँदैछैन भन्ने मात्रै हामी अद्वैतवादीको भनाइ हो ।

उपर्युक्त लौकिक सामान्य वाक्यहरू विशिष्ट र संसर्गजन्य

१९ भेदादिरूपभवबोधयितुं समर्थं यद्वाक्यमस्ति तदखण्डविलक्षणार्थम् । तल्लौकिकं भवतु वैदिकमेव वास्तु नास्माकमत्र विषये विमतिः कदाचित् ॥ – सङ्क्षेपशारीरकम् १।१४७

२० तमेव विदित्वाऽतिमृत्युमेति नान्यः पन्था विद्यतेऽयनाय ।
– श्वेताश्वतरोपनिषद् ६।१५।३

हुन्छन् । जहाँ [२१]एक तिङ् भएका वा दुई तिङ् भन्दा बढी भएका वाक्यहरू हुन्छन् । यसलाई पूर्वमीमांसा आदि दर्शनहरू र वेदाङ्गले पनि अङ्गीकार गरेका छन् । जुन विना वाक्य नै निष्पन्न हुँदैन भनिन्छ । यस कुरालाई अद्वैत [२२]वेदान्तले व्यावहारिकरूपमा स्वीकार गरे तापनि पारमार्थिकरूपमा भने स्वीकार गर्दैन । किनभने वेदान्तगत वा वैदिक *'तत्त्वमसि' 'अभयं (तत्) वै जनक (त्वं) प्राप्तोऽसि'* हुन् वा लौकिक *'सोऽयं देवदत्तः'* आदि वाक्यहरूले अखण्डार्थलाई छोडेर कुनै पनि अवस्थामा संसर्ग वा विशिष्ट वस्तु भन्न सक्तैनन् । ती सबै वाक्यहरूले अखण्डार्थको नै कथन गर्दछन् । अर्को कुरा लौकिक अथवा वैदिक कुनै पनि वाक्यहरूले वाक्यभेद या संसर्गको प्रतिपादन गर्न सक्तैनन् । ती अखण्डार्थ हुन्छन्, यही नै अद्वैतवेदान्तको सिद्धान्त हो ।

माथि लौकिक वाक्य पनि अखण्डार्थक हुन्छ भनेर उल्लेख गरिसकियो । जस्तै *'सोऽयं [२३]पुमान्'* यो वाक्यले विरुद्ध देश र काल विशेषण भएको मुख्य पदार्थघटित वाक्यार्थ भएको वाक्य हो भन्ने प्रतीति गराउन अवश्य सक्तैन । किनभने

---

२१ एकतिङ् वाक्यम् ।

२२ यद्वाक्यजातमथ वेदशिरोनिविष्टं यद्वापि लौकिकमखण्डमपास्य नान्यत् ।
शक्नोति वस्तु वदितुं तदशेषमेव ब्रूयादखण्डमिति तु प्रतिपादयामः ॥
– सङ्क्षेपशारीरकम् १।१४८

२३ सोऽयं पुमानिति हि मुख्यपदार्थयुक्तवाक्यार्थबुद्धिजननस्य न वाक्यमेतत् ।
ईशीत वाच्यशबलस्थपदद्वयेन संसृष्टबुद्धिजनने पदयोर्विरोधात् ॥
– सङ्क्षेपशारीरकम् १।१४९

विरुद्ध देश र कालादिरूप विशिष्ट अर्थका वाचक दुवैथरी पदहरूबाट संसृष्टबुद्धिको उत्पादन हुनमा दुवै पदहरूको आपसमा विरोध देखिन्छ।

उपर्युक्त विश्लेषणलाई अझै स्पष्ट पार्नु पर्दा *'सोऽयं पुमान्'* अर्थात् *'सोऽयं देवदत्तः'* यस वाक्यमा 'तत्' शब्दको मुख्य अर्थ हो – *'तद्देशकालविशिष्ट देवदत्तः'* र 'अयम्' शब्दको मुख्य अर्थ *'एतद्देशकालविशिष्ट देवदत्तः'* हो। यी दुवैथरी अर्थहरूको संसर्ग बन्न नै सक्तैन। किनभने दुवै अर्थको अत्यन्त नै विरोध देखिन्छ। विरुद्धार्थक पदहरूबाट निर्मित वाक्यलाई पनि यदि संसृष्टार्थ अर्थात् संसर्गबोधक वाक्य नै हो भनेर कसैले भन्दछ भने 'पयः पावकः' आदि वाक्यहरूलाई पनि संसृष्टार्थ अर्थात् संसर्गबोधक हो भन्नुपर्ने हुनजान्छ। यसैकारण पनि उक्त वाक्यद्वारा संसृष्टार्थको बोध कुनै हालतमा पनि नहुने कुरामा विद्वान्हरू सहमत छन्।

उपर्युक्त *'सोऽयं देवदत्तः'* वा [२४] *'सोऽयं पुमान्'* वाक्यलाई शाबरभाष्यमा भनिएजस्तो *'भेदः संसर्गो वा वाक्यार्थः'* नभनेर यसलाई अखण्डार्थबोधक नै मान्नुपर्दछ। अद्वैत वेदान्तमा यो भन्दा अर्को गति नै छैन। *'सोऽयं देवदत्तः'* मा आएको 'स' पदले अतीत काल र परोक्ष देशद्वारा विशिष्ट वस्तुलाई ग्रहण

---

२४ एतद्धि सोऽयमिति वाक्यमखण्डनिष्ठां
वक्तव्यमत्र गतिरस्ति न काचिदयन्या।
तद्देशकालमनुकृष्य स इत्यनेन नायं पदार्थमुपढौकयते हि नैतत्॥
– सङ्क्षेपशारीरकम् १।१५०

गरेर *'अयम्'* पदार्थ, जुन वर्तमान कालमा छ त्यसले अपरोक्ष देशद्वारा विशिष्ट वस्तुका साथ सम्बन्ध गराउन सक्तैन। किन्तु अयं वस्तुको स वस्तुका साथ नै सम्बन्ध स्थापित हुनसक्तछ।

उक्त वाक्यलाई अखण्डार्थक नै हो भनेर बुद्धिवृत्तिमा आरूढ गराउनु अति आवश्यक छ। यसका लागि यसबारे अझै केही चर्चा गर्नु आवश्यक देखिन्छ। *'नीलमुत्पलम्'* का समान *'सोऽयं देवदत्तः'* वाक्यलाई विशेषणविशेष्यभाव पनि भन्न मिल्दैन र यो वाच्यभेद पनि बन्न सक्तैन। माथिल्लो वाक्यावलीमा उल्लेख भएजस्तै 'स' पदको वाच्यार्थ हो '*परोक्षदेशकालविशिष्ट देवदत्त*' र 'अयम्' पदको अर्थ हो *'अपरोक्षदेशकालविशिष्ट देवदत्त'*। उक्त वाक्यले आफ्ना घटक दुवैथरी पदहरूका विरुद्ध वाच्यार्थहरूको संसर्ग गराउन सक्तैन। अतः दुवै पदहरूको लक्षणावृत्तिद्वारा शुद्ध देवदत्तमा तात्पर्य मान्नु पर्दछ।

लक्षणा गर्ने सम्बन्धमा पनि केही उल्लेख गर्नुपर्ने देखिन्छ। किनभने एक पदार्थको वाच्यार्थमा अर्को पदको लक्षणाद्वारा पनि काम नचल्न सक्तछ। विनिगमक नहुनाले कसको वाच्यमा कसको लक्षणा गर्ने भनेर प्रश्न खडा हुनसक्तछ। विनिगमना अर्थात् एकपदलक्षणामा कुनै स्पष्ट कारण छैन। त्यसकारण उभयपद लक्षणा मानिन्छ। किनभने

---

२५ न च विनिगमनायां कारणं किञ्चिदस्ति,
स्फुटमुभयपदस्था लक्षणा शस्यतेऽतः।
न हि विनिगमनायां हेत्वभावे कदाचित्,
क्वचिदियमुपलब्धा सोऽयमित्यादिवाक्ये॥
– सङ्क्षेपशारीरकम् ॥१।१६३

[२५]विनिगमनामा हेतु नहुनाका कारण *'सोऽयं देवदत्तः'* वा *'सोऽयं पुमान्'* आदि वाक्यहरूमा कहीं पनि यो एकपद लक्षणा कुनै अवस्थामा पनि पाइँदैन ।

यो प्रसङ्ग केही अस्पष्ट र दुरूह भएकाले अझै स्पष्टसँग बुझ्न आवश्यक छ । किनभने कुनै एक पदको लक्षणा गर्ने हो भने यसमा कुनै पनि विनिगमक देखिँदैन । यसै कारण दुवै पदहरूको लक्षणा अपनाइन्छ । यसमा श्रोताका इच्छालाई विननिगमक भन्न सकिँदैन । किनभने श्रोता धेरै छन् र तिनीहरूको इच्छा पनि सबैको भिन्नाभिन्नै छ । कसैले प्रथम पदको लक्षणा भन्लान् कसैले द्वितीय पदको लक्षणा भन्लान् । यस अवस्थामा कुनै एक पदको लक्षणा गर्न सम्भव हुँदैन । अतः *'सोऽयं देवदत्तः'* आदि वाक्यमा कतै पनि एकपदलक्षणा गरेको देखिँदैन, दुवै पदको लक्षणा नै पाइन्छ । यसमा पनि उभयपदलक्षणा नै उचित हुन्छ ।

प्रकृत वाक्यमा यो देवदत्त त्यही हो ? अथवा अर्को कुनै हो ? यस प्रकारको संशय उत्पन्न हुनसक्तछ । यसैको निवृत्तिका लागि नै *'सोऽयं देवदत्तः'* यस वाक्यको प्रयोग गरिएको हो । अतः यसको अर्थ त्यही नै हुन सक्तछ, जसबाट उपर्युक्त संशयको निवृत्ति हुन सकोस् । यदि केवल एकपदको लक्षणा अर्को वाच्यार्थमा गर्ने हो भने त्यस अवस्थामा त्यो देवदत्त हो कि ? यो देवदत्त हो ? यस प्रकारको अर्थ निस्किन्छ । यतिले मात्र उक्त संशयको निवृत्ति हुँदैन । एक पदको लक्षणा शुद्ध देवदत्तमा गरेर अर्को पदको वाच्य अर्थसँग पनि अभेद हुन्छ

भन्न सकिँदैन । किनभने विशिष्ट र शुद्ध फरक हुन्छन् । अतः अगत्या दुवैथरी पदहरूको भागत्याग लक्षणाद्वारा अभिन्न देददत्तरूप अर्थ निकाल्नु पर्दछ । यसैबाट उक्त संशयको निवृत्ति हुन्छ । यसरी विश्लेषणा गर्दा *'सोऽयं देवदत्तः'* यो वाक्य अखण्डार्थक नै सिद्ध हुन्छ ।

उपर्युक्त अनुसार अखण्डार्थबोधक लौकिक दृष्टान्तको प्रस्तुतीकरणपश्चात् अब वैदिक अखण्डार्थबोधक दुईथरी श्रवणात्मक महावाक्यहरू प्रस्तुत गरिन्छन्, जसमा छान्दोग्य शाखाको *'तत्त्वमसि'* र *'यजुः'* शाखाको *'अभयं वै जनक प्राप्तोऽसि'* छन् । आफ्नै [२६]शाखाको नै महावाक्य गुरुबाट सुन्नुपर्ने अन्यथा [२७]शाखारण्ड हुने शास्त्रीय वचन पाइन्छ ।

माथि उल्लेख भएको लौकिक महावाक्य शास्त्रहरूले केवल उदाहरणका लागि दिएका हुन् । त्यसैलाई अघि सारेर [२८]*'तत्त्वमसि'* आदि वेदान्तवाक्यहरू बुझ्न सक्नुपर्दछ ।

---

२६ स्वाध्यायधर्मपठितं निजवेदशाखावेदान्तभूमिगतमादरपालितञ्च सन्न्यासिना परदृशा गुरुणोपदिष्टं साक्षान्महावचनमेव विमुक्तिहेतुः ।
— सङ्क्षेपशारीरकम् ३।२९५

२७ (क) हित्वा स्वस्य द्विजो वेदं यस्त्वधीते परस्य तु ।
शाखारण्डः स विज्ञेयः सर्वधर्मबहिष्कृतः ॥
— लध्वाश्वलायनस्मृतिः २४।१९

(ख) न जातु परशाखोक्तं बुधः कर्म समाचरेत् ।
आचरन्परशाखोक्तं शाखारण्डः स उच्यते ॥
— वसिष्ठवचन, संस्कारगणपतिः ।

२८ एवं सतीदमपि तत्त्वमसीति वाक्यमाश्रित्य लाक्षणिकवृत्तिमखण्डनिष्ठम् ।
सोऽयं पुमानिति यथा वचनं तथास्तु नो चेत्समं हि तदलाबनिमज्जनोक्त्या ॥
— सङ्क्षेपशारीरकम् १।१५१

तिनलाई पनि उभयपद लक्षणाद्वारा अखण्डार्थनिष्ठ नै मान्नुपर्दछ। होइन भने 'अतिशुष्क, निश्छिद्र, एक्लो लौकाको तुम्बी पानीमा डुब्दछ' भनेजस्तो विरुद्धार्थक भनाइ अर्थात् वाक्यलाई लोकमा जसरी प्रमाण मानिदैन, त्यसै गरेर वैदिक महावाक्य पनि अप्रमाण हुनजाला। अतः उभयपदलक्षणा गर्नुपर्दछ।

यसरी जीव र ब्रह्मको एकत्वको प्रतिपादन गर्ने वेदवाक्यमात्रै महावाक्य हुन्। ब्रह्मको स्वरूपलक्षण र तटस्थलक्षणबोधक वाक्यहरू अवान्तर वाक्य हुन्। तीदेखि बाहेकका अरू सम्पूर्ण वैदिक वाक्यहरू भविष्यद्वृत्तिपरक सहायक वाक्यहरूमात्र हुन् भन्ने चर्चा यथामति शुरुमा गरिसकियो। ती श्रवणात्मक वैदिक महावाक्यहरूमध्ये कुन शाख्याध्यायीको कुन महावाक्य हो भन्ने सम्बन्धमा यसै ग्रन्थमा समाविष्ट [२९] *'स्वाध्यायोऽधेतव्यः'* शीर्षकको निबन्धमा उल्लेख गरिसकिएको छ। जीव र ब्रह्मका बीचमा रहेको अज्ञानको आवरण हट्ने बित्तिकै जीवात्मा र परमात्माको एकता भइहाल्दछ भन्न सजिलो छ। महात्मा सन्न्यासीहरूले अनुयायीहरूलाई, वेदान्तीले अवेदान्तीलाई, गुरुले चेलालाई र पण्डितले श्रोताहरूलाई सतहीरूपले अत्यन्त हलुका शैलीमा यसलाई लिएर उपदेश गरेको सुनिन्छ पनि, तर उनीहरूले यो कति बुझेर उपदेश गरेका हुन्, विचारणीय छ।

---

२९ (क) स्वाध्यायोऽधेतव्यः। – शतपथब्राह्मण १५।५।७।२
(ख) स्वाध्यायमधीयित। – तैत्तिरीय आरण्यक २।१०,१२
(ग) स्वाध्यायप्रवचनाभ्यां न प्रमदितव्यम्। – तैत्तिरीयोपनिषद् १।११

जीवात्माले परमात्मा हुने, जीवले ब्रह्म हुने र अल्पज्ञ चिदाभासले चिदात्मा नै हुने भनेको के हो ? यसलाई शास्त्रीयरूपमा जिज्ञासु आफैँले मनन, निदिध्यासन र ब्रह्माभ्यास नगरीकन उपदेशकको भनाइमा पछि लागेर हावामा ज्ञानी भएर हिँड्ने हो भने यो जन्मको त के कुरा कैयौँ जन्महरू बितेर जानसक्तछन् । अतः जिज्ञासु मुमुक्षुले अत्यन्त मनोयोगका साथ यसै जन्ममा बुझिहाल्ने प्रयास गर्नु नै श्रेयस्कर हुनेछ । उपनिषद्हरूमा जीव ब्रह्मै हो र [३०]ब्रह्म नै हुन्छ, जीवात्मा [३१]ब्रह्म भएर ब्रह्ममा मिल्दछ, ब्रह्म जान्ने [३२]ब्रह्म नै हुन्छ, [३३]ब्रह्मज्ञानीले ब्रह्मलाई प्राप्त गर्दछ आदि इत्यादि वाक्यहरू आएका देखिन्छन् । किन्तु उपनिषद्मा लेखेको छ, उपनिषद्ले भनेको छ, गुरुबाट उपदेश सुनेका छौँ र कण्ठै पारेका छौँ भन्दै रातदिनै सुगाले रटेझैँ गरेर शब्दमात्रै बर्बराएर उपदेशक गुरुको र चेलाचेलीको पनि मुक्ति हुनसक्तैन । यस कुराको राम्रो ज्ञान भएर मात्रै साधनचतुष्टय सम्पन्न मुमुक्षुले पनि ब्रह्मचिन्तनमा लाग्नु पर्दछ । अन्यथा वेदान्तश्रवण मनोविलास वा हात्तीको स्नानसरह मात्र हुनेछ ।

ब्रह्मज्ञानी त्यस बेला ब्रह्म हुनसक्तछ, जब उसको अन्तःकरण शास्त्र र आचार्यको उपदेश सुनेपछि मनन, निदिध्यासन र

३० ब्रह्मैव सन् ब्रह्माप्येति । – बृहदारण्यकोपनिषद् ४।४।६

३१ अत्रैव समवलीयन्ते ब्रह्मैव सन्ब्रह्माप्येति ।

– नृसिंहोत्तरतापनीयोपनिषद् ५

३२ ब्रह्मवेद ब्रह्मैव भवति । – मुण्डकोपनिषद् ३।२।९

३३ ब्रह्मविदाप्नोति परम् । – तैत्तिरीयोपनिषद् २।१।१

ब्रह्माभ्यास गर्दछ । यसभन्दा अघि समदमादिसाधनहरूसमेतबाट अन्तःकरणमा जमेर अनन्त जन्मदेखि बसेको मलदोषलाई भगवान्मा अर्पण गरिएको निष्काम कर्मद्वारा पखाल्छ । अहैतुकी भगवद् उपासनाद्वारा चित्तको विक्षेप दोष समाप्त गरेको साधन चतुष्टय सम्पन्न मुमुक्षु हुनुपर्दछ । त्यस्तो उत्तम अधिकारीको मात्रै महावाक्य श्रवण पश्चात् कालान्तरमा अन्तःकरणलाई समग्ररूपमा ढाकेर बसेको अज्ञानको आवरण अर्थात् अनन्त जन्मदेखि अन्तःकरणमा थुप्रिएर बसेको सञ्चितकर्मको थुप्रोलाई ब्रह्मज्ञानरूपी अग्निद्वारा [३४]भस्म गरेर डढाएपछि ऊ ब्रह्म भइहाल्दछ । [३५]श्रुतिले यही नै उद्घोष गरेको हो ।

उपर्युक्त साधनहरू र साधनाले मात्रै मुमुक्षु ब्रह्मवेत्ता ब्रह्म बन्दछ त ? भन्ने जिज्ञासा तैपनि बाँकी नै रहने देखिन्छ । किनभने अन्तःकरणको चरमवृत्ति अर्थात् ब्रह्मचैतन्य आरूढ बुद्धिको अन्तिम वृत्ति ब्रह्मको आकार जस्तै आकारले आकारित भएपछि ज्ञानी ब्रह्म बन्दछ, अन्यथा सम्भव छैन । फेरि जिज्ञासा पैदा हुन्छ, त्यो के हो ? ब्रह्म ता निराकार हो भनेर [३६]उपनिषद्ले भनेको छ । त्यसो भए ब्रह्मको आकार जस्तै बुद्धिको आकार कसरी हुनसक्तछ ? आकाश जस्तै आकारहीन ब्रह्म हो । जब ब्रह्मको आकार नै नहुने भएपछि

---

३४ ज्ञानाग्निः सर्वकर्माणि भस्मसात् कुरुते तथा । – गीता ४।३७

३५ भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः ।
क्षीयन्ते चास्य कर्माणि तस्मिन्दृष्टे परावरे ।। – मुण्डकोपनिषद् २।२।८

३६ निष्कलं निष्क्रियं शान्तं निरवद्यं निरञ्जनम् । – श्वेताश्वतरोपनिषद् । ६।१९

शास्त्रले ब्रह्मकाराकारित बुद्धिको चरम वृत्ति कसरी भन्यो भन्ने सम्बन्धमा चिन्तन गर्नुपर्ने हुन्छ।

आकारका सम्बन्धमा अद्वैतसिद्धिको टीका लघु-चन्द्रिकाकार गौडब्रह्मानन्दले [३७]आकार भनेको घटपटादि वस्तुहरूको आपसमा देखिने विलक्षणता हो भनेका छन्। त्यो आकार ता मायिक वस्तुको आकार भयो। मायिक वस्तुहरूमा पनि कैयौँ भावात्मक निरूपवस्तुहरूको आकार हुँदैन। जसमा शब्द, [३८]गन्ध, स्पर्श र रसादि पर्दछन्। यहाँ आकार भनेर बिम्ब वा प्रतिबिम्बलाई बुझ्नु पर्दछ। आकार नहुने तथ्य स्पष्टै देखिन्छ। अतः आकार भनेर ब्रह्मको अर्थात् आत्माको [३९]अत्यन्त निर्मलत्व, अत्यन्त स्वच्छत्व र अत्यन्त सूक्ष्मत्वलाई लिनु पर्दछ। त्यस्तै गरेर बुद्धि पनि आत्माको समान नै अत्यन्त निर्मलत्व, अत्यन्त स्वच्छत्व र अत्यन्त सूक्ष्मत्व भएमा ब्रह्मका सरह नै ब्रह्मकाराकारित बुद्धि वा बुद्धिको वृत्ति वा अन्तःकरण हुनजान्छ। ब्रह्मवेत्ता यो अवस्थामा पुग्न सकेमा जीव र ब्रह्मको ऐक्य हुन्छ। उपनिषद्ले भनेको यही हो। यही हो जीवको सद्योः वा कैवल्यमुक्ति

---

३७ आकारो हि ज्ञानानां मिथो वैलक्षण्यम्। – लघुचन्द्रिका, अद्वैतसिद्धिः

३८ शब्दगन्धरसादीनां कीदृशी प्रतिबिम्बता। – श्लोकवार्तिक पृष्ठ २८०

३९ सिद्धि प्राप्तो यथा ब्रह्म तथाप्नोति निबोध मे।
समासेनैव कौन्तेय निष्ठा ज्ञानस्य या परा॥ – गीता १८।५०
अत्यन्त निर्मलत्वस्वच्छत्वसूक्ष्मत्वोपपत्तेः, आत्मनो बुद्धेश्च, आत्मसमनैर्मल्याद्युपपत्तेः, आत्मचैतन्याकाराभासत्वोपपत्तिः।
– शाङ्करभाष्य, गीता १८।५०

भनेको। यही हो परमगति प्राप्त हुनु भनेको।

यसैका लागि आफ्ना शाखामा पठित महावाक्यको श्रवण विधिपूर्वक श्रोत्रियब्रह्मनिष्ठ गुरुबाट गर्ने भनेर श्रुतिले भनेको हो। अन्यथा शाखारण्ड हुने शास्त्रीय वचन माथि उल्लेख गरिसकियो। शुक्लयजुर्वेदीय माध्यन्दिनीय शाखाध्यायी द्विजहरूलाई सम्झाउन सामवेदीय श्रवणात्मक महावाक्य *'तत्त्वमसि'* उदाहरणार्थ आएको लौकिक वाक्य *'सोऽयं देवदत्तः'* जस्तै हो, श्रवणीय होइन, केवल पठनीय र जानकारीमा लिनुपर्ने वैदिक महावाक्य हो। शुक्ल-यजुर्वेदीहरूका लागि भने *'तत्त्वमसि'* महावाक्य जस्तै मिल्दो जुल्दो र श्रोत्रिय ब्रह्मनिष्ठ गुरु याज्ञवल्क्यले आफ्ना जिज्ञासु तथा मुमुक्षु शिष्य राजा जनकलाई उपदेश गरेको श्रवणात्मक महावाक्य *'अभयं वै जनक प्राप्तोऽसि'* हो। जसको उल्लेख आद्य जगद्गुरु श्रीशङ्कराचार्यले ब्रह्मसूत्रको *'तत्तु समन्वयात्'* *(ब्र.सू.१।१।१।४)* को शाङ्करभाष्यमा गर्नुभएको छ। शुक्लयजुर्वेदाध्यायीहरूले गुरुबाट श्रवण गर्नुपर्ने वैदिक महावाक्यको चर्चा यसै निबन्धको प्राप्त सन्दर्भमा र *'स्वाध्यायोऽधेतव्यः'* मा पनि गरिसकिएको छ। बुझ्न खोज्नेले यसैबाट बुझ्न सकिन्छ, अन्यथा पिष्टपेषणमात्रै हुनजान्छ।

वैदिक महावाक्यको श्रवणबाट जीव र ब्रह्मको एकत्व हुने रहेछ भन्ने कुरा बुझिने र तदनुरूप मुमुक्षुले साधना गरेमा ऊ ब्रह्म नै हुनसक्ने कुरा सत्य हो। यसै कारणले नै *'अखण्डार्थबोधकं वाक्यं महावाक्यम्'* भनेर शास्त्रहरूले भनेका

हुन्। किन्तु वाक्य गुरुबाट सुनेर मात्रै अखण्डार्थको बोध हुनसक्तैन, परन्तु साधनाको परिपाक भएपछि मुमुक्षुले आफैँले [४०]अनुभूति गर्न सक्नुपर्दछ। म अखण्ड भेदशून्य [४१]ब्रह्म हुँ भनेर साक्षात्कार गर्न सक्नुपर्दछ। अन्यथा मुमुक्षु केवल शब्द ब्रह्ममा निष्णात छ तर [४२]ब्रह्मसाक्षात्कार गर्न सकेको छैन भने त्यो थारी गाईको सुसार गरेजस्तो व्यर्थ हुने कुरा शास्त्रहरूले भनेका छन्। अतः आफ्नो वेदशाखाको महावाक्य श्रोत्रिय ब्रह्मनिष्ठ गुरुका मुखबाट सुनेर मात्रै जीवात्मा र परमात्माको अर्थात् जीव र ब्रह्मको एकत्वबोध हुनसक्तैन। त्यसका लागि जीव र ब्रह्मको एकत्वको बोध नै हुनुपर्दछ। यसो भएमा नै सार्थक हुनेछ। ॐ ब्रह्मार्पणमस्तु।

४० अनुभवाऽवसाना हि ब्रह्मविद्या।

४१ अहं ब्रह्मास्मि। – बृहदारण्यकोपनिषद् १।४।१०

४२ शब्दब्रह्मणि निष्णातो न निष्णायात् परे यदि।
श्रमस्तस्य श्रमफलो ह्यधेनुमिव रक्षतः ॥ – भागवत ११।११।१८

# ३. अनूचानमानी

उपर्युल्लिखित शब्द सामान्य लेखापढी र बोलिचालीमा सामान्यतः आएको देखिँदैन। यो शास्त्रीय र वैदिक शब्द हो। यसले अत्यन्त गहन अर्थ सम्प्रेषण गर्दछ। यो शब्द मैले त्यस बेला केही बढी गम्भीर भएर बुझ्ने प्रयास गरेँ, जब म छान्दोग्योपनिषद्मा पठित *'तत्त्वमसि'* वाक्यका सम्बन्धमा विशेष जानकारी प्राप्त गर्न प्रयासरत थिएँ। मेरो आश्रम अर्थात् घरमा हुने स्वाध्याय वा शास्त्रार्थका सन्दर्भमा एकदिन अद्वैत वेदान्तका विद्वान् जिज्ञासुहरूले कुन वेदाध्यायीका लागि श्रवणात्मक महावाक्य कुन हो ? भनेर जिज्ञासा व्यक्त गरे।

उक्त जिज्ञासा आएपछि धेरै लामो तर्कवितर्क र ऊहापोह चल्यो। जिज्ञासुहरूले शास्त्रीय वचन अनुसार प्रत्येक [१]शाखाध्यायी मुमुक्षुले आफ्आफ्नै शाखामा पठित महावाक्य आफ्नै शाखाध्यायी आधिकारिक श्रोत्रिय ब्रह्मनिष्ठ गुरुका मुखबाट श्रवण गर्नुपर्दछ, अन्यथा त्यसबाट ब्रह्मसाक्षात्कार हुनुको साटो [२]शाखारण्डको कलङ्क लाग्दछ र त्यो सर्वधर्म-बहिष्कृत पनि हुन्छ भने।

---

१ स्वाध्यायधर्मपठितं निजवेदशाखावेदान्तभूमिगतमादरपालितञ्च।
सन्न्यासिना परदृशा गुरुणोपदिष्टं साक्षान्महावचनमेव विमुक्तिहेतुः॥
– सङ्क्षेपशारीरकम् ३।२९५

२ हित्वा स्वस्य द्विजो वेदं यस्त्वधीते परस्य तु।
शाखारण्डः स विज्ञेयः सर्वधर्मबहिष्कृतः॥
– लघ्वाश्वलायनस्मृति : २४।१९

यसरी जिज्ञासुहरूले शास्त्रप्रमाण समेत दिएर आफ्नै वेदका शाखाको महावाक्यको श्रवण गर्दामात्रै ब्रह्मसाक्षात्कारको ढोका खुल्न सक्ने हुँदा त्यतैतिर अनुशीलन हुनुपर्ने भनेर आफ्नू शालीन अभिमत व्यक्त गरेका थिए। किन्तु त्यस सत्रमा उपस्थित एकजना स्वनामधन्य, आफूलाई अद्वैत वेदान्तको मूर्धन्य विद्वान्, ज्ञाता र वक्ता समेत ठान्ने आधिकारिक गुरुले म कसैको कुरा र प्रमाण पनि मान्दिन भन्दै सबैका लागि श्रवणात्मक महावाक्य एउटै तत्त्वमसि हो भनेर अनाधिकारिक अहङ्कारपूर्ण अभिमत व्यक्त गरे।

विद्वान्‌को त्यस प्रकारको मूढाग्रहयुक्त अहङ्कारपूर्वकको अभिमत सुनेपछि यस लेखकलाई दुःख लाग्यो र यो लेखक आश्चर्यचकित पनि भयो। अद्वैत वेदान्तका जिज्ञासु विद्यार्थीहरूलाई अद्वैतवेदान्त पढाउन विश्वविद्यालयबाट नियुक्त आधिकारिक विद्वान् गुरुको ज्ञान नै त्यस प्रकारको मिथ्या भएपछि त्यस्ता गुरुसँग पढेर विद्यार्थीहरू कसरी विद्वान् होलान् ? ब्रह्मजिज्ञासा गर्ने मुमुक्षुले ती गुरुबाट कस्तो ज्ञान प्राप्त गर्लान् र साक्षात्कार गर्लान् ? भनेर दुःख लाग्यो। त्यत्रो वर्ष अद्वैत वेदान्त पढेर र उपाधि लिएर ठूलो उच्चपदमा पुगेका विद्वान् गुरुको त्यस्तो सतही र बहिर्मुखी ज्ञानका साथै मूढाग्रह देखेर अत्यन्त आश्चर्य पनि लाग्यो।

त्यस दिनको ब्रह्माभ्यास वा शास्त्रार्थपछि यस जिज्ञासुले जिज्ञासा गरे अनुसारको उत्तर हाल नेपालमा उपलब्ध विद्वान्‌हरूबाट प्राप्त हुन नसक्ने भन्ने ठानेर लेखक निराश

पनि भयो। तत्त्वमसिलाई सबैको साझा महावाक्य भनेको सुनेपछि मलाई फेरि तत्त्वमसिको गहन अनुशील गर्ने इच्छा भयो। यसको चर्चा यसै ग्रन्थमा छापिएको *'तद्विज्ञानार्थं स गुरुमेभाभि गच्छेत्'* भन्ने लेखमा पनि भएको छ। यस लेखमा भने तत्त्वमसिको उपदेश गर्ने पृष्ठभूमिका क्रममा आएको [३]मन्त्रमा उपनिषद्ले सोझै आफैँले र छोरा श्वेतकेतुलाई सम्बोधन गर्ने सन्दर्भमा पिता उद्दालकले पनि भनेका *'महामना', 'अनूचानमानी'* र *'स्तब्ध'* तीनोटा शब्दहरूको छोटो विश्लेषण गरिने छ। विश्लेषण गर्नुभन्दा पहिले पादटिप्पणीमा आएको मन्त्रको अर्थ र विवेचना गर्नु सान्दर्भिक हुनेछ। ती श्वेतकेतु बाह्र वर्षको उमेरमा उपनयन भएपछि वेदाध्ययन गर्न गुरुसमक्ष गए। चौबीस वर्षको उमेर हुँदा सम्पूर्ण वेदहरूको अध्ययन गरेर आफूलाई ठूलो बुद्धिमान् र व्याख्याता ठान्दै उद्दण्डभावमा घर फर्किए। उपनिषद् मन्त्रले गरेको श्वेतकेतुको गुरुकुलमा बसेर पढाइसकेर घर फर्कंदाको यो प्रत्यक्ष वर्णन हो। त्यसपछि पिता उद्दालकले पनि उपनिषद्को उपर्युक्त भनाइलाई नै दोहोर्‍याउँदै 'हे सोम्य ! तिमी यस्तो महामना, पण्डितम्मन्य र अविनीत छौ, उसो भए के तिमीले त्यो आदेश तिम्रा गुरुलाई सोध्यौ ?' भनेर सोधे।

सम्पूर्ण वेद र वेदाङ्ग समेत गुरुसँग राम्रो पढेर अद्वैत

३ स ह द्वादशवर्षउपेत्य चतुर्विंशतिवर्षः सर्वान् वेदानधीत्य महामना अनूचान-मानी स्तब्ध एयाय। तं ह पितोवाच श्वेतकेतो यन्नु सोम्येदं महामना अनूचानमानी स्तब्धोऽस्युत तमादेशमप्राक्ष्यः। – छान्दोग्योपनिषद् ६।१।२

वेदान्तको विद्वान् भएर घर फर्किएका भए श्वेतकेतुले त्यसप्रकारले आफैँलाई महामना अर्थात् अरूभन्दा ठूलो मान भएको व्यक्ति अनुचानमानी अर्थात् अनुवचन गर्न समर्थ, ठूलो विद्वान् र श्रेष्ठतम प्रवक्ता ठान्ने थिएनन्। त्यतिमात्रै होइन उनी स्तब्ध, अविनीत र अहङ्कारी समेत भएर घर फर्किने थिएनन्।

उपर्युक्त उपनिषद्मा आएको महामना शब्दको अर्थ वामन शिवराम आप्टेले आफ्नो कोशमा सकारात्मक अर्थ दिने उदारमना, उदात्तमनस्क, उदाराशय र उदार आदि लेखेका छन् भने नकारात्मक अर्थ दिने घमण्डी, अभिमानी आदि पनि लेखेका छन्। त्यसै गरेर श्रीशङ्कराचार्यले [४]महामनाको अर्थ जसको मन महान् अर्थात् गम्भीर छ, अथवा जसको मनले अरूलाई आफू समान नठानेर आफूलाई अरूभन्दा फरक र ठूलो सम्झन्छ भनेर भाष्यमा लेख्नुभएको छ। [५]अनूचानमानीको अर्थ उहाँले आफूलाई ठूलो प्रवक्ता मान्ने भएको अर्थात् जो यस्तो स्वभावको भनेर पनि लेख्नुभएको छ। यस शब्दको अर्थ नरेन्द्रपुरिले अनुवचन गर्न समर्थ भन्ने लेख्नुभएको छ। संस्कृत नेपाली शब्दकोशले अनूचानको अर्थ साङ्गोपाङ्ग वेद पढेको, वेदको अर्थ जान्ने, विद्याप्रेमी र विनय भएको भन्ने र अनुचानमानीको अर्थ चाहिँ आफूलाई

४ महामना महद्गम्भीरं मनो यस्यासममात्मानमन्यैर्मन्यमानं मनो यस्य सोऽयं महामना।

५ अनूचानमान्यनूचानमात्मात्मानं मन्यत इत्येवंशीलो यः सोऽनूचानमानी।

वेदको अर्थ जान्ने भनी ठान्ने लेखेको छ। अर्को शब्द स्तब्धको अर्थ उक्त कोशले हठ गर्ने हठी, जिद्दी गर्ने अभिमानी, घमण्डी, जड आदि लेखेको छ भने संस्कृत हिन्दीकोशले संज्ञाहीन, ढीट, कठोरहृदय, निष्ठुर, उद्दण्ड आदि धेरैथरी नकारात्मक अर्थहरू दिएको छ। श्रीशङ्कराचार्यले स्तब्धको अर्थ आफ्नू भाष्यमा अप्रणतस्वभाव अर्थात् अविनीत स्वभाव भन्नुभएको छ। ती शब्दहरू प्रकृत प्रसङ्गमा श्वेतकेतुका विशेषण भएर आएका छन्।

उपनिषद्ले सोझै भनेको र त्यसैलाई अनुवचनद्वारा पिता उद्दालकले श्वेतकेतुलाई सम्बोधन गर्दै व्यक्त शब्दहरूद्वारा श्वेतकेतुले गुरुकुलमा बसेर वेद र वेदाङ्ग अर्थ सहित पढेर आत्मसात् गरेको देखिँदैन। यदि उनले वेदका शिरोभाग वा ज्ञानभागलाई श्रोत्रिय ब्रह्मनिष्ठ गुरुसँग गुरुमुखी भएर पढेका र त्यसलाई मनन समेत गरेर आत्मसात् गरेका भए उनमा महामना र अनुचानमानीको भावना पैदा हुने थिएन। उनले स्तब्धको नकारात्मक उपाधि पाउने नै थिएनन्। वस्तुतः ब्रह्मज्ञानी भएर गुरुकुलबाट उपकुर्वाण ब्रह्मचारीको रूपमा श्वेतकेतु घर फर्किएका भए उनी विनीत हुन्थे। ब्रह्मविद्याले मानिसलाई विनय प्रदान गर्छ। उनी घमण्डरहित, उदार, विनयशील र अहङ्काररहित हुने थिए। किनभने ब्रह्मविद्याबाट अन्तःकरणका मलदोष र विक्षेपदोषका साथै अहङ्कारको आवरणको जालो भङ्ग भएपछि ब्रह्मज्ञानी, शान्त, सरल, सहज, घमण्डरहित, अहङ्कारशून्य, मर्यादापालक र विनीत

समेत हुन्छ। उपर्युक्त गुणहरूको अभाव देखेपछि उपनिषद् र पिता उद्दालकले समेत श्वेतकेतुलाई महामना, अनूचानमानी र स्तब्ध समेतको विशेषण दिएको देखिन्छ।

उपर्युक्त परिप्रेक्ष्यमा पिता उद्दालकलाई छोरो श्वेतकेतुले गुरुकुलमा राम्रो नपढेको र ब्रह्मविद्या नपढीकनै घर फर्किएको भान हुन्छ। त्यसपछि उद्दालकले उमेर पुगिसकेको अविनीत छोरालाई गुरुकुलमा गुरुसँग ब्रह्मविद्या पढे नपढेका विषयमा सोझै सोद्धा सही उत्तर आउने कुरामा आशङ्का गरेर उनले उद्दण्डता प्रदर्शन गर्न सक्ने सम्भावना पनि देखेर होला उद्दालकले घुमाउरो पाराले कूटनीतिक भाषामा 'उत तमादेशमप्राक्ष्यः' अर्थात् के तिमीले गुरुसँग त्यो आदेश सोध्यौ ? भनेर प्रश्न गरेका थिए।

वस्तुतः उद्दालकले श्वेतकेतुलाई *'उत तद्ब्रह्म अप्राक्ष्यः'* भनेर प्रसिद्ध ब्रह्मशब्दद्वारा नसोधेर अप्रसिद्ध आदेश शब्दद्वारा प्रश्न गरेको देखिन्छ। यस उपनिषद्मा चेतन ब्रह्मको उपदेश नगरेर सद् आत्माको उपदेश गरिने भएकाले सायद ब्रह्मशब्दको प्रयोग उद्दालकले नगरेका होलान्। वैदिक प्रयोगमा *'एष आदेश', 'आदेश आत्मा'* आदि शब्दहरूको प्रयोग भएको देखिन्छ। आदेशका सम्बन्धमा [६]श्रीशङ्कराचार्यले आफ्नू भाष्यमा जसको उपदेश गरिन्छ, त्यसलाई आदेश भनिन्छ भनेर लेख्नुभएको छ। यसबाट ब्रह्म केवल शास्त्र र गुरुका

---

६ आदिश्यत इत्यादेशः केवलशास्त्राचार्योपदेशगम्यमित्येतत्, येन वा परं ब्रह्मादिश्यते स आदेशः। – छान्दोग्योपनिषद् ६।१।२ शा.भा.

उपदेशबाट नै ज्ञेय रहेछ भन्ने ज्ञात हुन्छ। जसका द्वारा परब्रह्मको उपदेश गरिन्छ त्यसलाई आदेश भनिन्छ। अर्को उपनिषद्मा [७]'यसका पश्चात् नेति नेति यो ब्रह्मको आदेश हो' भनिएको छ। यो आदेश निषेधमुखले सोझै श्रुतिद्वारा गरिएको चिद्ब्रह्मको उपदेश हो भन्ने बुझाउँछ।

छान्दोग्योपनिषद्मा अध्याय ३।१२।६ र ७, ४।१५।४, ८।१।१ र ८।१४।१ देखि बाहेक अन्यत्र ब्रह्मको सोझै उपदेश नगरेर अप्रत्यक्षरूपमा सत्, भूमा आदि शब्दहरूद्वारा ब्रह्मको उपदेश गरेको देखिन्छ। यस प्रकृत प्रसङ्गमा पनि सोझै चेतन ब्रह्मको उपदेश नगरेर सद् आत्माको उपदेश उद्दालक मार्फत श्रुतिले गराएको देखिन्छ। किनभने उपक्रममा *'सदेव सोम्येदमग्र आसीत्'* बाट शुरु भएको प्रसङ्ग उपसंहारमा पुगेर *'इदं सर्वं तत्सत्यं स आत्मा तत्त्वमसि श्वेतकेतो इति'* मा समाप्त भएको हुँदा यसमा सद्ब्रह्मको उपदेश नगरेर सद् आत्माको नै उपदेश भएको देखिन्छ।

यहाँ उपर्युक्त प्रसङ्गको उल्लेख गर्नुको उद्देश्य सद्आत्मा वा सद्ब्रह्मको चर्चा गर्नु नभएर केवल श्वेतकेतुका विशेषणका रूपमा प्रयोग भएका महामना, अनूचानमानी र स्तब्ध शब्दहरूका परिप्रेक्ष्यमा दुई शब्दहरूको बीचमा आएको अनूचानमानी शब्दलाई श्वेतकेतुको प्रतीक बनाएर यसको नामकरण गर्नु हो। वस्तुतः अनूचानमानी यो शब्द श्वेतकेतुको अज्ञानको प्रतीकका रूपमा उपनिषद्मा प्रयोग भएको देखिन्छ।

---

७ अथात आदेशो नेति नेति। – बृहदारण्यकोपनिषद् २।३।६

श्वेतकेतु गुरुकुलमा ब्रह्मविद्या नपढीकन नै केवल अहङ्कार पालेर घर फर्केका देखिन्छन्। पिता उद्दालकले महामना र अनूचानमानी ठानेर घर आएका छोरालाई स्तब्धबाट विनीत र शालीन बनाउने दृष्टिबाट नै सद् आत्मा अर्थात् तत्त्वमसिको उपदेश गरेको देखिन्छ। गीताज्ञानको श्रवणपछि निवृत्तिमार्गमा नलागेर अर्जुन महाभारतको युद्धमा प्रविष्ट भएजस्तै तत्त्वमसि महावाक्यको श्रवणपछि श्वेतकेतु निवृत्तिमार्गतर्फ नलागेर प्रवृत्तिमार्ग अर्थात् गृहस्थाश्रममा प्रवेश गरेको देखिन्छ। किनभने पञ्चाग्निविद्या जान्ने गृहस्थ नै क्रममुक्तिको अधिकारी हुने कुरा [८]उपनिषद्हरूमा आएको छ।

पञ्चाग्निविद्याको ज्ञाता गृहस्थ नै देवयान मार्गद्वारा क्रममुक्तिमा जान सक्ने श्रुतिवचन भएको हुँदा श्वेतकेतु पाञ्चालदेशीय प्रवाहणसँग उक्त विद्या पढ्न गएको [९]छान्दोग्योपनिषद्बाट देखिन्छ। किन्तु यही विषय अर्को उपनिषद् [१०]बृहदारण्यकोपनिषद्मा केही फरक शैलीमा आएको छ। उपर्युक्त प्रवाहणका समक्ष पञ्चाग्निविद्या जान्न पिता

---

८ (क) ते य एक्मेतद् विदुर्ये चामी ... तेषां न पुनरावृत्तिः ।
— बृहदारण्यकोपनिषद् ६।२।१५
(ख) तद् इत्थं विदुः .... एष देवयानः पन्था इति ।
— छान्दोग्योपनिषद् ५।१०।२

९ श्वेतकेतुर्हारुणेयः पञ्चालानांसमितिमेयाय तं ह प्रवाहण जैवलिरुवाच
— छान्दोग्योपनिषद् ५।३।१

१० श्वेतकेतुर्ह वा आरुणेयः पञ्चालानां परिषदमाजगाम स आजगाम जैवलिं प्रवाहणम् । — बृहदारण्यकोपनिषद् ६।२।१

उद्दालकको आदेश अनुसार श्वेतकेतु जान्छन्। तर प्रवाहणका परीक्षामा उत्तीर्ण हुन नसकेपछि उनी त्यसै घर फर्किन्छन्। पिता उद्दालक पनि पञ्चाग्निविद्यामा अनभिज्ञ भएकाले छोरा श्वेतकेतुलाई उपदेश गर्न सक्तैनन्। अतः सो विद्या जान्न उद्दालक आफैँ स्वयं नै प्रवाहण समक्ष जान्छन् । उद्दालकले प्रवाहणबाट पञ्चाग्निविद्या जानेर घर फर्किएपछि छोरा श्वेतकेतुलाई त्यसको उपदेश गरेहोलान् भन्न सकिन्छ। किनभने छोरा श्वेतकेतुका लागि उनी उक्त विद्या सिक्न गएका थिए। किन्तु यस उपनिषद्मा उद्दालकले श्वेतकेतुलाई उक्त विद्याको उपदेश गरेको प्रसङ्ग देखिँदैन।

उपर्युक्त अशास्त्रज्ञ, अव्यावहारिक, अविनीत र अनूचानमानी श्वेतकेतु पिताको उपदेशपछि विद्वान्, व्यावहारिक, विनीत र घमण्डरहित भएको हुनसक्ने देखिन्छ, तर उनी जीव र ब्रह्मको एकत्वको साक्षात्कार गरेर मुक्त भएको कुरा भने देखिँदैन। ॐ ब्रह्मार्पणमस्तु।

# ४. अन्तर्यामी

अन्तर्यामीको प्रसङ्ग बृहदारण्कोपनिषद्को तेस्रो अध्यायको सातौँ ब्राह्मणमा याज्ञवल्क्य र आरुणिका बीचमा भएको प्रश्नोत्तरका रूपमा आएको छ। आरुणिले अन्तर्यामीका सम्बन्धमा प्रश्नपूर्वकको जिज्ञासा याज्ञवल्क्यसँग राखेपछि यसको उत्तर विभिन्न उदाहरणहरू दिँदै तेस्रो मन्त्रदेखि लिएर तेइसौँ मन्त्रसम्ममा विस्तारपूर्वक दिन्छन्।

अन्तर्यामीको विषय अद्वैत वेदान्तमा ज्यादै महत्त्वपूर्ण मानिन्छ। यसै हुनाले भगवान् वेदव्यासले यसलाई अत्यन्त महत्त्व दिँदै ब्रह्मसूत्रमा छुट्टै अन्तर्याम्यधिकरण अन्तर्गत *'अन्तर्याम्यधिदैवादिषु तद्धर्मव्यपदेशात्, न च स्मार्तमतद्धर्माभिलापात् र शारीरश्चोभयेऽपि हि भेदेनैनमधीयते'* सम्मका तीनओटा सूत्रहरू प्रणयन गर्नुभएको छ।

आरुणिले अब तपाईं [१]अन्तर्यामीको वर्णन गर्नुहोस् भनेर याज्ञवल्क्यलाई अनुरोध गरेपछि यो प्रसङ्ग विस्तृतरूपमा अघि बढ्दछ। याज्ञवल्क्य भन्दछन् – [२]जुन अन्तर्यामी पृथिवीमा नै पृथिवीका भित्र छ, तर त्यसलाई पृथिवी जान्दिनन्। जसको

---

१ याज्ञवल्क्यान्तर्यामिणं ब्रूहीति। – बृहदारण्यकोपनिषद् ३।७।३

२ यः पृथिव्यां तिष्ठन् पृथिव्या अन्तरो यं पृथिवी न वेद यस्य पृथिवी शरीरं यः पृथिवीमन्तरो यमयत्येष त आत्मान्तर्याम्यमृतः।

– बृहदारण्यकोपनिषद् ३।७।३

पृथिवी शरीर हो र भित्रै बसेर जसले पृथिवीलाई नियमन गर्दछ, त्यही नै तिम्रो आत्मा अन्तर्यामी अमृत हो।

त्यसपछि क्रमिकरूपमा जल, अग्नि, अन्तरिक्ष, वायु, द्युलोक, आदित्य, दिशा, चन्द्रमा, आकाश, तमस्, तेज, विज्ञान र अन्त्यमा वीर्यमा समेत रहने यो तिम्रो आत्मा अन्तर्यामी अमृत हो। यसदेखि भिन्न सबै नाशवान् हुन् भनेर याज्ञवल्क्यले उत्तर दिएपछि अरुणका पुत्र उद्दालक प्रश्न सोध्नबाट निवृत्त भए।

उपर्युक्त अनुसार बाहिरी स्थूल पृथ्वीदेखि लिएर प्रत्येक प्राणीका शरीरभित्र रहेको अत्यन्त सूक्ष्म ऊर्जारूप रेत अर्थात् वीर्यभित्र पनि रहने आत्मा नै अन्तर्यामी अमृत हो भन्ने प्रतिज्ञास्वरूप विषय उपनिषद्का एक्काइस मन्त्रहरूबाट उत्थापन भएको देखिन्छ। यस विषयमा देवता, लोक, वेद, यज्ञ, भूत र आत्मामा रहेर तिनीहरूको नियन्त्रण गर्ने भएको कुनै अन्तर्यामी छ भन्ने कुरा उपर्युक्त श्रुतिबाट प्रतीत हुन्छ भनेर श्रीशङ्कराचार्यले संशय उठाउनुभएको छ। उहाँले विप्रतिपत्तिका रूपमा के त्यो अधिदैव आदिको अभिमानी कुनै देवतात्मा हो ? अथवा अणिमादि ऐश्वर्य प्राप्त गरेको कुनै योगी हो ? अथवा परमात्मा हो ? अथवा कुनै अर्को अतिरिक्त पदार्थ हो ? भन्दै विभिन्न विकल्पहरू दिएर अन्तर्यामीरूप अपूर्व नामका श्रवणबाट यस्तो संशय हुन्छ भन्ने कुरा आफ्ना भाष्यमा उठाउनु भएको देखिन्छ। त्यतिमात्रै होइन साङ्ख्यमतसम्मत प्रधान पनि अन्तर्यामी हुनसक्ने  भन्दै संशय पनि आएको छ।

उपर्युल्लिखित संशयमा सयुक्तिक पूर्वपक्ष राख्तै देवता, योगी, परमात्मा आदि कुनै पनि अन्तर्यामी नभएर जीवात्मा नै अन्तर्यामी हो भनेर पूर्वपक्षीले आफ्नो मत राखेका छन् । किनभने जगत्का नियन्ता धर्माधर्मादि यद्यपि अनेक छन्, तथापि अदृष्टत्वरूप जातिलाई ध्यानमा राखेर 'यः' र 'यमयति' भन्ने उपनिषद्मा आएका शब्दहरूको सङ्गति जीवात्मामा नै अन्तर्यामी हो भनेर पूर्वपक्षी भन्दछन् ।

उक्त पूर्वपक्षको खण्डन गर्दै जीव अन्तर्यामी नभएर परमात्मा नै अन्तर्यामी भएको श्रुतिसम्मत पक्ष सिद्धान्ती अगाडि सार्दछन् । जीवात्मा र परमात्मा उपाधिका कारणले पृथक् जस्ता देखिए तापनि परमार्थतः दुवैमा ठूलो पार्थक्य देखिँदैन । किनभने *'एष त आत्माऽन्तर्याम्यमृतः'* भनेर यस श्रुतिमा जीवसँग परमात्माको अभेद देखाइएको छ । त्यतिमात्र नभएर परमात्मामा अमृतत्वको वर्णन पनि आएको छ । यसका अतिरिक्त प्रकृत अन्तर्यामी ब्राह्मणका पृथिवी, आकाश आदि सबै पदार्थहरूमा अन्तर्यामित्वको उपदेश आएको छ । यसबाट अन्तर्यामीमा सर्वव्यापकत्व प्रतीत हुन्छ ।

यसरी यस उपनिषद्मा वर्णित अन्तर्यामी परमेश्वर नै भएको तथ्य स्थापित हुन्छ । किनकि श्रुतिले त्यसलाई [३]नदेखिने भए पनि द्रष्टा हो, नसुनिने भएर पनि श्रोता हो, मननको

---

३ अदृष्टो द्रष्टाश्रुतः श्रोतामतो मन्ताविज्ञातो विज्ञाता नान्योऽतोऽस्ति द्रष्टा नान्योऽतोऽस्ति श्रोता नान्योऽतोऽस्ति मन्ता नान्योऽतोऽस्ति विज्ञातैष त आत्मान्तर्याम्यमृतोऽतोऽन्यदार्तम् । – बृहदारण्यकोपनिषद् ३।७।२३

विषय नभए पनि मनन गर्ने हो र विशेषतया ज्ञात नहुने भएर पनि जान्ने चाहिँ हो भनेको छ। यसदेखि बाहेक अर्को द्रष्टा छैन, यसदेखि बाहेक अर्को श्रोता छैन, यसभन्दा बाहेक अर्को मन्ता छैन, यसदेखि बाहेक अर्को विज्ञाता छैन, त्यही तिम्रो आत्मा अन्तर्यामी हो। त्यसदेखि बाहेक  अरू सबै नाशवान् हुन् भनेको छ।

बृहदारण्यकोपनिषद्को अन्तर्यामी ब्राह्मणमा आएको अन्तर्यामी प्रधान अचेतन भएकाले अन्तर्यामी हुन सक्तैन। पृथिव्यादि अभिमानी देवताहरू चेतन भए पनि तिनीहरूमा सर्वलोक नियन्तृत्व नभएकाले अन्तर्यामी हुन सक्तैनन्। सर्वऐश्वर्यसम्पन्न योगी अरू सम्पूर्ण शक्ति भए तापनि जगत्को सृष्टि आदि काम गर्ने अधिकार तिनलाई नभएकाले उनी अन्तर्यामी हुनसक्तैनन्। आफ्नू पूर्वजन्मको सञ्चित कर्मजन्य प्रारब्ध कर्मद्वारा प्रदत्त कर्मफलको भोग गर्न आएको शक्तिहीन जीव पनि अन्तर्यामी हुन नसक्ने भएकाले सर्वशक्तिमान् तथा सबैको अभिन्न निमित्त उपादान कारण भएको मायाधीश परमात्मा नै अन्तर्यामी भएको श्रौतसिद्धान्त स्थापित हुन्छ। ॐ ब्रह्मार्पणमस्तु।

# ५. अन्धन्तमः प्रविशन्ति

यो उपनिषद् वाक्य हो। यसबाट प्रतीकात्मकरूपमा अज्ञान, अविद्या, अन्धकार र तदुपलक्षित अज्ञानी वा अज्ञलाई पनि लिनु पर्दछ। अद्वैतवेदान्तमा अज्ञान अर्थात् अविद्यालाई निष्प्रतियोगिक भावात्मकरूपमा लिइन्छ। यसै अविद्या र अज्ञानका सहायताबाट ब्रह्मले प्रपञ्च विवर्तका रूपमा रच्तछ। ती हुन् [1]अनिर्वाच्या अनादि मूला अविद्या र अन्तःकरणावच्छिन्न अज्ञान वा अविद्या।

यस प्रकृत प्रसङ्गमा समग्र अविद्या वा अज्ञानका विषयमा चर्चा नगरेर अन्धकारोपलक्षित अज्ञानका बारेमा सीमित भएर चर्चा गरिनेछ। भौतिक अन्धकार के हो ? यसको उपादानकारण के हो ? यो प्रकाशका अभावमा कताबाट आउँदछ ? र प्रकाशको उपस्थितिमा कता गएर विलीन हुन्छ ? इत्यादि कुरामा हाम्रा वेद र शास्त्रहरूका आधारमा विश्लेषण गर्ने प्रयास गरिनेछ।

अन्धकारका विषयमा केही प्रकाश पार्नुअघि अद्वैतवेदान्तमा भावात्मक अविद्या वा अज्ञानको आश्रय र विषयका सम्बन्धमा स्पष्ट पारेर त्यसको चर्चा गर्नु सान्दर्भिक हुनेछ। अविद्याले जीवात्मालाई आश्रय बनाएर ब्रह्मलाई

१ अनिर्वाच्याविद्याद्वितयसचिवस्य प्रभवतो
विवर्ता यस्यैते वियदनिलतेजोऽबवनयः। – ब्रह्मसूत्र भामतीटीका १

विषय गर्दछ भन्ने सुरेश्वराचार्यको भनाइ देखिन्छ भने आचार्य सर्वज्ञात्ममुनि [२]अविद्याको आश्रय र विषय दुवै ब्रह्म हो भन्दछन् ।

[३]चिद्वस्तुलाई विषय गर्ने भएको त्यस अज्ञानले चिद्वस्तुको नै आश्रय लिन्छ। तिमिर, तमिस्र, तामिस्र, अन्धन्तमस, जडिमा, तमिस्रा, माया, जगत्, प्रकृति, अच्युतशक्ति, सान्ध्य, निद्रा, सुषुप्ति, अनृत, प्रलय र गुणसाम्य आदि शब्दहरूबाट त्यस निष्प्रतियोगिक भावरूप अज्ञानलाई लिइन्छ। यसैका आधारमा भावरूप अन्धकारको चर्चा गरिनेछ। संसारमा व्याप्त अन्धकार प्रकाशका अभावका आधारमा देखापरेको कुरा सबैले अनादिकालदेखि नै अनुभव गर्दै आएका छौँ।

सृष्टिको प्रथम अवस्थामा अर्थात् महाप्रलयका अवस्थामा सत्, असत् केही थिएनन्, त्यसवेला केवल अन्धकार थियो। त्यसै अन्धकारलाई आफूमा [४]लीन गरेर ब्रह्मले त्यसकै आधारमा जगत् प्रपञ्चको सृष्टि गर्दछ। ब्रह्म जब व्याप्त प्रकाशस्वरूप चित्तत्त्वलाई आफूमा नै समेटेर

---

२ आश्रयत्वविषयत्वभागिनी निर्विभागचितिरेव केवला ।
पूर्वसिद्धतमसो हि पश्चिमो नाऽऽश्रयो भवति नापि गोचरः ॥
– सङ्क्षेपशारीरकम् १।३१९

३ चिद्वस्तुनश्चिति भवेत्तिमिरं तमिस्रं तमिस्रमन्धतमसं जडिमा तमिस्रा ।
माया जगत्प्रकृतिरच्युतशक्तिरान्ध्यं निद्रा सुषुप्तिरनृतं प्रलयो गुणैक्यम् ॥
– सङ्क्षेपशारीरकम् १।३१८

४ स्वसृष्टमिदमापीय शयानम् । – भागवत १०।८७।१२

केवल आफ्नू सत्तारूप शक्ति शेष राखेर महाप्रलयका रूपमा परिवर्तित हुन्छ। त्यसपछि भावरूपा अविद्या अन्धकारका रूपमा त्यति बेलासम्म परिवर्तित भएर रहन्छे जबसम्म महासृष्टिको महाचैतन्यरूपी ब्रह्मचैतन्य पुनः जीवात्माका रूपमा प्रपञ्चमा प्रस्फुटित भएर बाहिर छर्रिंदैन। त्यसपछि प्रलयकालीन महारात्रि समाप्त भएर भौतिक मायिक तमस् देखापर्दछ।

उपर्युक्त अनुसार महा अन्धकारको परिचयपछि अब अनन्त विशाल ब्रह्माण्डमा रहेको यस अत्यन्त सानो सौर्यमण्डलमा व्याप्त रात्रिरूपी तमस्को चर्चा गर्नु सुगम हुन जान्छ। माथिका पङ्क्तिहरूमा उल्लेख भएभैँ अविद्यारूपी अन्धकारको कारण, आश्रय र विषय सबै कुरा ब्रह्म नै हो भनेर अद्वैत वेदान्तले भन्दछ। किन्तु सो कुरा सहजरूपमा सामान्य मान्छेले बुभ्न सक्ने देखिँदैन। किनभने सामान्य लौकिक व्यवहारमा पनि सूर्य उदाएपछि रातको गहन अन्धकारको नाश हुन्छ र घरभित्रको अँध्यारो बत्ती बालेपछि नाश हुने गर्दछ। त्यसैगरेर स्वप्रकाश ब्रह्मका अगाडि तमोमयी [५]माया, अविद्या वा अन्धकार पर्नै नसकेर पर भाग्ने भनेर शास्त्रहरूले भनेका छन् र लौकिक व्यवहारमा पनि सो कुरा देखिन्छ।

बिहान अरुणोदयका साथ विशाल व्योममण्डलमा प्रकाशपुञ्ज सूर्यको पदार्पण हुने बित्तिकै पृथ्वीलाई आवृत गरेर बसेको कालो तमोमय औँसीको अन्धकार क्षणभरमा नै

५ माया परैत्यभिमुखे च विलज्जमाना। – भागवत २।७।४७

फुस्स भएर विलीन हुन्छ र सूर्य अस्ताउने बित्तिकै फेरि पूर्ववत् पृथ्वीलाई निस्पष्ट कालो आवरणले आवृत गरेर अन्धकार लमतन्न भएर पसारिन्छ। त्यो अन्धकार सूर्य अस्ताचलमा पुग्दाखेरि कहाँ कसबाट उत्पन्न भएर आउँछ ? र सारा द्यौ र पृथ्वीसमेतलाई अन्धकारयुक्त बनाउँछ ? अर्को दिन प्रातमा सूर्यको प्रथम झुल्का पर्ने बित्तिकै हाम्रो दृष्टिपथको धर्ती र आकाशसमेतबाट त्यो अन्धकार कहाँ गएर हराउँछ वा विलीन हुन्छ ? अर्थात् अन्धकारको जन्मदाता वा उपादानकारण के हो ? उपादान कारण थाहा पाएपछि त्यस अन्धकारको लयस्थान पनि थाहा हुन्छ। किनभने कार्यको जहिले पनि उसको कारणमा नै लय हुन्छ। कार्य र कारणको सिद्धान्त यही हो। उदाहरणका लागि सम्पूर्ण माटोका कार्य अर्थात् विकारहरू अन्तिममा गएर माटोमा नै लीन हुन्छन्।

यसरी विचार गर्दा निष्प्रतियोगिक भावरूप अन्धकारको कुनै न कुनै कारण हुनु अनिवार्य छ। पारमार्थिकरूपमा जसरी शुद्ध ब्रह्मलाई नै अविद्याको कारण र आश्रय समेत मानिन्छ भने व्यावहारिकरूपमा अन्धकारको कारण र आश्रय पनि जगत्प्रकाशक सूर्यलाई श्रुतिले मानेको देखिन्छ। [६]मित्र र वरुणलाई हेर्नका लागि सूर्य द्युलोकमा आफ्नू स्वरूपलाई प्रकट गर्दछन्। सूर्यको चम्किलो तेजःस्वरूप अनन्त छ। सूर्यको अर्को कृष्णस्वरूपलाई रसहारिणी रश्मिहरूले वहन गर्दछन्।

---

६ तन्मित्रस्य वरुणस्याभिचक्षे सूर्यो रूपं कृणुते द्योरूपस्थे।
अनन्तमन्यद्रुशदस्य पाजः कृष्णमन्यद्धरितः सम्भरन्ति ॥
— शुक्लयजुर्वेदसंहित। ३३।३८

उपर्युक्त अनुसार सूर्यका केही रश्मिहरूलाई शुक्ल यजुर्वेदले कालो रश्मि भनेको छ। यस कुरालाई अज्ञ मनुष्यहरूले सहजै विश्वास गर्नसक्तैनन्। किनभने त्यस्तो असह्य चम्किलो सूर्यका तेजमा कसरी कालो अन्धकार रहन सक्तछ भन्ने सम्झन्छन् ? यस रहस्यलाई स्पष्ट पार्दै अर्को मन्त्रले पनि यसै कुराको पुष्टि गर्दै कालो रातको स्तुति गरेको छ। श्रुति भन्दछ – [७]हे रात्रि ! अन्तरिक्षस्थानका साथसाथै तिमीले यस पार्थिवलोकलाई पनि सर्वथा आपूरित गरेकी छ्यौ। अर्थात् पोषक सूर्यका काला तेजद्वारा हे रात्रि ! तिमीले पृथ्वीलोकलाई भरिदिएकी छ्यौ। हे महति रात्रि ! तिमी द्युलोकका पनि सबै स्थानहरूलाई अभिव्याप्त गरिरहेकी छ्यौ। अर्थात् अन्धकारलाई आफ्नू पूर्ण प्रदीप्तिका साथ सर्वत्र फैलिइरहेकी छ्यौ।

उपर्युक्त श्रुति अनुसार सूर्यका प्रखर तेजभित्र नै गहन अन्धकार पनि अन्तर्निहित भएर रहेको देखिन्छ। सूर्यको त्यसै कालो रश्मिलाई पृष्ठभूमि बनाएर सूर्यको सेतो रश्मि चम्किन्छ। भौतिक विज्ञानले पनि कालो कार्वोन आदिबाट नै चम्किलो प्रकाशको उत्पादन हुने भन्दछ। सूर्यको तातो र चम्किलो रश्मिद्वारा सम्पूर्ण भूतभौतिक सृष्टिले दिनमा ऊर्जा प्राप्त गर्दछ भने रातको कालो सूर्यका रश्मिद्वारा पोषण र अभिवर्द्धनको रस प्राप्त गर्दछ। रातको त्यही सूर्यको कालो

---

७ आ रात्रि पार्थिवं रजः पितुरप्रायि धामभिः ।
दिवः सदांसि बृहती वितिष्ठस आ त्वेषं वर्तते तमः ॥
– शुक्लयजुर्वेदसंहिता ३४।३२

रश्मि दिनमा तेजिलो प्रकाशमा परिवर्तित हुन्छ भने सूर्यको त्यही प्रकाश रातमा गहन, निवीड र घोर चम्किलो कालरात्रिमा विवर्तित हुन्छ। श्रुतिका उपर्युक्त मन्त्रहरूले दिएको गूढ अर्थ यही हो। दिन र रात दुवै जन्माउने भएकाले सूर्यलाई वेदले सविता भनेको हो। किनभने क्षण, पल, घडी, दिन, रात, पक्ष, महिना, वर्ष, कल्प, युग समेतको काल सूर्यका रश्मिबाट नै जन्मने र अन्त्यमा त्यसै रश्मिमा नै विलीन हुने गर्दछन्।

उपर्युक्त अनुसार सूर्यका रश्मिलाई आधार बनाएर नै अद्वैत वेदान्तले आफ्नू सिद्धान्तको महल खडा गरेको देखिन्छ। स्वप्रकाश ब्रह्मबाट निःसृत तमोमय निष्प्रतियोगिक अविद्याको आधारमा नै सृष्टि प्रपञ्च विवर्तित हुन्छ भन्ने अद्वैत वेदान्तको मत देखिन्छ। सूर्यका प्रकाशपुञ्ज भित्र लुकेर बसेको कालो रश्मिले भरण पोषण गरे जस्तै स्वप्रकाश ब्रह्मको सत्ता पाएको अविद्याले सम्पूर्ण भूतभौतिक जगत्लाई आपूरित र सञ्चालन गरेको छ। शुरुमा त्यो तमोरूपा अविद्या निस्पट्ट अन्धकारका रूपमा रहेको भनेर अर्को [८]वेदको मन्त्रले भनेको छ।

माथिको सङ्क्षिप्त विवेचनबाट स्वप्रकाश शुद्ध बह्मको सत्ता र आश्रय पाएर जसरी तमोरूपा अविद्याको वर्चस्व रहन्छ त्यसैगरेर प्रकाशपुञ्ज सूर्यको आश्रय र सत्ता पाएर अन्धकारको अस्तित्व रहने तथ्य उपर्युक्त अनुसार श्रुतिद्वारा

---

८ तम आसीत्तमसा गूढमग्रे प्रकेतम्। – तैत्तिरीयब्राह्मण २।८।९

उद्घाटित भएको छ। किनभने गहन तमस् वा अन्धकार पनि सूर्यको कृष्णरश्मि अर्थात् कालो तेज हो। स्वयंप्रकाश परमात्मा सत्ता र [१]अन्तर्यामी मनरूपले तमस्का भित्र रहने परमार्थ सत्य श्रुतिले स्पष्टै उद्घोष गरेको छ। सूर्यको जाज्वल्यमान प्रकाशपुञ्जमा जसरी कालो अन्धकार लुकेको हुन्छ, त्यसरी नै स्वप्रकाश ब्रह्ममा नै अविद्या वा अन्धकार लुकेको हुन्छ। प्राणीहरूका अन्तःकरण वा बुद्धिमा प्रतिभासित चिदाभासको आश्रयमा नै अज्ञान पनि लुकेर बसेको हुन्छ। त्यसलाई नाश गरेर शुद्ध प्रकाशरूप हुनु नै मुक्त हुनु हो, ब्रह्म हुनु हो। नाश गर्न नसक्नु अन्धकारमा पस्नु हो। ॐ ब्रह्मार्पणमस्तु।

---

१. यः पृथिव्यां तिष्ठन् पृथिव्या अन्तरो यं पृथिवी न वेद यस्य पृथिवी शरीरं यः पृथिवीमन्तरो यमयत्येष त आत्मान्तर्याम्यमृतः ।

– बृहदारण्यकोपनिषद् ३।७।३

# ६. अभयं ब्रह्म

संस्कृतमा भयार्थक ञिभी धातुबाट अच् प्रत्यय भएर भयम् र नञ् समास भएपछि अभयम् शब्द बन्दछ। नेपालीमा अभय हुन्छ। यसका सामान्य अर्थहरू निर्भय, सुरक्षित, भयमुक्त आदि हुन्छन्। किन्तु अद्वैत वेदान्तमा [१]अभयंको अर्थ ब्रह्म हुन्छ।

गीतामा अभयलाई [२]दैवी सम्पदाका रूपमा पनि लिएको देखिन्छ। त्यसै अभयात्मक दैवीसम्पत्तिबाट नै मुमुक्षु ज्ञानमार्गको पथिक बन्न सक्तछ। दैवीसम्पत्ति सत्त्वगुणात्मक बुद्धिवृत्ति हो। मुमुक्षुले साधनचतुष्टयसम्पन्न भएपछि गुरूपसत्तिपूर्वक दर्शनार्ह अर्थात् दर्शन गर्न योग्य ब्रह्मसाक्षात्कार गर्नका लागि श्रवण, मनन र निदिध्यासन गर्नुपर्दछ। त्यसपछि मुमुक्षुको बुद्धिवृत्ति पनि ब्रह्म जस्तै [३]अत्यन्त निर्मल, अत्यन्त स्वच्छ र अत्यन्त सूक्ष्म भएपछि ऊ मुक्त हुन्छ। मुक्त हुनु भनेको ब्रह्म हुनु हो। भविष्यद्वृत्तिका दृष्टिले गीताले ब्रह्म प्राप्तिका साधनहरूलाई पनि अभय नै भनेको देखिन्छ।

---

१ अभयं वै ब्रह्म, अभयं हि वै ब्रह्म। – मा. शतपथब्राह्मण १४।७।२।२१,३१

२ अभयं सत्त्वसंशुद्धिः। – गीता १६।१

३ अत्यन्तनिर्मलत्वस्वच्छत्वसूक्ष्मत्वोपपत्तेरात्मनो बुद्धेश्चात्मसमनैर्मल्याद्युपपत्तेरात्मचैतन्याकाराभासत्वोपपत्तिः।
– गीता १८।५० शाङ्करभाष्य

संसारमा सबै वस्तुहरू भयद्वारा आक्रान्त छन्। [४]भोगमा रोगको भय हुन्छ। कुलीनतमा पतन हुने भय हुन्छ। धनसम्पत्तिमा सरकारको भय हुन्छ। मनमा दीनताको भय हुन्छ। बलशालीलाई आफूभन्दा बलिया शत्रुको भय हुन्छ। रूपमा बुढ्याइँको भय हुन्छ। शास्त्रमा वादीको भय हुन्छ। गुणमा दुष्टको भय हुन्छ। शरीरमा कालको भय हुन्छ। यसरी संसारका सबै वस्तुहरू भयले व्याप्त छन् भने यी सबैबाट विरक्त भएर ब्रह्मचिन्तन गर्नुमा अभय छ।

वासना निवृत्त नभएका मोक्षार्थीले जतिसुकै प्रयास गरे तापनि त्यस्ता पुरुषलाई अभय ब्रह्म प्राप्त हुन सक्तैन। त्यस्तो [५]अजितेन्द्रिय संसारी पुरुषलाई सर्वत्र भय भइरहन्छ। वनको एकान्त गुफामा गएर बसे पनि मृत्युको भय भइरहन्छ। त्यस्ता मनोनाश नभएका संसारीलाई कामक्रोधादि षट्शत्रुहरूले जहाँ बसे पनि छोड्दैनन्। उसलाई दुःख दिने उसका तिनै शत्रु हुन्छन्। यिनकै कारण उसलाई सर्वदा र सर्वत्र भय भइरहन्छ। किन्तु जुन मुमुक्षुले अन्तःकरणमा जन्मजन्मान्तरदेखि जमेर बसेको वासनालाई ज्ञानाग्निद्वारा भस्म गरेर अभय ब्रह्मको

---

४ भोगे रोगभयं कुले च्युति भयं वित्ते नृपालाद्भयम्
मानेे दैन्यभयं बले रिपुभयं रूपे जराया भयम्।
शास्त्रे वादिभयं गुणे खलभयं काये कृतान्ताद्भयम्
सर्वं वस्तु भयान्वितं भुवि नृणां वैराग्यमेवाभयम्॥ – वैराग्यशतक ३१

५ भयं प्रमत्तस्य वनेष्वपि स्याद् यतः स आस्ते सहषट्सपत्नः।
जितेन्द्रियस्यात्मरतेर्बुधस्य गृहाश्रमः किन्नु करोत्यवद्यम्॥
– भागवत ५।१।१७

साक्षात्कार गरेको ज्ञानी चाहिँ जीवन्मुक्त हो। उसले कहीँ पनि जानु आवश्क छैन। त्यस्ता मुक्त पुरुषलाई घरले बिगार्न सक्तैन। किनभने ऊ अभय ब्रह्म भइसकेको हुन्छ।

[६]भय त्यस्ता संसारी पुरुषलाई हुन्छ जसले परमात्मालाई बिर्सिएको छ र ऊ मायिक विषयमा चुर्लुम्म डुबेको छ। त्यस्ता द्वैतबुद्धि भएकाहरूलाई परमात्माकी मायाले उल्टो ज्ञान गराइदिन्छे। त्यसै कारण ऊ गौण आत्मा र मिथ्या आत्मालाई नै आफ्नू आत्मा ठानेर त्यसमा हिरिक्क भइरहन्छ। त्यस्तैलाई नै जन्ममृत्यु आदिका भयले सताइरहेको हुन्छ। यस भयबाट छुट्कारा पाउन अभय ब्रह्मको चिन्तन गर्नुपर्दछ।

यस [७]परमार्थतत्त्वलाई अस्पर्शयोग भनिन्छ। किनभने यसमा सबै प्रकारका सम्बन्ध रूप स्पर्शादिको अभाव छ। यसैकारण उपनिषद्मा यो अस्पर्श योगका नामबाट प्रसिद्ध छ। वेदान्तप्रतिपादित विज्ञानले रहित सबै योगीहरूद्वारा यो दुर्दर्श छ। यसलाई अत्यन्त मुस्किलले देख्न सकिन्छ। यो ता केवल आत्मसत्यानुबोधका लागि गरिएका आयासबाट मात्रै प्राप्त हुन योग्य छ। किनभने सम्पूर्ण भयद्वारा रहित भएर पनि कर्मनिष्ठ वैदिक व्यक्तिहरू यस अभय ब्रह्ममा भय देख्तछन्। तिनीहरू यस अस्पर्शयोगलाई आत्माको नाशस्वरूप

---

६ भयं द्वितीयाभिनिवेशतः स्यादीशादपेत पिपर्ययोऽस्मृतिः ।
— भागवत ११।२।३७

७ अस्पर्शयोगो वै नाम दुर्दर्शः सर्वयोगिभिः ।
योगिनो बिभ्यति ह्यस्मादभये भयदर्शिनः ॥ — माण्डूक्यकारिका ३।३९

सम्भन्छन् । यस भयशून्य योगमा पनि तिनीहरू भय देख्तछन् । अभय ब्रह्ममा भय देख्नु भनेको अन्तःकरण शुद्ध नहुनु हो । त्यस्तालाई अनादि दुर्वासनाद्वारा ग्रस्त संसारी हुन् भनेर बुझ्नु पर्छ ।

यसरी अभय ब्रह्ममा पनि भय देख्ने अज्ञानी हो । अभयरूप आफ्नै आत्मालाई पनि भयरूप देख्ने अज्ञानी बहिर्मुखी संसारी हो । त्यतिमात्रै होइन, कुनै व्यक्तिले अज्ञानवश [८]आत्मा र परमात्माका बीचमा अलिकति रौँ बराबर मात्रै पनि अन्तर ठान्दछ भने त्यस भेददर्शी पुरुषले भयङ्कर मृत्युरूप भय प्राप्त गर्दछ ।

जहाँ द्वैतबुद्धि हुन्छ त्यहाँ आत्माभन्दा बाहेक अरू वस्तु पनि अज्ञानीले देख्तछ । जब आत्मादेखि इतर वस्तु देख्न थाल्दछ, तब त्यसलाई भय हुन्छ । सबैतर्फ अभय ब्रह्म देख्न थालेपछि सबै आफूमात्रै रहन्छ, अद्वितीय आत्मा मात्रै सर्वत्र देखिन्छ र भय समाप्त हुन्छ । किनभने द्वैतबुद्धि भएमा मात्रै भय हुन्छ । जहाँ [९]एक अद्वितीय अभय ब्रह्म मात्रै छ भने को सँग को डराउने ?

अभय ब्रह्म नै [१०]भूमा हो । किनभने जहाँ अरू केही

---

८ आत्मनश्च परस्यापि यः करोत्यन्तरोदरम् ।
तस्य भिन्नदृशो मृत्युर्विदधे भयमुल्बणम् ॥ – भागवत ३।२९।२६

९ एकमेवाद्वितीयम् । – छान्दोग्योपनिषद् ६।२।१

१० यत्र नान्यत्पश्यति नान्यच्छृणोति नान्यद्विजानाति स भूमाथ यत्रान्यत्पश्यत्यन्यच्छृणोत्यन्यद् विजानाति तदल्पं यो वै भूमा तदमृतमथ यदल्पं तन्मर्त्यम् । – छान्दोग्योपनिषद् ७।२४।१

देख्तैन, अरू केही सुन्दैन र अरू केही जान्दैन त्यो भूमा हो। किन्तु जहाँ अरू केही देख्तछ, अरू केही सुन्दछ र अरू केही जान्दछ त्यो अल्प हो। जुन भूमा हो त्यही नै अमृत हो, त्यो अभय हो, त्यो ब्रह्म हो र त्यो मायातीत हो। किन्तु जुन अल्प हो, त्यो मर्त्य हो, त्यो भय हो र मायिक त्रिपुटी हो।

जहाँ द्वैत छ त्यहाँ भय छ, त्यहाँ मायिक प्रपञ्च छ। किन्तु जहाँ अद्वैत छ त्यहाँ अभय छ, अमृत छ र मायातीत ब्रह्म छ। तीव्र वैराग्य, मुमुक्षा र साधनचतुष्टय सम्पन्न नभएको सामान्य संसारीले वकवेदान्तीको रूपमा [११]यदि ब्रह्मचिन्तन गरिहाल्यो भने पनि केही समयका लागि संसारबन्धनको तीव्र भय निवृत्त भए जस्तो भए तापनि भयको निमित्तभूत उपादानकारण अविद्या वा अज्ञान समूल नष्ट नभएको हुँदा त्यस्तो क्षणिक ज्ञानीको भय फेरि फर्किएर आइहाल्दछ।

सधैँका लागि जन्ममृत्युको त्रासदिपूर्ण भयबाट मुक्त हुन अभय ब्रह्मको साक्षात्कार गर्नु बाहेक अर्को विकल्प छैन। [१२]ब्रह्मज्ञान नभईकन मुक्ति हुँदैन भन्ने श्रुतिको उद्घोष छ। तीव्र वैराग्यमा पुगेको साधनचतुष्टययुक्त मुमुक्षु कर्मद्वारा प्राप्त भएका यस लोकका र परलोकका भोगहरूसमेत अनित्य

---

११ क्वचित् तत्त्वावमर्शेन निवृत्तं भयमुल्बणम्।
अनिवृत्तनिमित्तत्वात्पुनः प्रत्यवतिष्ठते॥ – भागवत ३।२७।२०

१२ ऋते ज्ञानान्नमुक्तिः। – श्रुतिः

भएको जानेर विरक्त बनेर एकमात्र नित्य वस्तु ब्रह्मज्ञानतर्फ अग्रसर बनोस् र [१३]ब्रह्मज्ञानका लागि हातमा समिधा लिएर मुमुक्षु श्रोत्रिय ब्रह्मनिष्ठ गुरुका समक्ष गएर उपसत्तिपूर्वक गुरुबाट वैदिक महावाक्यको श्रवण गरोस्।

गुरुसँग गएर के र कस्तो उपदेश सुन्ने ? भन्ने जिज्ञासा उत्पन्न हुनसक्तछ। यसमा [१४]आफ्ना वेदशाखामा आएको वैदिक महावाक्यको श्रवण विधिपूर्वक गरेमात्रै त्यो मोक्षको हेतु हुनसक्तछ। महावाक्य श्रवण गरेपछि श्रद्धापूर्वक मनन र निदिध्यासन गर्नुपर्दछ। अन्यथा श्रवण गरेर मात्रै ब्रह्मसाक्षात्कार हुन सक्तैन भन्ने कुरा पनि मुमुक्षुले बुझ्नु पर्दछ।

शास्त्रमर्यादा र श्रुतिवचन अनुसार आफ्नै वेदशाखाको महावाक्य योग्य गुरुबाट नियम र विधिपूर्वक श्रवण गर्नुपर्दछ। प्रत्येक वेदीले आफ्नै शाखामा पठित महावाक्य सुन्नुपर्ने भएपछि हाल प्रचलित *'तत्त्वमसि'* महावाक्य सामवेदीहरूका लागि मात्रै श्रवणीय महावाक्य हो भनेर स्पष्टरूपमा बुझ्नु पर्दछ। उदाहरणका रूपमा आएको महावाक्यलाई सबै वेदीहरूले श्रवण गर्ने साझा महावाक्य हो भन्ने ठानेर गुरुले

---

१३ परीक्ष्य लोकान्कर्मचिन्तान्ब्राह्मणो निर्वेदमायान्नास्त्यकृतः कृतेन।
तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्॥
– मुण्डकोपनिषद् १।२।१२

१४ स्वाध्यायधर्मपठितं निजवेदशाखा वेदान्तभूमिगतमादरपालितञ्च।
सन्न्यासिना परदृशो गुरुणोपदिष्टं साक्षान्महावचनमेव विमुक्तिहेतुः॥
– सङ्क्षेपशारीरकम् ३।२९५

शिष्यलाई श्रवण गराउनु हुँदैन र शिष्यले श्रवण गर्नु पनि हुँदैन । यसबाट अभीष्ट प्राप्न नभएर अझ उल्टो प्रत्यवायको भागी गुरु र शिष्य दुवै हुनुपर्ने शास्त्रको वचन देखिन्छ ।

शुक्लयजुर्वेदशाखाध्यायीहरूका लागि श्रवणात्मक महावाक्य *'अभयं वै जनक प्राप्तोऽसि'* *(बृ.उ.४।२।४)* र अनुभवात्मक महावाक्य *'अहं ब्रह्मास्मि'* *(बृ.उ.१।४।१०)* भनेर *'तत्तु समन्वयात्'* *(ब्रह्मसूत्र १।१।४।१)* को आफ्नू भाष्यमा आद्यजगद्गुरु भगवत्पाद श्रीशङ्कराचार्यले लेख्नुभएको छ । यसबाट शुक्लयजुर्वेदशाखाध्यायीका लागि गुरुबाट श्रवण गर्नुपर्ने र अनुभव हुने महावाक्यको स्पष्ट ज्ञान हुन्छ ।

अरू वेदका शाखाका अध्येता मुमुक्षुले गुरुबाट श्रवण गर्ने वैदिक महावाक्यहरूको चर्चा गर्ने तर्फ नलागेर अब केबल माध्यन्दिनीय वाजसनेयिशुक्लयजुर्वेदशाखा-ध्यायीहरूले ब्रह्मज्ञानका लागि श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट श्रवण गरिने महावाक्यको चर्चा गरिनेछ । किनभने त्यो महावाक्य कुन हो ? भन्ने जिज्ञासा उत्पन्न भइरहेको भए तापनि त्यसको समाधान आजसम्म कतैबाट पनि भएको देखिँदैन । शास्त्रसम्मतरूपमा सामवेदीहरूका लागि छान्दोग्योपनिषद्मा पठित महावाक्य नै सबै वेदीहरूका लागि श्रवणीय वाक्य हो भनेर सतही र हचुवाका रूपमा विद्वान्हरूले लेख्ने र भन्ने गरेको देखिन्छ । किन्तु यस सन्दर्भमा पूर्वाग्रह, आलस्य र लापर्बाहीपनबाट निर्मुक्त भएर अद्वैत वेदान्तका विद्वान्, अनुसन्धाता र मुमुक्षुले समेत गम्भीर भएर श्रुति र

शास्त्रसम्मत चिन्तन गर्नु अति आवश्यक छ। अन्यथा सामवेदी इतर वेदशाखाका जिज्ञासु मुमुक्षुहरूले गुरुबाट श्रवण गर्ने महावाक्य नै नपाउँदा ब्रह्मसाक्षात्कारको मूलद्वार नै बन्द भएर संसृतिको कहालिलाग्दो दुश्चक्रमा अनन्त जन्मसम्म घुमिरहनु पर्ने हुन जान्छ। योभन्दा ठूलो दुर्भाग्य अर्को कुनै हुने छैन।

मुमुक्षुले आफ्नै वेदशाखा अन्तर्गतका उपनिषद्हरूमा पठित महावाक्य विधिपूर्वक श्रवण गर्नुपर्दछ। जसको शुक्लयजुर्वेदशाखा हो त्यस शाखा अन्तर्गत ईशावास्योपनिषद् र बृहदारण्यकोपनिषद् दुई उपनिषद् भएको पाइन्छ तापनि [१५]मुक्तिकोपनिषद्ले उन्नाइसओटा उपनिषद्हरू भएको विवरण दिएको छ। ती सबै उपनिषद्हरूमा नै श्रवण गर्ने महावाक्यहरूको खोजी गरेर गुरुबाट सुन्नुपर्दछ। छान्दोग्योपनिषद्मा पठित तत्त्वमसि महावाक्य उदाहरणका लागि मात्रै आकर, प्रकरण, विवरण ग्रन्थ र पुराणहरूमा समेत आएको हो। सबै वेदीहरूका लागि भनेर आएको होइन। सबै ठाउँमा *'तत्त्वमसि'* पछाडि इति र आदि शब्द जोडिएको हुन्छ। यसबाट *'तत्त्वमसि'* जस्तै अरू महावाक्यहरू प्रत्येक

---

१५ १. ईशावास्य, २. बृहदारण्यक, ३. जाबाल, ४. हंस, ५. परमहंस, ६. सुबाल, ७. मन्त्रिका, ८. निरालम्ब, ९. त्रिशिखिब्राह्मण, १०. मण्डलब्राह्मण, ११. अद्वयतारक, १२. पैङ्गल, १३. भिक्षुक, १४. तुरीयातीत, १५. अध्यात्म, १६. तारसार, १७. याज्ञवल्क्य, १८. शाट्यायनी र १९ मुक्तिका।

वेदशाखाका उपनिषद्हरूमा छन् भनेर बुझ्नु पर्छ। उदाहरणका लागि [१६]स्कन्दपुराण, [१७]देवीभागवत, [१८]वाक्यवृत्ति, [१९]बृहदारण्यकोपनिषद्वार्तिक समेतमा आएका सामवेदीय *'तत्त्वमसि'* महावाक्यलाई लिन सकिन्छ।

माथि गरिएको सङ्क्षिप्त विवेचनाबाट तत्त्वमसि महावाक्य सबै वेदीहरूका लागि श्रवण गर्ने वाक्य नभएर आफ्नै वेदशाखाको महावाक्य श्रवण गरेपछि दृढताका लागि आफैँले अध्ययन गर्नुपर्ने वाक्य रहेछ भन्ने थाहा हुन्छ। आफ्नै वेदशाखा अन्तर्गतका १९ ओटा उपनिषद्हरू भएको तथ्य मुक्तिकोपनिषद्ले उपर्युल्लिखित अनुसार दिएको भए तापनि प्रसिद्ध ईशावास्योपनिषद् र बृहदारण्यकोपनिषद् बाहेकका अरू उपनिषद्हरूमा जीवात्मा र परमात्माको ऐक्यबोधक श्रवणात्मक महावाक्यहरू पाइँदैनन्। ती बाहेकको ईशावास्योपनिषद्मा त्यो जुन [२०]आदित्यमा परम पुरुष छ, त्यो यही म हुँ भनेर आएको वाक्य श्रवणका लागि नभएर अनुभूतिका लागि भएको तथ्य

---

१६ तत्त्वमस्यादिवाक्यानामुपदेष्टा तु पार्वती।
कारणाख्यो गुरुः प्रोक्तो भवरोगनिवारकः ॥ – स्कन्दपुराण

१७ वेदान्तश्रवणं कुर्यान्नित्यमेवमतन्द्रितः।
तत्त्वमस्यादिवाक्यस्य नित्यमर्थं विचिन्तमेत् ॥ – देवीभागवत ७।३४।१८

१८ तत्त्वमस्यादिवाक्योत्थं यज्जीवपरमात्मनोः।
तादात्म्यविषयं ज्ञानं तदिदं मुक्तिसाधनम् ॥ वाक्यवृत्तिः ६
साक्षात्तत्त्वमसीति वेदवचसा यो बोधयत्त्याश्रितान्।
– श्रीदक्षिणामूर्तिर्सीतोत्रम् ३

१९ तत्त्वमस्यादिवाक्योत्थ सम्यग्धी जन्ममात्रतः।
अविद्या सहकार्येण नासीदस्तिभविष्यति ॥ – बृहदारण्यकोपनिषद्वार्तिक

२० योऽसावसौ पुरुषः सोऽहमस्मि। – ईशावास्योपनिषद् १६

श्रुतिले सङ्केतसम्म गरेको हो भनेर बुझ्नु पर्दछ।

उपर्युक्त वाक्यलाई [२१]जीव र आत्माको ऐक्य बुझाउने वाक्यका रूपमा नलिएर जसले ज्ञान र कर्मको समुच्चय गर्दछ, त्यसले अन्तकालमा आदित्यको प्रार्थना गर्दछ भनेर आफ्नो भाष्यमा श्रीशङ्कराचार्यले लेख्नुभएको छ। यसरी यो वाक्य ज्ञानकर्म समुच्चयकारीको अन्तःकालको प्रार्थनाका लागि रहेछ भन्ने भएपछि र बृहदारण्यकोपनिषद् बाहेकका अरू उपनिषद्हरूमा पनि श्रवण गर्ने र अनुभूति गर्ने समेत महावाक्यहरू नपाइएपछि बृहदारण्यकोपनिषद्भित्र नै खोज्नु पर्ने देखिन्छ।

बृहदारण्यकोपनिषद्मा धेरैथरी वाक्यहरू छन्। जसमा एकथरी वेदका आदेशका रूपमा आएका छन् भने अर्काथिरी उपदेशका रूपमा पनि आएका छन्। श्रुतिबाट सोझै भनिने वाक्यलाई आदेश र कुनै मानवपात्र श्रोत्रियब्रह्मनिष्ठ गुरु खडा गरेर उनका मुखबाट ब्रह्मसाक्षात्कार गराउन अर्थात् जीव र ब्रह्मको एकत्वको लागि मुमुक्षु अधिकारीलाई श्रवण गराउने र मुमुक्षुले साक्षात्कारपछि अनुभूति गर्ने वाक्यलाई महावाक्य भनिन्छ। "अब यसपछि *'नेति नेति'* यो ब्रह्मको आदेश हो भन्ने" वाक्य वेदको आदेश हो भने सामवेदीहरूका लागि उपदिष्ट *'तत्त्वमसि'* र यजुर्वेदीहरूका लागि उपदिष्ट *'अभयं वै जनक प्राप्तोऽसि'* मुमुक्षुका लागि उपदेश गरिने महावाक्य हो। सर्वप्रथम आदेशका बारेमा सङ्क्षिप्त चर्चा पश्चात् महावाक्यको

---

२१ यो ज्ञानसमुच्चयकारी सोऽन्तकाल आदित्यं प्रार्थयति। अस्ति च प्रसङ्गो गायत्र्यास्तुरीयः पादो हि सः तदुपस्थानं प्रकृतम्। अतः स एव प्रार्थ्यते।
– शाङ्करभाष्य, बृहदारण्यकोपनिषद् ५।१५।२

बारेमा छोटो चर्चा गर्नु प्रासङ्गिक हुनेछ। [२२]मायाको कार्य र माया समेतलाई जहाँ सोभै निषेध गरेको हुन्छ त्यसलाई ब्रह्मको आदेश भनिन्छ। यो भन्दा अर्को उत्कृष्ट आदेश हुनसक्तैन। अविद्या र यसका कार्यलाई श्रुति बाहेक अरू कुनै पनि उपायबाट हटाउन सकिँदैन भन्ने उपनिषद् र भाष्यसमेतमा आएको छ। यो ब्रह्मको आदेश हो। यसमा ननु नच केही हुनसक्तैन। किन्तु यस वाक्यले जीवात्मा र परमात्माको एकताको उपदेश भने गर्दैन।

प्रकृत प्रसङ्गमा जीव र ब्रह्मको एकताको उद्बोधन गराउने महावाक्य बृहदारण्यकोपनिषद्बाट नै खोज्नु परेको छ। त्यस्तो महावाक्य [२३]संसर्ग वा विशिष्ट अर्थात् एक पदार्थभन्दा विशिष्ट अपर पदार्थ भएको वाक्य महावाक्य नभएर अखण्ड एक रस चैतन्य नै महावाक्य हो भन्ने विद्वान्हरूको मान्यता भएको भनेर श्रीशङ्कराचार्यले लेख्नुभएको छ। यसैलाई अभ्र स्पष्ट गर्दै जुन वाक्य शब्दहरूको [२४]संसर्ग अगोचर प्रमा ज्ञानको हेतु हो, जुन एक प्रातिपदिकार्थको बोधक हो, त्यही नै अखण्डार्थबोधक वैदिक महावाक्य हो, त्यसैमा नै अखण्डार्थकत्व छ भनेर चित्सुखाचार्यले पनि भन्नुभएको छ।

---

२२ अथात आदेशो नेतिनेति। – बृहदारण्यकोपनिषद् २।३।६
इति न इति न … अन्यत्परं निर्देशनं नास्ति तस्मादयमेव निर्देशो ब्रह्मणः।
– शाङ्करभाष्य बृहदारण्यकोपनिषद् २।३।६

२३ संसर्गो वा विशिष्टो वा वाक्यार्थो नात्र सम्मतः।
अखण्डैकरसत्वेन वाक्यार्थो विदुषां मतः॥ – वाक्यवृत्तिः ३८

२४ संसर्गासङ्गिसम्यग्धीहेतुता या गिरामियम्।
उक्ताखण्डार्थता यद्वा तत्प्रातिपदिकार्थता॥ – तत्त्वप्रदीपिका १।१९

उपर्युक्त आचार्यहरूको परिभाषा अनुसार श्रवणात्मक महावाक्य जस्ता वाक्यहरू शुक्लयजुर्वेदशाखा अन्तर्गत बृहदारण्यकोपनिषद्मा *'अयमात्मा ब्रह्म'* जस्ता वाक्यहरू पठित छन्। जीव र ब्रह्मको एकता बुझाउने वैदिक वाक्यहरू मात्रै महावाक्य हुन्। त्यस्ता महावाक्य श्रोत्रिय ब्रह्मनिष्ठ गुरुका मुखबाट विधिपूर्वक उत्तम अधिकारी अर्थात् मुमुक्षुले सुन्नु पर्दछ। त्यस महावाक्यको उपदेश गर्दा तिमी नै ब्रह्म हौ भनेर गुरुले साक्षात्रूपमा शिष्यलाई भन्नुपर्छ। *'अयमात्मा ब्रह्म'* एकातर्फ [२५]माण्डूक्योपनिषदमा पठित हुनाले अथर्ववेदीका लागि हो भनेर [२६]शुकरहस्यो-पनिषद्ले चार महावाक्यहरूको वर्गीकरण गर्दै क्रमानुसार भनेको छ भने अर्कोतर्फ [२७]बृहदारण्यकोपनिषद्मा पठित उक्त वाक्य ब्रह्मसाक्षात्कारका लागि गुरु दध्यङ्ङाथर्वणले शिष्य अश्विनीकुमारहरूलाई उपदेश गरेको नभएर ब्रह्मको लक्षणमात्रै बताएको देखिन्छ। अन्तमा सबै वेदान्तहरूको अनुशासन यही हो भनिएको हुँदा पनि यो वेदको आदेश हो। यो महावाक्य ब्रह्मसाक्षात्कारका लागि शिष्यहरूलाई उपदेश गरेको नदेखिएको हुनाले पनि यजुर्वेदशाखाध्यायीका लागि ब्रह्मज्ञानार्थ यो वाक्य गुरुबाट श्रवण गर्न योग्य देखिएन।

---

२५ सर्वं ह्येतद् ब्रह्मायमात्मा ब्रह्म सोऽयमात्मा चतुष्पात्। – माण्डूक्योपनिषद २

२६ अथ महावाक्यानि चत्वारि, यथा १. ॐ प्रज्ञानं ब्रह्म, २. ॐ अहं ब्रह्मास्मि, ३. ॐ तत्त्वमसि, ४. ॐ अयमात्मा ब्रह्म। – शुकरहस्योपनिषद् १

२७ अयमात्मा ब्रह्म सर्वानुभूरित्यनुशासनम्। – बृहदारण्यकोपनिषद् २।५।१९

उपर्युक्त अनुसार विश्लेषण गर्दा श्रोत्रिय ब्रह्मनिष्ठ गुरु याज्ञवल्क्यले मुमुक्षु उत्तम अधिकारी जिज्ञासु शिष्य राजा जनकलाई ब्रह्मात्मैक्यबोधका लागि साक्षात् अर्थात् सोझै तिमीले अभय प्राप्त गऱ्यौ किंवा [२८]तिमी नै ब्रह्म हौ भनेर उपदेश गरेकाले उक्त वाक्य नै यजुर्वेदी मुमुक्षुहरूका लागि ब्रह्मसाक्षात्कारार्थ गुरुबाट श्रवण गर्नुपर्ने महावाक्य हो। यस महावाक्यमा आएको अभय शब्दले 'ब्रह्म'लाई बुझाउँछ। किनभने यजुर्वेदशाखा अन्तर्गतको [२९]शतपथब्राह्मणले सो कुरा स्पष्टसँगै उल्लेख गरेको छ। यहाँ आएको मध्यम पुरुषको एक वचनले 'त्वम्'लाई अर्थात् उपदेश श्रवण गर्ने मुमुक्षुलाई बुझाउँछ। 'असि' नामपद प्रातिपदिकार्थबोधक भएकाले यसले उपाधिरहित 'तत्' र 'त्वम्' मा अविच्छिन्नरूप अनुस्यूत भएर रहेको चित् अर्थात् आत्मालाई बुझाउँछ। अतः यजुर्वेदी मुमुक्षुहरूले गुरुबाट श्रवण गर्नुपर्ने वाक्य *'अभयं वै जनक प्राप्तो ऽसि'* विना सङ्कोच ठहर्न आउँछ।

ब्रह्म नै अभय भएको प्रसङ्ग [३०]श्रीमद्भागवतमा पनि आएको छ। जुन अभय ब्रह्मको श्रवण श्रोत्रिय ब्रह्मनिष्ठ गुरु श्रीशुकदेवबाट गरेर राजा परीक्षित मुक्त भए भनिएको छ।

---

२८ अभयं वै जनक प्राप्तोऽसि। – बृहदारण्यकोपनिषद् ४।२।४

२९ अभयं हि वै ब्रह्म। अभयं हि ब्रह्म। – शतपथब्राह्मण १४।७।२।३१

३० भगवँस्तक्षकादिभ्यो मृत्युभ्यो न बिभेम्यहम्।
प्रविष्टो ब्रह्मनिर्वाणमभयं दर्शितं त्वया ॥
प्राक्कूले बहिर्ष्यासीनो गङ्गाकूल उदङ्मुखः।
ब्रह्मभूतो महायोगी निःसङ्गश्छिन्नसंशयः ॥ – भागवत १२।६।५,१०

अभय ब्रह्म हो। भय माया हो। अभय मायातीत हो। भय मायिक हो। अभय त्रिपुटी निर्मुक्त हो। भय त्रिपुटीयुक्त हो। अभय अमृत हो। भय मर्त्य हो। अभय प्रकाश हो। भय अन्धकार हो। अभय परमार्थ हो। भय मिथ्या हो। अभय शाश्वत हो। भय क्षणिक हो। अभय सत्य हो। भय असत्य हो। अभय चेतन हो। भय जड हो। अभय चित् हो। भय अचित् हो। अभय आनन्द हो। भय निरानन्द हो। अभय सुख हो। भय दुःख हो। अभय विभु हो। भय अविभु हो। अभय असीमित हो। भय सीमित हो। अभय समष्टि हो। भय व्यष्टि हो। अभय कारण हो। भय कार्य हो। अभय साध्य हो। भय साधन हो। अभय सबैथोक हो। भय एकथोक हो। अभय व्यापक हो। भय व्याप्य हो। अभय विवर्तक हो। भय निवर्त्य हो। अभय उपादान हो। भय उपादेय हो।

यसै कारण नै यजुर्वेदशाखाध्यायीहरू मुमुक्षुका लागि श्रुतिले 'अभय ब्रह्म नै तिमी हौ' भन्ने श्रवणात्मक महावाक्यको विधान गरेको हो भन्ने ठहर्छ। मुमुक्षुले संसारको भयङ्कर त्रासदीपूर्ण भयबाट सधैँका लागि विनिर्मुक्त हुने हो भने [३१]अभय ब्रह्मको नै साक्षात्कार गर्नुपर्दछ। अर्को मार्ग मोक्षका लागि छँदैछैन भनेर श्रुतिले उद्घोष गरेको छ। ॐ ब्रह्मार्पणमस्तु।

❀

३१ तमेव विदित्वाऽतिमृत्युमेति नान्यः पन्था विद्यतेऽयनाय।
– शुक्लयर्जुवेदः ३१।१८। श्वेताश्वतरोपनिषद् ३।८

# ७. अविज्ञातं विजानताम्

शीर्षकका रूपमा उद्धृत मन्त्रांश केनोपनिषद्मा पठित अत्यन्त महत्त्वपूर्ण अंश हो। यो उपनिषद् सामवेदीय तलवकार ब्राह्मणका अन्तर्गत पर्दछ। चारखण्डमा विभाजित केनोपनिषद् स्वरूपका दृष्टिले सानो देखिए तापनि ज्ञानका दृष्टिले अत्यन्त महनीय छ। यस उपनिषद्को महत्त्वको कारणले नै भाष्यकार आचार्य श्रीशङ्करले सामान्य पदभाष्य र युक्तिप्रधान वाक्यभाष्य समेत गरेर दुईथरी भाष्यहरू लेख्नुभएको छ।

यस उपनिषद्को प्रत्येक मन्त्र ब्रह्मद्रवले आप्लावित छ। श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट शास्त्रीयविधि, नियम र निष्ठा अनुसार यसको श्रवण गर्न सकेमा मुमुक्षुको मुक्तिमा कुनै शङ्का रहँदैन। किन्तु त्यस्तो सौभाग्य कमै मुमुक्षुले मात्रै प्राप्त गर्न सक्तछन् र यस उपनिषद्को श्रवण गर्ने सौभाग्य पनि कमै मुमुक्षुहरूले मात्रै पाउन सक्तछन्। श्रवण गर्ने सौभाग्य पाइहाले पनि त्यसको मनन, निदिध्यासन र ब्रह्मसाक्षात्कार गर्ने सौभाग्य पाउन सक्ने चाहिँ अत्यन्त विरलै हुनसक्तछन्। किनभने [१]हजारौँ साधनचतुष्टय सम्पन्न मनुष्यमध्ये कसैकसैले ब्रह्मसाक्षात्कारका लागि प्रयत्न गर्दछ। त्यसरी प्रयत्न गर्ने मध्ये पनि कसैकसैले मात्र तत्त्वतः ब्रह्मज्ञान गरेर मुक्त हुन्छ।

---

१ मनुष्याणां सहस्रेषु कश्चिद्यतति सिद्धये।
यततामपि सिद्धानां कश्चिन्मां वेत्ति तत्त्वतः ॥ – गीता ७।३

मन, वचन र कुनै पनि कारणबाट जान्न नसकिने मायातीत ब्रह्मलाई [२]जसले जान्दिन भन्दछ, त्यसले जान्दछ। अर्थात् ब्रह्म जसलाई ज्ञात हुँदैन त्यसैलाई ज्ञात हुन्छ। जसलाई ज्ञात हुन्छ, त्यसलाई ज्ञात हुँदैन। किनभने त्यो ब्रह्म जाने भन्नेका लागि जानिएको हुँदैन र जानिन भन्नेका लागि जानिएको हुन्छ। अर्थात् ब्रह्म जान्नेले नजान्ने र नजान्नेले जान्ने हुन्छ।

उक्त उपनिषद्का मन्त्रमा आएको भनाइ अत्यन्त बुझ्निनसक्नु पहेली जस्तो लाग्न सक्तछ। किनकि व्यावहारिक जगत्मा जुन वस्तु वा पदार्थलाई मानिसले जान्दछ र त्यसलाई नै जानेँ भन्दछ र त्यो जानेको पनि ठहर्दछ। किन्तु कसैले जुन पदार्थ अथवा वस्तुलाई जान्दैन, त्यसलाई जानेँ भन्दैन र त्यो वस्तु नजानेको नै ठहर्दछ। किन्तु त्यसको प्रतिकूल यस मन्त्रमा भने बह्म जान्नेले नजानेको र नजान्नेले भने जानेको हुन्छ भनिएको छ।

जानेँ भन्नेले मायिक साधनाहरूबाट जानेँ भनेको हो भने शब्दादि मायिक साधनहरूद्वारा ब्रह्म जान्न सकिँदैन। किनभने अरू घट, पटादि वस्तुका समान ब्रह्म मायिक पदार्थ नभएका कारण ब्रह्मलाई विषयरूपले जान्न सकिँदैन भनिएको हो। ब्रह्मानुभूति गर्न प्रेरित भएर ब्रह्मजिज्ञासाद्वारा प्रवृत्त भएको तर ज्ञान नभएको मुमुक्षुलाई ब्रह्म अविज्ञात वा अविदित हो। किन्तु आत्मतत्त्वनिश्चयरूप फलमा पर्यवसित हुने भएको

---

२ यस्यामतं तस्य मतं मतं यस्य न वेद सः।
अविज्ञातं विजानतां विज्ञातमविजानताम्॥ – केनोपनिषद् २।३

ज्ञानबाट जसको जिज्ञासा निवृत्त भइसकेको छ, त्यस्तालाई भने ब्रह्म विदित हो अर्थात् ज्ञात हो। यस अत्यन्त दुर्ज्ञेय उपनिषद्वाक्यको तात्पर्य सारांशमा के हो भने जुन मुमुक्षुले ब्रह्मलाई अविषयरूपले आत्मभावबाट अनुभूति गर्दछ, त्यसै मुमुक्षुले ब्रह्मलाई जान्न सक्तछ। विषयरूपले ब्रह्म जाने भन्नेले जान्न सक्तैन।

यसरी जुन मुमुक्षुले [३]ब्रह्मसाक्षात्कार गर्दछ र उसलाई ब्रह्मभाव प्राप्त हुन्छ, त्यसपछि उसले गर्नुपर्ने कर्तव्य केही रहँदैन। उसलाई सर्वत्र ब्रह्मभाव प्राप्त हुन्छ। त्यस्तो ज्ञानी नै सम्यग्दर्शी जीवन्मुक्त पुरुष हो। त्यस्ता जीवन्मुक्तको लौकिक कार्यमात्रै होइन ब्रह्मसाक्षात्कारको क्षणभन्दा पहिले [४]जानेका, सुनेका र भनेका सम्पूर्ण शास्त्रहरू ब्रह्मज्ञानसँगै भस्म भएर जान्छन्। त्यसो नभएसम्म उसलाई ब्रह्मसाक्षात्कार नै हुँदैन। जान्नु भनेको मायिक वासना हो, जुन वृत्तिका रूपमा अन्तःकरणमा बसेको हुन्छ, जसलाई वृत्त्यात्मक ज्ञान भनिन्छ। [५]ब्रह्मज्ञानरूपी अग्निद्वारा वासना बस्ने अन्तःकरण डढेर भस्म भएपछि र सम्पूर्ण वासनासहितका सञ्चितकर्महरू भस्म भएपछि वृत्त्यात्मक

३ यस्त्वात्मरतिरेव स्यादात्मतृप्तश्च मानवः।
आत्मन्येव च सन्तुष्टस्तस्य कार्यं न विद्यते॥ – गीता ३।१७

४ आचक्ष्व शृणु वा तात नानाशास्त्राण्यनेकशः।
तथापि न तव स्वास्थ्यं सर्वं विस्मरणादृते॥ – अष्टावक्रगीता १६।१

५ यथैधांसि समिद्धोऽग्निर्भस्मसात्कुरुतेऽर्जुन।
ज्ञानाग्निः सर्वकर्माणि भस्मसात्कुरुते तथा॥ – गीता ४।३७

ज्ञान पनि भस्म भइहाल्दछ। वृत्तिशून्य भएपछि नै मुमुक्षु ज्ञानी स्वस्वरूपमा पुग्दछ र मौन बन्दछ। यस स्थितिमा ज्ञानी सबै बिर्सन्छ।

उपर्युक्त भन्दा विपरीत ब्रह्मलाई जान्दछु भन्ने मिथ्याज्ञानी हो र अज्ञानी हो। अर्को शब्दमा 'मैले ब्रह्म जाने' भन्नेलाई विज्ञानी अर्थात् विपरीत ज्ञानी पनि भनिन्छ। त्यो विपरीत विज्ञानवान् सम्यग्दर्शी होइन, मिथ्यादर्शी हो। किनभने ब्रह्म विदित भन्दा भिन्नै हो। त्यसैकारण जाने भन्नेले ब्रह्म जान्दैन। ज्ञानीले ब्रह्मलाई आफ्नै आत्मरूपले अनुभूति गर्दछ, अर्थात् ज्ञानीको ब्रह्म आत्मस्वरूप हुनाका कारण इन्द्रियको विषय हुँदैन। अतः ज्ञानीलाई ब्रह्म अविज्ञात वा अविदित हो। अतः त्यही ब्रह्मज्ञान हो।

ज्ञात र अज्ञात पदार्थले शून्य उसको आत्मा नित्य विज्ञानस्वरूप, आत्मस्थ, अविक्रिय, अमृत, अजर, अभय र अनन्यरूप हुनाका कारण ब्रह्म कुनै इन्द्रियको विषय होइन भनेर अज्ञानीले जान्दैन। किन्तु अज्ञानी ब्रह्मलाई विज्ञात, विदित, व्यक्त र बुद्धि आदिका विषयरूपबाट नै प्रतीत हुन्छ भनेर ठान्दछ। उसले बुद्धि आदिका विषयरूपबाट नै ब्रह्मको ज्ञान हुन्छ भन्ने ठान्दछ। विषयतया ब्रह्म बुझेँ भन्नेले ब्रह्म बुझेको हुँदैन। किन्तु विषयतया ब्रह्म बुझिन भन्नेले ब्रह्म बुझेको अर्थात् ब्रह्म जानेको ठहर्दछ।

उपर्युक्त उपनिषद्का मन्त्रमा आएको 'विज्ञातम-विजानताम्' भन्ने वाक्यांश असम्यग्दर्शनको पूर्वपक्षका रूपमा

आएको हो। अर्को शब्दमा भन्ने हो भने उक्त मन्त्रमा *‘अविज्ञातं विजानताम्’* भन्ने मन्त्रको जुन उत्तरार्द्ध आएको छ त्यो हेतु अर्थमा हो। सारांशमा भन्ने हो भने ब्रह्म अज्ञानीलाई यस कारण ज्ञात हो, किनकि ज्ञानीलाई ब्रह्म अज्ञात हो। ब्रह्म ज्ञात वा जानेँ भन्नु मिथ्या र असम्यग्ज्ञान हो भने ब्रह्म जानिन वा अज्ञात हो भन्नु सम्यग्ज्ञान र प्रमात्मक ज्ञान हो। ब्रह्म प्रमा हो। ब्रह्म नै स्वरूप ज्ञान हो र पारमार्थिक ज्ञान हो। वृत्त्यात्मक ज्ञान भ्रमज्ञान र अयथार्थ ज्ञान हो। त्यो ज्ञान शुक्ति आदिमा आरोपित रजतादि ज्ञानका सरह मिथ्या हो।

वस्तुतः ब्रह्म विषयका रूपमा बुझिने वस्तु होइन। ब्रह्म ज्ञानको विषय नभएर अनुभूतिको वस्तु हो। ब्रह्मलाई कुनै साधनद्वारा पनि विषय गर्न सकिँदैन। बरु ब्रह्मले सबैलाई विषय गर्दछ। विषय गर्नु भनेको अज्ञात वस्तुको ज्ञान हुनु हो। त्यस वस्तुमा रहेको अज्ञानको आवरण भङ्ग हुनु हो। स्वयं संवित्, चिति र स्वप्रकाश ब्रह्ममा आवरण रहने कुरै भएन। अर्को कुरा जड तथा तमोमय करण आदि साधनले चेतन तथा स्वप्रकाश संवित्स्वरूप ब्रह्मलाई जान्न सक्ने कुरै भएन। यसको प्रतिकूल उसैको चेतना र सत्ता पाएर चक्षुरादि करण सत्तावान् र चेतन जस्ता आध्यासिक सम्बन्धबाट भएका छन्। यसै कारण उपर्युक्त मन्त्रले ब्रह्मलाई विषयतया जाने भन्नेले जान्दैन र विषयतया ब्रह्म जानिँदैन भन्नेले जान्दछ भनेको हो।

उपर्युक्त औपनिषद ज्ञान नै परम ज्ञान हो। यो ज्ञान शाश्वत र कालजयी ज्ञान हो। यो ज्ञान नै परम सत्य हो। यो ज्ञान देश,

काल र वस्तुमा व्याप्त तर सबैदेखि अतीत ज्ञान हो। यो परम विज्ञान प्राच्य वैदिक दर्शन भए पनि यसको प्रभाव अतीतदेखि नै पाश्चात्य दर्शनमा गहिरो रूपमा परेको देखिन्छ। यसको झलक प्राचीन युनानी दर्शनमा पनि पाइन्छ। प्राचीन युनानका दार्शनिक सुकरातले आफ्नू जीवनको अन्तिम क्षणमा भनेको उक्ति बेलायती दार्शनिक बर्टेन रसेलले यसरी उद्धृत गरेका छन्– [६]'उनी उनका समकालीनहरूमा सबैभन्दा बुद्धिमान् थिए। किनकि उनीमात्रै एक्लो त्यो गूढ कुरा जान्दथे, त्यो थियो उनी केही पनि जान्दैनथे।' सोक्रेटस्ले भने जस्तो म केही जान्दिन भनेर भन्नु पनि अद्वैत दर्शनमा जानेको नै ठहर्दछ। केही नबोल्नु पनि जान्नु नै हो। माथि उल्लेख भएको औपनिषदको कथन *'अविज्ञातं विजानताम्'* चाहिँ मौन अभिव्यक्ति हो। किन्तु वाणीद्वारा व्यक्त वैखरी हो। त्यो पनि ज्ञात हो, अविज्ञात होइन। ब्रह्मज्ञानी बोल्दैन। ब्रह्म वाणीको विषय नभएकाले ज्ञानी बोल्दैन। [७]ब्रह्मज्ञानी ता ब्रह्म नै हो। [८]ब्रह्म इन्द्रियरहित भएकाले बोल्दैन, देख्तैन, सुन्दैन र हिँड्दैन पनि। किन्तु उसकै सत्ता पाएर प्राणी बोल्दछ, देख्तछ, सुन्दछ र हिँड्दछ पनि।

मुक्त पुरुष बोल्दैन [९]तर आत्मालाई वेदको स्वाध्यायद्वारा,

---

६ Socretas had said that he was wiser rather than his contemporaries because he alone knew that he knew nothing. – Bertran Russel, Galileo and Scientific method in topics and opinion.

७ ज्ञानी त्वात्मैव मे मतम् । – गीता ७।१८

८ अशब्दमस्पर्शमरूपमव्ययम् । – कठोपनिषद् १।३।१५

९ तमेतं वेदानुवचनेन ब्राह्मणा विविदिषन्ति यज्ञेन दानेन तपसानाशकेनैतमेव विदित्वा मुनिर्भवति । – बृहदारण्यकोपनिषद् ४।४।२२

यज्ञ, दान र निष्काम तप समेतका साधनहरूद्वारा जान्न इच्छा गर्दछ। आत्मसाक्षात्कार भएपछि बोल्दैन, मौन हुन्छ र उसको वाणीको व्यवहार बन्द हुन्छ। यही अवस्था *'अविज्ञातं विजानताम्'* हो। ब्रह्मज्ञान भएपछि ज्ञानी ब्रह्मलाई जान्दिन पनि भन्दैन। ऊ मौन भइहाल्दछ। ब्रह्मज्ञानीको आश्रम हुँदैन, अनुयायी हुँदैनन्, ऊ स्वाध्याय र प्रवचन पनि गर्दैन। उसलाई कसैले भेट्न सक्तैन। मौन भइसकेकाले ऊ कसैलाई पनि ब्रह्मोपदेश गर्दैन। गर्नै परे पनि मौन भाषामा गर्दछ। मौनी गुरुका शिष्यहरू पनि मौनी नै हुन्छन्। त्यसै मौन उपदेशबाटै उनीहरू ब्रह्मज्ञानी बन्दछन्।

गुरु दक्षिणामूर्ति बोल्नु हुन्नथ्यो। मौनब्रह्मोपदेशको सन्दर्भमा उपर्युक्त विचित्रको प्रसङ्ग आएको देखिन्छ। एकपटक परम शिव सनकादि मुनिहरूलाई ब्रह्मोपदेश गर्नका लागि तेजस्वी ब्रह्मचारी युवकको रूपमा दिव्य वटवृक्षका फेदमा मौनमूर्ति लिएर प्रकट हुनुभएको थियो भनिन्छ। गुरु दक्षिणामूर्तिका रूपमा आविर्भूत हुनुभएका शिवरूपी युवा गुरुले आफ्नू ज्ञानमुद्रा वा चिन्मयमुद्राद्वारा बूढा सनकादिका लागि [१०]मौन व्याख्यानबाटै परब्रह्मतत्त्व प्रकटित गरिदिनुभयो भन्ने विद्वान्हरूको विश्वास देखिन्छ।

उपर्युक्त भनाइ अनुसार [११]विचित्रको वटवृक्षका फेदमा

१० मौनव्याख्याप्रकटितपरब्रह्मतत्त्वं युवानम्। – श्रीदक्षिणामूर्तिस्तोत्रम्

११ चित्रं वटतरोर्मूले वृद्धाः शिष्या गुरुर्युवा।
गुरोस्तु मौनं व्याख्यानं शिष्यास्तु छिन्नसंशयाः॥ – श्रीदक्षिणामूर्तिस्तोत्रम्

प्रकट भएर युवा गुरुले वृद्ध शिष्यहरूलाई मौनरूपले तत्त्वको व्याख्या गरेको अर्थात् ब्रह्मोपदेश गरेको र त्यसपछि शिष्य सनकादिका सम्पूर्ण संशयहरू छिन्नभिन्न भएको अनौठो र विचित्रको बोधप्रसङ्ग गुरु दक्षिणामूर्तिका सम्बन्धमा पाइन्छ। दिव्य र अलौकिक गुरुतत्त्वका बारेमा आद्यजगद्गुरु श्रीशङ्कराचार्यले *'श्रीदक्षिणामूर्तिस्तोत्रम्'*मा आफ्नू अत्यन्त प्रगाढ अनुभूति र श्रद्धाद्वारा आप्लावित दश श्लोकहरूबाट व्यक्त गर्नुभएको छ, जुन अत्यन्त मननीय छ।

ब्रह्मज्ञानी मौन हुन्छन्। ब्रह्मज्ञान नहोउन्जेलमात्रै मुमुक्षुले बोल्ने गर्दछ। ब्रह्मज्ञान भएपछि ज्ञानी मौन बन्दछ। भनिन्छ– नौनी घिउ कराईमा राखेर खार्न आगोमा बसालेपछि विजातीय पानीको लेशलव रहुन्जेल त्यसले कटकट गरेर आवाज निकाल्ने गर्दछ। जब पानीको लेशलव पनि अग्निले डढाइदिन्छ त्यसपछि खारिएको शुद्ध घिउ पनि मौन बन्दछ भने ज्ञानाग्निद्वारा सारा कर्मवासना र अज्ञानको लवलेश समेत भस्म पारेको ज्ञानी कसरी बोल्दछ? बोल्दैन। ऊ जीवन्मुक्तिको अवस्थामा पुगेको हुनाले नै मौन बन्दछ। यसैकारण नै गुरु अष्टावक्रले जानेका, सुनेका र भनेका सबै कुरा बिर्सिएर ज्ञानी मौन बनोस् भनेका हुन्।

[१२]बुद्धिमान् ब्रह्मज्ञानीले ब्रह्मज्ञान वा ब्रह्मसाक्षात्कार

---

१२ तमेव धीरो विज्ञाय प्रज्ञां कुर्वीत ब्राह्मणः।
नानुध्यायाद् बहुञ्छब्दान् वाचो विग्लापनं हि तत्।
– बृहदारण्यकोपनिषद् ४।४।२१

भइसकेपछि धेरै शब्दहरू बोल्नु हुँदैन। ब्रह्मज्ञानीले बोल्नु भनेको ज्ञानको क्षरण मात्रै हो। जसका कारण मोक्षमा अन्तराय पैदा हुनसक्तछ। ब्रह्मज्ञान भएपछि ब्रह्मज्ञानी व्यर्थको बोल्ने काम छोडेर स्वतः मौन भइहाल्दछ।

श्रुतिले *'एतमेव विदित्वा मुनिर्भवति'* भनेको छ। पुराणमा पनि यसको वर्णन प्रशस्त पाइन्छ। राजा धर्मराज युधिष्ठिर महाप्रस्थानमा जाँदा मौन मात्रै भएनन् बरु उनी [१३]जड, उन्मत्त र पिशाचजस्ता पनि भए। राजा ऋषभदेव अवधूत भएर हिँड्दा पनि मौनव्रत लिएर चुपचाप हिँड्नुका साथै [१४]जड, अन्धो, बहिरो, लाटो, पिशाच र पागल जस्तो हाउभाउ देखाउँदै अवधूत भएर जताततै घुम्थे।

त्यस्तै गरेर [१५]ब्रह्मज्ञानी जडभरत पनि मौन बन्दै मानिसका भीडबाट टाढै रहन्थे र गुप्तरूपमा हिँड्दथे। राजा परीक्षितले गुरुबाट भएको ब्रह्मोपदेशको श्रवण गरेपछि उनलाई ब्रह्मज्ञान भएको थियो। उनले गुरुदेव श्रीशुकदेव मुनिसँग हे गुरुदेव ! [१६]म अब वाणीलाई र मनलाई समेत ब्रह्ममा ऐक्य गर्दछु र ब्रह्म बन्दछु। ब्रह्मन् ! मलाई अनुमति दिनुहोस् भनेर राजाले गुरुसँग विदा मागेका थिए। ब्रह्मज्ञान भएपछि गुरुको काम

१३ जडोन्मत्तपिशाचवत्। – भागवत १।१५।४३

१४ जडान्धमूकबधिरपिशाचोन्मादकवदवधूतवेषोऽभिभाष्यमाडोऽपि जनानां गृहीत मौनव्रतस्तूष्णीं बभूव। – भागवत ५।५।२९

१५ अथो अहं जनसङ्गादसङ्गो विशङ्कमानोऽविवृतश्चरामि।
– भागवत ५।१२।१५

१६ अनुजानीहि मां ब्रह्मन् ! वाचं यच्छाम्यधोक्षजे। – भागवत १२।६।६

सकिएको थियो। त्यसैकारण ब्रह्मज्ञानी गुरु श्रीशुकदेवलाई बिदा दिएर उनी मौन समाधिमा समाधिस्थ भएका थिए।

ब्रह्मज्ञानी ब्रह्मसाक्षात्कार भइसकेपछि मौन हुनुभन्दा पहिले शास्त्रलाई थन्क्याउँछ, उपदेश दिने गुरुलाई पनि नमस्कार गर्दै बिदा दिन्छ र आफू पनि बिदा हुन्छ। वस्तुतः ब्रह्मसाक्षात्कार भएपछि शास्त्र, आचार्य र अरू बाहिरी साधन सबै स्वतः छुट्तछन्। ब्रह्मज्ञानीले तिनलाई छाड्ने प्रयास गरिरहनु नै पर्दैन। किनभने [१७]ब्रह्मज्ञानी ब्रह्म नै हुन्छ, [१८]ब्रह्म विदित भन्दा अन्य हो र अविदित भन्दा पर हो भनेर श्रुतिले भनेको हो।

जुन ज्ञानीले आफ्नू वेदको शखाको वेदान्तभाग अर्थात् उपनिषद्मा आएको महावाक्यलाई श्रोत्रिय ब्रह्मनिष्ठ गुरुको मुखबाट विधिपूर्वक स्वाध्यायद्वारा सुनेको छ र त्यसलाई श्रद्धापूर्वक लामु समयसम्म आराधना अर्थात् मनन र निदिध्यासन गरेको छ भने त्यो [१९]महावाक्य नै त्यस मुमुक्षुको साक्षात् मोक्षको कारण वा हेतु बन्दछ, त्यो बाहेक अरू हेतु नबन्ने तथ्य स्पष्टै रूपमा शास्त्रले भनेको पाइन्छ।

ब्रह्मसाक्षात्कार गरेर ब्रह्म भइसकेको ज्ञानी माया र मायाको

१७ ब्रह्मवेद ब्रह्मैव भवति। – मुण्डकोपनिषद् ३।२।९

१८ तद्विदितादथो अविदितादधि। – केनोपनिषद् १।३

१९ स्वाध्यायधर्मपठितं निजवेदशाखा
वेदान्तभूमिगतमादरपालितञ्च।
सन्न्यासिना परदृशा गुरुणोपदिष्टं
साक्षान्महावचनमेव विमुक्तिहेतुः॥ – सङ्क्षेपशारीरकम् ३।२९५

कार्य भन्दा माथि उठिसकेको हुन्छ अर्थात् ऊ ब्रह्म नै भइसकेको हुन्छ । उसलाई अविज्ञात र विज्ञातमा कुनै भेद रहँदैन । किनभने ऊ यी सबैको साक्षी निरञ्जन, निराकार, निष्कल, निरवद्य ब्रह्म भइसकेको हुन्छ । ऊ स्वप्रकाश आत्मा सबै भूतभौतिक वस्तुको प्रकाशक र सत्तात्मक अधिष्ठान भइसकेको हुन्छ ।

परमगति प्राप्त ब्रह्मज्ञानीका [20]भेद र अभेद समाप्त हुन्छन् । पुण्य र पाप ध्वंस हुन्छन् । माया र मोह भस्म हुन्छन् । सन्देहात्मक वृत्ति नष्ट हुन्छ । शब्दातीत तथा त्रिगुणरहित ब्रह्मतत्त्व प्राप्त गरेर ब्रह्म भइसकेको जीवन्मुक्त ब्रह्मज्ञानीलाई कुनै प्रकारको लौकिक र वैदिक विधि र निषेधले छुन सक्तैन । त्यस अवस्थामा ज्ञानीले ब्रह्मलाई प्रतीतिका साक्षीका रूपमा आफैँले आफैँ स्वयंलाई प्राप्त गरिसकेकाले उसका मत, अमत, ज्ञात र अज्ञात समेत समाप्त हुन्छन् ।

अज्ञानी संसारी मनुष्यहरू तमःप्रकृतिको मायिक संसारलाई सत्य ठानेर त्यसमा नै रमाएर मिथ्यालाई पनि शाश्वत र साँचो ठानेर मस्त भइरहेका हुन्छन् । त्यस्ता अज्ञले रातलाई दिन र अज्ञानलाई ज्ञान ठानेका हुन्छन् । अन्तःकरणको अत्यन्त मलिनताले गर्दा उनीहरू अन्धकारमा नै बस्न लाटोकोसेरो

---

२० भेदाभेदौ सपदि गलितौ पुण्यपापे विशीर्णे
मायामोहौ क्षयमुपगतौ नष्ट सन्देहवृत्तिः ।
शब्दातीतं त्रिगुणरहितं प्राप्य तत्त्वावबोधं
निस्त्रैगुण्ये पथि विचरतां को विधिः को निषेधः ।। – शुभाष्टकम् १

जस्तै बानी परिसकेका हुन्छन् । अज्ञानीहरूलाई अन्धकार बाहेक प्रकाश पनि भएको तथ्यको ज्ञान नै हुँदैन । लाटोकोसेरो जस्तै प्रकाशका बारेमा उनीहरू सुन्नै चाहँदैनन् । जसरी अद्वैत ब्रह्मका बारेमा अज्ञानी द्वैतीहरू जिज्ञासा नै राख्तैनन् ।

संसारी [21]अज्ञानीहरू नश्वर मायिक संसारलाई सत्य ठानेर त्यतैतर्फ हिरिक्क भएर लागेका हुन्छन् भने ज्ञानी पुरुषहरू भने यसलाई हेय ठानेर यस मायिक संसार अर्थात् माया र मायाको कार्यलाई उपेक्षा गरेर प्रकाशस्वरूप ब्रह्मचिन्तन गरेर बस्तछन् । अज्ञानी मनुष्यको तमः स्वभाव जुन अविद्यारूप रात्रि हो त्यसमा संयमी आत्मज्ञानी महात्मा जागा रहन्छन् र त्यसलाई मिथ्या ठानेर आफ्ना स्वरूपमा अवस्थित रहन्छन् । किन्तु अविद्या र अविद्याको कार्यमा जागा रहने अज्ञानीहरूको संसारलाई असत्य ठान्दछन् । संसारीले दिन जस्तो उज्यालो ठानेको आविद्यिक संसारलाई ब्रह्मज्ञानी अन्धकारपूर्ण औँसीको रात ठान्दछन् । यसको विपरीत संसारी मनुष्यले अज्ञानका कारण निस्पट्ट रात जस्तो ठानेको परमार्थ ब्रह्मज्ञानलाई ब्रह्मज्ञानी झलझलाकाररूपमा अनुभव गरेर त्यसैमा जागा भएर आत्मरमण गरिरहेका हुन्छन् । *'यस्यामतं तस्यमतं मतं यस्य न वेद सः । अविज्ञातं विजानतां विज्ञातमविजानताम् ॥'* भन्ने उपनिषद्को मन्त्रको गूढ रहस्य यही हो ।

---

२१ या निशा सर्वभूतानां तस्यां जागर्ति संयमी ।
यस्यां जाग्रति भूतानि सा निशा पश्यतो मुनेः ॥
– श्रीमद्भगवद्गीता २।६९

वस्तुतः मिथ्या मायिक सांसारिक संस्कार, वासना र सञ्चित कर्म समेत शून्य भएको जीवन्मुक्त महात्माको अन्तःकरण अविद्याको लेश समेतबाट सर्वथा निर्मुक्त हुन्छ। त्यस्तो ब्रह्मज्ञानीका लागि संसारी सुख, दुःख, माया, मोह, लोभ, क्रोध, मद, मात्सर्य आदि कुनै कुराको पनि प्रभाव त्यसै गरी पर्दैन जसरी चलचित्रघरमा टाँगिएको पर्दामा चित्र प्रदर्शन गर्दा चित्रमा लागेको आगोले पर्दालाई डढाउँदैन र परेको पानीले भिजाउँदैन। ॐ ब्रह्मार्पणमस्तु।

# ८. अहं ब्रह्म परं धाम

ब्रह्मको बिम्ब वा प्रतिबिम्बका रूपमा रहेको प्रत्येक जीवले आफ्नू स्वरूप ब्रह्मलाई प्राप्त गर्न प्रयास गर्नु स्वाभाविकै हो। ब्रह्म सत्, चित् र आनन्दस्वरूप हो भने जीवमा पनि सत्ता, चित्ता र आनन्दरूपता विद्यमान देखिन्छ। बृह् धातुबाट निष्पन्न [१]ब्रह्मशब्दको अर्थ बृहत् अर्थात् ठूलो भन्ने हुन्छ। शास्त्रहरूले ब्रह्मलाई धेरै नामहरूबाट अभिधान गरेको देखिन्छ। [२]तत्त्ववेत्ताहरू ज्ञाता र ज्ञेयका भेदले रहित अखण्ड, अद्वितीय तथा सच्चिदानन्दस्वरूपलाई नै तत्त्व भन्दछन्। त्यसै तत्त्वलाई कसैले ब्रह्म, कसैले परमात्मा र कसैले भगवान् भन्दछन्। वस्तुतः एउटै उपाधिका भेदले उही ब्रह्म धेरैथरी रूपमा विवर्तित हुन्छ। वस्तुतः [३]ज्ञानस्वरूप ब्रह्मलाई अद्वैतीहरू औपनिषद ब्रह्म भन्दछन्, हिरण्यगर्भका उपासकहरू परमात्मा भन्दछन् भने सात्वतहरू भगवान् भन्दछन्।

सम्पूर्ण चराचर जगत् ब्रह्मको [४]विवर्त हो भनेर अद्वैत

---

१ बृहत्वाद् बृंहणत्वाच्च तद्रूपं ब्रह्मसंज्ञितम्। – विष्णुपुराण १।१२।५५

२ वदन्ति तत्तत्त्वविदस्तत्त्वं यज्ज्ञानमद्वयम्।
ब्रह्मेति परमात्मेति भगवानिति शब्द्यते ॥ – भागवत १।२।११

३ यज्ज्ञानं नाम, अद्वयमिति। औपनिषदैर्ब्रह्मेति, हैरण्यगर्भैः परमात्मेति, सात्वतैर्भगवानित्यभिधीयते। – श्रीधरः, भागवत १।२।११

४ अनिर्वाच्याविद्याद्वितयसचिवस्य प्रभवतो विवर्ता यस्यैते वियदनिलतेजोऽबवनयः। – भामती १

वेदान्तले भनेको छ। [५]विवर्त भनेको चराचर उपादानकारणको विषम सत्ताका साथ देखा पर्नु हो। कुनै पनि [६]मायिक तत्त्वविना नै चराचर जगत् देखा पर्नु नै विवर्त हो। ब्रह्मको सत्, चित्, आनन्दादि अधिष्ठानमा देखापरेको यो मिथ्या, जड तथा दुःखमय चराचर सम्पूर्ण ब्रह्माण्ड ब्रह्मको विवर्त हो।

द्वैतवादी वैष्णवसम्प्रदायका उपासकहरू भगवान्लाई अंशी र जीवलाई अंश मान्दछन्। अंशले जहिले पनि अंशीलाई उपासक र उपास्यका रूपमा चाहन्छ। अंश कहिल्यै पनि अंशी हुन खोज्दैन। किन्तु औपनिषद सिद्धान्तमा अंश र अंशीको भेद मानिँदैन। बिम्ब र प्रतिबिम्ब वा विवर्त मानिन्छ। किनभने जहाँ अंश र अंशीको विभेद आउँछ, त्यो मिथ्या हुन्छ भन्ने औपनिषद अद्वैतसिद्धान्त हो। जस्तै सूर्यको प्रतिबिम्ब हजारौँ, लाखौँ, जलपूर्ण घडाहरूमा, जलाशयहरूमा र सरोवरहरूमा देखा परे तापनि सूर्यको अंश वा भाग खण्डित भएर प्रतिबिम्ब बन्ने होइन। सूर्य पूर्ण नै रहन्छ र उसका प्रतिबिम्बहरू जति बन्दछन् सबै नै पूर्ण नै हुन्छन्। यदि घडा फुटेमा वा जलाशयको जल सुकेमा पनि बिम्बस्थानीय सूर्य पूर्ण नै रहन्छ। प्रतिबिम्ब उपाधिको कारण बन्दछ। घडा र जलाशय आदि उपाधिका कारण एउटै सूर्यका धेरै प्रतिबिम्बहरू बन्दछन्। यदि उपाधि वा अवच्छेदक नभएमा सूर्यमात्रै रहन्छ। किन्तु अंश र अंशीको भेद गर्दा अंशी खण्डित

५ विवर्तो नाम उपादानविषमसत्ताककार्यापत्तिः। – वेदान्तपरिभाषा

६ अतत्त्वोऽन्यथाप्रथा विवर्त इत्युदीरितः। – पञ्चदशी

भएर अंश बन्दछ। अतः टुक्रिने र जोडिने जति सबै मिथ्या हुन् भनेर अद्वैत वेदान्तले भन्दछ।

उपर्युक्त उदाहरण अनुरूप विभिन्न उपाधि वा अवच्छेदकका कारण निष्कल, शुद्ध तथा [७]परिपूर्ण ब्रह्म नै जीव बन्दछ। ब्रह्मज्ञानद्वारा उपाधि वा अवच्छेदक हटेपछि जीव पनि [८]निष्कल, शुद्ध तथा परिपूर्ण ब्रह्म नै बन्दछ। यही वैदिक वा औपनिषद सिद्धान्त।

ब्रह्मज्ञान वा ब्रह्मसाक्षात्कार गर्नुलाई मनुष्यको सबैभन्दा ठूलो पुरुषार्थ मानिन्छ। साधनचतुष्टयसम्पन्न मुमुक्षु द्विजले आफ्नू वेदको शाखामा पढिएको श्रवणात्मक महावाक्य श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट विधिपूर्वक श्रवण गरेपछि मनन, निदिध्यासन, ब्रह्माभ्यास आदि अन्तरङ्ग साधनहरूको परिपाक भएपछि मुमुक्षुलाई 'म ब्रह्म हुँ' भन्ने अनुभूति हुन्छ र मुमुक्षु ज्ञानी मुक्त हुन्छ। यही नै सङ्क्षेपमा अद्वैत वेदान्तको प्रक्रिया हो। उदाहरणका लागि सामवेदीहरूका लागि छान्दोग्य शाखा अर्थात् उपनिषद्मा पठित 'तिमी [९]ब्रह्म हौ' भन्ने महावाक्यको उपदेश पिता उद्दालकबाट पुत्र श्वेतकेतुले श्रवण गरेपछि श्वेतकेतुलाई आफू सत् आत्मा भएको [१०]अनुभूति भएको थियो।

---

७ पूर्णमदः पूर्णमिदं पूर्णात् पूर्णमुदच्यते।
पूर्णस्य पूर्णमादाय पूर्णमेवावशिष्यते ॥ – बृहदारण्यकोपनिषद् ५।१।१

८ निष्कलं निष्क्रियं शान्तं निरवद्यं निरञ्जनम्।
अमृतस्य परं सेतुं दग्धेन्धनमिवानलम् ॥ – श्वेताश्वतरोपनिषद् ६।१९

९ तत्त्वमसि – छान्दोग्योपनिषद् ६।८।७

१० स आत्मा तत्त्वमसि श्वेतकेतो इति तद्धास्य विजज्ञौ विजज्ञौ।
– छान्दोग्योपनिषद् ६।१६।३

उपर्युक्त आत्मज्ञानको प्रक्रिया 'तिमी त्यही हौ' भन्ने प्रसिद्ध श्रवणात्मक महावाक्य सामवेदीका लागि मात्र हो। अरू वेदपाठीहरूले आफ्नै वेदको शाखामा भएको महावाक्यको श्रवण गरेमात्रै ब्रह्मज्ञान हुन्छ, अन्यथा ब्रह्मज्ञान हुने त के कुरो उल्टै *'शाखारण्डः'* को दोष लाग्छ भनेर शास्त्रहरूमा उल्लेख भएको शास्त्रीय प्रमाण *'स्वाध्यायोऽध्येतव्यः'* मा उल्लेख गरिसकिएको छ। अरू वेदपाठीहरूले अर्को वेदमा पढिएको महावाक्यको श्रवण गरेर ब्रह्मसाक्षात्कार नहुने भएपछि अब आफ्नै वेदमा र त्यसका शाखाहरू ब्राह्मण, आरण्यक र उपनिषद्हरूमा भएका महावाक्यको श्रवण गरेर ब्रह्मज्ञान गर्नुपर्दछ।

माथि उल्लेख भए अनुसार आफ्नै वेद र अन्तर्गत रहेको महावाक्य सुन्नु पर्ने देखियो। यी पङ्क्तिहरूका लेखकले पनि यस सम्बन्धमा धेरै समयको चिन्तन र मननपछि आफ्नै शुक्लयजुर्वेदमाध्यन्दिनीयशाखा अन्तर्गतबाट नै श्रवणात्मक महावाक्य 'तिमी ब्रह्म हौ' भन्ने अनुशीलन गरेको छ। यस वेदमा अधिकार भएका मुमुक्षुका लागि यही महावाक्य नै गुरुबाट सुन्नु पर्दछ। जसरी गुरु याज्ञवल्क्यबाट मुमुक्षु राजा जनकले [११]'तिमी नै ब्रह्म हौ' भन्ने महावाक्य सुनेर [१२]'म ब्रह्म हुँ' भन्ने अनुभूति भएर मुक्त भएका थिए।

---

११ अभयं वै जनक प्राप्तोऽसि। – बृहदारण्यकोपनिषद् ४।२।४

१२ अहं ब्रह्मास्मि। – बृहदारण्यकोपनिषद् १।४।१०

छान्दोग्योपनिषद्मा पनि बृहदारण्यकोपनिषद्मा जस्तै प्रकरणको अन्त्यमा पिता उद्दालकले पुत्र श्वेतकेतुको नामै लिएर उनलाई सम्बोधन गर्दै तिमी सत् आत्मा हौ भनेपछि श्वेतकेतुलाई आत्मज्ञान भएको थियो । अतः छान्दोग्यो-पनिषद्को उपदेशको शैली र बृहदारण्यकोपनिषद्को उपदेशको शैली मिल्दोजुल्दो नै देखिन्छ।

यसरी गुरुको उपदेशपछि दीर्घकालको मनन र निदिध्यासनसमेतको परिपाकपछि ब्रह्मानुभूति हुने कुरा उपर्युक्त दुइटा उपनिषद्को सङ्क्षिप्त चर्चाद्वारा प्रस्तुत गरियो। यस चर्चाबाट दुइटा कुरा स्पष्ट बुझ्नु पर्ने देखिन्छ। पहिलो कुरो महावाक्यको श्रवण आफ्नै वेदको शाखाबाट गर्नु पर्ने र दोस्रो कुरा ब्रह्मानुभूति भएको अनुभूति मुमुक्षु आफैँले गर्नुपर्ने, गुरुबाट आफू ब्रह्म भएको अनुभूति गर भनेर उपदेश दिन नमिल्ने स्पष्ट हुन्छ। किन भने ब्रह्मानुभूति जुन मुमुक्षुलाई हुन्छ, उसले मात्रै थाहा पाउँछ, अरूले थाहा पाउन सक्तैन।

अनुभूत्यात्मक महावाक्यको उपदेश गुरुले नगरेर मुमुक्षुले आफैँले ब्रह्म भएको अनुभूति गरेर मुक्त हुने हो। श्रुतिले भन्न खोजेको र गर्न खोजेको पनि त्यही हो। किन्तु उपदेशक र विद्वान्हरू आफ्ना सीमित ज्ञान अनुसार अनुभवात्मक महावाक्यलाई पनि उपदेशात्मक वाक्य भन्ने गर्दछन्। त्यो उनीहरूको सीमित ज्ञानको परिचायक हो। वस्तुतः त्यो उपदेशात्मक वाक्य नभएर अनुभवात्मक वाक्य हो। यसै किसिमको वाक्य श्रीमद्भागवतमा पनि आएको छ। गुरु

श्रीशुकदेवमुनिले म्रियमाण मुमुक्षु राजा परीक्षित्लाई उपदेश गर्दै हे परीक्षित् ! म नै [१३]सर्वाधिष्ठान ब्रह्म हुँ र सर्वाधिष्ठान ब्रह्म म नै हुँ भन्ने ठानेर आफ्नो वास्तविक एकरस 'अनन्त' अखण्डस्वरूपमा आफूलाई तिमी स्थित गर भन्नु भयो ।

उपर्युक्त उपदेश नै म्रियमाण मुमुक्षु राजा परीक्षित्लाई स्वामी श्रीशुकदेवको अन्तिम थियो । श्रीधर स्वामीले आफ्नू भावार्थदीपिका टीकामा उक्त श्लोकमा आएको [१४]*'अहं ब्रह्म'* वाक्यको अर्थ जुन म हुँ त्यो ब्रह्म हो र *'ब्रह्माहम्'* वाक्यको अर्थ जुन ब्रह्म हो त्यो म हुँ भन्ने अनुभव गर भनेर श्रीशुकदेवमुनिले परीक्षित्लाई उपदेश गर्नुभएको हो भनेर लेख्नुभएको छ । अझ यसलाई स्पष्ट पार्दै दुई पटक अहम् र ब्रह्म शब्द आएकोमा पहिलो अहं ब्रह्मले जीवको अन्तःकरणमा रहेको शोकादिदोषको निवृत्ति हुन्छ भने दोस्रो ब्रह्मभन्दा पछि व्यत्यय भएर आएको अहंभावनाले ब्रह्मको पारोक्ष्य अर्थात् मुमुक्षुका अन्तःकरणमा व्याप्त आवरणको निवृत्ति गर्दछ भनेर लेख्नुभएको छ । ब्रह्मको परोक्ष्यनिवृत्ति गर्नु भनेको ब्रह्मको साक्षात्कार गर्नु भनेको हो भनेर पण्डित वंशीधरले लेख्नुभएको छ ।

---

१३ अहं ब्रह्म परं धाम ब्रह्माहं परमं पदम् ।
एवं समीक्षन्नात्मानमात्मन्याधाय निष्कले ॥ – भागवत १२।५।११

१४ योऽहं स ब्रह्मैव यद् ब्रह्म तदहमेवेति समीक्षन् । तत्राहं ब्रह्मेति भावनया जीवस्य शोकादिनिवृत्तिः, ब्रह्माहमिति भावनया च ब्रह्मणः पारोक्ष्य-निवृत्तिर्भवतीति व्यतिहारो दर्शितः । – श्रीधरः स्वामी, भागवत ।
पारोक्ष्यनिवृत्तिः साक्षात्कारः । परस्परीकरणं व्यतिहारः ।
– पण्डित वंशीधरः ।

माथि श्रीधरी टीकामा आएको पहिलो अहं ब्रह्मद्वारा शोकादिको निवृत्तिको अर्थ शोक भनेको काम्यकर्म हो र शोक गर्नु अनात्मज्ञ हुनु हो। मन्त्रवित् अर्थात् कर्मी अनात्मज्ञ हो, अज्ञानी हो। अज्ञानीले नै शोक गर्दछ। शोक गर्ने अकृतार्थ हो। अकृतार्थ सधैँ सन्तप्त रहन्छ र दुःखी हुन्छ। आत्मज्ञान भएपछि मुमुक्षु कृतार्थ हुन्छ र शोकबाट पार हुन्छ। यो कुरा [१५]उपनिषद्मा सनत्कुमार र नारदको संवादको सन्दर्भमा आएको छ। यसै कुरालाई श्रीधरस्वामीले यस प्रसङ्गमा सङ्केत गर्नुभएको देखिन्छ।

पुराणहरूमा भगवान् शब्द र ब्रह्म शब्द पर्यायवाची शब्दका रूपमा आएको कुरा शुरुमा नै उल्लेख गरिसकियो। भागवतमा भगवान् श्रीकृष्णले [१६]सयौँ हजार गोपीहरूले म जार ब्रह्मलाई प्राप्त गरे भन्नु भएको छ। श्रीधरस्वामीले सामान्य टीका गर्दै तिनीहरू सबै [१७]ब्रह्मस्वरूपमा नै प्राप्त भए भन्नुभएको छ।

ती हजारौँ अबला गोपीहरू एकैचोटि कसरी मुक्त भए ? अर्थात् तिनीहरूले के ब्रह्मसाक्षात्कार गरे ? भन्ने जिज्ञासा उत्पन्न हुनसक्तछ। भगवान् श्रीकृष्णले गीतामा [१८]हजारौँ

---

१५ सोऽहं भगवो मन्त्रविदेवास्मि नात्मविच्छ्रुतं ह्येव मे भगवद्दृशेभ्यस्तरति शोकमात्मविदिति सोऽहं भगवः शोचामि तं मा भगवाञ्छोकस्य पारतारयत्विति। – छान्दोग्योपनिषद् ७।१।३

१६ ब्रह्म मां परमं प्रापुः सङ्गाच्छतसहस्रशः। – भागवत ११।१२।१३

१७ ब्रह्मस्वरूपमेव मां परमं प्रापुः। – श्रीधर, भागवत ११।१२।१३

१८ मनुष्याणां सहस्रेषु कश्चिद्यतति सिद्धये।
यततामपि सिद्धानां कश्चिन्मां वेत्ति तत्त्वतः॥ – गीता ७।३

मनुष्यहरू मध्ये कसैकसैले मात्रै ब्रह्मसाक्षात्कारका लागि प्रयत्न गर्दछ र ती प्रयत्न गर्नेहरूमध्ये पनि कसैकसैले मात्रै मलाई तत्त्वतः जान्दछ भन्नु भएको छ। भागवतमा आएको प्रसङ्ग र गीतामा भनिएको कुरा नमिले जस्तो भान हुन्छ। सयौँ हजारौँले एकै पटक मोक्ष प्राप्त गर्ने कुरा सामान्यरूपमा बुझ्न गाह्रो हुन्छ। अतः यस कुरालाई बुझ्न भागवतको दशमस्कन्धको पूर्वार्धमा २९ औँ अध्यायदेखि ३३ औँ अध्यायसम्म आएको रासक्रीडाको गूढ रहस्यलाई बुझ्नु आवश्यक छ।

वस्तुतः रासक्रीडा भनेको परमात्माको आफ्नै बुद्धिका सयौँ हजारौँ वृत्तिहरूसँगको खेल हो। त्यो क्रीडा शरीरधारिणी गोपीहरू र मनुष्यको रूपधारी भगवान् श्रीकृष्णका बीचको सामान्य मानुषक्रीडा होइन। त्यो अन्तर्मनको चिन्मय लीला हो। अतः सयौँ हजारौ गोपीहरूले म ब्रह्मलाई एकै पटक प्राप्त गरे भनेको ब्रह्मज्ञानीका बुद्धिका सयौँ हजारौँ वृत्तिहरू ब्रह्मज्ञान भएपछि एकैपटक सबै शान्त भए, अर्थात् समाप्त भए भनेको हो। ज्ञानीका बुद्धिका हजारौँ लाखौँ वृत्तिहरू क्रमशः निवृत्त हुँदै गएर अन्त्यमा चरमवृत्तिको पनि नाश भएपछि ज्ञानीको मुक्ति हुन्छ। भगवान् श्रीकृष्णले भन्नुभएको ब्रह्मसाक्षात्कारको तात्पर्य यही हो। अतः *'अहं ब्रह्म परं धाम ब्रह्माहं परमं पदम्'* को तात्पर्य पनि मोक्ष नै हो। ॐ ब्रह्मार्पणमस्तु।

# ९. असत्‌देखि सद्‌ब्रह्मसम्म

प्रत्येक स्थावर र जङ्गम जगत्‌ ब्रह्मको सत्ता पाएर नै अस्तित्ववान्‌ वा सत्तावान्‌ हुन्छ। ब्रह्मको सत्ता नपाए कसैको पनि अस्तित्व सम्भव हुँदैन। परमाणु वा आधुनिक विज्ञानको खोजी अनुसार सूक्ष्मतम Nano Partcle सम्म उसैको सत्ता पाएर र उसैलाई आफ्‌नू केन्द्रबिन्दु बनाएर घुमिरहेका हुन्छन्‌। ब्रह्म सानो भन्दा सानो परमाणुदेखि लिएर बृहत्तर अनन्त ब्रह्माण्ड पिण्डसम्म पनि व्याप्त छ। [1]सानोमा सानो र ठूलो भन्दा ठूलो पनि ब्रह्म नै हो। त्यो नै आत्मा हो। त्यो महान्‌ आत्मा अत्यन्त सूक्ष्मरूपमा प्रत्येक प्राणीका हृदयरूपी गुफामा बसेको छ र ऊ सानादेखि ठूलासम्मका प्राणीहरूका अङ्ग प्रत्यङ्ग अर्थात्‌ नङका टुप्पादेखि लिएर रौँका फेदसम्म आध्यासिकरूपले व्याप्त भएर चेतनरूपमा रहेको छ। त्यसै गरेर अचेतन वस्तुमा सत्तारूपले अस्तित्व दिएर स्थित छ।

ब्रह्म शब्द बृद्ध्यर्थक बृह्‌ धातुबाट बन्दछ। व्यापक र वर्धनशील भएकाले त्यस परम सत्तालाई ब्रह्म भनिएको हो।

---

१ अणोरणीयान्महतोमहीयानात्मास्य जन्तोर्निहितो गुहायाम्‌।

– कठोपनिषद्‌ २।२०

अणोः सूक्ष्मादणीयाञ्श्यामाकादेरणुतरः। महतो महत्परिमाणान्महत्तरः पृथिव्यादेः। अणु महद्‌वा यदस्ति लोके वस्तु तत्रैनैवात्मना नित्येन आत्मवत्सम्भवति। तदात्मना विनिर्मुक्तमसत्सम्पद्यते।

– शाङ्करभाष्य कठोपनिषद्‌ २।२०

सबैभन्दा अत्यन्त ठूलो र अरूको वर्धन गर्ने भएको हुँदा त्यस्तो चैतन्य सत्तालाई ब्रह्म भनिएको हो भनेर [२]पुराणादि शास्त्रहरूमा पनि आएको देखिन्छ।

अद्वैत वेदान्तको अन्तिम प्राप्य र ज्ञाप्य वस्तु नै ब्रह्म हो। ब्रह्म बाहेक अरू कुनै वस्तु पनि त्रिकालाऽवाध्य छैन। उही परम सत्य नै ऋत अर्थात् ज्ञेय वस्तु हो। उसैको अस्तित्वमा नै अखिल अनन्त ब्रह्माण्डका चर तथा अचर वस्तुहरू अस्तित्वयुक्त भएका छन्। ब्रह्मको परिभाषा दिने क्रममा आफैँ बढ्छ र अरूलाई पनि बढाउँछ, यसैकारण यसलाई परं ब्रह्म भनिन्छ भनेर श्रुतिमा आएको ब्रह्मपदलाई स्वयं श्रुतिले नै निमित्त र उपादानका भेदले अर्थ पनि देखाएको हो भनेर आद्य जगद्गुरु श्रीशङ्कराचार्यले आफ्नू [३]भाष्यमा दिनुभएको छ।

ब्रह्म बृहत् र बृंहणशील भएकाले सर्वत्र [४]ब्रह्मै ब्रह्म विद्यमान छ। त्यो अमृत ब्रह्म नै अगाडि छ, ब्रह्म नै पछाडि छ, ब्रह्म नै दाहिने र देब्रेमा छ। ब्रह्म नै तल र माथि सबैतिर व्याप्त छ। यो

---

२ बृहत्वाद् बृंहणत्वाच्च तस्माद्ब्रह्मेति शब्दितः। – हरिवंशपुराण
बृहत्वाद् बृंहणत्वाच्च तद्रूपं ब्रह्मसंज्ञितम्॥ – विष्णुपुराण १।१२।५५

३ अथ कस्मादुच्यते ब्रह्म इत्यारम्भ 'बृंहति बृंहयति तस्मादुच्यते परं ब्रह्म' इति सकृच्छ्रुतस्य ब्रह्मपदस्य निमित्तोपादानरूपेणार्थभेदः श्रुत्यैव दर्शितः। – श्वेताश्वतरोपनिषद् १।३ शाङ्करभाष्य

४ ब्रह्मैवेदममृतं पुरस्ताद्ब्रह्म पश्चाद् ब्रह्म दक्षिणतश्चोत्तरेण।
अधश्चोर्ध्वञ्च प्रसृतं ब्रह्मैवेदं विश्वमिदं वरिष्ठम्॥
– मुण्डकोपनिषद् २।२।११

सम्पूर्ण जगत् सर्वश्रेष्ठ ब्रह्म नै हो भनेर श्रुतिले पनि भनेको छ।

मन, वचन र वाणीका पहुँचदेखि ब्रह्म बाहिर छ। यी सबै ब्रह्मबाट सञ्चालित भएकाले र ब्रह्मका सत्ताबाट सत्तावान् भएकाले आफ्ना परमसत्तावान् ब्रह्ममा यी मायिक करणहरूको पहुँच हुन नसकेको हो। कुनै पनि करणले जान्नु, देख्नु, सुन्नु, भन्नु भनेको त्यो जानिने वस्तु त्यस क्रिया पदको कर्म हुनु हो र वस्तुलाई करणको प्रकाशले प्रकाशित गर्नु भनेको हो। किनभने कुनै पनि वस्तुको ज्ञान गर्न फलव्याप्ति र वृत्तिव्याप्ति हुनु आवश्यक छ। परप्रकाश्य विषय घटपटादिको ज्ञान गरेको जस्तो गरेर ब्रह्मज्ञान हुनसक्तैन। अतः ब्रह्ममा वृत्तिव्याप्ति भए पनि [५]फलव्याप्ति हुन सक्तैन। किनकि फल भनेको चिदाभास हो। चिदाभास भनेको ब्रह्मको बिम्बभूत साक्षीको पनि प्रतिबिम्ब चिदाभास हो। अतः मिथ्या चिदाभासको अल्प प्रकाशले परमप्रकाशस्वरूप परब्रह्मलाई प्रकाशित गर्न सक्तैन। जस्तै अल्पप्रकाश भएको टिमटिमे बत्तीले परम प्रकाशमय सूर्यलाई प्रकाशित गर्न सक्तैन। यसै कारण मनुष्यका मायिक [६]मनवचनादि करणहरूका माध्यमबाट ब्रह्म जान्न सकिँदैन भनेर श्रुति आदि शास्त्रहरूले भनेका हुन्।

---

५ फलव्याप्यत्वमेवास्य शास्त्रकृद्भिर्निवारितम्।
ब्रह्मण्यज्ञाननाशाय वृत्तिव्याप्तिरपेक्षिता॥
स्वयं स्फुरणरूपत्वान्नाभास उपयुज्यते॥
– पञ्चदशी, तृप्तिदीपप्रकरण ९०,९२

६ यतो वाचो निवर्तन्ते अप्राप्य मनसा सह।
– तैत्तिरीयोपनिषद् २।९।१, २।४।१)

त्यो ब्रह्म [७]अदृश्य, अग्राह्य अगोत्र, अवर्ण र चक्षुश्रोत्रादिहीन पनि हो। त्यसै गरेर ब्रह्म अपाणिपाद, नित्य, विभु, सर्वगत, अत्यन्त सूक्ष्म र अव्यय पनि हो। जुन ब्रह्म सम्पूर्ण भूतहरूको परम कारण हो त्यस ब्रह्मलाई विवेकीहरू सर्वत्र देख्तछन् भनेर अर्को श्रुतिले भनेको छ। त्यस *'अवाङ्मनसगोचरः'* ब्रह्मलाई [८]तत्त्ववेत्ताहरू ज्ञाता र ज्ञेयका भेदले रहित अखण्ड, अद्वितीय, सच्चिदानन्दस्वरूप ज्ञान तत्त्व भन्दछन्। त्यसैलाई कसैले ब्रह्म, कसैले परमात्मा र कसैले भगवान् भन्ने गर्दछन्।

यस विभु ब्रह्ममा परस्पर विरोधी धर्महरू रहन्छन्। उसले [९]हात नभएर पनि समात्तछ। पाउ विना पनि अत्यन्त वेगले ऊ हिँड्दछ। आँखा नभएर पनि देख्तछ भने कान विना पनि सुन्दछ। ऊ सम्पूर्ण वेद्यलाई जान्दछ। किन्तु उसलाई जान्ने कोही पनि छैनन्। त्यसै ब्रह्मलाई सर्वश्री परम पुरुष भनिन्छ भन्ने अर्को श्रुतिको उद्घोष छ।

---

७ यत्तदद्रेश्यमग्राह्यमगोत्रमवर्णमचक्षुः श्रोत्रं तदपाणिपादम्।
नित्यं विभुं सर्वगतं सुसूक्ष्मं तदव्ययं यद्भूतयोनिं परिपश्यन्ति धीराः।
– मुण्डकोपनिषद् १।१।६

८ वदन्ति तत्तत्त्वविदस्तत्त्वं यज्ज्ञानमद्वयम्।
ब्रह्मेति परमात्मेति भगवानिति शब्द्यते ॥ – भागवत १।२।११

९ अपाणिपादो जवनो ग्रहीता पश्यत्यचक्षुः स शृणोत्यकर्णः।
स वेत्ति वेद्यं न च तस्यास्ति वेत्ता तमाहुरग्र्यं पुरुषं महान्तम् ॥
–श्वेताश्वतरोपनिषद् ३।१९

उपर्युक्त प्रकारको [१०]'सत्य, ज्ञान, अनन्त आदि लक्षण भएको कुनै पनि बाह्यकरण र अन्तःकरणले पनि जान्न नसकिने त्यस ब्रह्मको जिज्ञासा गर्नु कागको दाँत गन्ने काम जस्तै व्यर्थ हो भन्ने वादीहरूको भनाइ पाइन्छ। त्यतिमात्रै होइन त्यस्तो अव्यक्त तथा निराकार ब्रह्मको जिज्ञासा गर्नु दुःख बेसाउनु मात्रै हो तर पार लाग्दैन भन्ने पनि केही वादीहरू देखिन्छन् । किनभने जसको [११]अव्यक्त ब्रह्ममा चित्त लागेको छ त्यस्ताले सर्वप्रथम देहाभिमान त्याग्नु पर्दछ। अव्यक्त ब्रह्मको चिन्तन गर्नु भनेको अत्यन्त क्लेशयुक्त काम हो। अव्यक्त ब्रह्मको ज्ञान गर्ने भनेको संसारप्रति आसक्त देहधारीका लागि अत्यन्त कठिन काम हो भनेर श्रीमद्भगवद्गीताले पनि भनेको छ।

त्यस्तो मन, वचन र सम्पूर्ण करणहरूबाट अप्राप्य तथा अग्राह्य ब्रह्म सृष्टिको क्रममा उसले म धेरै होऊँ, व्यक्त होऊँ र उत्पन्न होऊँ भन्ने [१२]इच्छा गऱ्यो । उसले तप गऱ्यो र तप गरेर नै यो सबै अखिल ब्रह्माण्डको रचना गऱ्यो । त्यसरी सम्पूर्ण चराचर जगत्को रचना गरेर अव्यक्त ब्रह्म त्यसै आफ्नू

---

१० सत्यं ज्ञानमनन्तं ब्रह्म । – तैत्तिरीयोपनिषद् २।१।१

११ क्लेशोऽधिकतरस्तेषामव्यक्तासक्तचेतसाम् ।
अव्यक्ता हि गतिर्दुःखं देहवद्भिरवाप्यते ॥ – श्रीमद्भगवद्गीता १२।५

१२ सोऽकामयत । बहुस्यां प्रजाययेति । स तपोऽतप्यत । स तपस्तप्त्वा इदं सर्वमसृजत यदिदं किञ्च । तत्सृष्ट्वा तदेञ्चानिरुक्तञ्च । निलयनञ्चानिलयञ्च विज्ञानञ्चाविज्ञानञ्च । सत्यञ्चानृतञ्च सत्यमभवत् । यदिदं किञ्च । – तैत्तिरीयोपनिषद् २।६।१

रचनाभित्र चैतन्य र सत्तारूपले अनुप्रवेश गऱ्यो। त्यस प्रकार अनुप्रवेश गरेर त्यो सत्यस्वरूप ब्रह्म मूर्त्त, अमूर्त्त, भन्न योग्य, नभन्न योग्य, आश्रय, अनाश्रय, चेतन, अचेतन एवं व्यावहारिक सत्य र असत्य सबै भयो भनेर छान्दोग्य श्रुतिले भनेको छ।

त्यो ब्रह्म त्यसरी अखिल प्रपञ्चमा अनुप्रवेश गरेपछि [१३]रूप रूपको प्रतिरूप हुनगयो। ब्रह्मको त्यो रूप प्रतिख्यापन गर्न अर्थात् प्रकट गर्नका लागि हो। त्यो ब्रह्म मायाद्वारा अनेक रूपमा प्रतीत वा परिवर्तित जस्तो भएर देखा पर्दछ।

अव्यक्त परब्रह्म जब मायाको उपाधिद्वारा धेरै रूप लिएर व्यक्त भयो, तब ऊ सबै भूतभौतिक जगत्‌को अभिन्न निमित्त र उपादान कारणका रूपमा परिणत भयो। त्यसपछि ब्रह्म, वेद र लोकमा प्रार्थनीय भयो। जुन ब्रह्मको [१४]रूपलाई वेदले अव्यक्त र सबैको कारण भनेको छ। जुन ब्रह्म ज्योतिःस्वरूप, सम्पूर्ण गुणहरूले रहित र विकारहीन हो। जसलाई विशेषणरहित, निष्क्रिय र केवल सत्ताका रूपमा वर्णन गरिएको छ। त्यो नै बुद्धि आदिको प्रकाशक अन्तःकरणावच्छिन्न ब्रह्मचैतन्य, कूटस्थ, साक्षी र प्रत्यगात्मा हो। जसद्वारा सम्पूर्ण प्राणीहरू अनुप्राणित हुन्छन्।

---

१३ रूपं रूपं प्रतिरूपो वभूव तदस्य रूपं प्रतिचक्षणाय। इन्द्रो मायाभिः पुरुरूप ईयते।

– बृहदारण्यकोपनिषद् २।५।१३

१४ रूपं यत् यत् प्राहुरव्यक्तमाद्यं ब्रह्म ज्योतिर्निर्गुणं निर्विकारम्।
सत्तामात्रं निर्विशेषं निरीहं स त्वं साक्षाद् विष्णुरध्यात्मदीपः॥

– श्रीमद्भागवत १०।३।२४

त्यो शुद्ध ब्रह्म [15]कलाहीन, क्रियाहीन, शान्त, अनिन्द्य, निर्लेप, अमृतको परम सेतु र धूमादिशून्य झलझलाकार अग्नि समान हो भनेर श्रुतिले भनेको छ। सर्वान्तर साक्षात् अपरोक्ष [16]ब्रह्म आत्मा हो। त्यस दृष्टिका द्रष्टालाई देख्न सकिँदैन। श्रुतिका श्रोतालाई सुन्न सकिँदैन। मतिका मन्तालाई मनन गर्न सकिँदैन। विज्ञातिका विज्ञातालाई जान्न सकिँदैन। तिम्रो त्यही आत्मा नै सर्वान्तर हो। यस बाहेक अरू सबै नाशवान् हुन्।

अव्यक्त ब्रह्मलाई लोकमा बुझाउनका लागि भौतिक आकाशको उदाहरण शास्त्रले दिने गरेको छ। किनभने अरू उदाहरण दिएर यस अव्यक्त ब्रह्मलाई व्यक्त गर्न सकिँदैन। जसरी एक अखण्ड आकाश सम्पूर्ण घट, मठादिका भित्र उपाधिद्वारा परिच्छिन्न जस्तो भएर देखा पर्दछ, त्यसै गरेर ब्रह्म प्रत्येक चेतन प्राणीका अन्तःकरणमा बुद्धिरूपी उपाधिद्वारा परिच्छिन्न भएर चिदाभास चैतन्यका रूपमा र अचेतन वस्तुमा सत्ताका रूपमा सर्वत्र व्याप्त छ।

ब्रह्मलाई लौकिक उदाहरण दिएर मुमुक्षुलाई बुझाउन वेदमा ब्रह्मको उदाहरण [17]आकाशसँग दिइएको छ। ब्रह्म आकाश जस्तै व्यापक र विभू भएका कारण यस्तो उदाहरण

---

१५ निष्कलं निष्क्रियं शान्तं निरवद्यं निरञ्जनम्।
अमृतस्य परं सेतुं दग्धेन्धनमिवानलम् ॥ – श्वेताश्वतरोपनिषद् ६।१९

१६ साक्षादपरोक्षाद्ब्रह्म य आत्मा सर्वान्तरः।
– बृहदारण्यकोपनिषद् ३।४।२

१७ ओ३म् खं ब्रह्म। – शुक्लयजुर्वेदसंहिता ४०।१७

दिइएको हो। ब्रह्मलाई शून्यका रूपमा लिएर आकाशको उदाहरण दिइएको भने होइन।

सृष्टिको प्रथम अवस्थामा ब्रह्म एकमात्र अद्वितीय [१८]सत् थियो। किन्तु त्यसै सत् ब्रह्मका विषयमा कुनै शून्यवादीले आरम्भमा यो एकमात्र अद्वितीय असत् थियो भन्ने अर्थ लगाए। त्यसै असत् अर्थात् शून्यबाट सत्को उत्पत्ति भएको हो भन्ने उक्त मन्त्रमा *'एके आहुः'* अर्थात् कसैले भने भनेर आएको वैनाशिक अथवा शून्यवादीले भने भनेर श्रुतिले भन्न खोजेको हो। उनीहरूले वस्तुको निरूपण गर्दै उत्पत्तिभन्दा पूर्व आरम्भमा यो जगत् एक अद्वितीय असत् अर्थात् सत्को अभावमात्र थियो भने। शून्यवादीहरू उत्पत्तिभन्दा पूर्व सत्को अभावमात्रलाई नै तत्त्व मान्दछन्।

किन्तु उपर्युक्त वैनाशिक शून्यवादीको मतलाई कुनै प्रमाणबाट पनि मान्न सकिँदैन। यस कुरालाई अर्को श्रुतिले व्याख्या गर्दै र स्पष्ट पार्दै अगाडि भनेको छ – सृष्टिभन्दा [१९]पूर्व यो जगत् असत् अर्थात् अव्याकृत, अव्यक्त ब्रह्मरूप नै थियो। यसै अव्यक्त सदात्मक ब्रह्मबाट नामरूपात्मक व्यक्त जगत्को उत्पत्ति भयो। त्यसले स्वयं आफूलाई नामरूपात्मक

---

१८ सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम्। तद्धैक आहुरसदेवेदमग्र आसीदेकमेवाद्वितीयम्। तस्मादसतः सज्जायत।

– छान्दोग्योपनिषद् ६।२।१

१९ असद्वा इदमग्र आसीत्। ततो वै सदजायत। तदात्मानं स्वयमकुरुत।

– तैत्तिरीयोपनिषद् २।७।१

ब्रह्म वा इदमग्र आसीदेकमेव। – बृहदारण्यकोपनिषद् १।४।११

जगत्‌का रूपबाट रच्यो। अर्थात् आफू नै प्रपञ्चका रूपमा ब्रह्म विवर्तित भयो।

यसरी श्रुतिले अव्याकृत सत् ब्रह्मबाट व्याकृत नामरूपात्मक सृष्टि भएको भन्दै असत् अर्थात् अभावबाट सत् अर्थात् भाव पदार्थको सृष्टि कसरी हुन्छ ? भन्दै स्वयं असद्‌वादी वैनाशिकसँग प्रश्न गर्दै श्रुति त्यसको समाधान पनि दिन्छ। [20]कुन प्रमाणबाट असत्‌बाट सत्‌को कसरी उत्पत्ति हुन्छ ? अर्थात् यस्तो असम्भव कुरा कुनै प्रमाणबाट पनि हुनसक्तैन। अतः आरम्भमा यो एकमात्र अद्वितीय सत् ब्रह्म नै थियो भन्ने श्रुतिको निर्णय देखिन्छ।

उपर्युक्त श्रुतिप्रमाणलाई नमानेर यदि वैनाशिक बौद्धहरू असत्‌बाट नै सत्‌को उत्पन्न हुन्छ भनेर मूढाग्रह राख्तछन् भने बीजको नाश भएपछि अभावबाट अङ्कुर उत्पन्न हुन्छ भनेर भन्न पनि सक्नु पर्दछ। यदि त्यसो भन्दछन् भने त्यो उनीहरूकै सिद्धान्तका प्रतिकूल हुने देखिन्छ। किनभने बीजका आकारले युक्त जुन बीजका अवयव हुन्छन्, तिनको अनुवृत्ति अङ्कुरमा पनि हुन्छ। अङ्कुर उत्पन्न भएपछि त्यसको नाश हुँदैन। बीजाकारको जुन संस्थान हो, त्यसलाई भने वैनाशिक बौद्ध पनि बीजका अवयवहरू भन्दा फरक अरू कुनै वस्तु मान्दैनन्। जसको अर्थात् जुन अङ्कुरको उत्पत्ति भएपछि नाश होस्। यदि तिनीहरूले बीजका अवयवदेखि व्यतिरिक्त त्यो

२० कुतस्तु खलु सौम्यैवं स्यादिति होवाच कथमसतः सज्जायेतेति। सदे सोम्येदमग्र आसीदेकमेवाद्वितीयम्। – छान्दोग्योपनिषद् ६।२।२

वास्तविक स्वरूप हो भनेर मान्दछन् भने त्यो उनीहरूको मान्यताको विरुद्ध हुन्छ।

यदि उक्त कुरा [२१]संवृति अर्थात् लौकिक व्यवहारद्वारा मानिएको बीज र संस्थानको रूप नष्ट हुन्छ भनेर वैनाशिकहरू भन्छन् भने संवृत्ति भनेको के हो ? भाव हो कि ? अभाव हो ? यसको जबाफ उनीहरूले दिनुपर्दछ। अभाव हो भन्छौ भने अभावबाट भावको उत्पत्ति भएको कुनै दृष्टान्त पाइँदैन। यसकारण अभावरूपा संवृति बीजका सत्ताको साधिका हुनसक्तैन। यदि भाव हो भन्छौ भने तिम्रो सिद्धान्त विपरीत हुनजान्छ। यदि अभावबाट अङ्कुरको उत्पत्ति हुन्छ भन्छौ भने अभावबाट उत्पत्ति हुनु सम्भव छैन। किनभने अङ्कुरको उत्पत्ति चाहिँ बीजका अवयवहरूबाट हुन्छ। अभाव वा शून्यबाट हुँदैन।

उपर्युक्त अनुसार विचार गर्दा जसरी बिना बीज अङ्कुरको उत्पत्ति हुन सक्तैन, त्यसै गरेर विना सद् ब्रह्म वैनाशिकको अभाव अर्थात् शून्यबाट सृष्टि हुन सक्तैन। महाप्रलयपछि महासृष्टि हुँदा ब्रह्मको सत्ताबाट सृष्टि हुन्छ, सत्तारूपबाट र जीव वा चैतन्यरूपबाट ब्रह्म नै चराचर सबैमा विवर्तित हुन्छ र व्याप्त हुन्छ। ऊ पूर्णरूपमा सम्पूर्ण सृष्टिभरि भरिन्छ। त्यसकारण [२२]ब्रह्मलाई पूर्ण भनिन्छ। किनभने त्यो परब्रह्म पूर्ण हो र यो

---

२१ द्वे सत्ये समुपाश्रित्य बुद्धानां धर्मदेशना।
लोकसंवृति सत्यञ्च सत्यञ्च परमार्थता ॥ – मध्यकशास्त्र

२२ पूर्णमदः पूर्णमिदं पूर्णात् पूर्णमुदच्यते।
पूर्णस्य पूर्णमादाय पूर्णमेवावशिष्यते ॥ – बृहदारण्यकोपनिषद् ५।१।१

सोपाधिक ब्रह्म पनि पूर्ण हो। यो कार्यात्मक ब्रह्म पनि पूर्ण हो, जुन कारणात्मक पूर्णबाट नै पूर्णात्मकरूपमा उत्पन्न हुन्छ। यस पूर्णको पूर्ण अर्थात् अविद्याकृत अन्यत्वाभासलाई निकालेपछि पनि यो पूर्ण नै रहन्छ भनेर श्रुतिले भनेको छ। जब महाप्रलय अर्थात् प्रकृतिलय हुन्छ तब सम्पूर्ण सृष्टिचक्र ब्रह्ममा गएर समेटिन्छ। तब ब्रह्म नै व्याकृतबाट अर्थात् व्यक्तबाट अव्याकृत वा अव्यक्त हुन्छ। यसैलाई अज्ञानीहरूले शून्य भनेका हुन्। वस्तुतः ब्रह्म शून्यको पनि साक्षी हो। वैनाशिकहरूले पनि साक्षी, ब्रह्म वा चैतन्य नहुने हो भने शून्यको अनुभूति गर्न सक्तैनन्। त्यसै चैतन्य ब्रह्मको सत्ता पाएर नै यी नास्तिकहरू पनि ब्रह्मसत्ताको र आफ्नै अस्तित्वको निषेध गरिहिँडेका छन्। योभन्दा ठूलो विडम्बना के हुनसक्तछ ?

शून्यवादीहरूका सम्बन्धमा [२३]श्रीशङ्कराचार्यले उनीहरूको शून्य सिद्ध गर्ने प्रत्यक्ष, अनुमान र श्रुतिसमेत कुनै प्रमाण नभएकाले शून्यवादको निराकरणका निमित्त प्रत्यय गरिरहनु पर्दैन, किनभने त्यो आफैँ निराकृत छ भनेर श्रीशङ्कराचार्यले आफ्नो भाष्यमा लेख्नुभएको छ। अतः शून्यवादीको शून्य पनि ब्रह्म नै हो र सत्वादीको सत् पनि ब्रह्म नै हो भन्ने सिद्धान्त निर्विवाद सिद्ध हुन्छ। ॐ ब्रह्मार्पणमस्तु।

२३ शून्यवादीपक्षस्तु सर्वप्रमाणप्रतिसिद्ध इति तन्निराकरणाय नादरः क्रियते।
– बृहदारण्यकोपनिषद् ४।३।७ मन्त्रको शाङ्करभाष्य

# १०. आधिकारिक पुरुषको मुक्ति

ब्रह्मतत्त्वविदां मुक्तिः पाक्षिकी नियताऽथवा ।
पाक्षिक्यपान्तरतमः प्रभृतेर्जन्मकीर्तनात् ॥
नानादेहोपभोक्तव्यमीशोपास्तिफलं बुधाः ।
भुक्त्वाधिकारिपुरुषा मुच्यन्ते नियता ततः ॥

– *वैयासिकन्यायमाला*

ब्रह्मसाक्षात्कार भइसकेको मुक्त पुरुषको वर्तमान देहपात भएपछि उसले फेरि जन्म लिनुपर्छ कि पर्दैन ? भन्ने सन्देहमा वेदाचार्य अपान्तरतमा, वसिष्ठ, भृगु, सनत्कुमार आदिले फेरि जन्म लिएको उदाहरण शास्त्रहरूमा पाइन्छ। अतः ब्रह्मज्ञानीको मुक्ति नियत नभएको देखिन्छ भनेर पूर्वपक्षीको भनाइ आएको छ।

उपर्युक्त पूर्वपक्षको खण्डन गर्दै सिद्धान्ती आफ्नू पक्ष राख्तछन् । [1]अपान्तरतमा आदि महर्षिहरूको स्वनुष्ठित अर्थात् सुष्ठु अनुष्ठित विद्या र कर्मबाट [2]परितुष्ट भएर परमेश्वरले जसलाई जुन आधिकारिक पदमा नियुक्त गरेको हुन्छ,

---

१ विद्याकर्मस्वनुष्ठानतोषितेश्वरचोदितम् ।
अधिकारं समाप्येते प्रविशन्ति परं पदम् ॥ – भामती ७५। ब्रह्मसूत्र ३।३।३२

२ ततस्तुतोष भगवान् हरिस्तेनास्य कर्मणा ।
तपसा च सुतप्तेन यमेन नियमेन च ॥
मन्वन्तरेषु पुत्रत्वमेवमेव प्रवर्तकः ।
भविष्यस्यचलो ब्रह्मन्नधृष्यश्चैव नित्यशः ॥ – महाभारत १२।३४९

तिनीहरूले आफ्नू दायित्व सुम्पिएका कार्यहरू सम्पादन गरेपछि परमपदमा प्राप्त हुन्छन्, अर्थात् मुक्त हुन्छन् भनेर अपान्तरतमा महर्षिका सम्बन्धमा महाभारतमा उपर्युक्त वचनको वर्णन आएको छ।

उपर्युक्त अनुसारका शास्त्रीय वचनहरू विद्यमान हुँदाहुँदै पनि अपान्तरतमा आदि तत्त्ववेत्ता मुक्त पुरुषहरू पुनः देहधारणा गर्दछन् भने ब्रह्मविद्या मोक्षको हेतु कसरी हुनसक्तछ ? भनेर सन्देह प्रकट गर्नु उचित होइन। किनभने वास्तविक हेतु पनि प्रबल प्रतिबन्धक उपस्थित भएमा आफ्नू कार्य उत्पन्न गर्न नसक्ने हुनजान्छ। तथापि त्यस तत्त्वमा कारणताको अभाव चाहिँ त्यसैगरी मान्न सकिँदैन जसरी गुरुत्व गुणलाई पतनको कारण मान्दाखेरि पनि सुदृढ भेट्नु भएको रुखकटहरको ठूलो फल रुखमा झुन्डिरहन्छ, गुरुत्वले त्यसको पतन गराउन सक्तैन। त्यति हुँदाहुँदै पनि त्यस गुरुत्वमा पतनको अकारणता पाउन भने सकिँदैन। किन्तु प्रतिबन्धक पदार्थ निवृत्त भएपछि कारणले आफ्नू कारणलाई तुरुन्तै जन्म दिन्छ।

अर्को उदाहरणमा कुनै तेज गति भएको नदीको जलमा बाँध निर्माण गरेकोमा नदीको जलको बहाव ओरालोतर्फ बग्न नपाएर अवरुद्ध हुन्छ, किन्तु बाँध भत्काएमा वा भत्किएमा आफ्नो साविकको बाटोबाट निर्बाध बग्न पाउँछ। त्यसरी उदाहार्यमा पनि विद्या र कर्मद्वारा परितोषित परमेश्वरले अपान्तरतमा आदि महात्माहरूलाई सृष्टिकार्यको सञ्चालनमा आफूलाई सहयोग गर्ने जुन अधिकार वा दायित्व प्रदान

गर्नुहुन्छ, त्यसैबाट प्रतिबद्ध भएर ब्रह्मविद्या यद्यपि तुरुन्तै मुक्ति दिँदैन तापनि उक्त अधिकार वा दायित्व पूरा हुनेबित्तिकै प्रतिबन्ध हट्‌तछ र उनीहरू मुक्त हुन्छन् ।

यस सम्बन्धमा अर्को उदाहरण पनि आचार्य वाचस्पति मिश्रले दिनुभएको छ। जसरी ब्रह्मसाक्षात्कार भइसकेको विद्वान्‌को प्रारब्ध कर्म प्रतिबन्धक हुन्छ र प्रारब्ध कर्म भोगिसकेपछि मात्रै ज्ञानी मुक्त हुन्छ त्यसरी नै परमात्माद्वारा प्रदत्त अधिकार पनि मोक्षको प्रतिबन्धक हुन्छ। अपान्तरतमा आदि मुक्तात्माहरू अनासक्त भावनाद्वारा सांसारिक पुरुषका सरह नै परमात्माद्वारा प्रदत्त अधिकारको उपयोग गर्दछन् र त्यसको अवधि समाप्त भएपछि तत्कालै मुक्त हुन्छन् । आधिकारिक पुरुषहरूको प्रत्यावर्तन कर्मबन्धनबाट नभएर परमात्माको कार्यसञ्चालनमा सहयोग पुऱ्याउनका लागि नै हो ।

आधिकारिक पुरुषहरू जातिस्मर हुँदैनन् । अर्थात् उनीहरू आफ्नू पूर्वजन्मको घटनाको स्मरण गर्दैनन्। किनभने जुन व्यक्तिले आफ्ना इच्छाद्वारा शरीर त्याग गर्दैन र जसको आफ्नू प्रारब्ध कर्म अनुसार मृत्यु भएको छैन भने त्यस्ता व्यक्तिले फेरि जन्म लिएर आफ्ना पूर्व जन्ममा अनुभव गरेका पदार्थ र घटनाहरूको स्मरण गर्दछ । यसैलाई जातिस्मर भनिन्छ। किन्तु जुन पुरुष आफ्नू प्रारब्ध कर्म अनुसारको आयु भोगेर मृत्युमा प्राप्त हुन्छ उसलाई [३]जातिस्मरण अर्थात् पूर्व जन्मको स्मरण हुँदैन ।

---

३ नचैते जातिस्मराः । – ब्रह्मसूत्रशाङ्करभाष्य ३।३।१९।३२

उपर्युक्त सन्दर्भमा [४]महाभारतमा ब्रह्मवादिनी सुलभा र राजा जनकको विवाद वा संवादको प्रसङ्ग आएको देखिन्छ। जनकका सभामा पुगेकी सुलभा र जनकको संवाद सुरु हुन्छ। शास्त्रार्थ गर्दै जाँदा राजा जनकले उत्तेजित भएर तीक्ष्ण तथा मर्मभेदिनी भाषामा सुलभालाई थुप्रै प्रश्नहरू सोध्छन्। किन्तु सुलभाले संयम राखेर अर्थात् संयमित भएर कुनै प्रतिक्रिया नदेखाईकन संयत भाषामा जनकका सबै प्रश्नहरूको यथार्थ उत्तर दिन्छिन्। अन्ततोगत्वा राजा जनक मौन भएको आख्यान [५]भीष्म पितामहको कथनमा आएको छ।

आधिकारिक पुरुष पनि आफ्नू प्रारब्ध कर्मको नै उपभोग गर्दछ। किन्तु सञ्चित कर्मको उपभोग गर्दैन। किनभने ब्रह्मसाक्षात्कारको समयमा नै उसको सञ्चित कर्मको बीजभाव अर्थात् अविद्याको लेशसमेत [६]भस्मसात् भइसकेको हुन्छ।

तत्त्ववेत्ता पुरुषले आफ्नू एउटा प्रारब्ध कर्मको उपभोग गर्दागर्दै यदि उसको अर्को प्रारब्ध कर्म आविर्भाव भएमा त्यसको उपभोग गर्नुपर्ने हुन्छ भन्न कत्ति पनि मिल्दैन। किनकि

---

४ महाभारत शान्तिपर्व अध्याय ३२०

५ इत्येतैरसुखैर्वाक्यैरयुक्तैरसमञ्जसैः।
प्रत्यादिष्टा नरेन्द्रेण सुलभा न व्यकम्पत॥
उक्त वाक्ये तु नृपतौ सुलभा चारुदर्शना।
ततश्चारुतरं वाक्यं प्रचक्रमाय भाषितुम्॥
– महाभारत शान्तिपर्व अध्याय ३२०, श्लोकवार्तिक ७६,७७

६ यथैधांसि समिद्धोऽग्निर्भस्मसात्कुरुतेऽर्जुन।
ज्ञानाग्निः सर्वकर्माणि भस्मसात्कुरुते तथा॥ – गीता ४।३७

सञ्चित कर्म नभई प्रारब्धकर्म आविर्भाव हुँदैन र ब्रह्मसाक्षात्कार हुनेबित्तिकै सञ्चित कर्म सबै नाश हुने शास्त्रीय वचनहरू माथिल्ला पङ्क्तिहरूमा उल्लेख गरिसकिएको छ।

आधिकारिक पुरुष पनि अरू जीव सरह नै हो। जीवको [७]जन्मजन्मान्तरदेखिको पुण्यपुञ्जको परिपाक भएपछि ऊ मुक्त हुन्छ। त्यही मुक्तात्मा मध्येको जीव नै उसका सुष्ठु अनुष्ठित विद्या र कर्मबाट परितुष्ट भएर आफ्ना सहयोगीका रूपमा परमात्माले उसलाई जगत्सञ्चालनको गुरुतर दायित्व दिएर केही समयका लागि आधिकारिक पदमा नियुक्त गरेको हुन्छ र उसले आफूलाई ईश्वरबाट प्रदत्त दायित्व पूरा गरेपछि सधैँका लागि ऊ मुक्त भएर जाने कुरा माथि नै उल्लेख गरिसकियो।

अब जिज्ञासा उत्पन्न हुन सक्तछ कि परमात्माले त्यस्ता मुक्तात्मालाई कुन अवस्थामा अर्थात् मुक्त भएपछि वा मुक्त हुनुभन्दा पहिले नै आधिकारिक पुरुषका रूपमा नियुक्त गर्दछन् ? यस सम्बन्धमा बुझ्नु अति आवश्यक छ। किनभने ब्रह्मसाक्षात्कार भएर मुक्त भइसकेको जीवात्माको भिन्नै अस्तित्व बाँकी नरहने हुँदा उसलाई आधिकारिक पुरुषमा परमात्माले नियुक्त गर्ने कुरै भएन। जस्तै अगाध समुद्रको जलमा पुगेर आफ्नू नाम र रूपसमेत विसर्जन गरेको नदीको जलबिन्दुलाई समुद्रबाट छुट्याएर परिचय दिन सम्भव हुँदैन। अतः परमात्माले त्यसै ज्ञानी पुरुषलाई आधिकारिक पुरुषका

७ मुक्तिर्नो शतकोटिजन्मसु कृतैः पुण्यैर्विना लभ्यते। – विवेकचूडामणि २

रूपमा नियुक्त गर्दछन् जो ब्रह्मसाक्षात्कार गरिसकेपछि पनि प्रारब्ध कर्मद्वारा निर्धारित आयुलाई भोगेर जीवन्मुक्ति अवस्थामा ब्रह्म भएर बाँचिरहेको हुन्छ। त्यसै जीवन्मुक्त पुरुषको प्रारब्ध कर्मलाई आधार बनाएर उसलाई नै परमात्माले आधिकारिक पुरुषमा नियुक्त गर्दछन् ।

सारांशमा उपर्युक्त अपान्तरतमा आदि मुक्तात्माहरू जगत् सञ्चालनका लागि ईश्वरका आदेश अनुसार केही समय संसारमा बसेर प्रारब्ध कर्म क्षीण भएपछि उनीहरू अन्त्यमा सधैँका लागि मुक्त भएर जान्छन्। जसरी [८]ज्ञानीलाई मुक्त हुन त्यति समयमात्रै विलम्ब हुन्छ, जबसम्म उसको देहपात हुँदैन। देहपात हुने बित्तिकै ब्रह्मज्ञानी मुक्त भइहाल्दछ, अर्थात् ब्रह्म भइहाल्दछ भन्ने श्रुतिको उद्घोष भएकाले तदनुरूप नै [९]आधिकारिक पुरुषहरूको पनि मुक्ति हुने कुरा निर्विवाद सिद्ध हुन्छ।

मुक्त ब्रह्मज्ञानीको [१०]पुनरावृत्ति हुँदैन भनेर श्रुतिको उद्घोष छ। किन्तु उपनिषद्मा [११]*'इमम्'* भन्ने विशेषणको पर्यायवाची शब्द इह हुन्छ भनेर आचार्य श्रीशङ्करले आफ्नू भाष्यमा लेख्नु भएको छ। यो विशेषण *'मानवमावर्तम्'* को आएको

---

८ तस्य तावदेव चिरं यावन्न विमोक्ष्येऽथ सम्पत्स्य इति ।
– छान्दोग्योपनिषद् ६।१४।२

९ यावदधिकारमवस्थितिराधिकारिणाम् । – ब्रह्मसूत्र ३।३।१९।३२

१० तेषां न पुनरावृत्तिः । – बृहदारण्यकोपनिषद् ६।२।२५

११ एतेन प्रतिपद्यमाना इमं मानवमावर्तं नावर्तन्ते । – छान्दोग्योपनिषद् ४।१५।१

हुँदा यसै पृथिवी लोकमा मुक्त पुरुष नफर्के पनि कुनै अरू लोकहरूमा वा केही युग वा कल्पपछि यसै पृथिवीमा नै पनि मुक्त पुरुषको पुनरावर्तन हुनसक्नेमा कतिपय आचार्यहरूको मत देखिन्छ । अतः उपनिषद्को मन्त्रमा आएको 'इमं मानमावर्तम्' को आशय र आचार्यहरूको भनाइ पनि यसै आधिकारिक पुरुषको प्रत्यावर्तनबाट मिल्ने देखिन्छ । यस प्रत्यावर्तनको विषयमा अरू धेरै तर्कवितर्क र ऊहापोह गरि रहनु पर्ने देखिँदैन । मुक्त पुरुष कुनै युग र अवस्थामा पनि जन्ममरणको कुचक्रमा फर्कंदैन । यसो गर्दा मुक्त पुरुष [१२]जन्ममरणको यस आवर्त वा भुमरीमा फेरि नफर्किने श्रुतिवचन पनि सार्थक हुने देखिन्छ । ॐ ब्रह्मार्पणमस्तु ।

---

१२ न च पुनरावर्तते । – छान्दोग्योपनिषद् ८।१५।१

# ११. आश्चर्य

आश्चर्य शब्द आ+चर+ण्यत् सुट् भएर बन्दछ । यसका सामान्य अर्थहरू चमत्कार, विलक्षण, असाधारण, आश्चर्यजनक, अद्‌भुत, विस्मय, अचम्म, अनौठा, आसर्जे र उदेक आदि हुन्छन् । किन्तु प्रकृत प्रसङ्गलाई व्यावहारिकरूपमा मात्र व्याख्या नगरेर त्यसभन्दा माथि आध्यात्मिक, पारलौकिक र दार्शनिक दृष्टिले व्याख्या गरिने छ। जसलाई प्रत्येक जिज्ञासु पाठकले बुझ्नु आवश्यक छ।

यस आश्चर्यलाई महाभारतको एउटा प्रसङ्गबाट शुरु गर्नु सान्दर्भिक हुनेछ। त्यो प्रसङ्ग पाण्डवहरू वनवासमा रहेको समयमा यक्ष र युधिष्ठिरका बीचमा भएको संवादमा आधारित छ। यक्षले [१]आश्चर्य के हो ? भनेर युधिष्ठिरलाई सोधेपछि संसारमा दिनदिनै प्राणीहरूको मृत्यु भइरहेको छ, तर टार्न नसकिने त्यस मृत्युलाई देख्ने जीवित मनुष्यहरू भने सधैँ बाँचिरहने इच्छा गर्दछन्। अवश्यम्भावी आफ्नू निकटवर्ती मृत्युलाई नदेखेर जो सधैँ बाँच्न खोज्दछन् योभन्दा बढी आश्चर्य के हुनसक्तछ ? भनेर युधिष्ठिर यक्षलाई उत्तर दिन्छन् ।

---

१ अहन्यहनि भूतानि गच्छन्तीह यमालयम् ।
शेषाः स्थावरमिच्छन्ति किमाश्चर्यमतः परम् ॥
– महाभारत वनपर्व ३१३।११४,११६

यस प्रकारको आश्चर्यलाग्दो व्यवहार अज्ञानी, अदूरदर्शी र संसारी मान्छेले सृष्टिको प्रभातदेखि गरिरहेको छ र प्रलयसम्म पनि गरिरहने छ। अरूलाई मारेर आफू चिरञ्जीवी बन्न खोज्नु नै आश्चर्य हो। यस्ता आश्चर्यका पात्रहरूको कहानी वैदिक, पौराणिक, प्रागैतिहासिक, ऐतिहासिक र वर्तमान कालसम्म हुँदै आएको छ र पछिसम्म चलिरहने छ। प्रत्येक व्यक्ति आफू अजम्बरी र कालजयी भएको ठानेर विभिन्न प्रकारका कामना र एषणाहरू अन्तःकरणमा बोकेर दौडिरहन्छ। अज्ञको त कुरै छोडौँ, यो संसार अनित्य हो, मिथ्या हो, मायिक हो, आध्यासिक हो र दुई दिनको घामछाया हो भनेर प्रवचन, पुराण र उपदेश गर्दै हिँड्ने अद्वैत वेदान्तका गुरु, पण्डित, सन्न्यासी र महात्माहरू नै मान, सम्मान, धन, कीर्ति र उपाधिका लागि हिरिक्क भएर आफ्नू स्वाध्याय, अध्ययन, अध्यापन, चिन्तन र मनन समेतलाई चटक्कै छोडेर अहर्निश मनमा अदम्य लालसा, कामना, एषणाको भारी बोकेर अर्थका लागि दौडिरहेको देख्ता आश्चर्य लाग्दछ। किनभने अरूलाई लालसा, एषणा, कामना सबै बन्धनका कारण हुन्, यिनले मुक्तिको बाटोलाई छेक्तछन् भनेर उपदेश गर्ने ज्ञानी उपदेशक द्रव्यैषणा, लोकैषणा आदिमा आकण्ठ चुर्लुम्म डुबेको देख्ता आश्चर्य लाग्दछ।

संसारमा मनुष्यले निर्माण गरेका चीनको विशाल पर्खाल, भारतको ताजमहल जस्ता भौतिक वस्तुलाई पनि आश्चर्यमा

लिइन्छ, तर तिनको निर्माता मान्छे नै सबैभन्दा आश्चर्यको विषय हो। संसारमा सबैभन्दा आश्चर्य लाग्दो प्राणी नै मान्छे हो। किनभने मान्छे मनमा एउटा कुरो राख्तछ, मुखले अर्को कुरा गर्दछ र कार्यमा अर्कै गर्दछ। मान्छे नै एउटा यस्तो आश्चर्य लाग्दो प्राणी हो जसले परोपकार गर्नेलाई प्रत्युपकार गर्नुको साटो कृतघ्नताका साथ धोका दिन्छ। एकातर्फ दुराचारी, भ्रष्ट, अनैतिक, लोभी, कामी, क्रोधी मान्छे विश्वासै गर्न नसकिने अविश्वस्त सामाजिक प्राणी हो भने अर्कोतर्फ भयङ्कर निर्दयी र क्रूर प्राणी पनि हो। फेरि त्यही मान्छे सदाचारी, नैतिक, चरित्रवान्, उदार, त्यागी, एषणाशून्य भएमा पृथ्वीको देवता हो र गहना पनि हो। यसै कारण मान्छे बुझ्नै नसकिने आश्चर्ययुक्त प्राणी हो। किन्तु नृशंस र कृतघ्न त्यही मान्छे बाहिरबाट भित्रतर्फ फर्केर आत्मचिन्तन गर्‍यो भने स्वयं ब्रह्म नै हुन्छ। यो भन्दा आश्चर्य के हुनसक्तछ ?

त्यस्तो आत्मतत्त्व अर्थात् ब्रह्मतत्त्वलाई अज्ञानीले, संसारीले र बहिर्दृष्टि भएको मनुष्यले बुझ्नै सक्तैन। बुझ्न सक्ने कुरा ता परै जाओस् धेरैले चाहिँ आत्माका बारेमा [२]सुन्नसम्म पनि पाउँदैनन्। फेरि अर्कोतर्फ धेरै जना अशुद्धचित्त भएका अभागी मानिसहरू आत्मतत्त्वका बारेमा श्रवण गरेर पनि त्यसलाई जान्न सक्तैनन्। त्यतिमात्रै

२ श्रवणायापि बहुभिर्यो न लभ्यः शृण्वन्तोऽपि बहवो यं न विद्युः।
आश्चर्यो वक्ता कुशलोऽस्य लब्धाश्चर्यो ज्ञाता कुशलानुशिष्टः॥
– कठोपनिषद् १।२।७

होइन, यसको वक्ता पनि आश्चर्य अर्थात् अद्भुत नै हुन्छ। किनभने आत्मतत्त्वका बारेमा आफूले आत्मसात् गरेर अर्थात् साक्षात्कार गरेर अर्कोलाई भन्न सक्नु पनि आश्चर्य नै हो। त्यस्ता वक्ता पनि अत्यन्त विरलै नै हुन्छन्। आत्मा बुझ्ने चाहिँ [३]हजारौँमा कुनै एक कुशल व्यक्तिमात्रै हुन्छ। किनभने आत्मदर्शनमा कुशल अर्थात् श्रोत्रिय ब्रह्मनिष्ठ गुरुले उपदेश गरिएको आत्मतत्त्वलाई बुझ्ने ज्ञाता पनि आश्चर्यरूप नै हो।

यसै आश्चर्यको कुरालाई गीताले पनि वर्णन गरेको छ। त्यसलाई शाङ्करभाष्य, आनन्दगिरि र मधुसूदन सरस्वतीको टीकाका आधारमा सङ्क्षिप्त चर्चा गरिने छ। आत्मचिन्तन गर्न त्यति सजिलो छैन। आत्मतत्त्व अत्यन्त दुरूह, दुर्विज्ञेय र गूढ पनि छ। आश्चर्यको परमपुञ्ज नै आत्मतत्त्व हो। किनभने पहिले जुन देखिएको थिएन, अकस्मात् दृष्टिगोचर भयो भने त्यस्तो अद्भुत पदार्थको नाम नै आश्चर्य हो। त्यसै सदृशको नाम नै [४]आश्चर्यवत् हो। यस्तो अदृश्य, अज्ञेय, दुर्विज्ञेय र अवाङ्मनसगोचर आत्मालाई कुनै महात्मा ब्रह्मज्ञले नै आश्चर्यमय वस्तुका सरह देख्तछ। त्यतिमात्रै

---

३ मनुष्याणां सहस्रेषु कश्चिद्यतति सिद्धये।
यततामपि सिद्धानां कश्चिन्मां वेत्ति तत्त्वतः ॥ – श्रीमद्भगवद्गीता ७।३

४ आश्चर्यवत्पश्यति कश्चिदेनमाश्चर्यवद्वदति तथैव चान्यः।
आश्चर्यवच्चैनमन्यः शृणोति श्रुत्वाप्येनं वेद न चैव कश्चित् ॥
– श्रीमद्भगवद्गीता २।२९

होइन अर्को कुनै एउटा ज्ञानी यस आत्मतत्त्वलाई आश्चर्य जस्तो गरेर भन्दछ। अर्को कुनै व्यक्ति आश्चर्यजस्तो मानेर सुन्दछ। फेरि कुनै अर्कोले सुनेर, देखेर र भनेर पनि त्यस आत्मतत्त्व वा ब्रह्मलाई जान्दैन।

आनन्द गिरिले गीतामा आएका आश्चर्यात्मक शब्दहरू मध्ये प्रथम आश्चर्यवत्पश्यतिको अर्थ आत्मविषयदर्शनको दुर्लभता हो भन्ने देखाउँदै ब्रह्मसाक्षात्कार दुर्लभ भनेका छन्। द्वितीय आश्चर्यले आत्मतत्त्व आफैँले साक्षात्कार गरेर उपदेश गर्नु पनि दुर्लभ भन्ने बुझाउँछ र तृतीय आश्चर्यले आत्माको श्रवणको दुर्लभताद्वारा श्रोताको विरलताको संसूचन गर्दछ भनेका छन्। चतुर्थ आश्चर्यले श्रवण, दर्शन र कथन सम्भव भए पनि आत्मसाक्षात्कार भने अत्यन्त आयासबाट मात्र लभ्य हुने अभिप्राय हो भनेर लेखेका छन्।

मधुसूदन सरस्वतीले यिनै आश्चर्य शब्दहरूको विद्वत्तापूर्ण विश्लेषण गर्नु भएको छ। उहाँले मायाद्वारा निर्मित यस शरीरभित्र रहेको आत्मालाई नानाथरीका विरोधी धर्महरूले युक्त भएर नभए जस्तो, स्वप्रकाशचैतन्यरूप भएर पनि जड जस्तो, आन्दघन भएर पनि दुःखित जस्तो, निर्विकार भएर पनि सविकारजस्तो, नित्य भएर पनि अनित्यजस्तो, प्रकाशमान भएर पनि अप्रकाशमान जस्तो, ब्रह्मदेखि अभिन्न भएर पनि ब्रह्मदेखि भिन्न जस्तो, मुक्त भएर पनि बद्धजस्तो, अद्वितीय भएर पनि द्वितीय जस्तो, यस प्रकारका सम्भावित अनेकौँ विचित्र आकार प्रकारको

प्रतीति विषय भएको भनेर कसैले देख्तछ।

आत्मदर्शन पनि आश्चर्यवत् नै हो। किनभने जुन आत्मालाई शास्त्र र आचार्यको उपदेशद्वारा अविद्याद्वारा सिर्जित सबै द्वैतको निषेध भएपछि, परमात्माको स्वरूपमात्रको आकार वेदान्तमहावाक्यद्वारा जन्य, सम्पूर्ण सुकृत कर्महरूको फल भएको अन्तःकरणका वृत्तिमा प्रतिफलित भएर समाधिका परिपाकबाट मात्रै कसैकसैले साक्षात्कार गर्दछ। त्यो अत्यन्त विरलै हुन्छ। किनभने सबैले साक्षात्कार गर्नसक्तैन।

आत्मदर्शन पनि आश्चर्यवत् नै हो भने स्वरूपतः ब्रह्माकाराकारित वृत्ति मिथ्या भए तापनि यो सत्यको व्यञ्जक हो। आविद्यक भए पनि अविद्याको विघातक हो। अविद्यालाई नाश गरेपछि त्यो आफैँ अविद्याको कार्य भएकाले त्यसले आफैँलाई अन्त्यमा नाश गर्दछ।

उपर्युक्त अनुसार अविद्या र त्यसका कार्यहरू निवृत्त भएर ब्रह्मसाक्षात्कार भइसकेको ज्ञानी प्रारब्धकर्म अत्यन्त बलवान् भएका कारण कर्म गरेझैँ गर्दछ। सधैँ समाधिनिष्ठ भएर पनि ऊ संसारी जस्तो देखापर्दछ र संसारी भएर पनि समाधिको अवस्थामा रहन्छ। प्रारब्ध कर्मको विचित्रताले गर्दा दुष्प्राप्य ज्ञान भएकाले सबैका लागि स्पृहणीय हो। अतः यो ज्ञानस्वरूप आत्मा आश्चर्यवत् नै हो।

यस प्रकारका तीनोटा आश्चर्ययुक्त वस्तुहरू आत्मा, त्यस आत्माको ज्ञान र त्यस आत्माको ज्ञाता सबै दुर्लभ छन्। त्यस्तो आत्मतत्त्वको उपदेश गर्ने उपदेष्टाको अभाव

भएका कारण पनि आत्मा दुर्विज्ञेय हो । जसले आत्मालाई जान्दछ, त्यस ज्ञानीले अरूलाई अवश्य पनि उपदेश गर्ने छ । अज्ञानीले आत्माका बारेमा उपदेश गर्ने सम्भावना नै हुँदैन । किन्तु एकातर्फ जानेर पनि समाहित चित्त भएका आत्मज्ञानीले प्रायः उपदेश गर्दैनन् । अर्कोतर्फ व्युत्थित चित्त भएका ज्ञानीलाई अरूले चिन्न सक्तैनन् । कथङ्कदाचित् कसैले चिनिहाले पनि आत्मवेत्ता ज्ञानी लाभ, पूजा, ख्याति आदि एषणानिर्मुक्त भएका कारण उपदेश गर्दैनन् । त्यस्ता ज्ञानीले केही गरी करुणावश उपदेश गर्नु भनेको परमेश्वरको कार्य हुने हुँदा त्यस्तो हुनु दुर्लभ भएकाले 'आश्चर्यवद्वदति' भनेर गीतामा अन्तिम आश्चर्यका रूपमा भगवान् श्रीकृष्णले अर्जुनलाई भन्नुभएको देखिन्छ ।

आत्मालाई प्रत्यक्षादि कुनै प्रमाणहरूबाट पनि जान्न सकिँदैन । कुनै पनि इन्द्रियले आत्मालाई भेट्न सक्तैन । *'नेति नेति'* भनेर निषेध मुखबाट श्रुतिले आत्माको बोधन गराउन खोजेको छ । किनभने विधिमुखबाट बोधन गराउने [५]चक्षु, वचन, मन आदि बहिष्करण र अन्तःकरणले पनि आत्मालाई भेट्न सक्तैनन् । अतः *'नेति नेति'* पछि जुन शेष रहन्छ, त्यही आत्मा हो । यो [६]परमात्मा सबै प्राणीका

---

५ न तत्र चक्षुर्गच्छति न वाग्गच्छति नो मनो न विद्मो । – केनोपनिषद् १।१।३

६ एष सर्वेषु भूतेषु गूढोत्मा न प्रकाशते ।
दृश्यते त्वग्र्यया बुद्ध्या सूक्ष्मया सूक्ष्मदर्शिभिः ॥ – कठोपनिषद् १।३।१२

बुद्धिरूपी गुफामा लुकेर बसेको छ। मलिन र विक्षेप युक्त बुद्धिमा यो प्रतिबिम्बित हुँदैन। जुन बेला बुद्धि शुद्ध, स्थिर र एकाग्र हुन्छ, त्यस्तो बुद्धिमा नै परमात्माको बिम्ब प्रतिबिम्बका रूपमा प्रतिष्फलित हुन्छ। विषयाकारतारहित तथा सूक्ष्म बुद्धिद्वारा नै आत्मसाक्षात्कार गर्न सकिन्छ। अन्यथा आत्मा आश्चर्यको वस्तु भएर रहन्छ। ॐ ब्रह्मार्पणमस्तु।

# १२. औपनिषदं पुरुषम्

विशरण, गति र अवसादन अर्थ भएको उप र नि उपसर्ग अगाडिपट्टि लागेर शद् धातुबाट क्विप् प्रत्यय भएर उपनिषद् शब्द बन्दछ। त्यसै उपनिषद् शब्दबाट उपनिषदि भव भन्ने व्युत्पत्तिबाट अण् प्रत्यय र आदि वृद्धि भएर औपनिषद शब्द निष्पन्न हुन्छ। यो विशेषण हो र विशेष्य पुरुषका साथ जोडिएर वा लागेर औपनिषद पुरुष भन्ने विशिष्ट वाक्य तयार हुन्छ। यसका सामान्य अर्थहरू उपनिषद्मा भनिएको, वेदविहित, अध्यात्म, उपनिषद्मा आधारित, औपनिषद दर्शन, परमात्मा, ब्रह्म, उपनिषद् वेद्य, औपनिषद सिद्धान्त मान्ने आदि धेरैथरी हुन्छन्।

उपर्युक्त अनुसारका तीनथरी अर्थहरूलाई बुझाउने विशेषणीभूत औपनिषद शब्दका साथ विशेष्य भएर आएको पुरुष शब्द जोडिएपछि यसका अर्थहरू उपनिषत् शास्त्रबाट मात्र जान्न सकिने परमात्मा, ब्रह्म, भूमा पुरुष आदि हुन्छन्। अझै यसको अर्थ स्पष्ट गर्दै उपनिषद्ले क्षुधादिधर्मरहित पुरुषलाई औपनिषद पुरुष भनेको छ।

पुरुषः शब्द पुरि देहे शेते यस्तो व्युत्पत्तिबाट शयनार्थक शीङ् धातुबाट (ढ पृषोदरा. तारा.पुर्+कुषन्) बन्दछ। यसका नर, मनुष्य आदि अर्थ हुन्छन्। पुरुषका अगाडि क्षर, अक्षर, उत्तम, सत्, का, कु आदि विशेषणहरू लागेर विभिन्न अर्थहरू

द्योतन गर्ने विभिन्न शब्दहरू बन्दछन् । प्रकृत औपनिषद पुरुष पनि तदनुरूप परमात्मा, ब्रह्मवाचक शब्द निष्पन्न हुन्छ ।

औपनिषद पुरुषका बारेमा केही चर्चा गर्नु अघि उपनिषद्मा आएको यसको प्रसङ्गको छोटो चर्चा गर्नु सान्दर्भिक हुनेछ । बृहदारण्यकोपनिषद्को तृतीय अध्यायको प्रथम ब्राह्मणदेखि याज्ञवल्कीय काण्ड शुरु हुन्छ । एक पटक जनकपुरका राजा जनकका दरबारमा विभिन्न विद्वान्हरूका बीचमा ब्रह्मचर्चा वा शास्त्रार्थ भएको थियो । त्यसमा कुरुपाञ्चाल देशहरूका ठूलाठूला ब्रह्मज्ञानी विद्वान्हरू आमन्त्रित थिए । त्यही ब्रह्मसभामा श्रोत्रिय ब्रह्मनिष्ठ कुलपति गुरु याज्ञवल्क्यका साथ विद्वान्हरूको शास्त्रार्थ भएको थियो । विजेतालाई अलङ्कार सहितका एक हजार गाईहरू दान दिने भनेर राजा जनकले घोषणा गरेका थिए । त्यस शास्त्रार्थमा मुख्यरूपमा अश्वल, आर्तभाग, भुज्यु, उषस्त, कहोल, गार्गी, आरुणि समेतका विद्वान्हरू पराजित भएपछि अन्त्यमा शाकल्यले याज्ञवल्क्यसँग विभिन्न प्रश्नहरू गरेका थिए । शाकल्यले याज्ञवल्क्यसँग सोधेका मुख्य प्रश्नहरू मध्ये देवताहरूको सङ्ख्या, तेत्तीस देवताहरूको विवरण, वसु, रुद्र, आदित्य, इन्द्र, प्रजापति, ६ देवता, तीन, दुई, डेढ र एक देवताको साथै प्राण ब्रह्मका प्रकार आदि थिए ।

उपनिषद्सम्मत ब्रह्मविद्यासँग सम्बन्धित प्रश्नभन्दा बढी असङ्गत प्रश्नहरू सोधेर आफ्नू विद्वत्ता देखाउने र ब्रह्मज्ञानी याज्ञवल्क्यको मानमर्दन गर्ने असूयायुक्त व्यवहार शाकल्यको

देखेपछि याज्ञवल्क्यले शाकल्यलाई सचेत गराउनु परेको थियो । [1]हे शाकल्य ! तिमीलाई निश्चय पनि यस सभामा उपस्थित अरू ब्राह्मणहरूले आगाको भुङ्ग्राबाट आगो च्यापेर बाहिर निकाल्ने चिम्टा बनाइराखेका छन् । तिमी नबुझीकन नै मसँग वादविवाद गरिरहेका छौ । मबाट तिमी डढिरहेको कुरा तिमीलाई थाहा नै छैन ।

याज्ञवल्क्यको उपर्युक्त व्यञ्जनायुक्त चेतावनीपछि झन् उल्टै याज्ञवल्क्यलाई सम्बोधन गर्दै शाकल्यले भने हे याज्ञवल्क्य ! तिमीले कुरुपाञ्चालका ब्राह्मणहरूमाथि आक्षेप गर्दै जे कुरा भन्यौ र अतिभाषण अर्थात् आक्षेपद्वारा तिरस्कार गर्‍यौ । के यस्तो भनेर तिमी आफूलाई ब्रह्मज्ञानी ठान्दछौ ? के ब्रह्मज्ञानी भएका कारण नै यस प्रकार तिमी ब्राह्मणहरूको तिरस्कार गर्दछौ ? यति भनेपछि शाकल्यले फेरि याज्ञवल्क्यलाई देवता र प्रतिष्ठासहित पूर्व, दक्षिण, पश्चिम र उत्तर दिशा ध्रुवदिशा, हृदय तथा शरीरको अनोन्याश्रयत्वका साथै प्राणवृत्तिको समान वृत्तिसम्म शरीरादिको प्रतिष्ठा तथा आत्मस्वरूपका सम्बन्धमा प्रश्नहरू सोधे । शाकल्यको जिज्ञासा अनुरूप याज्ञवल्क्यले उत्तर दिए ।

उपर्युक्त अनुसार याज्ञवल्क्य र शाकल्यका बीचमा लामु जल्पकथाका माध्यमबाट शास्त्रार्थ भएपछि उपान्ततिर पुगेपछि याज्ञवल्क्यले औपनिषद पुरुष अर्थात् ब्रह्मका बारेमा

---

१ शाकल्येति होवाच याज्ञवल्क्यस्त्वां स्विदिमे ब्राह्मणा अङ्गारावक्षयण-मक्रमता ३ इति । – बृहदारण्यकोपनिषद् ३।९।१८

मधुकाण्डमा निरूपण गरिएको [२]'नेति नेति' को प्रसङ्ग सम्झाउँदै शाकल्यलाई भने – त्यो आत्मा अगृह्य, अशीर्य, असङ्ग, असित र हिंसारहित हो। उपर्युक्त यी आठ आयतन हुन्, आठ लोक हुन्, आठ देव हुन् र आठ पुरुष हुन्। जसले तिनलाई निश्चयपूर्वक जानेर र उपसंहृत गरेर उपाधि धर्म हृदयादिरूपतालाई अतिक्रमण गरेका छन्। जो क्षुधादिधर्मरहित औपनिषद पुरुषमा अर्थात् आफ्ना नै स्वरूपमा स्थित छन्। जो उपनिषद्द्वारा नै विज्ञेय छन्। जसलाई अरू प्रमाणहरूबाट जान्न सकिँदैन। त्यस पुरुषका विषयमा विद्याको अभिमान राख्ने भएका तिमी शाकल्यलाई म प्रश्न गर्दछु। त्यो मलाई बताऊ। यदि तिमीले मलाई त्यसको विशेष स्पष्ट रूपबाट निरूपण गरेर जबाफ दिन सक्तैनौ भने तिम्रो मूर्धा अर्थात् मस्तक पतन हुने छ। अन्त्यमा याज्ञवल्क्यले शाकल्यलाई अत्यन्त सशक्त शब्दमा शाप नै गरेजस्तो गरेर कठोर वचन प्रयोग गरेको उपनिषद्को आख्यायिकाबाट देखिन्छ।

वस्तुतः औपनिषद पुरुष अर्थात् ब्रह्मलाई शाकल्य स्पष्टरूपमा जान्दैनथे। यसै कारण उनको मूर्धा पतन भयो। मूर्धा पतन हुनु भनेको के हो ? यो बुझ्नु पर्ने विषय देखिन्छ।

२ स एष नेति नेत्यात्मागृह्यो न हि गृह्यतेऽशीर्यो न हि शीर्यतेऽसङ्गो न हि सज्यते ऽसितो न व्यथते न रिष्यति एतान्यष्टावायतनान्यष्टौ लोका अष्टौ देवा अष्टौ पुरुषाः स यस्तान् पुरुषान्निरुह्य प्रत्युह्यात्यक्रामत्तं त्वौपनिषदं पुरुषं पृच्छामि तं चेन्मे न विवक्ष्यसि मूर्धा ते विपतिष्यतीति। तं ह न मेने शाकल्यस्तस्य ह मूर्धा विपपातापि हास्य परिमोषिणोऽस्थीन्यापजह्रुरन्यन्मानाः। – बृहदारण्यकोपनिषद् ३।९।२६

याज्ञवल्क्यको शापबाट शाकल्यको टाउको फुटेर मृत्यु भएको र मृत्युपश्चात् उनको मृत शरीर धार्मिक परम्परा अनुसार दाहसंस्कार आदि पनि हुन नसकेको र अवशिष्ट उसका अस्थि अर्थात् हाडखोड पनि लुटेराहरूले लुटेको आख्यायिकाबाट देखिन्छ।

उक्त कुराको अतिरिक्त आख्यायिकामा अष्टाध्यायीको सङ्केत पाइन्छ। [३]अष्टाध्यायी नामक बृहदारण्यकभन्दा पनि प्राचीन कर्मविषयक ग्रन्थ थियो। त्यस ग्रन्थमा शाकल्यसँग याज्ञवल्क्यको समान पर्यन्त अर्थात् आत्माको प्रतिष्ठा प्राणमा प्राणको प्रतिष्ठा अपानमा, अपानको प्रतिष्ठा व्यानमा भन्दै गएर अन्तिम प्रतिष्ठा समानमा भन्नेसम्म संवाद भएको र शाप पनि दिएको प्रसङ्ग आएको भन्ने कुरा शाङ्करभाष्य र आनन्दगिरिको टीकाबाट ज्ञात हुन्त। त्यसभन्दा अगाडिको बाँकी प्रसङ्ग भने प्रकृत बृहदारण्यकोपनिषद्मा आएको आख्यायिकाबाट ज्ञात हुन्छ।

यस उपनिषद्मा उल्लिखित याज्ञवल्क्य र शाकल्यका बीचमा भएको ब्रह्मसम्बन्धी शास्त्रार्थमा आएका केही प्रसङ्गहरू अत्यन्त महत्त्वपूर्ण छन्।

सर्वप्रथम त उपनिषद्को ज्ञानै नभएका स्वयंघोषित ज्ञानी, प्रवचनकर्ता, विद्वान्हरूलाई यस आख्यायिकाले सचेत गराउन खोजेको देखिन्छ। दोस्रो कुरो उपनिषद्वेद्य ब्रह्मका बारेमा

---

३ अष्टाध्यायी बृहदारण्यकात्प्राचीना कर्मविद्या।
– आनन्दगिरिटीका, बृ.उ. ३।९।२६ शाङ्करभाष्य

चर्चा गर्दा वा बोल्दा उपनिषद् जान्नुपर्छ भन्ने सङ्केत गर्छ। तेस्रो कुरो ज्ञानीसँग बातचित वा ब्रह्मचर्चा गर्दा मर्यादा र अनुशासनमा रहेर गर्नुपर्छ भन्ने देखाउँछ। चौथो कुरा जानेर अथवा नजानेर पनि ब्रह्मज्ञानीलाई अपहेलना वा परिभव गर्नु हुँदैन भन्ने थाहा हुन्छ। पाँचौँ कुरा ब्रह्मज्ञानी हो भने ब्रह्मज्ञानी हुँ भनेर भन्नु पनि हुँदैन र घमण्ड पनि गर्नु हुँदैन भन्ने थाहा हुन्छ। छैटौँ कुरा ब्रह्मचर्चा गर्दा र शास्त्रार्थमा सहभागी हुँदा समेत विद्वान्ले विनीत भावमा अरू विद्वान् सहभागीहरूको समेत सम्मान गर्दै निर्धारण गरिएका सीमा भित्रै सीमित भएर, प्रकरण र सान्दर्भिक प्रमाणहरूमात्रै शिष्ट भाषामा छोटकरीमा प्रस्तुत गर्नुपर्दछ भन्ने जनाउँछ।

ब्रह्मचर्चामा सहभागी पूर्वपक्षी र उत्तरपक्षी दुवै पक्षले उपर्युक्त अनुसारको ज्ञान, योग्यता, शिष्टता र मर्यादामा बस्नु अनिवार्य देखिन्छ। अन्यथा शाकल्यले भोगेजस्तै दुष्परिणाम भोग्नु पर्ने हुनसक्तछ। आख्यायिकामा कतिपय कुराहरू अर्थवादका रूपमा शिक्षा दिने उद्देश्यले आएका हुनसक्ने यस लेखकलाई लाग्दछ, तर पनि शिक्षा, अनुशासन र मार्गदर्शनका लागि नै उपनिषद् स्वयंले कण्ठतः सो कुरो भनेको हुँदा सबै वेदान्तमार्गका पथिकहरूका लागि सहज स्वीकार्य हुनुपर्ने देखिन्छ। ब्रह्मविद् वरीयान् याज्ञवल्क्यसँग अनाधिकाररूपमा अभिमान र अहंभाव राखेर राजा जनकको ब्रह्मसभामा ब्रह्मका बारेमा शास्त्रार्थ गर्न शाकल्य प्रस्तुत हुनु, अभिशप्त हुनु, उसको और्ध्वदैहिक संस्कार नहुनु र अवशिष्ट हाडखोडसमेत हराउनु

आदि अर्थवादयुक्त आख्यायिकाको कथनले निम्नलिखित गूढ रहस्य उद्घाटित गर्दछ।

१. औपनिषदगम्य ब्रह्मका बारेमा उपनिषद्को ऊहापोहपूर्वक अध्ययन, मनन र चिन्तन नगरीकन मन्त्र द्रष्टा, श्रोत्रिय ब्रह्मनिष्ठ परमगुरु याज्ञवल्क्य समक्ष शाकल्यले शास्त्रार्थ गर्ने बालहठ र धृष्टता गर्नु।

२. अहङ्कारी, अभिमानी, धृष्ट, अविनीत, उद्दण्ड र अल्पज्ञ भएर पनि ब्रह्मज्ञको रूपमा परम ब्रह्मज्ञानीलाई आक्षेपपूर्ण वचनको प्रयोग गर्दै पराभव गर्ने धृष्टता गर्नु।

३. शास्त्रार्थ अर्थात् जल्पकथाको सीमा र मर्यादालाई उल्लङ्घन गर्दै उपहास र मानमर्दन गर्ने कुत्सित अभिप्रायले अप्रासङ्गिक प्रश्नहरू सोध्नु।

४. आख्यायिकामा आएको याज्ञवल्क्यद्वारा प्रदत्त शापद्वारा शाकल्यको मूर्धा पतन भयो भन्नुको अर्थ लाक्षणिक र प्रतीक हुनुपर्ने देखिन्छ। किनभने शाकल्यको भौतिकरूपले मूर्धा पतन नभएर उसले अत्यन्त अभिमान गरेर ब्रह्मविद् याज्ञवल्क्यसँग विद्वेष गरेको हुँदा उसको ब्रह्मवर्चस् समाप्त भयो, विद्वत्समाजबाट सधैँका लागि निष्काशित, अवहेलित, उपेक्षित, मृतपायः र अस्तित्वविहीन भयो भनिएको हुनुपर्दछ। किनभने त्यस्ता व्यक्तिका इहलोक र परलोक दुवै अन्धकारपूर्ण हुन्छन्। दाहसंस्कार आदि नभएकाले परलोकको बाटो बन्द हुन गयो। त्यति ठूलो ब्रह्मसमाज र ब्राह्मण समाजबाट निरस्कृत र अवहेलित भएर निकालिएकाले यो लोक पनि

अन्धकारपूर्ण भयो भन्नुको तात्पर्य ऊ जीवन मृत भयो र अस्तित्वशून्य भयो भन्नु हो। अन्त्यमा शाकल्यका अवशिष्ट हाडखोड पनि लुटिए भन्नुको अर्थ उसलाई सम्झनु पर्ने कुनै पनि गुण, चिह्न र अवशेषहरू बाँकी रहेनन् भनेको हो। शास्त्रहरूले जीवनमृत त्यसै मान्छेलाई भन्दछन् जस्को [४]दुष्कीर्ति फैलन्छ वा सम्भावना रहन्छ, आफ्नाहरूबाट [५]अपमान हुन्छ र विद्वान्हरूबाट तिरस्कृत हुन्छ।

५. यस आख्यायिकाबाट एकातर्फ ब्रह्मज्ञानीका समक्ष, शिष्ट, विनीत र दीन भएर प्रस्तुत हुँदा इहलोक र परलोक दुवै सप्रने शिक्षा पाइन्छ भने अर्कोतर्फ यसको प्रतिकूल गएमा दुवैलोक बिग्रने सन्देश पनि पाइन्छ।

६. अन्त्यमा ब्रह्मविद्याको महत्ता अत्यन्त ठूलो भएको हुँदा यसको ख्यापन गर्नका लागि फलश्रुतिका रूपमा र ब्रह्मविद्याका स्तुतिका रूपमा पनि ब्रह्मज्ञानी याज्ञवल्क्य र शाकल्यका बीचको आख्यायिका उपनिषद्ले प्रस्तुत गरेको स्पष्ट देखिन्छ। ॐ ब्रह्मार्पणमस्तु।

❀

---

४ अकीर्तिञ्चापि भूतानि कथयिष्यन्ति तेऽव्ययाम्।
सम्भावितस्य चाकीर्तिर्मरणादतिरिच्यते ॥ – श्रीमद्भगवद्गीता २।३४

५ सम्भावितस्य स्वजनात्पराभवो यदा स सद्यो मरणाय कल्पते ॥
– श्रीमद्भागवत ४।३।२५

# १३. कर्मबन्धन

एकातर्फ मन नै मनुष्यको बन्धनको कारक तत्त्व हो भने अर्कोतर्फ त्यही मन नै मोक्षको कारक हो। किनभने विषयतर्फ लगाएमा मनुष्य बन्धनमा पर्दछ भने त्यही मन विषयबाट निर्मुक्त भएमा त्यो मुक्तिको साधन बन्दछ भनेर [1]श्रुतिले भनेको छ। यसबाट के थाहा हुन्छ भने मन नै एकातर्फ नरकतिर लैजाने साधन बन्दछ भने त्यो मन नै अर्कोतर्फ ब्रह्म बन्ने विशुद्ध साधन पनि बन्दछ। अतः बन्धन र मुक्तिको प्रमुख कारण मन भएको प्रमाणित हुन्छ।

मनका सम्बन्धमा वेददेखि लिएर सम्पूर्ण दर्शनहरू, शास्त्रहरू र पुराणहरूले समेत विस्तृत चिरफार र विश्लेषण गरेका छन्। यस बहुरूपी मनका काम अनुसारका श्रुतिले विभिन्न नामहरू दिएको छ। मनका नामहरूमा सर्वप्रथम काम भनेर श्रुतिले भनेको छ। काम भनेको दुरन्त [2]एषणा हो। उपनिषद्‌ले नै स्थूलरूपमा एषणालाई पुत्रैषणा, वित्तैषणा र लोकैषणा गरेर तीन कित्तामा विभाजन गरेको छ, तर

१ मन एव मनुष्याणां कारणं बन्धमोक्षयोः।
बन्धाय विषयासक्तं मुक्त्यैर्निर्विषयं मनः॥
– शाट्यायनीयोपनिषद् १

२ पूर्वे विद्वांसः ... पुत्रैषणायाश्च वित्तैषणायाश्च लोकैषणायाश्च व्युत्थाय भिक्षाचर्यं चरन्ति। – बृहदारण्यकोपनिषद् ४।४।२२

सूक्ष्मरूपमा विश्लेषण गर्ने हो भने तिनै तीनथरी एषणाहरूका असङ्ख्य रूपहरू भएर विषयी मान्छेलाई यस दुरन्त संसारको दुश्चक्रमा घुमाइरहन्छन् र कहिल्यै पनि जीवात्माले उन्मुक्ति पाउनसक्तैन। अतः कामना र एषणाको पोको भनेको नै मन रहेछ भन्ने थाहा हुन्छ। किनभने सबै एषणाहरू र कामनाहरू कामबाट उत्पन्न हुन्छन्। अत्यन्त भौतिक लालसाबाट जबसम्म माथि उठेर मान्छेले परमार्थको चिन्तन र ब्रह्मचिन्तन गर्दैन तबसम्म ऊ संसारमा दुरन्तकामना मनमा बोकेर घुमिरहन्छ। यी सबैलाई छोडेर मानसिकरूपमा कर्म सन्न्यासमा जानु नै मुक्तिको बाटो हो, अर्थात् अधिष्ठान तर्फ उन्मुख हुने बाटो हो भनेर श्रुतिले भनेको छ।

मन केवल कामना, एषणा र अनन्त लालसाको खानि मात्रै होइन, त्योभन्दा पनि बढी अझै बहुरूपी भएको बताएर उपनिषद्ले [३]सङ्कल्प, विचिकित्सा अर्थात् संशय, श्रद्धा, अश्रद्धा, धैर्य, अधैर्य, लज्जा र बुद्धिसमेत मनका नामहरू हुन् भनेको छ। मनका स्पष्टरूपमा सकारात्मक र नकारात्मक दुई स्वरूपहरू छन्। तदनुरूप अर्थात् त्यसका काम अनुरूप नै श्रुतिले मनको नामकरण पनि गरेको छ। जस्तै सङ्कल्परहित मन मुक्तिको साधन बन्दछ। त्यो विषयनिर्मुक्त हुन्छ र त्यसैलाई [४]ध्यान भनिन्छ। ध्यानबाट समाधि र समाधिबाट मुक्ति

---

३ कामः सङ्कल्पो विचिकित्सा श्रद्धाऽश्रद्धा धृतिरधृतिर्ह्रीर्धीर्भीरेतत्सर्वं मन एव। – बृहदारण्यकोपनिषद् १।५।३

४ ध्यानं निर्विषयं मनः। – स्कन्दोपनिषद् ११

हुन्छ। किन्तु त्यही मन सङ्कल्पयुक्त भएमा विषयतर्फ लाग्दछ र मान्छे बन्धनमा पर्दछ।

मनुष्यको मन जब अत्यन्त विषयासक्त हुन्छ, तब उसका मनमा नानाथरीका संशय र शङ्का तथा उपशङ्काहरू उत्पन्न हुन थाल्दछन्। त्यसपछि उसको [५]विनाश हुन्छ। त्यस्ताले इहलोक र परलोक कहीँ पनि सुख पाउँदैन। [६]श्रद्धायुक्त मनले मोक्ष दिन्छ र अश्रद्धाले बन्धन दिन्छ। श्रद्धा सात्त्विकी, राजसी र तामसी गरेर स्वभावैले ३ थरी हुन्छन्। सात्त्विकी श्रद्धा मुक्तिको कारण बन्दछ भने राजसी र तामसी श्रद्धा बन्धनको हेतु बन्दछन्। त्यस्ताले ब्रह्मविद्यामा श्रद्धा राख्तैनन् र द्वैतमार्गको पथिक भएर कामनामा चुर्लुम्म डुबेरै जीवन बिताउँछन्। त्यस्ता अश्रद्धा भएका [७]अश्रद्दधान पुरुषहरू यसै दुःखद संसारमा घुमिरहन्छन्।

शास्त्रहरूमा गुरु र वेदान्त वाक्यहरूमा श्रद्धा गर्नु भनेर उपदेश आएको छ। श्रद्धाविना सामान्य संसारी काम ता हुन सक्तैन भने पारमार्थिक मुक्ति कसरी हुन सक्तछ ? यसै कारण

---

५ अज्ञश्चाऽश्रद्धधानश्च संशयात्मा विनश्यति।
नायं लोकोऽस्ति न परो न सुखं संशयात्मना॥
– श्रीमद्भागवद्गीता ४।४०

६ सत्त्वानुरूपा सर्वस्य श्रद्धा भवति भारत।
श्रद्धामयोऽयं पुरुषो यो यच्छ्रद्धः स एव सः॥
– श्रीमद्भगवद्गीता १७।३

७ अश्रद्दधानाः पुरुषा धर्मस्यास्य परन्तप।
अप्राप्य मां निवर्तन्ते मृत्युसंसारवर्त्मनि॥ – श्रीमद्भागवद्गीता ९।३

नै मोक्षका रूपमा [८]साधनचतुष्टयमा श्रद्धालाई पनि राखिएको हो। जुन शमदमादि षट्सम्पत्तिमा पर्छ। मनको अर्को रूप सकारात्मक मोक्षकामी धैर्य हो। जसलाई धृति पनि भनिन्छ। यो धृति धर्मका १० [९]लक्षणहरूमा पहिलोमा पर्दछ। अधैर्य वा नकारात्मक मनले मनुष्यलाई अधिष्ठानांशको साटो भ्रमांशतर्फ लगेर डुबाउँछ। धृति भनेको वस्तुतः सन्तोष हो।

मनको अर्को सकारात्मक स्वरूप हो धीः। धी भनेको बुद्धि हो। शास्त्रादि तत्त्वको ज्ञान गर्ने मनलाई धी भनिन्छ। मनुष्यलाई यसले सोझै मोक्ष मार्गमा लैजान्छ। यसका [१०]बुद्धिः, मनीषा, धिषणा, प्रज्ञा, शेमुषी, मति आदि नामहरू पनि छन्। यी सबै धैर्य अर्थात् धृतिका सात्त्विक वा सकारात्मक नामहरू हुन्। यसका चौधथरी नामहरू अमरकोशले दिएको छ।

धैर्यको नकारात्मक अवस्था अधैर्य हो। धैर्य सत्त्वगुणी हो भने अधैर्य रजोगुणी अवस्था हो। यो मनको नकारात्मक विक्षेपको अवस्था हो। मनको अर्को अवस्था लज्जा हो। लज्जालाई दुर्गासप्तशतीमा देवीका रूपमा लिएको छ। यो विद्यारूपिणी सात्त्विकी अवस्थाको नाम हो। बुद्धि भनेको सात्त्विकी अवस्था हो। उपनिषद्ले बुद्धिलाई सत्त्व भनेको

---

८ शमो दम उपरमस्तितिक्षा श्रद्धा समाधानञ्च। – तत्त्वबोधः

९ धृतिः क्षमा दमोऽस्तेयं शौचमिन्द्रियनिग्रहः।
धीर्विद्या सत्यमक्रोधो दशकं धर्मलक्षणम्॥ – मनुस्मृतिः ६।९२

१० बुद्धिर्मनीषा धिषणा धीः प्रज्ञा शेमुषी मतिः। – अमरकोश १।५।१

छ। यस्तो सात्त्विकी बुद्धि मोक्षसाधिका हुन्छे। सत्त्व भनेको अन्तःकरण पनि हो। त्यो निर्मल भएमा मुमुक्षुले मोक्ष प्राप्त गर्दछ।

मनका १० ओटा नाम मध्येको अन्तिम नाम भी हो। भी भनेको भय हो। जहाँसम्म मुमुक्षुमा भय रहन्छ, तबसम्म द्वैत रहन्छ। द्वैत नै मायिक संसार हो। भय हटेपछि मान्छे मुक्त हुन्छ। भय पशुबुद्धि हो। अभय ब्रह्मबुद्धि हो, अभय [11]ब्रह्म नै हो। अभय साधन पनि हो र साध्य पनि हो।

उपर्युक्त अनुसार मनको छोटो विवेचनाबाट मन नै बन्धन र मोक्षको कारण हो भन्ने देखियो। यसबाट मन नै ताल्चा खोल्ने र बन्द गर्ने साँचो जस्तो रहेछ भन्ने थाहा हुन्छ। माथितिर घुमाए मोक्ष र तलतिर घुमाएमा मान्छे बन्धनमा पर्दछ। कर्म गर्ने मन नै भएकाले यसको चर्चा गरिएको हो। कर्मको गति जानिसक्नु छैन। [12]कर्महरूमा कर्म, विकर्म र अकर्म समेत तीनथरी छन्। कर्म भन्नाले शास्त्रविहित क्रियालाई भनिन्छ, त्यो पनि जान्नु पर्दछ। विकर्म भनेर शास्त्रवर्जित कर्मलाई भनिन्छ, त्यसलाई पनि जान्नु पऱ्यो, केही पनि नगरीकन चुप लागेर बस्नुको नाम अकर्म हो। त्यसको रहस्य पनि बुझ्नु पर्छ। किनभने कर्म, अकर्म र

---

११ (क) अभयं हि ब्रह्म। – माध्यन्दिनीयशतपथब्राह्मण १४।७।२।२१
(ख) अभयं वै जनक प्राप्तोऽसि। – बृहदारण्यकोपनिषद् ४।२।४

१२ कर्मणो ह्यपि बोद्धव्यं बोद्धव्यञ्च विकर्मणः।
अकर्मणश्च बोद्धव्यं गहना कर्मणो गतिः॥ – श्रीमद्भगवद्गीता ४।१७

विकर्मको यथार्थ स्वरूप बुझ्न गाह्रो छ। यो अत्यन्त गहन र रहस्यमय भएकाले सजिलै बुझ्न सकिँदैन।

वस्तुतः मान्छेले जे गरे पनि कर्म भइहाल्दछ। जन्मदेखि मृत्युसम्म गरेका राम्रा, नराम्रा, शुभ, अशुभ सारा कर्महरूका संस्कारहरू प्रतिपल, प्रतिक्षण हाम्रा अन्तःकरणमा वासनाका रूपमा र सञ्चित कर्मका रूपमा जम्मा भएर बस्तछन्। खुला शक्तिशाली क्यामराको लेन्सले आफ्ना सामुन्ने आएका सारा दृश्यलाई आफ्ना प्लेटमा खिचेर राखे जस्तै मान्छेको विषयासक्त मनले चेतन, अवचेतन र अर्धचेतन जुनसुकै अवस्थामा पनि शोचेका, कल्पना गरेका, देखेका, सुनेका र गरेका शुभ र अशुभ कामहरूको संस्कार रिठ्ठो नबिराईकन अन्तःकरणमा सञ्चय गरेर राख्तछ। त्यसैलाई सञ्चित कर्म भनिन्छ। तिनैले सुख दुःख दिँदै अनन्त योनिहरूमा घुमाइरहन्छन्। यसबाट पार पाउन अत्यन्त मुस्किल पर्दछ। यसै कारण गीताले 'गहना कर्मणो गतिः' भनेको हो। यिनै वेदविहित शुभकर्महरू, वेदनिषिद्ध अशुभ कर्महरू र मिश्रित कर्महरूको फल नै प्राणीमात्रको बन्धन हो। त्यो मुक्तिमार्गको तगारो हो। त्यसको नाश गर्नु मनुष्यको परम पुरुषार्थ हो।

त्यसैकारणले नै मुक्तात्मा ज्ञानीहरू कर्म गर्दैनन्। किन भने जीव [१३]कर्मले बाँधिन्छ र विद्या अर्थात् आत्मज्ञानले

---

१३ कर्मणा बध्यते जन्तुर्विद्यया च विमुच्यते।
तस्मात्कर्म न कुर्वन्ति यतयः पारदर्शिनः ॥ – महाभारत शान्तिपर्व २४२।७

मुक्त हुन्छ। अतः ब्रह्मज्ञानद्वारा सारा कर्महरू र कर्मबन्धन समेतको नाश हुन्छ।

अनन्त जन्मदेखि जम्मा भएर अन्तःकरणमा बसेका कर्महरूको सञ्चय प्राणीको सञ्चित कर्म हो। व्याङ्कमा ब्याज खान राखेको रूपैयाँको सञ्चितिमा अरू रकम थपिँदै गएजस्तो गरेर जम्मा सञ्चित शुभाशुभ कर्महरू घट्नुको साटो प्रतिपल बढी नै रहन्छ। यस सञ्चित कर्मलाई अर्को कर्मद्वारा अर्थात् प्रायश्चित आदि कर्महरूद्वारा काट्न सकिँदैन। जसरी हिलोलाई धमिलो पानीले पखाल्न सक्तैन, त्यसै गरेर मायिक कर्मद्वारा जम्मा भएको धर्म र अधर्मजन्य शुभाशुभ कर्मको फललाई अर्को मायिक सजातीय कर्मजन्य धर्मका अदृष्ट फलले काट्न सक्तैन, बरु उल्टै कर्म आफ्नू सञ्चितिमा थपिन जान्छ। अतः वस्तुतः कर्मबाट नै कर्मको [१४]आत्यन्तिक यद्वा निर्बीज नाश हुँदैन। किनभने कर्मको अधिकारी अज्ञानी हो। अज्ञान रहँदारहँदै पापका वासनाहरू सर्वथा नाश हुनसक्तैनन्। अतः मनुष्यका अन्तःकरणमा जम्मा भएर रहेका कर्महरूको समूल नाश वा उच्छेद ब्रह्मज्ञानबाट मात्रै हुनसक्तछ। शास्त्रले भनेको प्रायश्चित्त यही नै हो। अरू उपायहरूबाट वासनाको क्षय किमार्थ हुनसक्तैन।

अनन्त जन्मदेखि जम्मा भएर अन्तःकरणमा थुप्रिएर बसेका कर्महरूको थुप्रोलाई ब्रह्मज्ञानले मात्रै डढाएर निर्बीज

---

१४ कर्मणा कर्मनिर्हारो न ह्यात्यन्तिक इष्यते।
अविद्वदधिकारीत्वात्प्रायश्चित्तं विमर्शनम्॥ – श्रीमद्भागवत ६।१।११

गर्न सक्तछ, अर्थात् अविद्या अर्थात् वासनाको लवलेश समेत समाप्त गर्न सक्तछ, अन्यथा सम्भव छैन । यस कुरालाई गीतामा भगवान् श्रीकृष्णले अर्जुनलाई सम्बोधन गर्दै भन्नुभएको वचन अत्यन्त सटिक र श्रुतिसम्मत पनि छ। [१५]जसरी सुकेका दाउराको थुप्रोलाई दनदन दन्किएको आगोले भस्म गरेर समाप्त गरिदिन्छ त्यसरी नै बुद्धिको चरमवृत्तिमा आरूढ स्वरूपभूत ब्रह्मज्ञानले मुमुक्षुका अन्तःकरणमा थुप्रिएर बसेका वासना र सञ्चित कर्मलाई समेत भस्म गरेर डढाइदिन्छ।

उपर्युक्त भनाइलाई समर्थन गर्दै उपनिषद्ले पनि अन्तःकरणमा रहेका सञ्चित कर्महरूको नाश हुने उद्घोष गरेको छ। [१६]परावर अर्थात् कार्यकारणरूप ब्रह्मको साक्षात्कार भएपछि ज्ञानीको हृदयग्रन्थि अर्थात् वासनारूप सञ्चितकर्महरू समाप्त हुन्छन् । मनमा रहेका सबै संशयहरू समाप्त हुन्छन् । प्रारब्ध कर्म बाहेकका पहिलेका, वर्तमान समयका र आगामी कर्मका फलहरू एकैचोटि नाश हुन्छन् । जन्ममरणरूपी दुश्चक्र सिर्जना गर्ने अविद्यारूप अन्तःकरणावच्छिन्न अज्ञानको सबीज निर्मूलन हुन्छ।

कर्मबन्धनबाट निर्मुक्त हुनका लागि मुमुक्षुले एषणा,

---

१५ यथैधांसि समिद्धोऽग्निर्भस्मसात्कुरुतेऽर्जुन ।
ज्ञानाग्निः सर्वकर्माणि भस्मसात्कुरुते तथा ॥ – श्रीमद्भगवद्गीता ४।३७

१६ भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः ।
क्षीयन्ते चास्य कर्माणि तस्मिन्दृष्टे परावरे ॥ – मुण्डकोपनिषद् २।२।८

कामना र [१७]आशासमेत त्याग गर्नुपर्दछ। कुनै कामको नयाँ थालनी गर्नुहुँदैन। कसैलाई खुशी पार्न चाप्लुसी, नमस्कार र स्तुति गर्नु हुँदैन। निषिद्ध आचरण गर्नुहुँदैन। सञ्चित कर्मको वासनासहित निर्मूलन भइसकेको हुनुपर्दछ। त्यस्ता मुमुक्षु ज्ञानीलाई कर्मबन्धनले बाँध्दैन। किनभने उसका सम्पूर्ण कर्मजन्य वासनाहरू ब्रह्मज्ञानरूपी अग्निद्वारा समाप्त भइसकेका हुन्छन्। त्यस्ता वासनाशून्य जीवन्मुक्त पुरुषलाई देवताहरू पनि ब्राह्मण अर्थात् ब्रह्मवेत्ता भनेर सम्मान गर्दछन्।

वस्तुतः बुद्धिका त्रिगुणात्मका वृत्तिहरू नै मोक्ष र बन्धनका कारण हुन्। योगदर्शन अनुसार वृत्ति क्लिष्ट र अक्लिष्ट गरी दुईथरी हुन्छन्। सत्त्वप्रधान वृत्तिहरू अक्लिष्ट हुन्, जुन परम्परया मोक्षका साधन बन्न सक्तछन्। तमसूप्रधान वृत्तिहरू क्लिष्टरूप हुन्। ती बन्धनका कारण हुन्। किनभने ती वृत्तिहरूका हेतु अविद्या, अस्मिता, राग, द्वेष र अभिनिवेश हुन्। संस्कार कर्मवासनाको उत्पत्ति गर्ने भूमि हो। त्यसरी उत्पत्ति हुने तमसूप्रधान सबै वृत्तिहरू क्लिष्ट हुन्। किन्तु जुन सत्त्वप्रधान वृत्तिहरू छन्, तिनले अविद्या आदि पाँचै थरी क्लेशहरूलाई नाश गर्दछन् र धर्ममेघ समाधितर्फ जान साधकलाई सहयोग गर्दछन्। योगदर्शनले उपर्युक्त अनुसार

१७ निराशिषमनारम्भं निर्नमस्कारमस्तुतिम्।
अक्षीणं क्षीणकर्माणं तं देवा ब्राह्मणं विदुः॥ – स्मृतिशास्त्र

सत्त्व र तमस् दुईथरी वृत्तिहरूको मात्रै उल्लेख गरेको छ भने अद्वैत दर्शनमा चाहिँ सत्त्व, रजस् र तमोगुणको वर्णन पाइन्छ।

गीतामा भगवान् श्रीकृष्णले [१८]सत्त्वगुणी वृत्तिलाई मोक्षको साधन, रजोगुणी वृत्तिलाई संसारको कारण र तमोगुणीवृत्तिलाई अधःपतनको कारण भन्नु भएको छ।

मनुष्यलाई कर्मबन्धनमा पार्ने मानिसमा रहेका अनन्त इच्छा, एषणा, कामना, राग, द्वेष, ईर्ष्या, असूया, क्रोध, लोभ, खराब व्यवसन, बाध्यता, भय, सम्मानको आकाङ्क्षा अर्थात् तीव्र लालसा आदि हुन्। यी सबैले मनुष्यलाई प्रवृत्तिमार्गमा लगेर कर्मको बन्धनमा पार्दछन् तर यसको विपरीत सत्त्वगुणीवृत्ति दैवी सम्पत् हो जसमा [१९]अभय, दान, दम, यज्ञ, स्वाध्यायदेखि लिएर नातिमानितासम्म पर्दछन्। तिनले साधकलाई निवृत्तिमार्गमा बढ्न सहयोग गर्दछन् जसद्वारा मुमुक्षुको कर्मबन्धन नाश हुन्छ। [२०]दैवी सम्पत्ति मोक्षका लागि र आसुरी सम्पत्ति बन्धनका कारक हुन्।

---

१८ ऊर्ध्वं गच्छन्ति सत्त्वस्था मध्ये तिष्ठन्ति राजसाः।
जघन्यगुणवृत्तस्था अधो गच्छन्ति तामसाः ॥ – श्रीमद्भगवद्गीता १४।१८

१९ अभयं सत्त्वसंशुद्धिर्ज्ञानयोगव्यवस्थितिः
दानं दमश्च यज्ञश्च स्वाध्यायस्तप आर्जवम् ॥
अहिंसा सत्यमक्रोधस्त्यागः शान्तिरपैशुनम्।
दयाभूतेष्वलोलुप्तं मार्दवं ह्रीरचापलम्।
तेजः क्षमा धृतिः शौचमद्रोहो नातिमानिता।
भवन्ति सम्पदं दैवीम् ॥ – गीता १६।१,२ र ३

२० दैवीसम्पद्विमोक्षाय निबन्धायासुरी मता। – गीता १६।५

जुन मनुष्यको अन्तःकरणको वासना नाश भएर कर्मबन्धन समाप्त भइसकेको छ त्यसलाई आत्मसाक्षात्कार गर्न कत्तिबेर लाग्दैन। किन्तु जसका हृदयमा [21]कर्मबन्धनरूपी वासना छ र जसको मन विक्षिप्त छ, त्यसका हृदयमा विराजमान परमात्मालाई उसले फेला पार्न सक्तैन। किनभने संसारीका लागि परमात्मा अत्यन्त नगिच भएर पनि टाढा छन्।

उपर्युक्त परिप्रेक्ष्यमा मुमुक्षु पुरुषले आफ्ना सम्पूर्ण अधोमुखी वृत्तिहरूलाई रोकेर परमात्मातर्फ उन्मुख गराउनु पर्दछ। अधोमुखी खराब वृत्तिहरूले निषेधित कर्महरू गराएर बन्धनमा पार्दछन् भने ऊर्ध्वमुखी असल वृत्तिहरूले मुमुक्षुलाई मुक्तिको बाटोतर्फ लैजान्छन्। [22]बुद्धिमान् मनुष्यको बुद्धि अर्थात् विवेकीको विवेक र मनीषीहरूको मनीषा अर्थात् चतुरा मानिसहरूको चतुऱ्याइँको पराकाष्ठा यसैमा देखिन्छ, जसले यस विनाशशील र असत्य शरीरद्वारा त्यस सनातन, अविनाशी तथा सत्यात्मक ब्रह्मको साक्षात्कार गर्न सक्तछ।

कर्मबन्धनमा मनुष्यलाई पार्ने भनेको उसको अविद्याजन्य अन्तःकरण अर्थात् बुद्धिमा आध्यासिक सम्बन्धले अहं र ममभाव रहनु हो। अहंको कारण नै कर्मको जालो फैलिन्छ।

---

२१ हृदिस्थोऽप्यातिदूरस्थः कर्मविक्षिप्तचेतसाम्। – भागवत १०।८६।४७

२२ एषा बुद्धिमतां बुद्धिर्मनीषा च मनीषिणाम्।
यत् सत्यमनृतेनेह मर्त्येनाप्नोति मामृतम्॥ – भागवत ११।२९।२२

[23]जुन ज्ञानी मनुष्यको मनमा अहङ्कारकृत भाव किं वा मैले यी कर्म गरेँ भन्ने कर्मको कर्ता भाव छैन त्यस्तो अहंभावनिर्मुक्त कर्ता आफूले गरेको शुभ धर्म, अशुभ अधर्म आदि स्वर्ग र नरकको फल  दिने कर्महरूको भागी हुँदैन ।

त्यतिमात्रै होइन, आफूले गरेका शुभाशुभ कर्महरूका फलमा जसको बुद्धि टाँसिदैन र ऊ केवल साक्षीका रूपमा ती कर्महरूलाई तटस्थ भएर हेरिरहन्छ भने त्यस्ता ज्ञानीलाई कुनै पनि कर्मले छुन सक्तैन । अर्थात् त्यसरी अहंभाव र ममभावबाट माथि बसेर गरेका कर्महरू बन्धनका कारण बन्दैनन् । कर्म गरेर पनि त्यस्तो ज्ञानी कर्मबन्धनबाट निर्मुक्त नै हुन्छ ।

[24]वासना सद्वासना र असद्वासना गरी दुई प्रकारका हुन्छन् । जसलाई शुद्धा र मलिना वासना भनिन्छ । शुद्धा वासना कर्मबन्धनबाट मुमुक्षुलाई माथि उठाएर मोक्षको साधन बन्दछ भने मलिना वासनाले मनुष्यलाई जन्ममरणको दुश्चक्रमा धकेल्दछ । अतः मनुष्यले शुद्धावासनाको अभिवृद्धि गर्ने र मलिना वासनाको परित्याग गर्न सके कर्मबन्धनको क्षय हुनसक्तछ । यसैमा कल्याण छ ।

शास्त्र र गुरुका उपदेश समेतबाट प्राप्त ज्ञानाग्निद्वारा ज्ञानीका सम्पूर्ण कमबन्धनहरू समाप्त हुन्छन् । जतिसुकै धेरै

---

२३ यस्य नाहङ्कृतो भावो बुद्धिर्यस्य न लिप्यते ।
हत्वाऽपि स इमाँल्लोकान्न हन्ति न निबध्यते ॥ – श्रीमद्भगवद्गीता १८।१७

२४ वासना द्विविधा प्रोक्ता शुद्धा च मलिना तथा ।
मलिना जन्महेतुः स्यात् शुद्धा जन्मविनाशिनी ॥ – योगवासिष्ठ

[25]शास्त्रहरू सुनेको र अरूलाई सुनाएको भए पनि ज्ञानीले सारा बिर्सनु पर्दछ। अर्थात् ब्रह्मज्ञानी भएपछि यी विस्मृतिका गर्तभित्र जान्छन्। अन्यथा मुमुक्षुलाई ब्रह्मज्ञान भएको छैन भनेर जान्नु पर्दछ। ज्ञान भएपछि ज्ञानीलाई गुरु अगुरु र शास्त्र अशास्त्र हुन जान्छन्।

श्रुतिले पनि ज्ञानीका लागि यही कुराको उपदेश गरेको छ। [26]बुद्धिमान् मुमुक्षुले ब्रह्मज्ञान भइसकेपछि निरन्तर स्वस्वरूपमा रहनु पर्दछ। धेरै पढ्नु र मनन आदि गर्नु पनि हुँदैन। सो गर्नु भनेको व्यर्थको वाणीको श्रममात्रै पनि हो। यसरी ज्ञानीका सम्पूर्ण इतिकृत्य, कर्तव्य, कर्म र कर्मबन्धन समेत ब्रह्मज्ञानपछि समाप्त हुन्छन्। ॐ ब्रह्मार्पणमस्तु।

---

२५ आचक्ष्व शृणु वा तात नानाशास्त्राण्यनेकशः ।
तथापि न तव स्वास्थ्यं सर्वविस्मरणादृते ॥ – अष्टावक्रगीता १६।१

२६ तमेव धीरो विज्ञाय प्रज्ञां कुर्वीत ब्राह्मण ।
नानुध्यायाद् बहूञ्छब्दान् वाचो विग्लापनं हि तत् ॥
– बृहदारण्यकोपनिषद् ४।४।२१

# १४. काम, कर्म र परिणति

काम शब्द कम्+घञ् भएर बन्दछ। यसका अर्थहरू कामना, इच्छा, स्नेह, अनुराग, प्रेम भोग गर्ने इच्छा, कामुकता, कामदेव आदि धेरैथरी हुन्छन्। यसै कामले समष्टिरूपमा र व्यष्टि रूपमा अनन्त प्रपञ्चको जालो सृजना गर्दछ। यसैबाट विशेषणको रूपमा अर्थात् कामन्बाट नम् प्रत्यय अर्थात् पछाडि पट्टि ना लागेर कामना शब्द बन्दछ। यसका अर्थहरू कामासक्त, कामातुर, चाहना, अदम्य इच्छा आदि हुन्छन्। यसैबाट विहित, निषिद्ध आदि नानाथरी कर्महरू हुन्छन् । यिनै कर्महरूको परिणति यो प्रपञ्च, यो संसार हो जसमा परेर जीवात्मा अनन्त कालसम्म यसकै दुश्चक्रमा घुमेर दुरन्त दुःख पाइरहन्छ।

यो विश्व प्रपञ्च सम्पूर्ण भूतभौतिक सृष्टि परमात्माको कामनाबाट सर्वप्रथम शुरु हुन्छ। [१]ती परमात्माले म धेरै होऊँ अर्थात् उत्पन्न होऊँ भन्ने कामना गरे। त्यसपछि परमात्माले तप गरे। तप गरेर नै उनले यो समस्त प्रपञ्चको रचना गरे। यसको रचना गरेर उनी त्यसैमा प्रविष्ट भए भन्ने श्रुतिको कथन छ।

---

१ सोऽकामयत बहु स्यां प्रजायेयेति। स तपोऽतप्यत स तपस्तप्त्वा इदं सर्वमसृजत यदिदं किञ्च। तत्सृष्ट्वा तदेवानुप्राविशत्।

– तैत्तिरीयोपनिषद् २।६।१

यसरी निर्गुण निराकार शुद्ध ब्रह्मको सृष्टिसंरचनाको कामनाले गर्दा ता भूत र भौतिक सृष्टिलाई सत्ता दिनुका साथै जीव भएर अन्तर्यामीका रूपमा प्राणीका भित्र प्रवेश गर्नु पर्‍यो र आध्यासिक अर्थात् संसर्गाध्यासद्वारा जड बुद्धिको प्रमातृत्व, कर्तृत्व र भोक्तृत्व धर्मलाई स्वीकार गर्नु पर्‍यो भने अत्यन्त अशुद्ध संसारी जीवको कामनाले उसलाई कहाँ पुर्‍याउने रहेछ, सजिलै अनुमान गर्न सकिन्छ।

काम भनेको मन नै हो। यस चञ्चल मनका ठाउँ र काम अनुसारका [२]काम, सङ्कल्प, संशय, श्रद्धा, अश्रद्धा, धैर्य, अधैर्य, लज्जा, बुद्धि र भय समेत दश ओटा नामहरू छन् भनेर उपनिषद् भन्दछ। यस्तो बहुरूपी [३]काम वा मनलाई जीवात्माले छाडा छोडेर भ्रमांशतर्फ अर्थात् मायिक विषयवासनातर्फ लगाएमा बन्धनको कारण बन्दछ भने त्यसै मनलाई संयमित र शुद्ध बनाए ब्रह्मचिन्तनतर्फ लगाएमा सोझै मोक्षको कारण बन्न सक्तछ भनेर अर्को श्रुतिले भनेको छ। ब्रह्मज्ञानी वसिष्ठले मनलाई [४]पिशाचको संज्ञा दिनुभएको छ।

[५]पहिले एकमात्र आत्मा नै थियो। आत्मा बाहेक अरू

---

२ कामः सङ्कल्पो विचिकित्सा श्रद्धाऽश्रद्धा धृतिरधृतिर्ह्रीर्धीर्भीरितत्सर्वं मन एव। – बृहदारण्यकोपनिषद् १।५।३

३ मन एव मनुष्याणां कारणं बन्धमोक्षयोः।
बन्धाय विषयासक्तं मुक्तैर्निर्विषयं मनः॥ – शाट्यायनीयोपनिषद् १

४ मनः पिशाचमुत्सृज्य योऽसि सोऽसि स्थिरो भव। – योगवासिष्ठ

५ आत्मा वा इदमेक एवाग्र आसीत्। नान्यत् किञ्चन मिषत्। स ईक्षत लोकान्नु सृजा इति। – ऐतरेयोपनिषद् १।१

केही थिएन। त्यस आत्माले लोकहरूको रचना गर्ने कामना गर्‍यो। सगुण साकार नाम र रूप लिएर भूभारहरण गर्न धराधाममा अवतीर्ण भएका भगवान् श्रीकृष्णले पनि आफू [६]ब्रह्म भएको आफैँले प्रस्टरूपमा भन्नुभएको छ।

तिनै परमात्मा ब्रह्मले एकपटक खेल खेल्ने इच्छा गर्नुभयो। वस्तुतः यो सारा दृश्य प्रपञ्च उनकै खेल हो। लोकका राजाहरूले स्वभावैले विना प्रयोजन खेलबाड गर्दछन् भने त्यसै गरेर परमात्माले पनि खेल खेलमा सृष्टि गर्दछन् भन्ने कुरा [७]ब्रह्मसूत्रले भनेको छ।

भगवान् श्रीकृष्णले वृत्तिरूप जीवात्मासँग खेल खेल्नका लागि आफूसँग नभएको मनको रचना गर्नुभयो। किनभने ब्रह्मका [८]आँखा, कान, वाणी र मन समेत नहुने कुरा श्रुतिले भनेको छ। किन्तु मन समेतका इन्द्रियहरू नभईकन संसारी खेल खेल्न नसकिने हुँदा भगवान् श्रीकृष्णले मनको रचना गर्नुभएको प्रमाण [९]पुराणबाट देखिन्छ।

परमात्माले कुनै कुराको कामना गर्दा त मायिक प्रपञ्चमा फस्नु पर्दछ भने मनुष्यले कामना गर्दा त्यसको परिणति के कस्तो हुन्छ ? त्यसै अनुमान गर्न सकिन्छ। मनुष्यले अदम्य

---

६ मत्कामा रमणं जारमस्वरूपविदोऽबलाः।
ब्रह्म मां परमं प्रापुः सङ्गाच्छतसहस्रशः॥ – भागवत ११।१२।१३

७ लोकवत्तु लीलाकैवल्यम्। – ब्रह्मसूत्र २।१।३२

८ अचक्षुष्कमश्रोत्रमवागमनः। – शतपथब्राह्मण १४।६।८।८

९ भगवानपि ता रात्रीः शरदोत्फुल्लमल्लिकाः।
वीक्ष्य रन्तुं मनश्चक्रे योगमायामुपाश्रितः॥ – भागवत १०।२९।१

कामना राखेर विषयको चिन्तन गर्‍यो भने उसको विषयमा आसक्ति हुन्छ, आसक्तिबाट कामना बढ्दछ, कामनाको परिपूर्ति नभएमा क्रोध उत्पन्न हुनजान्छ, क्रोधबाट मूढता उत्पन्न हुन्छ, त्यसबाट मान्छेले आफूलाई बिर्सन्छ अर्थात् उसको बुद्धि नाश हुन्छ र बुद्धि नष्ट भएपछि उसको पतन हुन्छ भनेर [१०]श्रीमद्भगवद्गीताले भनेको छ।

अति कामनाबाट विषयासक्त मनुष्यको पतन नै हुन्छ। कामना भएपछि लोभ हुन्छ, लोभ भएपछि त्यसलाई प्राप्त गर्न मनुष्यले जस्तोसुकै कुकृत्य पनि गर्दछ। त्यसबाट पनि उसको कामनाको परिपूर्ति नभएमा उसमा क्रोध पैदा हुन्छ र त्यसपछि उसको अधपतनको मार्ग प्रशस्त हुन्छ। यसलाई आसुरी सम्पद् भनिएको छ। त्यतिमात्रै होइन काम, क्रोध र लोभलाई [११]नरकको द्वार नै भनेर भगवान् श्रीकृष्णले भन्नुभएको छ। किनभने यी आसुरी सम्पदामा पर्दछन्। यी तीनै थरी दोषहरू अन्तःकरणमा लिएर हिँड्ने संसारी विषयीको कहिल्यै पनि मुक्ति हुँदैन। ऊ बारम्बार पाप गर्दछ, नरक जान्छ, आएर नीच पाप योनिमा जन्मन्छ, फेरि पाप गर्दछ र फेरि नरक

---

१० ध्यायतो विषयान्पुंसः सङ्गस्तेषूपजायते।
सङ्गात्सञ्जायते कामः कामात्क्रोधोऽभिजायते॥
क्रोधाद्भवति संमोहः संमोहात्स्मृतिविभ्रमः।
स्मृतिभ्रंशाद् बुद्धिनाशो बुद्धिनाशात्प्रणश्यति॥
– श्रीमद्भगवद्गीता २।६२, ६३

११ त्रिविधं नरकस्येदं द्वारं नाशनमात्मनः।
कामः क्रोधस्तथा लोभस्तस्मादेतत्त्रयं त्यजेत्॥ – श्रीमद्भगवद्गीता १६।२१

जान्छ। कामना नै यसको मूल कारण हो। कामी मनुष्यले कहिल्यै पनि निस्तार पाउँदैन र ऊ संसारको दुश्चक्रमा अनन्त कालसम्म घुमिरहन्छ।

अविद्या, काम, कर्म र फलको सधैँ घुमिरहने कुचक्रमा परेर प्राणी घुमिरहन्छ। [१२]काम नै पापाचरणको हेतु हो। रजोगुणबाट उत्पन्न काम नै क्रोधको कारण हो। जतिसुकै विषय भोग गरे पनि यो काम अघाउँदैन। यस कामबाट आविष्ट मनुष्य जस्तोसुकै निषिद्ध कर्म पनि गर्न सक्तछ। यो काम नै संसारको भुमरीमा घुमाउने महावैरी हो। यसबाट धेरैको दुर्गति भएको छ।

कामका धेरैथरी रूप छन्। ती मध्ये कामुकता अर्थात् यौनेच्छा पनि एक हो। मान्छेको यो सबै भन्दा ठूलो वैरी हो। प्राचीन वैदिक कालदेखि अहिलेसम्म देवतादेखि यक्ष, किन्नर र मनुष्यसम्म कोही पनि कामबाट अछुतो रहन सकेका छैनन्। इन्द्र, चन्द्रमा आदि देवताहरूले अगम्यागमन गरेर त्यसको सजायका भागी भए भने इन्द्राणी माथि आँखा लगाउँदा नहुषले अजिङ्गर भएर पृथ्वीमा पतन हुनु पऱ्यो। कामासक्त पापीहरूका आख्यानहरू धेरै छन्। तीमध्ये प्रसिद्ध राजा पुरुरवाको आख्यान वेदमा पनि आएको छ। उर्वशीमा कामासक्त भएर पछि लाग्दा उनले ठूलो दुःख पाएका थिए।

---

१२ काम एष क्रोध एष रजोगुणसमुद्भवः।
महाशनो महापाप्मा विद्ध्येनमिह वैरिणम्॥ – गीता ३।३७

पुराणहरूमा वर्णित अत्यन्त कामासक्त व्यक्तिहरूमध्ये राजा ययातिको कथा पनि प्रसिद्ध छ। उनका शुक्राचार्यकी पुत्री देवयानी र दैत्यराज वृषपर्वाकी पुत्री शर्मिष्ठा लगायतका धेरै रानीहरू थिए। कामुक ययातिलाई ससुरा शुक्राचार्यको वृद्ध हुने शाप परेको थियो। ससुरालाई खुशी पारेर ययातिले युवासँग आफ्नू वृद्धावस्था साट्न सक्ने वरदान पाएका थिए। स्त्रैण तथा कामुक उनले आफ्नू कामेच्छा यथेच्छ पूर्ण गर्नका लागि आफ्ना कान्छा युवा पुत्र पुरुको जवानी निर्लज्जतापूर्वक साटेर लिएका थिए। धेरै वर्षसम्म कामवासनाको निर्बाध उपभोग गरेपछि अन्त्यमा उनमा विरक्ति आएको थियो। आफूले लिएको युवावस्था छोरालाई नै दिएर आफ्नू वृद्ध शरीर लिएर र राजपाट सबै छोराहरूलाई सुम्पिएर अन्त्यमा उनी भगवत्शरणमा गए।

अन्त्यमा राजा ययातिले अत्यन्त विरक्त हुँदै [१३]पृथ्वीमा जति पनि धान्य, सुवर्ण, पशु र स्त्रीहरू छन्, ती सबै पाए पनि कामनाद्वारा आहत र जर्जर भएको पुरुषको सुरसाको मुख जस्तो विशाल भएर फैलिएको मनलाई सन्तुष्ट गर्नसक्तैनन् भनेका थिए।

त्यतिमात्रै होइन, त्यो भन्दा पनि बढी ययातिले अत्यन्त शाश्वत औपनिषद ज्ञानले आप्लावित भनाइ पनि व्यक्त

---

१३ यत् पृथिव्यां ब्रीहियवं हिरण्यं पशवः स्त्रियः ।
न दुह्यन्ति मनः प्रीतिं पुंसः कामहतस्य ते ॥ – भागवत ९।१९।१३

गरेका थिए। किनभने [१४]विषयको भोग गरेर भोगवासना कहिल्यै पनि शान्त हुनसक्तैन। बरु यसको उल्टो आगोमा घिउ हालेमा जसरी आगो निभ्नुको साटो अझ ऊर्ध्वगामी भएर प्रज्वलित भएर दनदन दन्किन्छ, त्यसै गरेर भोगवासना पनि भोगद्वारा अझै प्रबल भएर बढ्दछ।

काम र कामना अर्थात् अदम्य विकृत कामुकता र विषय प्रतिको अत्यन्त प्रबल आसक्तिले अज्ञानीलाई त्यसमा आकण्ठ चुर्लुम्मै डुबाउँछ। तिनलाई उपनिषद्को भाषामा [१५]पुत्रैषणा, वित्तैषणा र लोकैषणा भनिन्छ। संसारी मान्छे कथङ्कदाचित उमेर र सामर्थ्यसमेतका कारणले पुत्रैषणा र वित्तैषणा दमितरूपमा भित्र भए पनि देखावटीरूपमा तीबाट केही पर हटेजस्तो भए तापनि लोकैषणाबाट भने माथि उठ्न सक्तैन। मृत्यु पर्यन्त नै कीर्ति चलाउने महत्त्वाकाङ्क्षा बोकेर ऊ अथकरूपमा चारैतिर दौडिरहन्छ। विश्वविजयी र विश्वसम्राट् बन्ने दिवास्वप्न अन्तःकरणमा सञ्चय गरेर हिँडेका त्यस्ता महत्त्वाकाङ्क्षी तानाशाहरूले धेरै मनुष्यहरूको हत्या गरेर रगतको खोलो बगाएको त्रासदीपूर्ण, बीभत्स, नृशंस र हृदयविदारक दुर्दान्त घटनाको साक्षी विश्व इतिहास छ। त्यस्ता कुत्सित प्रवृत्ति भएका तानाशाहहरूमा प्राचीन वैदिक

---

१४ न जातु कामः कामानामुपभोगेन शाम्यति।
हविषा कृष्णवर्त्मेव भूय एवाभिवर्धते॥ – भागवत ९।१९।१४

१५ पुत्रैषणाश्च वित्तैषणाश्च लोकैषणाश्च व्युत्थाय भिक्षाचर्यञ्चरन्ति।
– बृहदारण्यकोपनिषद् ४।४।२२

कालका नमुचि आदि, रामायण कालीन रावण आदि, महाभारत कालका दुर्योधन आदि, पौराणिक कालका कंस आदि, अर्वाचीन कालीन फ्रान्सका तत्कालीन तानाशाह नेपोलियन, जर्मनीका हिट्लर, इटालीका मुसोलिनी, मङ्गोलियाका चङ्गेज खाँ, भारतका औरङ्गजेव, रुसका स्टालिन, चीनका माओत्सेतुङ, नेपालका जङ्गबहादुर जस्ता धेरै तानाशाहरू समेत देखिन्छन्। उनीहरू त्यस्ता हुनुमा अधिकांशरूपमा कारकतत्त्व अतृप्त र विकृत काम वा यौनेच्छा भएको मनोविश्लेषकहरूको भनाइ पाइन्छ।

[१६]कहिल्यै र कुनै अवस्थामा पनि परिपूर्ण हुन नसक्ने अदम्य कामना मन र मस्तिष्कमा बोकेर दम्भ, मान र मदले युक्त भएर अशुद्ध धारणा बनाएर अमानवीय नृशंस आचरण गर्ने त्यस्ता राक्षस जस्ता प्रवृत्ति र प्रकृति भएका मानिसहरू आसुरी सम्पदाले युक्त हुन्छन्। तिनीहरू अत्यन्त अज्ञानले गर्दा मिथ्या धारणा लिएर संसारमा अकल्पनीय अमानवीय र नृशंस कामहरू गर्दछन्।

त्यस्ता हृदयविहीन दुर्दान्त र संवेदनाविहीन कामीहरूको कहिल्यै पनि मुक्ति हुँदैन। किन्तु [१७]गीताले भने त्यस्ता कुत्सित व्यक्तिहरूको पनि मुक्तिको बाटो देखाएको छ। कुनै मानिस

---

१६ काममाश्रित्य दुष्पूरं दम्भमानमदान्विताः ।
मोहाद् गृहीत्वासद्ग्राहान्प्रवर्तन्तेऽशुचिव्रताः ॥ – गीता १६।१०

१७ अपि चेत्सुदुराचारो भजते मामनन्यभाक् ।
साधुरेव स मन्तव्यः सम्यग्व्यवसितो हि सः ॥ – गीता ९।३०

अत्यन्त दुराचारी भए तापनि अनन्यरूपले भगवान्‌को भजन गर्दछ भने त्यसलाई साधु नै मान्नुपर्दछ।

पूर्वजन्मको संस्कार, वासना, सङ्गत र प्रारब्धकर्मका कारण पनि धेरैजसो मानिसहरू असल र खराब हुन्छन्। असल संस्कार, वासना र प्रारब्धकर्म समेत अनुकूल भएमा जतिसुकै कामुक, नृशंस र खराब मान्छे भए पनि अन्त्यमा अन्तःकरणमा प्रसुप्त संस्कार उद्भूत हुन्छ र अन्ततः उसले सुबाटो लिन्छ। जसमा व्याधा रत्नाकर, राजा ययाति, कामी ब्राह्मण, अजामिल समेत धेरै व्यक्तिहरूलाई उदाहरणका रूपमा लिन सकिन्छ।

प्रथम अवस्थामा संस्कार, वासना र प्रारब्ध कर्म समेत राम्रो हुँदाहुँदै पनि कुसङ्गत, प्रतिकूल वातावरण र काँचो बुद्धिले गर्दा कामासक्त भएर र नानाथरी कामना बोकेर मानिस दिग्भ्रमित हुनसक्तछ। किन्तु अनन्त पूर्वजन्ममा गरिएका पुण्यकर्मको फलले पुण्य संस्कारको उदय भएर उसलाई असल सङ्गत, अनुकूल वातावरण र असल गुरु प्राप्त हुन पनि सक्तछन्। त्यसो भएमा ऊ निषिद्ध र काम्य कर्म समेतलाई त्याग गर्दै निष्काम कर्म गरेर अनन्त जन्मदेखि अन्तःकरणमा थुप्रिएर बसेको मलदोषलाई फ्याँक्न सक्तछ।

उपर्युक्त मलदोषको प्रक्षालन गर्न सर्वप्रथम आहार शुद्धि हुनुपर्दछ। अर्थात् जसलाई आहरण गरिन्छ, त्यसलाई आहार भनिन्छ। भोक्ताको भोगका लागि शब्दादि विषय विज्ञानलाई जुन आहरण गरिन्छ, त्यसै विषयोपलब्धिरूप विज्ञानको शुद्धि नै आहारशुद्धि हो। अर्को शब्दमा राग, द्वेष, मोह आदि

दोषहरू अन्तःकरणबाट हट्नु नै आहारशुद्धि हो। यसबाट मुमुक्षुका अविद्या, काम, कामना, कर्म आदि अन्तःकरणमा रहेका दोषहरू नष्ट हुन्छन्।

आहारशुद्धि भएपछि सत्त्व अर्थात् अन्तःकरण शुद्ध, निर्मल हुन्छ। त्यसपछि आफ्नू स्वरूपको स्मरण हुन्छ। त्यसपछि अनेकौँ जन्मदेखि अन्तःकरणमा वा बुद्धिमा जमेर बसेका वासना वा सबै [१८]ग्रन्थिहरू वा सञ्चितकर्महरू नाश हुन्छन्। त्यसरी शुद्ध भएको बुद्धि ब्रह्माकाराकारित हुन्छ।

अविद्या वा अज्ञानद्वारा कामना पैदा हुन्छ। कामना भएपछि मान्छेले काम्य कर्म र निषिद्ध कर्म गर्दछ। त्यसको फल दुःखसुखात्मक यस संसारमा बारम्बार आउने र जाने अर्थात् जन्मने र मर्ने गर्नु पर्दछ। कर्मबाट अविद्या, अविद्याबाट काम, कामबाट कर्म र कर्मबाट संसाररूपी दुःखद फल प्राप्त हुन्छ। यसैलाई कुचक्र भनिन्छ। [१९]अज्ञान अर्थात् अविद्या नै यस परिणतिको मूल कारकतत्त्व भएकाले विद्या अर्थात् ज्ञानबाट यस अविद्या वा अज्ञानको नाश हुन्छ, कर्मबाट नाश हुनसक्तैन। ॐ ब्रह्मार्पणमस्तु।

---

१८ आहारशुद्धौ सत्त्वशुद्धिः सत्त्वशुद्धौ ध्रुवा स्मृतिः स्मृतिलम्भे सर्वग्रन्थीनां विप्रमोक्षः। – छान्दोग्योपनिषद् २६।७।२

१९ अज्ञानमेवास्य हि मूलकारणं तद्धानमेवात्र विधौ विधीयते।
विद्यैव तन्नाशविधौ पटीयसी न कर्म तज्जं सविरोधमीरितम्॥
– रामगीता ९

# १५. तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत्

गुरु शब्द विज्ञानार्थक गृ धातुबाट कु प्रत्यय र उत्व समेत भएर बन्दछ। गुरु शब्दका दुईथरी अर्थहरू हुन्छन्। जसमा गह्रौँ, ठूलो, लामो, महत्त्वपूर्ण, असह्य, प्रचण्ड, गरिष्ठ, उत्तम, प्यारो, घमन्डी, बूढो, ठूलो छाँटको, विशाल, प्रशस्त, तीव्र, अत्यधिक आदि सामान्य गुणादि गुरु शब्दका अर्थ हुन्छन् भने प्रकृत लेखसँग सन्दर्भ राख्ने गुरु शब्दका अर्थहरू भने पिता, विद्यागुरु, शिक्षागुरु, दीक्षागुरु, बृहस्पति, गुरु द्रोणाचार्य र ब्रह्मज्ञानको उपदेश गर्ने अर्थात् उपदेशात्मक महावाक्यको श्रवण गराउने श्रोत्रिय ब्रह्मनिष्ठ गुरु हुन्छन्।

वस्तुतः [1]अविद्यारूपी अर्थात् हृदयग्रन्थिरूप अज्ञानलाई नाश गरेर जसले जीवात्मा र परमात्माको एकत्व गराउने ब्रह्मज्ञान प्रदान गर्दछन् तिनै गुरुलाई सही अर्थमा गुरु भनेर योगीहरूले भनेका छन्। अरू विधाका गुरुहरू नाममात्रका गुरु हुन्। यद्यपि [2]विधिपूर्वक गर्भाधान आदि षोडशसंस्कार गर्ने विप्रलाई पनि स्मृतिले गुरु भनेको छ।

---

१ अविद्या हृदयग्रन्थिर्बन्धमोक्षो यतो भवेत्।
तमेव गुरुरित्याहुर्गुरुशब्देन योगिनः ॥ – सर्ववेदान्तसारसङ्ग्रह

२ निषेकादीनि कर्माणि यः करोति यथाविधि।
सम्भावयति चान्येन स विप्रो गुरुरुच्यते ॥ – मनुस्मृतिः २।१४२

अर्कोतर्फ तन्त्रशास्त्र अनुसार गुरुहरू चार प्रकारका मानिन्छन् । त्यसमा [३]गुरु, परमगुरु, परात्परगुरु र परमेष्ठी गुरुसमेत पर्दछन् । त्यसैगरेर भगवान् श्रीशिवले देवी पार्वतीलाई उपदेश गर्ने सन्दर्भमा सर्वत्र नै [४]मन्त्र दान गर्ने गुरु परमगुरु हुन् र परात्परगुरु भनेकी तिमी नै हौ र परमेष्ठी गुरु चाहिँ म नै हुँ भन्नुभएको छ ।

पार्वतीलाई उपदेश गर्दै भगवान् श्रीशिव भन्नुहुन्छ – हे परमेशानि ! आफूलाई ब्रह्मज्ञान प्रदान गर्ने आफ्ना गुरु निश्चय पनि साक्षाद् ब्रह्म हुन् । गुरुका पिता परमगुरु हुन् भने ती चाहिँ यस पृथिवीतलमा साक्षात् विष्णु भगवान् हुन् भनेर जान ।

गुरु शब्दलाई अझै चिरफार गरेर अर्थ गर्ने हो भने [५]गुकारको अर्थ हुन्छ अन्धकार, अविद्या र अज्ञान । [६]रुकारको अर्थ हुन्छ प्रकाश । मुमुक्षुका अन्तःकरणमा जमेर बसेको अज्ञानरूपी अन्धकारलाई जुन ज्ञानी गुरुले ब्रह्मज्ञानरूपी उज्यालोले सधैँका लागि नाश गरिदिन्छन्, त्यस्ता ब्रह्मनिष्ठ गुरु नै गुरु हुन् र ब्रह्म हुन् ।

गुरु शब्दको सही अर्थ उपर्युक्त अनुसार बुझेको मुमुक्षु

---

३ गुरुः परमगुरुश्चैव परात्परगुरुस्तथा ।
परमेष्ठी गुरुश्चैव स्वस्वाम्नायैः प्रतर्पयेत् ॥ – पुरश्चर्यार्णव १।२३९

४ आदौ सर्वत्र देवेशि मन्त्रदः परमो गुरुः ।
परात्परगुरुस्त्वं हि परमेष्ठी त्वहं यतः ॥ – पुरश्चर्यार्णव १।२३९

५ स्वगुरुः परमेशानि साक्षाद् ब्रह्म न संशयः ।
तत्पिता परमगुरुः स्वयं विष्णुः क्षितौ सदा ॥ – महिषमर्दिनीतन्त्र

६ गुकारस्त्वन्धकारश्च रुकारस्तेज उच्यते ।
अज्ञानग्रासकं ब्रह्म गुरुरेव न संशयः ॥ – गुरुगीता

जिज्ञासुले परब्रह्मको अनुपम ज्ञान गराउने गुरु प्रति अत्यन्त विनीत हुँदै भन्दछ – [७]जुन ब्रह्मले अखण्डमण्डलाकार भएर यस अपरिमित अखिल चराचर विश्व ब्रह्माण्डलाई ओतप्रोत गरेर राखेको छ, त्यस्तो अप्रमेय तथा अज्ञेय ब्रह्मतत्त्वको जसले ज्ञान गराइदिनु भयो, त्यस्ता श्रोत्रिय ब्रह्मनिष्ठ गुरुलाई म नमस्कार गर्दछु ।

उपर्युक्त अनुरूप विभिन्न शास्त्रहरूको भनाइ अनुसार ब्रह्मज्ञानका लागि गुरु समक्ष गएर विधिपूर्वक गुरूपसत्ति गर्नै पर्ने र आफूखुशी करोडौँ शास्त्रहरू पढे पनि ज्ञान हुन नसक्ने कुरा शास्त्रहरूले नै भनेका हुँदा जिज्ञासु मुमुक्षुले गुरुका समक्ष जानुपर्दछ । अन्यथा कुनै हालतमा पनि ज्ञान हुन सक्तैन । [८]साधनचतुष्टयसम्पन्न मुमुक्षुले आत्मसाक्षात्कार गर्नका लागि श्रोत्रिय ब्रह्मनिष्ठ गुरुको शरण लिनु पर्ने अनिवार्य देखिन्छ । [९]गुरुको मुखबाट महावाक्यको [१०]श्रवणपछि मनन, निदिध्यासन र ब्रह्माभ्यास गरेपछि मात्रै ब्रह्मज्ञान हुन्छ, अन्यथा कुनै हालतमा पनि ब्रह्मज्ञान हुनसक्तैन ।

---

७ अखण्डमण्डलाकारं व्याप्तं येन चराचरम् ।
तत्पदं दर्शितं येन तस्मै श्रीगुरवे नमः ॥ – गुरुगीता

८ (क) नित्यानित्यवस्तुविवेकः । (ख) इहामुत्रार्थभोगविरागः ।
(ग) शमदमादिसाधनसम्पत् तथा (घ) मुमुक्षुत्वञ्च ।
– ब्रह्मसूत्र शाङ्करभाष्य १।१।१।१

९ गुरूपदेशतो ज्ञेयो नान्यथा शास्त्रकोटिभिः । – श्रीमद्देवीभागवत ७।३५।६२

१० आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यो मैत्रेय्यात्मनो वा अरे दर्शनेन श्रवणेन मत्या विज्ञानेनेदं सर्वं विदितम् ।
– बृहदारण्यकोपनिषद् २।४।५

माथि उल्लेख भएका शास्त्रीय वाक्यहरूलाई अत्यन्त मनन गरेर जुन मनुष्य आफ्नू परम कल्याण अर्थात् ब्रह्मसाक्षात्कार गरेर मुक्त हुन चाहन्छ, त्यसले महावाक्य श्रवण गर्नका लागि गुरुका शरणमा जानुपर्दछ। त्यस्तो [११]गुरु वेद र वेदाङ्ग समेतमा निष्णात र ब्रह्ममा परिनिष्ठित तत्त्वज्ञानी हुनुपर्दछ। त्यसका साथै गुरु शान्तचित्त र व्यावहारिक प्रपञ्चबाट माथि उठेको पनि हुनुपर्दछ।

साधनचतुष्टयसम्पन्न मुमुक्षु ब्राह्मण कर्मद्वारा प्राप्त भएका मर्त्यलोक र स्वर्गलोकको निःसारता देखेर अर्थात् विचार गरेर [१२]ब्रह्मज्ञान गर्न तत्पर होओस् र विरक्त बनोस्। किनभने यो संसार अनित्य हो। यस अनित्य संसारमा गरिएका काम्यादि कर्महरूबाट अकृतक मोक्ष प्राप्त हुँदैन भन्ने पनि राम्रोसँग बुझेर त्यस नित्यवस्तु ब्रह्मलाई जान्न अत्यन्त स्वच्छ अन्तःकरण बनाएर मुमुक्षु श्रोत्रिय ब्रह्मनिष्ठ गुरुका शरणमा जाओस्।

अर्को श्रुतिले पनि [१३]जसरी यस लोकमा कर्म गरेर प्राप्त गरेको फल नाश हुन्छ, त्यसै गरेर अग्निहोत्रादि पुण्यकर्म गरेर प्राप्त गरेको स्वर्गलोकको भोग पनि नाश हुन्छ भनेको हुँदा

---

११ तस्माद् गुरुं प्रपद्येत जिज्ञासुः श्रेय उत्तमम्।
शब्दे परे च निष्णातं ब्रह्मण्युपशमाश्रयम्॥ – श्रीमद्भागवत ११।३।२१

१२ परीक्ष्य लोकान्कर्मचितान्ब्राह्मणो निर्वेदमायान्नास्त्यकृतः कृतेन।
तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्॥
– मुण्डकोपनिषद् १।२।१२

१३ तद्यथेह कर्मजितो लोकः क्षीयत मेवामुत्र पुण्यजितो लोकः क्षीयते।
– छान्दोग्योपनिषद् ८।१।६

नाश नहुने मोक्ष प्राप्त गर्न ब्रह्मज्ञानी गुरु समक्ष गएर मुमुक्षुले [१४]ब्रह्मजिज्ञासा गर्नुपर्दछ।

[१५]ब्रह्मज्ञानी गुरुसमक्ष गएर उपसत्तिपूर्वक मुमुक्षुले ब्रह्मजिज्ञासा गर्दा अत्यन्त विनीत र अनुशासित भएर गर्नुपर्दछ। गुरु समक्ष गएर ब्रह्मज्ञान गर्दा आफूलाई स्पष्ट नभएका विषयहरूमा नानाथरीका प्रश्नहरू समेत गरेर ब्रह्मज्ञान गर्नुपर्दछ। त्यस्ता तीव्र वैराग्ययुक्त र जिज्ञासु उत्तम अधिकारीलाई नै तत्त्वदर्शी ब्रह्मज्ञानी गुरुले उपदेश गर्ने छन्।

गुरु समक्ष गएर जिज्ञासु मुमुक्षुले ब्रह्मजिज्ञासा गरेपछि श्रोत्रिय [१६]ब्रह्मनिष्ठ गुरुले आफना वेदका शाखाको वेदान्त भागमा आएको, विधिपूर्वक स्वाध्यायका द्वारा प्राप्त गरेको र श्रद्धापूर्वक दीर्घ समयसम्म आराधित महावाक्य नै त्यस जिज्ञासु शिष्यलाई उपदेश गर्ने छन्। जुन उपदिष्ट महावाक्यले जीव र ब्रह्मको साक्षात् अपरोक्ष बोध उत्पन्न गर्दछ, त्यही महावाक्य नै मोक्षको साक्षात् हेतु हो, किन्तु अरू सामान्य अवान्तर वाक्यहरूले भने साक्षात् हेतुका रूपमा ब्रह्मको बोध गराउन सक्तैनन्।

महावाक्यको श्रवण गर्दाखेरि आफ्नै वेदका शाखाको

---

१४ अथातो ब्रह्मजिज्ञासा – ब्रह्मसूत्र १।१।१।१

१५ तद्विद्धि प्रणिपातेन परिप्रश्नेन सेवया।
उपदेक्ष्यन्ति ते ज्ञानं ज्ञानिनस्तत्त्वदर्शिनः ॥ – श्रीमद्भगवद्गीता ४।३४

१६ स्वाध्यायधर्मपठितं निजवेदशाखावेदान्तभूमिगतमादरपालितञ्च।
सन्न्यासिना पदृशा गुरुणोपदिष्टं साक्षान्महावचनमेव विमुक्तिहेतुः ॥
– सङ्क्षेपशारीरकम् ३।२९५

वेदान्त भागमा आएको महावाक्यको श्रवण गर्ने भनेर शास्त्रहरूमा आएको भए तापनि [17]रामगीता आदि स्मृतिहरूमा, शिवपुराण आदि पुराणहरूमा, वाक्यवृत्ति, दक्षिणामूर्तिस्तोत्र, बृहदारण्यकोपनिषद्वार्तिक समेतका विवरण र प्रकरण-ग्रन्थहरूमा समेत तत्त्वमसि आदि वाक्यहरूको श्रवणात्मकमहावाक्यका रूपमा उल्लेख गरेको पाइन्छ। रामगीतामा वेदविहित कर्महरूका अनुष्ठानद्वारा अन्तःकरण शुद्ध भएको श्रद्धालु मुमुक्षुले श्रोत्रिय ब्रह्मनिष्ठ गुरुका मुखबाट तत्त्वमसि आदि वाक्यहरूको श्रवण गरोस्। यसबाट जीवात्मा र परमात्माको एकत्वको ज्ञान गरेर ऊ सधैँका लागि यस दुःखद संसारबाट मुक्त हुनेछ भनिएको छ।

उपर्युक्त अनुसार मुमुक्षुले ब्रह्मसाक्षात्कारका लागि गुरुबाट तत्त्वमसि आदि महावाक्य सुन्नु भनेर वेददेखि लिएर उपनिषद्, स्मृति, पुराण, प्रकरण र विवरण ग्रन्थहरूले समेत निर्देशन गरेको पाइन्छ। किन्तु स्पष्ट बुझेर मनन र चिन्तनपूर्वक लेखकले नलेख्ने, गुरुले विद्यार्थीहरूलाई नबताउने, वेदान्तका व्याख्याता, उपदेशक र प्रवचनकर्ता महात्मा, सन्न्यासी प्राध्यापकहरूले सामवेद अन्तर्गत छान्दोग्योपनिषद्मा पिता उद्दालकले छोरा श्वेतकेतुलाई उपदेश गरेको श्रवणात्मक महावाक्य *'तत्त्वमसि'* नै सबैका लागि हो भनेर भन्ने गरेको

---

१७ श्रद्धान्वितेस्तत्त्वसीति वाक्यतो गुरोः प्रसादादपि शुद्धमानसः।
विज्ञाय चैकात्म्यमथात्मजीवयोः सुखी भवेन्मेरुरिवाप्रकम्पनः॥
– रामगीता २४

पाइन्छ। अद्वैतवेदान्तमा स्वाध्याय र प्रवचन गर्ने महात्मा, सन्न्यासी, विद्वान् र गुरुहरूले त्यही कुराको बारम्बार पुनरुक्ति गरिरहेको पाइन्छ। त्यतिमात्रै होइन एक जना अद्वैत वेदान्तका विद्वान्ले ता तत्त्वमसि महावाक्य मात्रै महावाक्य हो, अरू महावाक्य होइनन् सम्म पनि भन्ने गरेको सुनिन्छ।

स्वाध्याय र प्रवचनका प्रारम्भिक वर्षहरूमा त्यही *'तत्त्वमसि'* नै सबैका लागि श्रवणात्मक महावाक्य हो र अरू वैदिक महावाक्य होइनन् भन्ने गुरुवाक्यलाई नै ब्रह्मवाक्य ठानेर यस लेखकले विना विश्लेषण र अध्ययन सोही कुरा आफ्ना लेख र निबन्धहरूमा सोझै वा प्रकारान्तरले झल्काउने अदूरदर्शी काम गऱ्यो। अहिले आएर पश्चात्ताप जस्तो भएको छ। किनभने शास्त्रहरूले गुरुबाट ब्रह्मसाक्षात्कारका लागि श्रवण गर्दा तत्त्वमसि आदि महावाक्यहरू मध्ये आफ्ना वेदका शाखाको उपनिषद्मा पठित महावाक्यको श्रवण गर्नु भनेका हुन्। सबै वाक्य नै श्रवण गर्नु भनेको होइन। किनभने तत्त्वमसिपछि आएका आदि र इति समेतका शब्दहरूबाट सो कुरा थाहा हुन्छ। स्वाध्यायी, प्रवचनकर्ता, आचार्य, गुरु, महात्मा र सन्न्यासीहरूले यसलाई स्पष्टसँग उपदेश गर्नुपर्दछ।

यस लेखकले केही ज्ञान भएपछि धेरै पटक अत्यन्त जिज्ञासा लिएर श्रद्धा र विनयपूर्वक गुरु, महात्मा र विद्वान्हरूसँग म जस्ता माध्यन्दिनीयवाजसनेयिशुक्लयजुर्वेद–शाखाध्यायी द्विजले ब्रह्मसाक्षात्कारका लागि विधिपूर्वक श्रवण गर्नुपर्ने महावाक्य कुन हो ? भनेर प्रश्न गर्दा सबैका

लागि तत्त्वमसि नै हो भनेर उपेक्षापूर्वकको उत्तर पाएपछि चित्त नबुझेपछि यसका सम्बन्धमा विभिन्न ग्रन्थहरूको अध्ययन, अनुशीलन, छलफल र ब्रह्माभ्यासका सत्रहरूमा केही अद्वैतवेदान्तका विद्वान्हरूसँग अन्तरक्रिया र विचारविमर्श समेत गरेको थियो ।

शुक्ल यजुर्वेदशाखाध्यायी द्विजातिहरूले आफ्नै शाखाको उपनिषद्मा पठित महावाक्यको नै गुरुबाट श्रवण गर्नुपर्ने, अरूको वेदको शाखामा पठित महावाक्य सुनेमा शाखारण्ड हुने शास्त्रीय वचन भएकाले त्यसको अनुशीलनका सन्दर्भमा अध्ययन गर्ने क्रममा लेखकले स्वाध्यायको शास्त्रीय अर्थ समेत खुलाई यसै ग्रन्थमा समाविष्ट *'स्वाध्यायोऽधेतव्यः'* *'अखण्डार्थबोधकवाक्यं महावाक्यम्'* *'अहं ब्रह्म परंधाम'* *'अनूचानमानी'* आदि निबन्धहरू प्रस्तुत गरिसकेको छ ।

खोजी गर्ने सन्दर्भमा चारथरी महावाक्यहरू चार वेदका हुन् भन्ने र तिनको सामान्य विश्लेषण पनि गरेको छ । यसै सन्दर्भमा लेखकले आद्य जगद्गुरु श्रीशङ्कराचार्यले नै ऋग्वेद अन्तर्गत शाखाको ऐतरेय उपनिषद्मा पठित महावाक्य *'प्रज्ञानं ब्रह्म'*, शुक्लयजुर्वेद अन्तर्गतको *'अहं ब्रह्मास्मि'*, सामवेद शाखाको छान्दोग्योपनिषद्मा पठित *'तत्त्वमसि'* महावाक्य र अथर्ववेद शाखाको माण्डूक्योपनिषद्मा पठित *'अयमात्मा ब्रह्म'* भनेर आफ्नू मठाम्नायमा उल्लेख गर्नुभएको छ । परवर्ती आचार्यहरूले सायद यसैका आधारमा चार वेदहरूका चार महावाक्यहरू भनेर वर्गीकरण गर्नुभएको हो । जसमा

[18]विद्यारण्य स्वामी आदि आचार्यहरू हुनुहुन्छ। त्यसभन्दा अगाडि यसरी किटान गरेरै वर्गीकरणपूर्वक महावाक्यहरूको उल्लेख भएको पाइँदैन। केही उपनिषद्हरूले सङ्क्षिप्तरूपमा महावाक्यहरूको उल्लेख गरेका छन्। जसमा [19]महावाक्योपनिषद्, पैङ्गलोपनिषद् समेत पर्दछन्। महावाक्योपनिषद्मा *'ब्रह्मैक्यं तत्'* भनेर केवल जीव र ब्रह्मको एकताको कुरासम्म उल्लेख भएको छ भने [20]शुकरहस्योपनिषद्मा चार महावाक्यहरूको उल्लेख गरेको पाइन्छ। तर यस उपनिषद्ले पनि अरू उपनिषद्हरू, पञ्चदशी र आचार्यहरूले जस्तै श्रवणात्मक र अनुभवात्मक महावाक्य भनेर स्पष्ट उल्लेख गरेको पाइएन। [21]पैङ्गलोपनिषद्मा तत्त्वमसि र अहं ब्रह्मास्मि दुइटा महावाक्यहरूको मात्र उल्लेख गरेको पाइन्छ। यी उपनिषद्हरू कुन उपनिषद्का शिरोभाग हुन् स्पष्ट छैन। यी उपनिषद्हरूले भनेको प्रामाणिकरूपमा मान्न सकिने कुरामा पनि सन्देह नै देखिन्छ।

शुक्लयजुर्वेदशाखाध्यायीहरूका लागि गुरुबाट श्रवण गर्नुपर्ने श्रवणात्मक महावाक्य र त्यसको मनन, निदिध्यासन

---

१८ महावाक्यविवेकप्रकरण ५, पञ्चदशी।

१९ ब्रह्मैक्यं तत्। – महावाक्योपनिषद्।

२० अथ महावाक्यानि चत्वारि। यथा ॐ प्रज्ञानं ब्रह्म ॥१॥ ॐ अहं ब्रह्मास्मि ॥२॥ ॐ तत्त्वमसि ॥३॥ ॐ अयमात्मा ब्रह्म ॥४॥

२१ अथ हैनं पैङ्गलः पप्रच्छ याज्ञवल्क्यं गहावाक्यविवरणमनुब्रूहीति। स होवाच याज्ञवल्क्यस्तत्वमसि त्वं तदसि त्वं ब्रह्मास्यहं ब्रह्मास्मीत्यनुसन्धानं कुर्यात्। – पैङ्गलोपनिषद् ३

र ब्रह्माभ्यासपछि ब्रह्मज्ञानीले अनुभव गर्ने अनुभवात्मक वाक्य पनि भगवद्पाद श्रीशङ्कराचार्यले अर्थक्रम अनुसार ब्रह्मसूत्र *'तत्तु समन्वयात्' (१।१।४।१)* सूत्रको भाष्यमा उल्लेख गर्नुभएको छ। यस्तो स्पष्ट उल्लेख हुँदा हुँदै पनि विद्वान्, गुरु, महात्मा, सन्न्यासी, प्राध्यापकसमेतले सामवेद अन्तर्गत पठित *'तत्त्वमसि'* महावाक्यलाई नै सबैको श्रवणात्मक महावाक्य हो भन्दै उपदेश र प्रवचन गर्ने गरेका छन्। राम्रो बुझेर मात्रै उपदेश गर्ने गरेमा वक्ता र श्रोता दुवैको कल्याण हुने छ। ॐ ब्रह्मार्पणमस्तु।

# १६. नायमात्मा प्रवचनेन लभ्यः

आत्मा अत्यन्त नजिक आफ्नै शरीरभित्र अन्तःकरणमा साक्षीका रूपमा अनवरत अवस्थित छ । बुद्धिका वृत्तिमा प्रतिबिम्बित बिम्बरूप साक्षीको प्रतिबिम्ब नै जीव हो । त्योभन्दा नजिक शरीर, प्राण, इन्द्रियादि केही पनि हुनसक्तैनन् । जसको सत्ता र चित्ता पाएर प्राणी प्राणवान् भएको छ। त्यसै प्राणका कारण नै जीवात्मा प्राणी भएको छ। स्थूल शरीरमा आत्मा नरहने हो भने स्थूल शरीर शव हुन्छ, जड हुन्छ र पञ्चमहाभूतका तत्‌तत् उपादान कारणमा गएर यस शरीरका घटकहरू लीन हुन्छन्, जसरी जड पार्थिव मृत्तिका उपादान कारण भएको जड घट फुटेपछि मृत्तिकामा नै विलीन हुन्छ।

प्राणीका स्थूल र सूक्ष्म शरीर दुवै मायिक तत्त्वबाट बनेका जडपदार्थहरू हुन्। किन्तु चेतन आत्माको अध्यासात्मक सम्बन्धबाट अर्थात् आत्माको संसर्गाध्यासका कारण प्राणीको जड शरीर पनि चेतन जस्तो भएर चेष्टा गर्दछ। वस्तुतः पाञ्चभौतिक शरीर पृथ्वीको विकार हो। ढुङ्गो र शरीरमा केही फरक छैन। सम्पूर्ण चराचर भूत सधैँ पृथिवीबाट नै उत्पन्न हुन्छन्। अन्त्यमा पृथ्वीमा नै लीन हुन्छन्। केवल क्रियाभेदका कारण थरीथरी नाम राखेर व्यवहार गरिन्छ। किन्तु त्यो सबै मिथ्या हो र आत्मा, ब्रह्म, चित्तत्त्वमात्रै सत्य हो। यसका लागि आत्मचिन्तन, आत्मानुभूति र ब्रह्मानुभूति गर्नुपर्दछ।

आत्मज्ञान वा आत्मसाक्षात्कार अनेकौँ साध्य, साधन र तिनको सम्बन्ध देखाउने धेरै शास्त्रहरू पढेर र श्रवण गरेर मात्रै हुन सक्तैन। एउटा खास उद्देश्य र लक्ष्यविना धेरैथरी वक्ताहरूका प्रवचन सुन्दैमा र जुन पायो त्यही साहित्य र शास्त्र पढ्दैमा आत्मज्ञान हुनसक्तैन। किनभने केवल शब्दमात्रै पढेर र घोकेर कण्ठस्थ गर्दैमा ब्रह्मसाक्षात्कार हुन सक्तैन। त्यसका लागि उपनिषद्ले निर्देशन गरे अनुसार श्रवण, मनन र निदिध्यास गरेर औपनिषद ज्ञानलाई मुमुक्षुले आत्मसात् गरेर आफ्नू स्वभाव नै बनाउन सक्नु पर्दछ। अन्यथा त्यस्तो ओठे सतही ज्ञानबाट मोक्ष प्राप्त हुन सत्तैन। त्यतिमात्रै होइन, त्यस्तो सतही चिन्तनबाट कामना, एषणा, मोह, कामक्रोधादि दुर्गुणको परिमार्जनसम्म पनि हुनसक्तैन र अन्तःकरण शुद्धसम्म पनि हुनसक्तैन। अतः [1]शास्त्रहरू सबै कण्ठस्थ पारेर प्रवचन गर्दै हिँडे पनि, जतिसुकै पढे पनि र पढाए पनि ती वाणीजन्य मायिक कुराहरू सबै बिर्सिनै पर्दछ, अन्यथा ब्रह्मसाक्षात्कार हुनसक्तैन।

[2]यो आत्मा प्रवचन सुनेर र वेदको अध्ययन गरेर मात्रै प्राप्त हुन सक्तैन, धारणाशक्ति अत्यन्त प्रबल हुँदैमा पनि प्राप्त हुनसक्तैन। ब्रह्मसाक्षात्कार न धेरै शास्त्रहरू श्रवण गरेर नै

---

१ आचक्ष्व शृणु वा तात नानाशास्त्राण्यनेकशः ।
तथापि तव न स्वास्थ्यं सर्वविस्मरणादृते ॥ – अष्टावक्रगीता १६।१

२ नायमात्मा प्रवचनेन लभ्यो न मेधया न बहुना श्रुतेन ।
यमेवैष वृणुते तेन लभ्यस्तस्यैष आत्मा विवृणुते तनूंस्वाम् ॥
– कठोपनिषद् १।२।२३

प्राप्त हुनसक्तछ। किन्तु जुन मुमुक्षुले यस आत्मालाई, ब्रह्मलाई साक्षात्कार गर्ने दृढ निश्चय गरेर उपनिषद्ले भने अनुसार श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट आफ्नै वेदशाखामा आएको महावाक्यको श्रवण, मनन र निदिध्यास समेत गरेर अनुभव गरेको छ वा गर्दछ, त्यसै मुमुक्षुले मात्रै आत्मसाक्षात्कार गर्न सक्तछ। सर्वकर्म र सर्व एषणानिर्मुक्त मुमुक्षुलाई नै आत्मा साक्षात्कार हुनसक्तछ। अन्तःकरण अत्यन्त निर्मल, अत्यन्त स्वच्छ र अत्यन्त सूक्ष्म भएको मुमुक्षु जीवात्माको अन्तःकरणमा मात्रै ब्रह्म आफ्नू अत्यन्त निर्मल, अत्यन्त स्वच्छ र अत्यन्त सूक्ष्म स्वरूप अर्थात् मायातीत सर्वव्यापी प्रकाशको प्रतिस्फलन गराइदिन्छ। अन्यथा आत्मसाक्षात्कार हुनसक्तैन।

[३]परमात्माले रिसाएर जीवात्माका श्रवणादि ज्ञानेन्द्रियहरूलाई बाहिरतर्फ फर्काइदिएकाले उसले भित्र आफ्नू अन्तःकरणतिर फर्केर आत्मालाई हेर्न सक्तैन। ऊ बहिर्मुख भएर बाहिर तर्फका मिथ्या मायिक विषयहरूलाई मात्रै हेर्दछ। जुन जीवात्माले अर्थात् मुक्तिको प्रबल इच्छा राखेर प्रयत्न गर्ने मुमुक्षुले आफ्ना बहिर्मुखी ज्ञानेन्द्रियहरूलाई अन्तर्मुखी बनाएर भित्र आफ्नै बुद्धिवृत्तिमा सधैँ विराजमान प्रत्यगात्माको चिन्तन गर्दछ त्यस्ता धीर पुरुषले मात्रै

---

३ पराञ्चि खानि व्यतृणत्स्वयम्भूस्तस्मात्पराङ्पश्यति नान्तरात्मन्।
कश्चिद्धीरः प्रत्यगात्मानमैक्षदावृत्तचक्षुरमृतत्वमिच्छन्॥
– कठोपनिषद् २।१।१

ब्रह्मसाक्षात्कार गर्नसक्तछ भनेर श्रुतिले भनेको छ।

श्रवण, मनन, निदिध्यासन, शम, दम आदि बुद्धिमान् [४]मुमुक्षुले अन्तरङ्ग साधनहरूसमेतद्वारा ब्रह्मचिन्तन अहर्निश गरोस्, अरू धेरै थरी शास्त्रहरूको अनुध्यान अर्थात् अनुचिन्तन नगरोस्। केवल आत्मालाई [५]ॐ द्वारा ध्यान गरोस्। [६]अरू वाणीलाई त्याग गरोस्। किनभने धेरै शब्दहरूको अनुध्यान गर्नु वाणीलाई खेर फाल्नु हो, व्यर्थ हो। ॐ ब्रह्मार्पणमस्तु।

---

४ तमेव धीरो विज्ञाय प्रज्ञां कुर्वीत ब्राह्मणः।
नानुध्यायाद् बहूञ्छब्दान् वाचो विग्लापनं हि तत्॥
– बृहदारण्यकोपनिषद् ४।४।२१

५ ओमित्येवं ध्यायथ आत्मानम्। – मुण्डकोपनिषद् २।२।६

६ अन्या वाचो विमुच्चथ। – मुण्डकोपनिषद् २।२।६

# १७. नैषा तर्केण मतिरापनेया

उपर्युक्त शीर्षक उपनिषद्को मन्त्रबाट उद्धृत गरिएको हो। यो अत्यन्त महत्त्वपूर्ण वाक्यसमूह कठोपनिषद्मा पठित हो। यज्ञकर्ता वाजश्रवाका बालक पुत्र नचिकेता र धर्मराजका बीचमा भएको संवादका सन्दर्भमा यो आएको छ। पिताको आज्ञा अनुसार नचिकेता मृत्युका देवता धर्मराजलाई भेट्न यमलोक गएका थिए। नचिकेता यमलोक पुगेको बेलामा यमराज कामविशेषले यमलोकबाट बाहिर गएका थिए। यमराज फर्केर नआउन्जेल नचिकेता तीन रातसम्म भोकै बसेका हुँदा यमराज फर्केपछि भोको बसेका प्रत्येक रातको एउटाको दरले वरदान दिने भनेर यमराजले आश्वासन दिएपछि मात्र नचिकेताले भोजन गरेका थिए।

यमराजले नचिकेतालाई दिएका तीन वरहरूमा पहिलो वर पितृपरितोष हो भने दोस्रो वर स्वर्गसाधनभूत अग्निविद्या हो र तेस्रो वर आत्मरहस्य हो। प्रकृत प्रसङ्ग तेस्रो वरदान आत्मरहस्य अन्तर्गत पर्दछ। त्यसै आत्मरहस्यको उपदेश गर्ने क्रममा यो *'नैषा तर्केण मातिरापनेय'* आएको छ। यमराज भन्दछन् – [१]हे प्रियतम नचिकेतस् ! सम्यक् ज्ञानका लागि

---

१ नैषा तर्केण मतिरापनेया प्रोक्तान्येनैव सुज्ञानाय प्रेष्ठ।
यां त्वमापः सत्यधृतिर्बतासि त्वादृङ्नो भूयान्नचिकेतः प्रष्टा ॥
– कठोपनिषद् १।२।९

शुष्क तार्किक भन्दा भिन्नै शास्त्रज्ञ आचार्यद्वारा उपदेश गरिएको यो बुद्धि अर्थात् जसका लागि तिमी जिज्ञासु भएका छौ, त्यो ज्ञान तर्कद्वारा प्राप्त हुनसक्तैन। निश्चय नै तिमी सत्यधारणायुक्त हौ। किनभने तिमी जस्ता आत्मरहस्यका बारेमा प्रश्न वा जिज्ञासा प्रकट गर्ने जिज्ञासु पाउन मुस्किल पर्दछ।

यो आत्मतत्त्व अर्थात् आत्मज्ञान अत्यन्त दुर्ज्ञेय छ। यसैकारण अभेददर्शी आचार्यद्वारा उपदेश गरिएको आत्मामा उत्पन्न भएको जुन यो शास्त्रप्रतिपाद्य आत्मविषयक मति हो, त्यो तर्कद्वारा अर्थात् आफ्नै ऊहापोहमात्रद्वारा प्राप्त हुनसक्तैन। यो तार्किकद्वारा तर्क गरेर तर्कको माध्यमबाट ज्ञातव्य होइन। [२]किनभने तार्किक अर्थात् तर्कशास्त्री ता अध्यात्मशास्त्रसँग सर्वथा अनभिज्ञ हुन्छन्। तार्किक आफ्नो बुद्धिले परिकल्पना गरेर जस्तो मन लाग्यो त्यस्तै बोलिरहन्छ भनेर आचार्य शङ्करले आफ्नो भाष्यमा लेख्नुभएको छ।

कुनै पनि गूढ र रहस्यपूर्ण विषयको रहस्य जान्नका लागि जिज्ञासुमा तदनुरूप योग्यता, पात्रता र क्षमता पनि हुनुपर्दछ। त्यतिमात्र होइन [३]जिज्ञासुमा अनुशासन, विनीतभाव, समर्पणभाव, शास्त्र र गुरुप्रति विश्वास तथा श्रद्धाका साथै सही रूपमा उपयुक्त प्रश्न गर्ने कला अनि

---

२ तार्किको ह्यनागमज्ञः स्वबुद्धिपरिकल्पितं यत्किञ्चिदेव कथयति।
– कठोपनिषद् १।२।९ शा.मा.

३ तद्विद्धि प्रणिपातेन परिप्रश्नेन सेवया।
उपदेक्ष्यन्ति ते ज्ञानं ज्ञानिनस्तत्त्वदर्शिनः ॥ – श्रीमद्भगवद्गीता ४।३४

कुशलता पनि हुनुपर्दछ । त्यति भएमा नै गुरुभित्र लुकेर बसेको [४]ब्रह्मविद्या जिज्ञासु शिष्यले प्राप्त गर्न सक्तछ। अन्यथा सम्भव छैन ।

[५]कर्मद्वारा प्राप्त भएको लोकको परीक्षा गरेर अर्थात् देखेर मुमुक्षु ब्रह्मज्ञानी विरक्त बनोस् । किनभने संसारका सम्पूर्ण पदार्थहरू अनित्य छन् । त्यस्ता अनित्य पदार्थ वा वस्तुहरूले हामीहरूलाई नित्य आनन्द दिन सक्तैनन् भन्ने बुझेर एकमात्र नित्य वस्तुको साक्षात् ज्ञान प्राप्त गर्नका लागि हातमा समिधा लिएर श्रोत्रिय ब्रह्मनिष्ठ गुरुसमक्ष मुमुक्षु पुरुष जाओस् ।

आत्मज्ञान वा आत्मसाक्षात्कार गर्न अत्यन्त मुस्किल छ। त्यस आत्मतत्त्वलाई आँखाले साक्षात्कार गर्न सक्तैन । किनभने त्यो आँखाको पनि आँखो हो, आँखाको सञ्चालक हो। त्यसै गरेर अरू ज्ञानेन्द्रिय, वाणी आदि कर्मेन्द्रियरूप बहिष्करण र मनबुद्धि समेतका अन्तःकरणरूपी साधनबाट पनि आत्मतत्त्व जान्न सकिँदैन। आत्मा अतीन्द्रियको पनि अतीन्द्रिय हो।

---

४ खनित्वा हि खनित्रेण भूतले वारि बिन्दति ।
तथा गुरुगतां विद्यां शुश्रूषुरधिगच्छति ॥
– चाणक्यनीति १३।१६, नी.प.४३

५ (क) परीक्ष्य लोकान्कर्मचितान्ब्राह्मणो निर्वेदमायान्नास्त्यकृतः कृतेन ।
तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम् ॥
– मुण्डकोपनिषद् १।२।१२

(ख) तद्यथेह कर्मजितो लोकः क्षीयते एवमेवामुत्र पुण्यजितो लोकः क्षीयते ।
– छान्दोग्योपनिषद् ८।१।६

कुनै पनि इन्द्रिय र करणद्वारा ब्रह्मज्ञान हुनसक्तैन । किनभने जगत्कर्ता ब्रह्माजीका प्रथम मानसपुत्र सनकादिहरू गृहस्थाश्रमतर्फ नलागेर अन्तर्मुखी भएर आत्मसाक्षात्कार गर्न प्रवज्यातर्फ अग्रसर भए । पछि जन्मने पुत्रहरू पनि दाजुहरूकै बाटो लागेमा आफूले गर्नुपर्ने सन्तानवृद्धिको काम नै अधूरो हुने देखेपछि रिसाएर जगत्का पिता ब्रह्माजीले मनुष्यका सारा इन्द्रियहरूलाई भित्रतर्फ फर्कन नदिएर बाहिर फर्काइदिए भन्ने श्रुतिको वचन छ ।

सृष्टिको प्रथम प्रभातमा नै [६]स्वयम्भू ब्रह्माले इन्द्रियहरूलाई बहिर्मुख गराएर बटारिदिएका थिए । उनीहरूको भित्रपट्टि फर्कन सक्ने शक्ति अर्थात् अन्तर्मुखी भएर ब्रह्मानुभूति गर्न सक्ने शक्ति नै नाश गरिदिएका कारण जीवले बाहिरका अनात्मभूत शब्दादि मायिक विषयहरूलाई मात्रै इन्द्रियद्वारा जान्दछ, अन्तरात्मालाई जान्दैन । उपर्युक्त कारणले सामान्यरूपमा सबैजसो मान्छे बहिर्मुखी भए तापनि कुनै विरलै धीर विवेकी पुरुषले नै नदीको अगाडितर्फ बग्दो प्रवाहलाई रोकेर विपरीत दिशातिर फर्काउनु जस्तै गरेर बाहिरी विषयतर्फ फर्किएका आफ्ना इन्द्रियहरूलाई भित्र फर्काउँछ र भित्र रहेको प्रत्यगात्मालाई देख्तछ । मोक्ष प्राप्तिको इच्छा गर्ने त्यसै धीर ज्ञानी पुरुषले नै त्यस अमृत तथा नित्य स्वभाव

---

६ पराञ्चि खानि व्यतृणत्स्वयम्भूस्तस्मात्पराङ्पश्यति नान्तरात्मन् ।
कश्चिद्धीरः प्रत्यगात्मानमैक्षदावृत्तचक्षुरमृतत्वमिच्छन् ॥
– कठोपनिषद् २।१।१

भएको आत्माको साक्षात्कार गर्न सक्तछ भनेर श्रुतिले भनेको छ।

अब यहाँ जिज्ञासा उत्पन्न हुन्छ के कुनै पनि मुमुक्षुले ब्रह्मसाक्षात्कार गर्न सक्तैन त ? किनभने श्रोत्र, मन, वचन आदि करण र साधनहरूद्वारा समेत आत्मतत्त्व नजानिने भन्दै जसलाई [७]मनद्वारा मनन गर्न सकिँदैन भनेर एकातर्फ केही श्रुतिले भनेका छन् भने अर्को तर्फ [८]केही श्रुतिहरूले मनद्वारा नै साक्षात्कार गर्नुपर्छ पनि भनेका छन्। स्थूल दृष्टिले सतही रूपमा विचार गर्दा कुनै पनि करण र साधनद्वारा ब्रह्म जान्न नसकिने भनेको पनि देखिन्छ। त्यतिमात्रै नभएर श्रुतिले [९]जहाँबाट मनसहित वाणी ब्रह्मलाई प्राप्त नगरेर फर्केर आउँछन् भनेको छ। अर्को श्रुतिले [१०]मन नै मनुष्यको बन्धन र मोक्षको कारण पनि हो भनेको छ। किनभने त्यही मन विषयमा आसक्त भएमा बन्धनको कारण बन्दछ भने त्यही मन निर्विषयी भएमा मुक्तिको कारण पनि बन्दछ भनिएको छ।

तर्कभन्दा श्रुति नै ब्रह्मसाक्षात्कारको प्रामाणिक साधन हो। किन्तु एक श्रुतिमा मनलाई नै ब्रह्मसाक्षात्कारको साधन भनिएको छ भने अर्कोमा मनले मनन गर्न सक्तैन पनि भनिएको

---

७ यन्मनसा न मनुते येनाहुर्मनो मतम् । तमेव ब्रह्म त्वं विद्धिः ।
– केनोपनिषद् १।५

८ मनसैवानुद्रष्टव्यम् । – बृहदारण्यकोपनिषद् ४।४।१९

९ यतो वाचो निवर्तन्ते अप्राप्य मनसा सह । – तैत्तिरीयोपनिषद् २।९

१० मन एव मनुष्याणां कारणं बन्धमोक्षयोः ।
बन्धाय विषयासक्तं मुक्त्यै निर्विषयं मनः ॥ – शाट्यायनीयोपनिषद् १

छ । यस्तो अवस्थामा के साँच्चै नै मनबाट आत्मज्ञान सम्भव छैन त ? भन्ने संशय उत्पन्न हुन्छ । वस्तुतः सोझो अर्थमा भित्री र बाहिरी कुनै पनि करण र साधनबाट पनि ब्रह्मसाक्षात्कार गर्न सकिँदैन भन्ने नै हो । किनभने ज्ञानेन्द्रियादि बाहिरी करण र अन्तःकरणरूपी भित्री करण समेत सबै मायिक हुन् । मायिक साधनले मायातीत ब्रह्मलाई जान्न सम्भव छैन भन्ने एकथरी श्रुतिको भनाइ हो भने अर्कोथरी श्रुतिको भनाइ चाहिँ [११]आचार्योपदेशपूर्वक अर्थात् परमार्थज्ञानद्वारा संस्कारित मनबाट नै ब्रह्मलाई देख्नु पर्दछ भन्ने उपनिषद्वाक्यको अर्थ देखिन्छ । [१२]शास्त्र र आचार्यका उपदेशद्वारा एवं शम, दम आदि साधनहरूद्वारा शुद्ध गरिएको मन आत्मदर्शनमा करण अर्थात् साधन हुन्छ भनेर श्रीशङ्कराचार्यले आफ्नू गीताभाष्यमा पनि लेख्नुभएको छ ।

यसरी बहिष्करण र असंस्कृत अन्तःकरण समेत आत्मदर्शनमा साधन हुन नसक्ने भनेर शास्त्रले भनेको छ र सुसंस्कृत मन चाहिँ आत्मदर्शनमा साधन हुन्छ भनेको देखिन्छ । किन्तु [१३]आत्मा वाणी र मनको विषय हुँदैन भनेर श्रुतिले ठोकुवा गरेको हुँदा सुसंस्कृत मन अर्थात् अन्तःकरणले पनि सोझै

---

११ मनसैव परमार्थज्ञानसंस्कृतेन आचार्योपदेशपूर्वकं चानुद्रष्टव्यम् ।
– बृहदारण्यकोपनिषद् ४।४।१९ शा.भा.

१२ शास्त्राचार्योपदेशशमदमादिसंस्कृतं मन आत्मदर्शने करणम् ।
– श्रीमद्भगवद्गीता २।२१ शा.भा.

१३ अवाङ्मनसगोचरः । – श्रुतिः

करणतया भेट्न नसक्ने देखिन्छ। अतः त्यसलाई करण जस्तो करण र साधनजस्तो साधन भनेर बुझ्नु पर्दछ। अन्तःकरणले साधनका रूपमा ब्रह्मसाक्षात्कार गर्न सक्तैन, तर आत्माको आकार जस्तै अन्तःकरण अर्थात् बुद्धि वा मनको वृत्ति भएपछि आत्मसाक्षात्कार हुन्छ भनेर आचार्य शङ्करले भन्नुभएको छ। अर्थात् ब्रह्मजस्तै [१४] बुद्धिको वृत्ति पनि अत्यन्त निर्मल, अत्यन्त स्वच्छ र अत्यन्त सूक्ष्म भएमा आत्मसाक्षात्कार हुन्छ।

यस्तो अत्यन्त दुर्ज्ञेय आत्मतत्त्व अत्यन्त निर्मल, स्वच्छ र सूक्ष्म अन्तःकरण आत्मसम भएपछि मात्रै साक्षात्कार भएको मानिन्छ। करण वा साधनबाट जानिने नभएर करण वा साधन नै ब्रह्मजस्तो हुनुपर्दछ। अन्यथा ब्रह्मसाक्षात्कार हुन सक्तैन। जस्तै फलामको डल्लाले अग्निको साक्षात्कार गर्नु पऱ्यो भने फलामले अग्निजस्तै हुनुपर्दछ।

यस्तो अचिन्तनीय ब्रह्मतत्त्वलाई विना श्रुतिप्रमाण अनुमान र तर्कबाट जान्न सकिँदैन। [१५]अचिन्त्य वस्तुलाई तर्कबाट जान्न सकिँदैन। जुन मायाभन्दा परको वस्तु हो त्यही नै अचिन्त्य हो। अर्थात् मायाका कार्य र माया भन्दा पर हुनु नै

---

१४ अत्यन्त निर्मलत्वस्वच्छत्वसूक्ष्मत्वोपपत्तेः, आत्मनो बुद्धेश्च आत्मसम नैर्मल्याद्युपपत्तेः, आत्मचैतन्याकाराभासत्वोपपत्तिः।

– श्रीमद्भगवद्गीता १८।५० शा.भा.

१५ अचिन्त्याः खलु ये भावा न तांस्तर्केण साधयेत्।
प्रकृतिभ्यः परं यत्तु यदचिन्त्यस्य लक्षणम्॥

– महाभारत, भीष्मपर्व ५।१२

१६ तद्विदितादथो अविदितादधि। – केनोपनिषद् १।३

अचिन्त्यको लक्षण हो। किनभने त्यो [16]विदित भन्दा अन्य र अविदित भन्दा पर भनेर श्रुतिले भनेको छ।

श्रुतिप्रमाण नभएका र केवल पुरुषका कल्पनामात्रबाट प्रसूत तर्कहरू अस्थिर र तथ्यहीन पनि हुन्छन्। किनभने कल्पना निरङ्कुश हुन्छ। अझ त्यसमा पनि वितण्डायुक्त कुतर्कको कुनै प्रामाण्य रहँदैन। कुतर्क नभएर सुतर्क नै भए पनि कुनै एक तार्किकले जतिसुकै तर्कपूर्णरूपमा आफ्नू मत अघि सारे पनि अर्को कुशल तार्किकले अर्को तर्कबाट काटिदिन सक्तछ। किनकि अत्यन्त निपुण एउटा तार्किकद्वारा [17]यत्नपूर्वक गरिएको अनुमानबाट जुन पदार्थ जस्तो अनुमित वा तर्कित हुन्छ, त्योभन्दा ठूलो अर्को तार्किक अघि आएर आफ्नो सशक्त र चातुर्यपूर्ण ऊहापोहपूर्वकको अनुमान वा तर्कद्वारा त्यसको खण्डन वा अन्यथा गरिदिन्छ। यसकारण तर्कको कहीँ पनि अन्त्य हुँदैन। अतः विना श्रुतिसम्मत तर्कको मान्यता र प्रामाण्य पनि रहन सक्तैन।

तर्कका विषयलाई लिएर भगवान् वेदव्यासले ब्रह्मसूत्रमा सूत्रको रचना नै गर्नु भएको छ, जसमा [18]केवल तर्कको प्रतिष्ठा नभए तापनि ब्रह्ममा वेदान्तवाक्यका समन्वयको

---

१७ यत्नेनानुमितोऽप्यर्थः कुशलैरनुमातृभिः ।
अभियुक्ततरैरन्यैरन्यथैवोपपाद्यते ॥ – वाक्यपदीय, ब्रह्मकाण्ड ४२

१८ तर्काप्रतिष्ठानादप्यन्यथानुमेयमिति चेदेवमप्यविमोक्षप्रसङ्गः ।
– ब्रह्मसूत्रम् २।१।३।११

कुनै विरोध हुँदैन। कुनै तार्किकले यदि कुनै तर्क अप्रतिष्ठित हुन गएमा पनि प्रतिष्ठित तर्ककाद्वारा वेदान्तसमन्वयका विरोधको अनुमान गर्नुपर्दछ भन्छ भने त्यो ठीक होइन। किनभने केही तर्क प्रतिष्ठित भए तापनि प्रकृत वेदान्त विषयमा भने तर्क अप्रतिष्ठितरूप दोषबाट मुक्त हुनसक्तैन। किनकि कपिल, कणादिका परस्पर विरुद्ध तर्कहरूबाट तत्त्वनिर्णय नै हुनसक्तैन। त्यस्तो भएमा संसारबाट कहिल्यै पनि मुक्ति हुनै सक्तैन।

वेदबाट मात्रै जान्न योग्य वस्तुमा वेदनिरपेक्ष तर्कबाट विरोध गर्नु उचित हुँदैन। किनभने वेदप्रमाणरहित पुरुषकल्पनामात्रमूलक तर्क अस्थिर हुन्छ। किनकि कल्पना निरङ्कुश हुन्छ। एउटाको तर्क अर्काद्वारा खण्डित हुन्छ। अतः तथाकथित तर्कको स्थिरता र विश्वसनीयता हुँदैन। यस्ता अप्रतिष्ठित तर्कबाट ब्रह्मज्ञान हुनसक्तैन।

केवल कोरा तर्कद्वारा मात्रै ब्रह्मज्ञान हुने कुरा त परै जाओस्, व्यावहारिक कर्तव्याकर्तव्य र सामान्य धर्मको पनि ज्ञान हुनसक्तैन। सामान्य मनुष्यको त कुरै छोडौँ[१९] त्रिकालदर्शी ऋषि पनि वेदलाई छोडेर तर्कका आधारमा मात्रै धर्मको निर्णय गर्न समर्थ हुँदैनन् भने वेदनिरपेक्ष तर्कबाट ब्रह्मज्ञान कसरी हुनसक्तछ ?

---

१९ न चागमादृते धर्मस्तर्केण व्यवतिष्ठते।
ऋषीणामपि यज्ज्ञानं तदप्यागमपूर्वकम् ॥
– वाक्यपदीय, ब्रह्मकाण्ड ३०

केही निरङ्कुश कुतर्कीहरू वेदद्वारा प्रतिपादित सर्वसमर्थ मायाधीश ईश्वरको जगत् रचनालाई पनि नानाथरीका शङ्का उपशङ्का गर्दै प्रश्न उठाउन पछि पर्दैनन् । त्यस्ता कुतर्कीहरू [२०]ईश्वरले जगत् रचना गर्दा लिएको आधार, प्रयोग गरेको कच्चा पदार्थ, प्रयुक्त उपकरण आदिको पनि खोजी गर्न पछि पर्दैनन् । यसैलाई मूढाग्रह र बुद्धिविहीन कुतर्क भनेर शास्त्रले भनेको छ । जसलाई आफू कहाँबाट आएँ ? पछि जाने कहाँ हो ? यो कुतर्क गर्ने जिब्रो र सोच्ने दिमाग कुन तत्त्वबाट कसरी बन्यो र यो जड शरीर कुन शक्तिको र कस्को अलौकिक चेतना पाएर चालिरहेको छ ? आदि आफ्नै सीमित शरीरका बारेमा थाहा पाउन असमर्थ अज्ञानीले ईश्वरको अचिन्त्य सामर्थ्य र उसको अपरिमेय ब्रह्माण्ड सृष्टिका बारेमा नाना शङ्का र कुतर्क गर्नुभन्दा हास्यास्पद कुरा अर्को के हुन सक्तछ ?

केही तार्किकहरू ब्रह्मको एकता बताउने वेदवाक्यहरूको अनुमान प्रमाणबाट विरोध हुन्छ भन्दछन् । यसको समर्थनमा आफ्नै बुद्धिद्वारा अज्माएका नाना थरीका कपोलकल्पित तर्कका बलले अपौरुषेय वेदका वाक्यहरूलाई दूषित गर्न

---

२० किमीह किङ्काय स खलु किमुपायस्त्रिभुवनम्
किमाधारो धाता सृजति किमुपादान इति च ।
अतर्क्यैश्वर्ये त्वय्यनवसरदुःस्थो हतधियः
कुतर्कोऽयं काश्चिन्मुखरयति मोहाय जगतः ॥
– शिवमहिम्नः स्तोत्रम् ५

धृष्टता वा दुष्प्रयास गर्ने कुतर्की तार्किकहरूका सम्बन्धमा आचार्य शङ्कर भन्नुहुन्छ – [२१]कुतर्कका कारण जसको अन्तःकरण दूषित छ र जसको बुद्धि वेदार्थविषयक सम्प्रदायदेखि टाढा छ यस्ता यी ब्राह्मणादि वर्णका मल हुन् र दयाका पात्र पनि हुन् । यतिमात्रले चित्त नबुझेर अगाडिका पङ्क्तिहरूमा गएर फेरि शङ्कर भन्नुहुन्छ – [२२]अहो ! जसका सिङ र पुच्छर छैनन्, यस्ता तिमीजस्तो तार्किक गोरुले के अनुमानकौशल देखाउँछौ ? जसले आफ्नै आत्मा जानेको छैन भने त्यस्ताले आत्माको भेद र अभेद कसरी जान्दछ ?

त्यसैगरेर शङ्कराचार्यका प्रमुख्य शिष्य सुरेश्वराचार्यले पनि वेदप्रमाण नमानेर [२३]केवल अनुमानका भरमा निर्वाण चाहने शून्यवादीलाई लक्षित गरेर भन्नु भएको छ – जसले अनुमानलाई मात्रै आफ्नू शरण मानेका छन् ती केवल आफ्नू इष्टसिद्धिबाट मात्रै वञ्चित नभएर अनर्थ पनि प्राप्त गर्दछन् । उदाहरणका लागि अनुमानमात्रैलाई नै प्रमाण मान्नाले तमोगुणी बुद्धिष्टहरू मोहद्वारा श्रुतिलाई अनादर गरेर

---

२१ ते तु कुतर्कदूषितान्तान्तःकरणा ब्राह्मणादिवर्णापसदा अनुकम्पनीया आगमार्थविच्छिन्नसम्प्रदायबुद्धय इति ।
– शाङ्करभाष्य, बृहदारण्यकोपनिषद् २।१।२०

२२ अहो अनुमानकौशलं दर्शितमपुच्छशृङ्गैस्तार्किकबलिवर्दैः । यो ह्यात्मानमेव न जानाति स कथं मूढस्तदगतं भेदमभेदं वा जानीयात् ?
– शाङ्करभाष्य, बृहदारण्यकोपनिषद् २।१।२०

२३ न केवलमनुमानमात्रशरणोऽभिलषितमर्थं न प्राप्नोतीत्यनर्थञ्च प्राप्नोतीत्याह-
अनादृत्य श्रुतिम्मोहादतो बौद्धास्तमस्विनः ।
आपेदिरे निरात्मत्वमनुमानैकचक्षुषः ॥ – नैष्कर्म्यसिद्धिः ३।३४

निरात्मवादी भएर शून्य पनि भएका छन् ।

[२४]आत्मस्वरूपलाई प्रतिष्ठित गर्ने श्रुतिप्रमाणलाई सहयोग पुऱ्याउने नै तर्कको काम हो । अतः श्रुतिप्रमाणको सहयोगी तर्क हो, किन्तु स्वतन्त्र निरङ्कुश तर्क प्रमाण हुन सक्तैन भनेर तर्कविदहरूले भनेका छन् । तर्क भनेको युक्ति हो, त्यो भन्दा बढी केही होइन ।

आत्मालाई कसैले अणु, कसैले विभु, कसैले शून्य र कसैले अविज्ञेय भनेका छन् । विभिन्न प्रकारबाट कल्पित गरिएको आत्माका बारेमा [२५]साधारण बुद्धि भएका पुरुषद्वारा उपदेश गरेमा राम्रोसँग बुझ्न सकिँदैन । अभेददर्शी गुरुद्वारा उपदेश गरिएका यस विभु आत्मामा अस्ति र नास्ति आदि कुनै पनि विकल्प रहँदैन । यो सर्वगत विभु आत्मा सर्वत्र व्याप्त भएर पनि प्रत्येक प्राणीका अन्तःकरणमा आत्मत्वेन, चिद्रूपेण र संविद्रूपेण रहन्छ । जसको कारण प्राणी शास फेर्दछ र जीवित भएर हिँड्दछ । यो आत्मा सूक्ष्म भन्दा पनि सूक्ष्म र दुर्विज्ञेय हो ।

उपयुक्त अनुसार श्रोत्रियब्रह्मनिष्ठ गुरुद्वारा आत्मत्वेन स्वानुभूतिपूर्वक उपदेश गरिएको आत्मा सुविज्ञेय हो । किन्तु

---

२४ तेन तत्स्वरूपप्रतिष्ठायै तर्कं सहायी करोति । अत एव प्रमाणानामनुग्राहकस्तर्क इति तर्कविदः । तर्को नाम युक्तिः ।

– पञ्चपादिका प्रथमं वर्णकम् पृ.२८१

२५ न नरेणावरेण प्रोक्त एष सुविज्ञेयो बहुधा चिन्त्यमानः ।
अनन्यप्रोक्ते गतिरत्र नास्ति अणीयान्ह्यतर्क्यमणुप्रमाणात् ॥

– कठोपनिषद् १।२।८

आफ्नै बुद्धिद्वारा कल्पित र तर्कित आत्मा आत्मा नभएर आत्माभास मात्रै हो । श्रुतिप्रमाणका आधारमा मात्रै आत्मज्ञान गर्नुपर्दछ । परस्पर खण्डित, अस्थिर तर्क र कुतर्कको आधारमा आत्मा जान्न सकिँदैन। किनभने श्रुतिलाई बल नपुऱ्याउने तर्क र स्वबुद्धि परिकल्पित [२६]कुतर्कको कतै र कहीँ पनि निष्ठा र स्थान छैन ।

यो आत्मा निरङ्कुश तर्कद्वारा जान्ने कुरा त परै राखौँ, केवल सामान्य [२७]वेदाध्ययन, प्रवचन, बुद्धिको धारणा शक्ति र अधिक श्रवणद्वारा पनि ज्ञात हुन सक्तैन। किन्तु केवल आत्मलाभका लागि अर्थात् आत्मसाक्षात्कारका निमित्त आत्मजिज्ञासा गर्ने निष्काम तथा निष्कर्मा साधनचतुष्टयसम्पन्न उत्तम अधिकारीलाई पाप्मदोषादिवर्जित आफ्नै शुद्ध प्रत्यगात्माको उपलब्धि अर्थात् साक्षात्कार हुन्छ। कुनै आधारहीन निरङ्कुश तर्क वा कुतर्कका आधारमा आत्मलाभ अर्थात् ब्रह्मज्ञान वा ब्रह्मानुभूति हुनसक्तैन । अतः श्रुतिविनाको तर्कको प्रतिष्ठा कहीं पनि हुँदैन। बुद्धि आदि मायिक साधनहरूद्वारा जान्न नसकिने मायातीत आत्मालाई निरङ्कुश तर्कद्वारा जान्न सकिँदैन ।

यसरी विचार गर्दा श्रुति र श्रुतिसम्मत स्मृति समेतबाट पनि बाहिर रहेर गरिएका तर्क र निरङ्कुश तथा उच्छृङ्खल शुष्कतर्क

---

२६ न हि कुतर्कस्य निष्ठा क्वचिद्विद्यते । – कठोपनिषद् १।३।८ शा.भा.

२७ नायमात्मा प्रवचनेन लभ्यो न मेधया न बहुना श्रुतेन ।
यमेवैष वृणुते तेन लभ्य स्तस्यैष आत्मा विवृणुते तनूं स्वाम् ।
– कठोपनिषद् १।२।२३

वा कुतर्कको अद्वैत वेदान्तमा कुनै स्थान छैन। आत्मज्ञानका लागि श्रुति अनुकूल तात्पर्य निश्चयका लागि षड्विध लिङ्गका आधारमा सुतर्क गर्नु राम्रो हो। यसले अभीष्ट प्राप्ति हुनसक्तछ। किन्तु उच्छृङ्खल र दिशाहीन कुतर्कले क्षणिक सन्तुष्टि देला, तर त्यसले इप्सित लक्ष्यमा पुग्न सहयोग गर्दैन।

[२८]आफ्नू बुद्धि र अनुभूति अनुसार श्रुति अनुकूलको तर्क गर्नुलाई सुतर्क भनिन्छ। सो गर्नु राम्रो हो, तर कुतर्क गर्नु राम्रो होइन। सुतर्क गर्नुलाई अद्वैत वेदान्तको शब्दावलीमा भ्रमै भए पनि अन्त्यमा लक्ष्यमा पुऱ्याउने हुनाले त्यसलाई संवादी भ्रम भनिन्छ। किन्तु श्रुतिविरुद्ध कुतर्क गर्नुलाई भने विसंवादी भ्रम भनिन्छ, जसले कहिल्यै पनि लक्ष्यमा पुग्न सहयोग गर्दैन, बरु यसको उल्टो कहिल्यै बाहिर निस्कन नसकिने अँध्यारो सुरुङमा लगेर जाकिदिन्छ।

[२९]अविद्याग्रस्त मान्छे आफैँलाई ठूलो बुद्धिमान् र पण्डित भएको ठान्दछ। श्रुति आदि सत् शास्त्रहरूलाई नमानेर ऊ असत् शास्त्रका भरमा कुतर्क गर्दै हिँड्दछ। त्यो अन्त्यमा अँध्यारो खाल्टोमा गएर जाकिन्छ। अज्ञानी मूढ मान्छे अन्धो जस्तै हो। अन्धो जसरी आफैँ जस्तो अन्धाको नै पछि लागेर हिँड्दा दुःख पाएर संसारमा घुमिरहन्छ र अन्त्यमा पतनको गर्तमा गएर जाकिन्छ। ॐ ब्रह्मार्पणमस्तु।

---

२८ बुद्ध्यारोहाय तर्कश्चेदपेक्षेत तथा सति।
स्वानुभूत्यनुसारेण तर्क्यतां मा कुतर्क्यताम्॥ – वाक्यपदीय

२९ अविद्यायामन्तरे वर्तमानाः स्वयं धीराः पण्डितंमन्यमानाः।
दन्द्रम्यमाणाः परियन्ति मूढा अन्धेनैव नीयमाना यथान्धाः॥
– कठोपनिषद् १।२।५

# १८. परमगुरु

वैदिक परम्परामा गुरुको ठूलो महत्त्व छ। गुरुविना ब्रह्मज्ञानको त के कुरा, सामान्य व्यवहारको पनि ज्ञान हुनसक्तैन। अतः गुरुको अत्यन्त ठूलो महत्त्व छ। अझ त्यसमा पनि श्रोत्रिय ब्रह्मनिष्ठ गुरुको त झन् ठूलो महत्त्व छ। त्यो गुरु नै श्रोत्रियका साथै ब्रह्मनिष्ठ हुनसक्तछ, जसले वेदवेदाङ्ग अर्थसहित गुरुमुखी भएर पढेको छ र तीव्रवैराग्यका साथ अहोरात्र ब्रह्मचिन्तन गर्दछ। आफ्नू शाखाको वेद, उपनिषद् विधिपूर्वक गुरुबाट पढेर श्रवण गरेर त्यसको मनन, निदिध्यासन र ब्रह्माभ्यास नगरीकन ब्रह्मसाक्षात्कार हुनसक्तैन। यस कुराको शिक्षा वा उपदेश पनि गुरुले त्यसै उपनिषद् शास्त्रबाट प्राप्त गर्ने भएकाले अद्वैतवेदान्तका प्रत्येक श्रद्धावान् विद्यार्थीका लागि गुरुको पनि गुरु उपनिषद् शास्त्र नै भएकाले उपनिषद्लाई गुरुको पनि गुरु परमगुरु भनिएको हो।

उपर्युक्त अनुसार विचार गर्दा हाम्रा सम्पूर्ण वाङ्मयहरूलाई साधारणतया तीन भागमा बाँड्न सकिन्छ। ती हुन् गुरुवाक्य, मित्रवाक्य र कान्तावाक्य। उपनिषद् र जिज्ञासु मुमुक्षुको सम्बन्ध गुरु र शिष्यको जस्तो हो। उपनिषद्रूपी गुरुको वाक्य अध्येता मुमुक्षुले शब्दशः र अक्षरशः पालना गर्नु आवश्यक छ। उपनिषद्वाक्यलाई ननु र न च नगरीकन

श्रद्धापूर्वक पढ्नु, तदनुरूप आचरण गर्नु र अन्ततोगत्वा जीव र ब्रह्मको एकताको बोध गर्न सक्नुपर्दछ। उपनिषद्शास्त्रको अन्तिम र परमलक्ष्य पनि मुमुक्षुलाई जीव र ब्रह्मको एकत्वको बोध गराएर ब्रह्मसाक्षात्कार गराउनु नै हो। यसैमा उपनिषद् गुरुमुखी भएर नियमपूर्वक श्रवणादि गर्नुको सार्थकता छ। योभन्दा बाहेक मुमुक्षुलाई पार लगाउने अर्को शास्त्र कुनै पनि छैन। व्याकरणादि अरू शास्त्रहरू यसका साधनहरू हुन् र साध्य ब्रह्मसाक्षात्कार पर्यन्त उपनिषद् नै हो। अझै स्पष्टरूपमा भन्ने हो भने अरू शास्त्रहरू अङ्ग हुन् र अङ्गी उपनिषद् शास्त्र हो। वेद स्वतः प्रमाण हो। यो परतः प्रमाण होइन। त्यसलाई प्रमाणित गर्न अन्य कसैको सहयोग आवश्यक पर्दैन।

दोस्रो गुरु मित्रवाक्य हो। जसरी आफ्ना मित्रले दिएको उपदेश, सल्लाह, परामर्श आदिलाई गुण, दोष, उपयोगिता, समसामयिकता र औचित्य आदिका आधारमा स्वीकार वा अस्वीकार गर्न सकिन्छ। यसमा स्मृतिशास्त्र, धर्मशास्त्र, पुराण, महाभारत, रामायण आदि पर्दछन्। यी आफैँमा प्रमाण नभएर परतः प्रमाण हुन्। यी शास्त्रहरू श्रुति अनुकूल भएमा प्रमाण मानिन्छन्, अन्यथा प्रमाण मानिँदैनन्। [१]स्मृतिहरू श्रुतिका पछि लागेमा नै प्रमाण हुन्छन्। त्यसैकारण नै मित्रवाक्य भनिएको हो।

तेस्रो कान्तावाक्य हो। वेद, स्मृति, पुराणबाहेकका अरू

---

१ श्रुतेरिवार्थं स्मृतिरन्वगच्छत्। – *रघुवंश २/२*

समाजोपयोगी श्रेष्ठ वाङ्मयलाई साहित्य भनिन्छ। मुमुक्षु र साहित्यको सम्बन्ध कान्ता र कान्त अर्थात् स्त्री र पुरुषको जस्तो हुन्छ। प्रायः मुमुक्षुले कान्तावाक्यका पछि लाग्नु हुँदैन। यसले पथभ्रष्ट पनि बनाउन सक्तछ। किनभने [२]शास्त्रलाई काव्य अर्थात् साहित्यले बाधा गर्दछ भनिन्छ। साहित्य श्रुतिमधुर भएकाले मुमुक्षुलाई विषयतिर आकर्षित गरेर पथभ्रष्ट पनि बनाउन सक्तछ। अतः कान्तावाक्य सर्वथा उपेक्षणीय हो भन्नु उचित नै हो।

वेद र उपनिषद्का वाक्यहरू मुमुक्षु तथा जिज्ञासु पुरुषहरूलाई ऊर्ध्वगमनको सुमार्ग देखाएर ब्रह्म बन्ने सम्मको परमोपदेश गरेर माथि उठाउन सक्तछन्। यिनले मुमुक्षुलाई ब्रह्मज्ञान गराएर जन्ममरणको दुरन्त संसृतिबाट सधैँका लागि पार लगाउने काम गर्दछन्। यी मायातीत हुन् भने अरू शास्त्रहरू मायिक हुन्। यिनले मीठो विष अर्थात् मधुर सीधु पियाएर पतनका मार्गतर्फ तान्दछन्। अतः मोक्षमार्गतर्फ अग्रसर गराउने उपनिषद्वाक्यहरू नै परम गुरु हुन्। अरू संसारी वाक्यहरू परमगुरु हुनसक्तैनन्। सबैभन्दा माथि परमेष्ठी गुरु हुनुहुन्छ। जसलाई परमात्मा भनिन्छ। किनभने उनै परमात्माका मुखबाट निःश्वासका रूपमा वेदादि शास्त्रहरू उत्पन्न हुन्छन्।

मायातीत ज्ञानका स्रोत उपनिषद्हरू हुन्। उपनिषद्लाई वेदान्त भनिन्छ। उपनिषद् शब्द विशरण, गति र अवसादन

---

२ शास्त्रं काव्येन हन्यते। – *सूक्तिः*

अर्थ भएका षद्लृ धातुदेखि अगाडिपट्टि उप र नि उपसर्गहरू लागेर बन्दछ। [३]विशरणको अर्थ दुर्बल वा कमजोर गराउनु हो। [४]गतिको अर्थ हिँड्नु, ज्ञान गर्नु वा पाउनु हो। [५]अवसादनको अर्थ नाश गर्नु हो। उपनिषद् भनेको गुह्य अर्थात् रहस्यमय विद्या हो। यो परा विद्या अर्थात् ब्रह्मविद्या हो। यसले महावाक्यको श्रवण गराएर जीवलाई ब्रह्म बनाउँदछ। उपनिषद्ज्ञान भन्दा ठूलो ज्ञान अर्को कुनै ज्ञान छैन। यो ज्ञानभन्दा [६]पवित्र कुनै अरू वस्तु छैन। उपनिषद् वाङ्मयभन्दा अरू दोस्रो वाङ्मय संसारमा छैन।

यो उपनिषद् ज्ञान मानवमात्रका लागि मोक्षको एकमात्र परम साक्षात् साधन हो। यसबाट विशुद्ध वैदिक सनातन धर्म, विभिन्न वैष्णव सम्प्रदाय, आस्तिक दर्शन, नास्तिक दर्शनका साथै अरू पन्थ र सम्प्रदायहरू पनि अनुप्राणित छन्। ज्ञानात्मक उपनिषद् शास्त्र ती सबैका लागि उपजीव्य स्रोत हो। त्यो विना कसैको परमार्थ सुध्रन सक्तैन। अतः यस दृष्टिबाट यो शास्त्र जगद्गुरु अर्थात् सबैको परम गुरु हो।

वैदिकस्रोतबाट अनुप्राणित भएका विभिन्न धर्म, दर्शन, संस्कार, संस्कृति, सम्प्रदाय, पन्थ र परम्परा भएका मान्छेका

---

३ उपनिषादयति अविद्यां तनूकरोति।

४ उपनिषादयति ब्रह्मगमयति

५ उपनिषादयति अविद्यां तत्कार्यञ्च नाशयतीति उपनिषद् भवति।

– शाङ्करभाष्य

६ नहि ज्ञानेन सदृशं पवित्रमिह विद्यते। – *गीता ४।३८*

अतिरिक्त अवैदिक धर्म, संस्कार, संस्कृति, सभ्यता र परम्परा भएका क्रिश्चियन, मुस्लिम, यहुदी आदि मनुष्यहरूले पनि वैदिक र औपनिषद ज्ञानलाई सर्वस्व मानेर अध्ययन गरेका छन् र परम गुरु मानेर आफूलाई कृतकृत्य ठानेका छन् ।

भारतका सम्राट् शाहजहाँका जेठा छोरा दाराशिकोह उपनिषद्का अध्येता थिए । जर्मनीका सुप्रसिद्ध दार्शनिक [७]अर्थर शोपेनहरले भनेका थिए कि यस उपनिषद्ले मलाई शान्ति दिएको छ र मृत्युपछि पनि शान्ति दिनेछ । [८]विदुषी डा. यानी बेसेण्टले उपनिषद्लाई मानवचेतनाको एकीभूत सर्वोच्च फल वा सारसर्वस्व भनेकी छन् । यस उपनिषद्द्वारा प्रतिपादित वैदान्तिक धर्म नै ढिलो चाँडो सम्पूर्ण पृथ्वीको धर्म हुन्छ पनि भनेकी छन् ।

जर्मन विद्वान् शेलिङ (Shelling) ले गरेको उपनिषद् व्याख्या सुनेर म्याक्समूलर (Max Muller) वेद र उपनिषद्को अध्ययन गर्न भारत आएका थिए । यसै गरेर धेरै जना पश्चिमी [९]विद्वान्हरूले उपनिषद् ज्ञान विश्व ज्ञान हुनेछ भनेर घोषणा गरेका छन् । उपनिषद्का प्रशंसक अनुसन्धाता र अध्येताहरू मध्येमा उपर्युक्त पश्चिमी विद्वान्हरूका अतिरिक्त गोल्डस्टकर, रोनाल्ड निक्सन, विल्सन आदि पनि थिए भने इस्लाम

---

७ It (Upanishad - Oupnekhat) has been the solace of my life, it will be the solace of my death.

८ Personally I regard the upanishada, as the highest product of the human mind, the crytallized wisdom of divinely illumind men.

९ It is destined sooner or later to becom the faith of the people.

धर्मावलम्बीहरू सूफी सन्त मन्सूर, सर्मद, फैजी, बुल्लाशाह आदि देखिन्छन् । सूफी सन्तले उपनिषद्को अनुभवात्मक वाक्य 'अहं ब्रह्मास्मि' लाई अरेबिक् भाषामा अनुवाद गरेर 'अनलहक' अर्थात् म ब्रह्म हुँ भनेको अपराधमा त्यस देशका तत्कालीन क्रूर शासकले मन्सूरलाई मृत्युदण्ड दिएका थिए । किन्तु उनी अभय ब्रह्म भइसकेका हुँदा उनले मृत्युलाई सहर्ष वरण गरेका थिए । त्यतिमात्रै होइन, मन्सूरलाई मृत्युदण्ड दिन फाँसीमा झुण्ड्याउँदा पनि उनले *'अहं ब्रह्मास्मि'* अर्थात् *'अनलहक'*को जाप गरिरहेका थिए । संसारमा सबैको आदि परमगुरु उपनिषद्को त्यति ठूलो प्रभाव देखिन्छ ।

क्रिश्चियन इराभन्दा धेरै अघिदेखि नै पश्चिमी गोलार्धमा त्यसबेला सभ्यताका शिखरमा पुगेका ग्रीस र रोमन विद्वान् र दार्शनिकहरूमा अद्वैत वेदान्तपरक उपनिषद्हरूको गहिरो प्रभाव परेको देखिन्छ। जसमध्ये ग्रीसका त्यस बेलाका महान् दार्शनिक आचार्य सुकरात (Socrates) लाई उदाहरणका रूपमा लिन सकिन्छ। अरू देवी, देवता र दृश्य प्रपञ्चसमेत सारा मिथ्या हुन्, ब्रह्ममात्रै एउटा सत्य हो भन्ने उनको मूल मन्त्र थियो । त्यही अपराधमा सुकरातलाई ग्रीसका तत्कालीन क्रूर शासकहरूले विष खुवाएर मृत्युदण्ड दिएका थिए। मृत्युको अन्तिम क्षणमा उनले [१०]केनोपनिषद्को मन्त्रको भाव आफ्ना

---

१० यस्यामतं तस्य मतं मतं यस्य न वेद सः ।
अविज्ञातं विजानतां विज्ञातमविजनताम् ॥ – केनोपनिषद् २।३

भाषामा आफ्ना दार्शनिक शिष्यहरूलाई उपदेश दिँदै भनेका थिए – 'मेरा [11]समकालीन दार्शनिक मित्रहरूमध्ये मैले मात्रै एउटा कुरो बुझ्केको छु, त्यो हो मैले केही पनि बुझ्केको छैन ।' उनमा उपनिषद्को यस्तो गहिरो प्रभाव थियो ।

वेद र उपनिषद् नै सबैको ज्ञानको स्रोत भएको तथ्य श्रीमद्भगवद्गीतामा आएको *'ब्रह्मसूत्रपदश्चैव' (गीता १३।४)* र *'औपनिषदं पुरुषं पृच्छामि' (बृहदारण्यकोपनिषद् ३।९।२६)* मा आएका वाक्यहरूबाट पनि थाहा हुन्छ। उपनिषद्को आधारमा नै श्रीमद्भगवद्गीता, देवी गीता, ईश्वरगीता, अष्टावक्रगीता, अवधूतगीता आदि गीताहरू, मनुस्मृति, याज्ञवल्क्यस्मृति आदि स्मृति शास्त्रहरू, महाभारत, रामायण, पुराणहरू समेत असङ्ख्य शास्त्रहरूको निर्माण भएको छ। भगवान् वेदव्यासले विभिन्न उपनिषद् मन्त्रहरूलाई समन्वय र व्याख्या गर्न ५५५ सूत्र भएको ब्रह्मसूत्रको रचना गर्नुभएको छ। उहाँले ब्रह्मसूत्रको प्रथमसूत्र [12]*'अथातो ब्रह्मजिज्ञासा'* देखि लिएर अन्तिम सूत्र [13]*'अनावृत्ति शब्दात्'* सम्म उपनिषद्का मन्त्रहरूलाई समेटेर नै ग्रथन गर्नुभएको छ। त्यतिमात्रै होइन, उहाँले

---

११ Socrates had said that he was wisen than his contemporaries because he alone knew that he knew nothing.

१२ तद्विजिज्ञासस्व, तद्ब्रह्म । – तैत्तिरीयोपनिषद् ३।१।१

१३ (क) न च पुनरावर्तते । – छान्दोग्योपनिषद् ८।१५।१
(ख) इमं मानवमावर्तं नावर्तन्ते । – छान्दोग्योपनिषद् ४।१५।१
(ग) तेषा न पुनरावृत्तिः । – बृहदारण्यकोपनिषद् ६।२।१५

महाभारतदेखि लिएर सम्पूर्ण पुराणहरूमा पनि उपनिषद्को व्याख्या गर्नुभएको छ।

आद्य जगद्गुरु श्रीशङ्कराचार्यले श्रीमद्भगवद्गीता, ब्रह्मसूत्र र उपनिषद्हरूका भाष्य लेख्नुभएको छ। जुन शास्त्रहरू वेदान्तमा प्रस्थानत्रयीका नामबाट प्रख्यात छन्। जसको श्रवण, मनन, निदिध्यासन र ब्रह्माभ्यास गर्न सकेमा मुमुक्षुको कल्याण हुनसक्तछ। उपर्युक्त प्रस्थानत्रयीको आधार, स्रोत र उपजीव्य उपनिषद् नै हुन् र तिनकै अनुसरण गर्दै पछिका आचार्यहरूद्वारा रचना गरिएका [१४]*अद्वैतसिद्धि,* [१५]*ब्रह्मसिद्धि,* [१६]*इष्टसिद्धि,* [१७]*नैष्कर्म्यसिद्धि,* [१८]*अद्वैतब्रह्मसिद्धि,* [१९]*अद्वयसिद्धि* र [२०]*स्वाराज्यसिद्धि*का साथै अरू थुप्रै प्रकरणग्रन्थहरू र विवरणग्रन्थहरूको पनि रचनामा यी सबै शास्त्र वा ग्रन्थहरूको उपजीव्य उपनिषद् नै देखिन्छ। सामान्य अरू आचार्य गुरुहरूको त के कुरा साक्षात् भगवान् श्रीशिव, श्रीविष्णु, श्रीब्रह्मा, अवतारी पुरुषहरूमा श्रीराम, श्रीकृष्ण, श्रीकपिल आदिले जिज्ञासु भक्त र मुमुक्षुलाई ज्ञानको उपदेश गर्दा कपोलकल्पित ज्ञानको उपदेश नगरेर श्रुतिकै आधारमा

---

१४ आचार्य मधुसूदन सरस्वती

१५ आचार्य मण्डन मिश्र

१६ आचार्य विमुक्तात्मा

१७ आचार्य सुरेश्वर

१८ आचार्य सदानन्द यति

१९ आचार्य श्रीधर

२० आचार्य गङ्गाधरेन्द्र सरस्वती

रहेर औपनिषद ज्ञानको उपदेश गर्नुभएको छ। यसैकारण साक्षात् भगवान्को पनि गुरु भएकाले उपनिषद् शास्त्रलाई परमगुरु भनिएको हो।

अद्वैतवेदान्तको अत्यन्त प्राचीन तथा गौरवशाली उदात्त र शाश्वत परम्परामा भगवान् नारायणदेखि लिएर अर्वाचीन श्रोत्रिय ब्रह्मनिष्ठ आचार्यहरूले आफ्नू सम्प्रदाय र गुरुपरम्परा अनुसार श्रुतिलाई प्रमुख प्रमाण मानेर ज्ञानोपदेश गर्ने र ग्रन्थहरू प्रणयन गर्ने प्रचलन अद्यावधिक अक्षुण्ण छ। त्यसै वैदिक परम्परालाई शिरोधार्य गरेर ग्रन्थ रचना गर्ने धेरै स्वनामधन्य आचार्यहरू मध्येका एक प्रमुख श्रीमत्परमहंसपरिव्रजकाचार्य श्रीदेवेश्वराचार्यका पूज्यपादशिष्य आचार्यप्रवर श्रीसर्वज्ञात्म-मुनिप्रणीत सङ्क्षेपशारीरक ग्रन्थबाट उपनिषद्लाई अत्यन्त आदर गर्दै तदनुरूप लेखिएका केही श्लोकहरूको उद्धरण यस लेखमा गर्न लागिएको छ।

जुन महावाक्य आफ्नू वेदको शाखा अर्थात् उपनिषद्मा आएको छ, त्यसलाई विधिपूर्वक [२१]स्वाध्यायद्वारा प्राप्त गरिएको र श्रद्धापूर्वक दीर्घ समयसम्म आराधना गरिएको छ। त्यतिमात्रै होइन त्यो महावाक्य श्रोत्रिय तथा ब्रह्मनिष्ठ गुरुबाट मुमुक्षु शिष्यलाई उपदेश गरिएको पनि छ। त्यस्तो महावाक्यले मात्रै जीव र ब्रह्मको एकत्वको बोध गराउन

---

२१ स्वाध्यायधर्मपठितं निजवेदशाखा वेदान्तभूमिगतमादरपालितञ्च।
सन्न्यासिना परदृशा गुरुणोपदिष्टं साक्षान्महावचनमेव विमुक्तिहेतुः॥
– सङ्क्षेपशारीरकम् ३।२९५

सक्तछ। त्यस्तो महावाक्यमात्रै साक्षात् मोक्षको हेतु बन्न सक्तछ। अन्यथा सम्भव हुँदैन।

उपनिषद् अर्थात् वेदान्तवाक्यको अर्थ सहित विधिपूर्वक श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट श्रवण, मनन र निदिध्यासन नगरीकन कुनै पनि मनुष्यले ब्रह्मसाक्षात्कार गर्न सक्तैन। त्यसैगरेर बृहदारण्यक उपनिषद्ले [२२]औपनिषद पुरुषको चर्चा गरेको छ। यस उपनिषद् मन्त्रमा आएको ब्रह्मको विशेषणलाई औपनिषद भनिएको छ। औपनिषदको अर्थ केवल [२३]उपनिषद् वाक्यद्वारा मात्रै ज्ञायमान भन्ने हुन्छ। यस उसले ब्रह्म तत्त्व उपनिषद्देखि बाहेकका अरू कुनै पनि शास्त्रहरूबाट जान्न सकिँदैन भन्ने कुरा स्पष्ट थाहा हुन्छ।

टिप्पणीको श्लोकमा आएका [२४]'उपनिषद्' र 'वेद' भन्ने पदहरूद्वारा उच्चरित वाक्यलाई विद्वान् आचार्यहरू महावाक्य भनेर ग्रहण गर्दछन्। किनभने आफ्ना शाखाको श्रुतिपठित महावाक्यलाई छोडेर अरू कुनै वाक्यद्वारा पनि ब्रह्मसाक्षात्कार हुनसक्तैन। यहाँ भनिएको स्वशाखा अर्थात् वेदको आफ्नो उपनिषद्मा पढिएको अर्थात् श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट श्रवण

---

२२ नावेदविन्मनुते तं बृहन्तम्। – तैत्तिरीयब्राह्मण ३।१२।९।७

२३ नावेदविद्धि मनुते पुरुषं बृहन्तम् इत्याह वेदवचनं कथमन्यथैतत्।
वाक्यान्तरञ्च कथमाह पुमांसमेनम् साटोपमौपनिषदत्वविशेषणेन॥
– सङ्क्षेपशारीरकम् ३।२९६

२४ उपनिषदिति वेद इत्यपीदम् समभिवदन्ति महावचो महान्तः।
फलवदवगतिः स्यादन्तरेणैतदेकम् वचनमिति न शक्यं वक्तुमित्यादरोऽस्मिन्॥
– सङ्क्षेपशारीरकम् ३।२९७

गरिएको महावाक्य नै ब्रह्मसाक्षात्कार गर्न अर्थात् अनन्त जन्मदेखि अन्तःकरणमा जमेर बसेको आवरण यद्वा अज्ञानको बाक्लो कालो पर्दा फोरेर जीव र ब्रह्मको एकता गराउन समर्थ हुन्छ, अन्यथा हुनसक्तैन भनेर बुझ्नु पर्दछ। औपनिषद महावाक्यको यति ठूलो महत्त्व छ।

उपनिषद् र वेद शब्दले महावाक्य भन्ने अर्थको सम्प्रेषण गर्दछन्। किनभने 'उपनिषद्' शब्दको *'उपसमीपे प्रत्यगात्मानं, अव्यधानेन गमयति'* र 'वेद' शब्दको *'ब्रह्म प्रत्यगात्मत्वेन वेदयति'* यस्तो व्युत्पत्ति हुन्छ। यी दुई शब्दहरू महावाक्यका अभिन्नत्वेन बोधक हुन्। यसका अतिरिक्त पनि 'वेद' र 'उपनिषद्' शब्दको उल्लेख अर्थको अभेद देखाउनलाई अभेदको अङ्गका रूपमा पनि हुने गर्दछ।

आ-आफ्ना वेदका शाखाका श्रवणात्मक महावाक्यहरू प्रत्येक शाखाध्यायीका लागि भिन्नाभिन्नै नै हुन्छन्। त्यस्ता महावाक्यहरूमा सामवेद अन्तर्गत तलवकार ब्राह्मण अन्तर्गत छान्दोग्योपनिषद् उपनिषद्मा पठित *'तत्त्वमसि'* श्रवणात्मक महावाक्य प्रचलित र प्रसिद्ध पनि छ। त्यो महावाक्य सुन्ने अधिकार केवल सामवेदीहरूका लागिमात्र हुने शास्त्रको निर्देशन छ। अतः अरू वेदपाठीले यो महावाक्य गुरुबाट सुन्नु हुँदैन। आफ्नै वेदको महावाक्य गुरुबाट सुन्नु पर्दछ। यदि वेदको निर्देशनलाई अवज्ञा गरेर कुनै पुरुषले गुरुबाट विधिपूर्वकै भए पनि अरूको महावाक्य सुन्ने धृष्टता गर्दछ भने सिद्धि प्राप्त हुँदैन, बरु त्यस्तो पुरुषलाई उल्टो प्रत्यवाय र

*‘शाखारण्ड’* को लाञ्छना लाग्दछ । यस *‘तत्त्वमसि’* महावाक्यलाई उदाहरणका लागि मात्रै सामवेद इतरका शाखाहरूले पनि उल्लेख गरेका हुन् । अतः मुमुक्षुले आफ्नै शाखाको महावाक्य खोजेर गुरुबाट सुन्नु पर्दछ। तबमात्रै सम्बन्धित महावाक्य मुक्तिको साधक बन्न सक्तछ। अन्यथा बाधक बन्नसक्तछ।

माथि उल्लेख भए अनुसार अधिकार प्राप्त आफ्नू वेदका शाखाको महावाक्य आफ्ना [२५]पिता आचार्य उद्दालकका मुखबाट शिष्य छोरा श्वेतकेतुले *‘तत्त्वमसि’* ९ पटक सुनेपछि केही कालपछि उनलाई म नै सत् आत्मा हुँ भन्ने ज्ञान भएको कुरा *‘तद्धास्य विजज्ञौ’ (छा.उ.६।७।६)* बाट थाहा हुन्छ। छान्दोग्यमा आएको उक्त महावाक्य हाम्रा लागि सामान्य जानकारीका लागि ज्ञापक हेतु मात्र हो, विधान होइन। उपनिषद् र वेद शब्द महावाक्यका ग्राहक शब्द हुन् । महावाक्यका पर्यायवाची शब्दका रूपमा पनि उपर्युक्त दुइटा शब्दहरू प्रयुक्त हुन्छन् ।

[२६]उपनिषद् शब्दले आफ्नू स्वाभाविक शक्ति अर्थात्

---

२५ पित्रा तत्त्वमसीति बोधनमनु स्पष्टं विजज्ञाविति,
छान्दोग्ये यदवोचदेतदिह नो लिङ्गं भवेज्ज्ञापकम् ।
सर्वत्रैव महागिरामुपनिषच्छब्दो भवेद्ग्राहको
वेदश्चायमतोऽन्यदस्य निकटे तेनात्र वेदादिगीः ॥
– सङ्क्षेपशारीरकम् ३।२९९

२६ उपनिषद्वचसा परमात्मधीः सहजशक्तिवशेन निगद्यते ।
तदुपचर्य्य महागिरि वर्तते निकटभावमपेक्ष्य तु मुख्यगीः ॥
– सङ्क्षेपशारीरकम् ३।३००

अभिधाद्वारा सोझै ब्रह्मज्ञान गराउँछ। त्यही शब्द महावाक्यमा भने सामीप्यका कारण उपचारद्वारा प्रवृत्त हुन्छ। अर्थात् 'उपनिषद्' शब्दले आफ्‍ना अवयवगत शक्तिद्वारा ब्रह्मज्ञानलाई बुझाउँछ। ब्रह्मज्ञानको बोधक भएकाले महावाक्य पनि उपनिषद् भनेर लक्षणा आदिद्वारा ब्रह्मबोधक मानिन्छ। अझै स्पष्ट रूपमा भन्ने हो भने ब्रह्मज्ञानको वाचक महावाक्यलाई पनि ब्रह्मज्ञान ठानेर उपनिषद् शब्द त्यसमा प्रयुक्त हुन्छ।

उपर्युक्त अनुसारको सङ्क्षिप्त विश्लेषणबाट मायातीत ब्रह्मसाक्षात्कार गर्ने एकमात्र साधन मुमुक्षुका लागि उपनिषद् नै हो भन्न सकिन्छ। उपनिषद्‌लाई नै वेदान्त भनिन्छ। वेदान्त ज्ञानभन्दा अर्को ठूलो ज्ञान कुनै छैन र वाङ्मय पनि अर्को ठूलो कुनै छैन। यस कुरालाई केवल वैदिक सनातन धर्मावलम्बीले मात्र नमानेर पश्चिमी अवैदिक धर्मावलम्बीले पनि नतमस्तक भएर स्वीकार गरेको देखिन्छ। जसमा मुख्य गरेर जर्मन विद्वान् पाउल डायसन पर्दछन्। उनले [२७]उपनिषद्‌दर्शन नामक ग्रन्थ नै लेखेका छन्। अर्का पश्चिमी विद्वान् ऐल्डरुज हक्सनले पनि मुक्त कण्ठले उपनिषद्‌को प्रशंसा गर्दै उपनिषद्‌दर्शनलाई [२८]शाश्वत दर्शन नाम दिएर ग्रन्थ नै लेखेका छन्। उनी छान्दोग्योपनिषद्‌को श्रवणात्मक महावाक्य *'तत्त्वमसि'* बाट अत्यन्त प्रभावित थिए भन्ने भनाइ पनि चर्चित छ।

यसरी विचार गर्दा प्रत्यक्ष, अप्रत्यक्ष, साक्षात् र परम्परया

---

२७ The philosophy of the Upanishadas.

२८ Perennial Philoshophy.

जुनसुकै रूपमा पनि आदि युगदेखि र आदिदेववदेखि लिएर सम्पूर्ण शास्त्रहरू र सम्पूर्ण मानव सभ्यताको पथप्रदर्शक आदि अलौकिक गुरु अपौरुषेय वेद र वेदको शिरोभाग वा ज्ञानभाग उपनिषद् नै भएको निर्विवाद देखिन्छ। जसले मानवलाई [२९]असत्‌बाट सत्‌तर्फ, अन्धकारबाट उज्यालोतर्फ र मृत्युबाट अमृत तर्फ लैजान्छ। यसैकारण उपनिषद्‌लाई गुरुको पनि गुरु परमगुरु भनिएको हो। आचार्य [३०]सदानन्दले उपनिषद् प्रमाण नै वेदान्त हो भनेका छन्। प्रसिद्ध टीकाकार आचार्य [३१]आनन्दगिरिले वार्तिकको अन्तिम ज्ञान नै ब्रह्मविद्या हो भनेका छन्।

हाम्रा सम्पूर्ण प्राच्य दर्शन, शास्त्र, पुराण, [३२]महाभारत, वेद र उपनिषद्‌हरूबाट नै अनुप्राणित छन्। सबै शास्त्रहरूका स्रोत वेद र उपनिषद् नै हुन्। अरू पुराणहरूका अतिरिक्त [३३]श्रीमद्‌भागवतमहापुराणले वेद र उपनिषद्‌को सार भागवत

---

२९ असतो मा सद्‌गमय तमसो मा ज्योतिर्गमय मृत्योर्मा ऽमृतं गमय।
– अक्ष्युपनिषद् १

३० वेदान्तो नाम उपनिषत्प्रमाणम्। – वेदान्तसारः

३१ शास्त्रप्रकाशिका आनन्दगिरिटीका बृहदारण्यकोपनिषद्वार्तिक।

३२ सर्वं विदुर्वेदविदो वेदे सर्वं प्रतिष्ठितम्।
वेदे हि निष्ठा सर्वस्य यद् यदस्ति न नास्ति च॥
*– महाभारत शान्तिपर्व २७०।४३*

३३ (क) वेदोपनिषदां साराज्जाता भागवती कथा। – *भागवतमहात्म्य २।६७*
(ख) सर्ववेदान्तसारं यद् ब्रह्मात्मैकत्वलक्षणम्। – *भागवत १२।१३।१२*
(ग) सर्ववेदान्तसारं हि श्रीभागवतमिष्यते।
तद्रसामृततृप्तस्य नान्यत्र स्याद्रतिः क्वचित्॥
*– भागवत १२।१३।१५*

भएको भनेर स्पष्टै उद्घोष गरेको छ। भगवान् श्रीराम, श्रीकृष्ण र शङ्करले पनि ज्ञानोपदेश गर्दा वेद र उपनिषद्लाई नै गुरु मानेर उपदेश गर्नुभएको देखिन्छ। यसैकारण गुरुको पनि गुरु जगद्गुरुको पनि गुरु भएकाले उपनिषद्लाई यस लेखमा परमगुरु भनिएको हो। बाहिरी संसारी मायिक गुरुहरू र बाहिरी संसारी मायिक शास्त्रहरूको काम भित्री गुरु र शास्त्रको परिचय गराउन सम्म मात्रै हो। त्यसपछि ती दुवैको काम समाप्त हुन्छ। बाहिरी गुरु र शास्त्रको प्रयोजन त्यतिमात्रै हो। किन्तु परम गुरु वेद र उपनिषद्को प्रयोजन भने मनुष्यलाई यस लोकमा मोक्षपर्यन्त र क्रममुक्तिमा सत्यलोक पुगेको जीवलाई पनि प्रयोजन रहन्छ नै। किनभने ब्रह्माजीबाट ब्रह्मोपदेश हुँदा पनि वेद र उपनिषद्कै आधार उहाँले लिनुपर्दछ। यीभन्दा श्रेष्ठ आधार अरू केही हुन सक्तैन। अतः वेद र उपनिषद्हरू परमेश्वर परमात्मा ब्रह्मा, विष्णु र शिव समेतका गुरु भएकाले परम गुरु भनिएको हो। ॐ ब्रह्मार्पणमस्तु।

# १९. परा ज्ञाननिष्ठा

ज्ञानको परानिष्ठा भनेको ब्रह्मसाक्षात्कार गर्नु हो। सबै साधनहरू अर्थात् बाहिरङ्गसाधन, अन्तरङ्गसाधन र महावाक्य श्रवणरूप साक्षात्साधनहरूको पर्यवसान वा परिसमाप्ति नै परा ज्ञाननिष्ठा हो। यही नै शुद्ध ब्रह्मको साक्षात्कार हो। यसैलाई [१]सिद्धि अर्थात् अन्तःकरणशुद्धिबाट हुने आत्मसाक्षात्कार भनिन्छ। यसको विवेचना प्रसङ्ग अनुसार अगाडि गरिने छ।

ज्ञानको जुन अन्तिम अवधि वा परिसमाप्ति हो त्यसैलाई निष्ठा भनिन्छ। त्यही नै ब्रह्मज्ञानको परम अवधि पनि हो। त्यसैलाई ब्रह्मज्ञानको निष्ठा भनिन्छ। त्यो निष्ठा आत्मज्ञान जस्तो छ। त्यो आत्मज्ञान पनि आत्मा जस्तै छ। त्यो आत्मा उपनिषद्वाक्यहरूले वर्णन गरेको [२]*'आदित्यवर्ण* [३]*भारूपः* र [४]*स्वयंज्योतिः'* जस्तै आकारवान् हो।

---

१ सिद्धिं प्राप्तो यथा ब्रह्म तथाप्नोति निबोध मे।
समासेनैव कौन्तेय निष्ठा ज्ञानस्य या परा ॥ – गीता १८।५०

२ वेदाहमेतं पुरुषं महान्तमादित्यवर्णं तमसः परस्तात्।
तमेव विदित्वाति मृत्युमेति नान्यः पन्था विद्यतेऽयनाय ॥
– शुक्लयजुर्वेद ३१।१८, श्वेताश्वतरोपनिषद् ३।८

३ मनोमयः प्राणशरीरो भारूपः सत्यसङ्कल्प आकाशात्मा सर्वकर्मा सर्वकर्मः सर्वगन्धः सर्वरसः सर्वमिदमभ्यात्तोऽवाक्यनादरः।
– छान्दोग्योपनिषद् ३।१४।२

४ अयं पुरुषः स्वयं ज्योतिर्भवति। – बृहदारण्यकोपनिषद् ४।३।९

आत्मालाई आदित्यवर्ण, प्रकाशस्वरूप, स्वयंज्योति आदि विशेषण दिएर श्रुतिले आत्माको वर्णन गरेको चाहिँ आत्मामा तमस्वरूपत्वको निषेध गर्नका लागि हो। किनभने आत्मामा द्रव्यगुण आदिको आकारको प्रतिषेध गर्दाखेरि आत्मालाई अन्धकाररूप मान्ने सम्भावना रहन्छ। अतः त्यसको व्यावृत्तिका लागि नै खास गरेर *'आदित्यवर्ण'* श्रुतिमा आएको हो। श्रुतिमा आएको *'अरूपम्'* आदि वाक्यहरूले विशेषरूपमा रूपको प्रतिषेध गरेका छन्। जस्तै यस [५]आत्माको रूप इन्द्रियहरूद्वारा पकडमा आउन सक्तैन, आत्मालाई कसैले पनि आँखाले देख्न सक्तैन, यो [६]अशब्द हो, अस्पर्श हो, इत्यादि श्रुतिवचनहरूबाट पनि आत्मा कसैको विषय नहुने भन्दै पूर्वपक्षी त्यसैकारणले जस्तो आत्मा छ त्यस्तै ज्ञान पनि हो भनेर सिद्धान्तीले भन्नु युक्तियुक्त होइन भन्दछन्।

उपर्युक्त परिप्रेक्ष्यमा आत्माको ज्ञान कसरी हुनसक्तछ ? भन्ने प्रश्न उठाउँदै पूर्वपक्षी [७]ज्ञानले जसलाई विषय गर्दछ त्यसैको आकारले आकारित हुन्छ भन्दै आत्मा र आत्माको ज्ञान दुवै निराकार भएका हुँदा कसरी आत्मामा भावना र निष्ठा हुनसक्तछ ? भन्दछन्।

---

५ न सदृशे तिष्ठति रूपमस्य न चक्षुषा पश्यति कश्चनैनम्।
– श्वेताश्वतरोपनिषद् ४।२०

६ अशब्दमस्पर्शमरूपमव्ययं तथा रसं नित्यमगन्धवच्च यत्।
– कठोपनिषद् १।३।१५

७ ज्ञानेच्छाकृतयः सविषया भवन्ति। – न्यायः

उपर्युक्त पूर्वपक्षीको भनाइ ठीक नभएको भन्दै सिद्धान्ती आफ्नो पक्ष अगाडि सार्दै [८]आत्माको ज्ञान हुनसक्तछ भन्दछन्। किनभने आत्माको अत्यन्त निर्मलत्व, स्वच्छत्व र सूक्ष्मत्व सिद्ध नै छ। त्यसै गरेर बुद्धिको पनि आत्माका सदृश निर्मलत्व, स्वच्छत्व र सूक्ष्मत्व सिद्ध छ। यसै कारण बुद्धिको आत्मचैतन्यका आकारद्वारा आभासित वा आकारित हुन सक्ने नै देखिन्छ।

यसरी विचार गर्दा आत्मविषयक ज्ञान गर्नु आवश्यक छैन। किनभने आत्मा ता सबैको सदासर्वदा प्राप्त प्रसिद्ध वस्तु हो। किन्तु यस्तो आत्मालाई जसले ढाकेर बसेको छ, अर्थात् आत्मामा नामरूपादि अनात्म वस्तुको जुन अध्यारोप भएको छ त्यसको निवृत्ति गर्नु मात्रै मुमुक्षुको कर्तव्य हो भनेर बुझ्नु पर्दछ। यसकारण [९]आत्मचैतन्यको ज्ञान गरिरहनु पर्दैन। किनभने ज्ञान अविद्याद्वारा आरोपित सम्पूर्ण पदार्थहरूका आकारमा नै विशेषरूपले ग्रहण भइरहेको छ।

एकथरी आफूलाई पण्डित मान्नेहरू आत्मतत्त्व निराकार भएका कारण त्यसलाई बुद्धिले ग्रहण गर्नसक्तैन, अतः

---

८ न, अत्यन्तनिर्मलत्वस्वच्छत्वसूक्ष्मत्वोपपत्तेरात्मनो बुद्धेश्चात्मसम-नैर्मल्याद्युपपत्तेरात्मचैतन्याकाराभासत्त्वोपपत्तिः।

– शाङ्करभाष्य, गीता १८।५०

९ अतश्च आत्मविषयं ज्ञानं न विधातव्यम्। किं तर्हि नामरूपाद्य–नात्माध्यारोपणनिवृत्तिरेव कार्या नात्मचैतन्यविज्ञानम्। अविद्याध्यारोपित–सर्वपदार्थाकारैरेव विशिष्टतया गृह्यमाणत्वात्।

– शाङ्करभाष्य, गीता १८।५०

आत्माको सम्यक् ज्ञाननिष्ठा दुःसाध्य हो भन्दछन् । उनीहरूको भनाइ [10]सत्य नै देखिन्छ। किनभने जुन पुरुष गुरुपरम्पराले रहित छ, जसले वेदान्तवाक्य विधिपूर्वक सुनेको छैन, जसको बुद्धि सांसारिक विषयहरूमा अत्यन्त आसक्त छ, जसले यथार्थ ज्ञान गराउने भएका प्रमाणहरू बुझ्नलाई परिश्रम गरेको छैन, तिनीहरूका लागि उपर्युक्त पूर्वपक्षीको भनाइ उपयुक्त नै देखिन्छ। किन्तु जो उपर्युक्त भनाइको विपरीत छन् अर्थात् सबै कुराले युक्त छन् भने तिनीहरूलाई यो भनाइ लागू हुँदैन। किनभने उनीहरूका लागि ता लौकिक ग्राह्यग्राहक भेदयुक्त वस्तुहरूमा सद्भाव अर्थात् तिनलाई सत्य सम्झन अत्यन्त कठिन हुन्छ। त्यस अवस्थामा पुगेका मुमुक्षुका लागि आत्मचैतन्यका अतिरिक्त अरू कुनै द्वैत मायिक पदार्थको भान नै हुँदैन। त्यसकारण आत्मसाक्षात्कार भएपछि द्वैत वा भेदबुद्धि निवृत्त हुन्छ। वस्तुतः आत्मा कहिल्यै र कसैलाई पनि अप्रसिद्ध हुन सक्तैन। त्यतिमात्रै होइन आत्मा प्राप्तव्य, त्याज्य र उपादेय पनि हुनसक्तैन। किनभने आत्मा आफ्नै स्वरूप हो र आफैँ नै हो।

जसरी आफ्नो शरीरलाई जान्नका लागि अरू प्रमाणहरूको आवश्यकता पर्दैन, त्यसै गरेर आफ्नू आत्मा त्यस शरीरभन्दा पनि अत्यन्त भित्र भएका कारण आत्मा जान्नका लागि प्रमाणान्तरको आवश्यकता पर्दैन। यसबाट

---

१० सत्यं, एवं गुरुसम्प्रदायरहितानामश्रुतवेदानामत्यन्तबहिर्विषयासक्तबुद्धीनां सम्यक्प्रमाणेष्वकृतश्रमाणाम् । – शाङ्करभाष्य, गीता १८।५०

विवेकीहरूका लागि आत्मज्ञाननिष्ठा सुप्रसिद्ध हो भन्ने कुरा सिद्ध हुन्छ। अन्ततः यसबाट आत्मा अत्यन्त प्रसिद्ध र सबैको प्रेष्ठ वा प्रियतम भएको पनि प्रमाणित हुन्छ। त्यसै गरेर आत्मज्ञ वा ज्ञाता पनि सुपरिचित र अत्यन्त प्रत्यक्ष नै छ। [११]अतः मुमुक्षुले आत्मज्ञानका लागि प्रयत्न गर्नु कर्तव्य वा आवश्यक छैन। परन्तु मुमुक्षुको अनात्मबुद्धिको निवृत्ति गर्नु नै कर्तव्य हो। यसैबाट पराज्ञाननिष्ठा सहज रूपमा सुसम्पाद्य हुन्छ।

यो पराज्ञाननिष्ठा वा ब्रह्मनिष्ठा नै मोक्ष हो। यसलाई अर्को शब्दमा भन्ने हो भने अन्तरात्मा अर्थात् [१२]प्रत्यगात्माको अविक्रियस्वरूपमा निश्चयरूपबाट स्थित हुनु नै मोक्ष हो। अन्तरात्मविषयक प्रतीतिलाई अक्षुण्ण राख्न प्रयत्न गर्नु नै पराज्ञाननिष्ठा हो। मुमुक्षुले मोक्षका लागि सर्वकर्म-सन्न्यासपूर्वक नै ज्ञाननिष्ठामा स्थित हुनुपर्दछ। मोक्ष अर्थात् परा ज्ञाननिष्ठा नै यही हो। ॐ ब्रह्मार्पणमस्तु।

❀

११ तस्माज्ज्ञाने यत्नो न कर्तव्यः किन्तु अनात्मबुद्धिनिवृत्तावेव। तस्माज्ज्ञाननिष्ठा सुसम्पाद्या। – गीता शाङ्करभाष्य १८।५०

१२ प्रत्यगात्मविषयप्रत्ययसन्तानकरणाभिनिवेशश्च ज्ञाननिष्ठा। तस्मात्सर्वकर्मसन्न्यासेनैव ज्ञाननिष्ठा कार्येति सिद्धम्।
– शाङ्करभाष्य गीता १८।५५

# २०. पञ्चब्रह्म

अद्वैत वेदान्तमा [१]ब्रह्म सत्य, जगत् मिथ्या र जीव ब्रह्म नै हो भनिन्छ। ब्रह्मलाई [२]सत्, चित् र आनन्दका रूपमा लिइन्छ। ब्रह्मका दुईथरी लक्षणहरू स्वरूपलक्षण र तटस्थलक्षण मानिन्छन्। मन र वचन आदिबाट अस्पृश्य ब्रह्मका वस्तुतः नाम, रूप, स्वरूप र लक्षण आदि केही पनि हुँदैनन् तापनि मुमुक्षु जिज्ञासुका कल्याणका लागि [३]सत्य, ज्ञान र अनन्त आदिलाई स्वरूपलक्षण तथा [४]सृष्टि, स्थिति र प्रलय आदिलाई ब्रह्मका तटस्थ लक्षण भनिएको छ। जसबाट साधना अवस्थामा जिज्ञासुलाई ब्रह्मचिन्तनमा प्रविष्ट हुन सुगम होओस् भनेर श्रुतिले कल्पना गरेको देखिन्छ।

ब्रह्म एउटै मात्र र अद्वितीय हो। समपूर्ण चराचर प्रपञ्चको उही अभिन्न निमित्त र उपादान कारण पनि हो। चेतन ब्रह्मको सत्ता पाएर जडात्मिका भावरूपा अनादि अविद्याले सृष्टिचक्रको विवर्तन गर्दछे। यद्वा अर्को शब्दमा व्यक्त

---

१ ब्रह्मसत्यं जगन्मिथ्या जीवो ब्रह्मैव नापरः। – ब्रह्मज्ञानावलीमाला २०

२ सच्चिदानन्दरूपाय विश्वोत्पत्त्यादिहेतवे। – श्रीमद्भागवतमहात्म्य १।१

३ सत्यं ज्ञानमनन्तं ब्रह्म। – तैत्तिरीयोपनिषद् २।१।१

४ यतो वा इमानि भूतानि जायन्ते। येन जातानि जीवन्ति। यत्प्रयन्त्यभिसंविशन्ति। तद्विजिज्ञासस्व। तद्ब्रह्म।
– तैत्तिरीयोपनिषद् ३।१।१

गर्नुपर्दा अनिर्वाच्या भावरूपा अनादि अविद्या र अन्तःकरणावच्छिन्न अज्ञान समेतको सहयोगद्वारा जगत् प्रपञ्चका रूपमा अद्वय, नीरूप र नामरहित ब्रह्म द्वय, सरूप र सनाम विवर्तित हुन्छ। यस्तो अद्वय ब्रह्मलाई पनि शास्त्रहरूले विशेषण जोडेर कार्य ब्रह्म र शुद्ध ब्रह्म भन्ने गरेका छन्। केही श्रुतिहरूमा आएका मन्त्रहरूमा [५]आफ्ना आत्मामा स्थित यस ब्रह्मलाई सर्वदा नै जान्नु पर्दछ। यसदेखि बाहेक अर्को कुनै पनि ज्ञातव्य पदार्थ छैन। भोक्ता अर्थात् जीव, भोग्य अर्थात् जगत् र प्रेरक अर्थात् ईश्वर समेत तीन रूपमा पूर्ण ब्रह्म नै विवर्तित भएर प्रपञ्चमा देखापर्दछ भनिएको छ। किन्तु यस श्रुतिको अर्थ आफ्नू द्वैत सम्प्रदाय अनुसार गरेर केही भारतीय विद्वान्हरू श्रुतिले नै तीन थरी ब्रह्म भनेको हो भन्ने अर्थ लगाउँछन्। जुन श्रुतिको मर्म विपरीत देखिन्छ।

यसरी अद्वितीय ब्रह्मलाई पनि द्वैतका रूपमा व्याख्या गर्ने सम्प्रदायबाट सतर्क भएर यस लेखकले श्रुतिसम्मत अद्वैत ब्रह्मको [६]श्रवण, मनन, निदिध्यासन र [७]ब्रह्माभ्यास गर्ने सत्प्रयास अनवरत गर्दै आएको छ। यसको परिपाकका लागि अद्वैत वेदान्त सम्बन्धी

---

५ एतज्ज्ञेयं नित्यमेवात्मसंस्थं नातः परं वेदितव्यं हि किञ्चित्।
भोक्ता भोग्यं प्रेरितारञ्च मत्वा सर्वं प्रोक्तं त्रिविधं ब्रह्ममेतत् ॥
– श्वेताश्वतरोपनिषद् १।१२,१३

६ श्रोतव्यः श्रुतिवाक्येभ्यो मन्तव्यश्चोपपत्तिभिः ।
मत्त्वा च सततं ध्येय एते दर्शनहेतवः ॥

७ तच्चिन्तनं तत्कथनमन्योऽन्यं तत्प्रबोधनम् ।
एतदेकपरत्वञ्च ब्रह्माभ्यासं विदुर्बुधाः ॥ – लघुवाक्यवृत्तिः

शास्त्रहरूको अध्ययन र ग्रन्थ लेखन समेत गर्दै आएको छ। अद्वैत वेदान्त श्रुतिप्रमाणमा आधारित छ। श्रुति नै अद्वैत वेदान्तको जीवन हो। यो दर्शन अरू दर्शनहरू जस्तो तर्क र कल्पनाका आधारमा चल्ने नभएकाले म भरसक श्रुतिशिखा उपनिषद्हरूको अध्ययन, अनुशीलन र अवलोकन गर्ने गर्दछु। किनकि ब्रह्मलाई औपनिषद पुरुष भनिन्छ। उपनिषद् नपढी ब्रह्म र पशुपतितत्त्व पनि जानिँदैन। श्रीपशुपतितत्त्व सम्बन्धी निबन्ध लेख्ने सन्दर्भमा सहायतार्थ आफूसँग भएको १८८ उपनिषद्हरूको सङ्ग्रह ग्रन्थ मैले पल्टाएँ। अध्ययन गर्दै जाँदा उक्त सङ्ग्रहमा मैले पशुपतिसम्बन्धी उपनिषद्हरू १. शरभोपनिषद्, २. कठरुद्रोपनिषद्, ३. रुद्रोपनिषद्, ४. रुद्रहृदयोपनिषद्, ५. पाशुपतब्रह्मोपनिषद्हरूका साथै पञ्चब्रह्मोपनिषद् पनि भेटेँ। उपर्युक्त श्वेताश्वोतरोपनिषद्मा वर्णित भोक्ता, भोग्य र प्रेरक भएर विवर्तित ब्रह्मलाई नबुझ्रेर तीन थरी ब्रह्म भनेर व्याख्या गर्ने विद्वान् सम्झेर तीनोटा ब्रह्मभन्दा पनि बढी अर्को उपनिषद्ले पाँच ब्रह्म कसरी भन्यो भन्ने ममा जिज्ञासाका साथै उत्सुकता पनि पैदा भएपछि तुरुन्तै उपनिषद् पल्टाएर मैले आद्योपान्त पढेँ। पढ्दाखेरि भगवान् श्रीपशुपतिका पञ्चमुख सद्योजात, अघोर, वामदेव, तत्पुरुष र ईशानलाई पञ्चब्रह्म भनिएको रहेछ भन्ने थाहा भयो।

उक्त पञ्चब्रह्मोपनिषद्ले निष्कल, निष्क्रिय, शान्त, निरवद्य, निरञ्जन शुद्ध ब्रह्मलाई न भनेर स्वरूपमा विवर्तित कार्यब्रह्म परम श्रीशिव श्रीपशुपतिका पञ्चवक्त्रलाई लिएर

प्रतीकात्मकरूपमा वर्णन गरेको रहेछ। वस्तुतः विद्याको स्रोत र अधिष्ठाता नै भगवान् शिव हुनुहुन्छ। पुराणहरूले विद्या प्राप्तिको कामना गर्नेले गिरिश अर्थात् भगवान् शिवको उपासना गर्नु भनेका छन्। श्रुतिले [८]ऋग्वेद, यजुर्वेद, सामवेद, अथर्ववेद, इतिहास, पुराण, विद्या, उपनिषद्, श्लोक, सूत्र, मन्त्रविवरण र अर्थवाद समेत सबै विद्या परब्रह्म परमशिवका निःश्वासबाट उद्भूत भएका हुन् भनेको छ।

उपर्युक्त अनुसार अध्यात्मविद्या, आगम, निगम, तन्त्र, मन्त्र, भक्तिशास्त्रदेखि सम्पूर्ण विद्या भगवान् शिवबाटै प्रकट भएका हुन् भन्ने देखिन्छ। [९]आगम चाहिँ त प्रत्यक्षरूपमा नै शिवका मुखबाट गिरिजा भगवती पार्वतीले सुनेको र भगवती पार्वतीबाट भगवान् वासुदेवले सुनेको हुँदा आगम भन्ने नाम भएको शास्त्रहरूको भनाइ छ। [१०]निगमलाई वेद भनिन्छ। त्यो पनि शिवबाट पार्वती हुँदै वासुदेवमा पुगेर संसारमा उत्तीर्ण भएको भन्ने शास्त्रहरूको भनाइ पाइन्छ।

---

८ अस्य महतो भूतस्यः निश्वसितमेतद्‌यद्‌ऋग्वेदो यजुर्वेदः सामवेदोऽथर्वाङ्गिरस इतिहासः पुराणं विद्या उपनिषद्ः श्लोकाः सूत्राण्यनुव्याख्यानानि व्याख्यानान्यस्यैवैतानि निःश्वसितानि।

– बृहदारण्यकोपनिषद् २।४।१०

९ आसमन्ताद् आगच्छति शिवमुखान्निर्गच्छतीति।
आगतः शिववक्त्रेभ्यो गतञ्च गिरिजा मुखे।
मग्नस्तस्या हृदम्भोजे तस्मादागममुच्यते ॥ – मा.भा.शा.प.

१० निर्गतः शाङ्करीवक्त्राद्गतश्च गिरिजानने।
मतः श्रीवासुदेवस्य तस्मान्निगम उच्यते ॥ – पुरश्चर्यार्णव, तान्त्रिकग्रन्थ

पञ्चब्रह्मोपनिषद्ले भगवान् श्रीपशुपतिका पाँच वक्त्रलाई नै पञ्चब्रह्म भनेर विभिन्न विशेषण र उपाधिहरू दिएर वर्णन गरेको छ। पैप्पलाद ऋषि र शाकलका बीचका संवाद अर्थात् प्रश्न र उत्तरका माध्यमबाट अनुष्टुप् छन्दमा जम्मा ३६ ओटा मन्त्रहरूमा ग्रथित यस उपनिषद्ले परम शिवस्वरूप श्रीपशुपतिलाई ब्रह्मत्वेन वर्णन गरेको छ।

बृहदारण्यकोपनिषद्मा वर्णित परं ब्रह्मका निःश्वासभूत वेदादि शास्त्रहरू भगवान् श्रीपशुपतिका सद्योजातादि पाँचोटा मुखबाट प्रकट भएका भनेर ब्रह्मत्वेन भगवान् श्रीपशुपतिका पाँच मुखको वर्णन गरिएको छ। चार वेदहरू मध्ये पूर्वतर्फको सद्योजात मुखबाट ऋग्वेद, दक्षिणतर्फको अघोर मुखबाट यजुर्वेद, पश्चिमतर्फको वामदेव मुखबाट सामवेद र उत्तरतर्फको तत्पुरुष मुखबाट अथर्ववेदको प्राकट्य भएको भनेर उक्त पञ्चब्रह्मोपनिषद्ले भनेको छ।

पाँचौं ऊर्ध्व [११]ईशानमुखलाई बुद्धिको साक्षी, परम शिव, जगत्को अधिष्ठाता, आकाशात्मक खं ब्रह्म अव्यक्त, ॐकारस्वरभूषित, सर्वदेवमय, पञ्चकृत्यनियन्ता, पञ्च-ब्रह्मात्मक, स्वप्रकाशात्मकस्वरूप, परब्रह्म इत्यादि विशेषणहरू दिएर वर्णन गरेको छ। किन्तु श्रीपशुपतिको छैटौँ कालाग्नि रुद्र मुखको भने पञ्चब्रह्मोपनिषद्ले उल्लेख गरेको छैन।

---

११ ईशानं परमं विद्यात्प्रेरकं बुद्धिसाक्षिणम्।
आकाशात्मकमव्यक्तमोङ्कारस्वरभूषितम्॥
सर्वदेवमयं शान्तं शान्त्यतीतं स्वराद्बहिः।
अकारादिस्वराध्यक्षमाकाशमयविग्रहम्॥

किनभने उपनिषद्को नाम पञ्चब्रह्मोपनिषद् भएको र उपनिषद्को वर्ण्य वा कथ्य विषय पनि श्रीपशुपतिका सद्योजातादि पञ्चवक्त्र भएकाले छैटौँ कालाग्निरुद्रनामक वक्त्रको उल्लेख नगरेको भन्ने लेखकलाई लागेको छ।

अन्त्यमा पञ्चवक्त्रात्मक परम ब्रह्मस्वरूप सृष्टि, स्थिति र संहारकर्ता परमात्मा, परमशिवस्वरूप भगवान् श्रीपशुपतिमा अपार हार्दिक श्रद्धा र भक्ति अर्पण गर्दै यो लेखक कलमलाई विराम दिन्छ। ॐ ब्रह्मार्पणमस्तु।

---

पञ्चकृत्यनियन्तारं पञ्चब्रह्मात्मकं बृहत्।
पञ्चब्रह्मोपसंहारं कृत्वा स्वात्मनि संस्थितः॥
स्वमायावैभवान्सर्वान्संहृत्य स्वात्मनि स्थितः।
पञ्चब्रह्मात्मकातीतो भासते स्वस्वतेजसा॥
आदावन्ते च मध्ये च भासते नान्य हेतुना।
मायया मोहिताः शम्भोर्महादेवं जगद् गुरुम्॥
येन प्रकाशते विश्वं तत्रैव प्रविलीयते।
तद्ब्रह्म परमं शान्तं तद्ब्रह्मास्मि परं पदम्।
पञ्चब्रह्म परं विद्यात्सद्योजातादिपूर्वकम्।
दृश्यते श्रूयते यच्च पञ्चब्रह्मात्मकं स्वयम्॥
पञ्चधा वर्तमानं तं ब्रह्मकार्यमिति स्मृतम्।
ब्रह्मकार्यमिति ज्ञात्वा ईशानं प्रतिपद्यते॥
पञ्चब्रह्मात्मकं सर्वं स्वात्मनि प्रविलाप्य च।
सोऽहमस्मीति जानीयाद्विद्वान्ब्रह्मऽमृतो भवेत्॥
इत्येतद्ब्रह्म जानीयाद् यः स मुक्तो न संशयः।
पञ्चाक्षरमयं शम्भुं परब्रह्मस्वरूपिणम्॥

— पञ्चब्रह्मोपनिषद् १४–१८, २०–२४

# २१. प्रतियोगिविनिर्मुक्त ब्रह्मसाक्षात्कार

जीवको अज्ञान वा अविद्याको निवृत्ति नै मोक्ष हो भने मोक्षका लागि औपनिषद सिद्धान्त हो। यो वैदिक सिद्धान्त चिरन्तन सिद्धान्त हो। यसै मूलसिद्धान्तलाई अङ्गीकार गरेर सम्पूर्ण प्राच्य दर्शनहरू र शास्त्रहरू पठनपाठन र उपदेशसमेतमा प्रचलित छन्। जीवका अन्तःकरणमा अनन्त जन्मदेखि जमेर बसेको अज्ञान वा अविद्या वा सञ्चितकर्म वा आवरणको नाश भएपछि जीव शिव बन्दछ, अर्थात् जीव ब्रह्म भइहाल्दछ।

जीवलाई संसारमा अनवरत घुमाइरहने अविद्या वा अन्तःकरणावच्छिन्न अज्ञान हो। यसको निवृत्ति भएपछि मोक्ष प्राप्त हुन्छ। यसका लागि मोक्षशास्त्रहरूमा धेरैथरी साधन र उपायहरू बताइएका छन्। अविद्याको निवृत्ति नै मोक्ष हो। अविद्या संसार हो। अविद्या विद्याबाट हट्तछ। अविद्या अन्धकार हो भने विद्या प्रकाश हो। जसरी प्रकाशका अगाडि अन्धकार रहन सक्तैन, त्यसरी नै विद्यारूपी प्रकाशका सामुन्ने अविद्या वा अज्ञानरूपी अन्धकार रहन सक्तैन। विद्या भनेको औपनिषद ज्ञान हो, ब्रह्मविद्या हो। यो [1]अद्वया हो, शान्ता हो

---

१ अविद्यास्तमयो मोक्षः सा संसार उदाहृतः ।
विद्यैव चाद्वया शान्ता तदस्तमय उच्यते ॥ – ब्रह्मसिद्धिः ३।१०।६

र अविद्या वा अज्ञानको नाशक हो। अतः ब्रह्मविद्याद्वारा अविद्याको नाश हुनुलाई नै शास्त्रहरूले मोक्ष भनेका हुन्।

शास्त्रहरूले उपदेश गर्दा विधिमुख अर्थात् अन्वयविधि र निषेधमुख अर्थात् व्यतिरेकविधिबाट गर्ने गर्दछन्। तदनुरूप माथि विधिमुखबाट शास्त्रले मोक्षको उपदेश गरे भने निषेधमुखबाट पनि मोक्षको उपदेश गरेको पाइन्छ। [२]आत्मा एक अद्वितीय हो भन्ने नमानेर वा नजानेर यो नाना र सुखदुःखादि द्वन्द्वहरूबाट मुक्त भनेर सम्झनु जसको स्वरूप हो त्यो अविद्या वा अज्ञान हो। त्यस्तो स्वरूप र लक्षण भएकी अविद्या ज्ञानस्वरूप आत्माको नै आश्रय लिएर बसेकी वा बसेको छ। अविद्यास्वरूप अज्ञान नै संसारकी जननी हो। त्यसको नाश नै आत्माको अर्थात् जीवको मुक्ति हो।

अविद्याको निवृत्ति वा नाश नै जीवको मुक्ति हो भन्ने सिद्धान्त उपर्युक्त अनुसार शास्त्रहरूले स्थापित गरेको देखिन्छ। निवृत्ति हुनु भनेको अभाव हुनु हो। किन्तु न्याय दर्शनको सिद्धान्त अनुसार कुनै वस्तुको अभाव हुने बित्तिकै त्यस अभावका ठाउँमा त्यसको [३]प्रतियोगी खडा हुन्छ। प्रतियोगीविना कुनै पनि वस्तुको निषेध वा निवृत्ति गर्न सकिँदैन। प्रतियोगी खडा भएपछि त्यस अवस्थामा कसरी

---

२ ऐकात्म्याऽप्रतिपत्तिर्या स्वात्मानुभवसंश्रया।
सा ऽविद्या संसृतेर्बीजं तन्नाशो मुक्तिरात्मनः॥ – नैष्कर्म्यसिद्धिः १।७

३ यस्याऽभावः सः प्रतियोगी। – न्यायदर्शन

अद्वय ब्रह्म हुन सक्तछ र कसरी अद्वय मोक्ष प्राप्त हुनसक्तछ ? भन्ने प्रश्न उत्पन्न हुन जाने देखिन्छ। किनभने अद्वैत वेदान्तका अर्वाचीन आचार्यहरूले पनि मिथ्यात्व वा अभावसिद्ध गर्दा न्यायको सिद्धान्त अनुरूप प्रतियोगिविधया नै गरेका छन्। उदाहरणका लागि मधुसूदनसरस्वतीको अद्वैतसिद्धि ग्रन्थलाई लिन सकिन्छ। उहाँले प्रपञ्चलाई मिथ्या सिद्ध गर्न यही सिद्धान्त अँगाल्नु भएको छ। जस्तै जुन उपाधिका आधारमा जुन वस्तुको प्रतीति हुन्छ, त्यसैका आधारमा हुने भएको [४]त्रैकालिक निषेध अर्थात् अत्यन्ताऽभावको जुन प्रतियोगी हो, त्यो नै मिथ्या हो भनेर प्रतियोगीका आधारमा प्रपञ्चलाई मिथ्या सिद्ध गर्नुभएको छ, जसलाई दर्शनको भाषामा [५]निवृत्ति पनि भनिन्छ।

उपर्युक्त अनुसार प्रतियोगिविधया यदि मोक्षको सिद्धि गर्ने हो भने त्यसलाई अद्वैत वेदान्तले मोक्ष नै मानेको छैन। अतः प्रतियोगी विनाको मोक्ष वा मुक्ति नै अद्वय मुक्ति हो र यस्तो मुक्ति नै आत्यन्तिकी मुक्ति हो भन्ने शास्त्रको भनाइ पाइन्छ । यसै सिद्धान्तको आधारमा ब्रह्मज्ञानद्वारा कैवल्यमुक्तिमा ब्रह्मज्ञानीलाई पुऱ्याउने ब्रह्मविद्याको उद्देश्य

---

४ प्रतिपन्नोपाधौ त्रैकालिकनिषेधप्रतियोगित्वं वा मिथ्यात्वम् ।

– अद्वैतसिद्धिः द्वितीयमिथ्यात्वसिद्धिः

५ निवृत्तिरात्मा मोहस्य ज्ञातत्वेनोपलक्षितः ।
उपलक्षणनाशेऽपि स्यान्मुक्तः पाचकादिवत् ॥

– प्रत्यक्तत्त्वप्रदीपिका ४।८

हो। सोही कुराको प्रतिज्ञा गरेर अद्वैत ब्रह्मविद्या प्रवृत्त भएको छ। त्यसकारण प्रतिज्ञा अनुसार प्रतियोगी विनिर्मुक्त ब्रह्मविद्या वा ब्रह्मसाक्षात्कारको चर्चा यसमा गरिन्छ।

मुमुक्षुलाई [६]प्रतियोगीविनिर्मुक्त ब्रह्मको चिन्तन र साक्षात्कार गराउन नै उपनिषद्‌हरू प्रवृत्त भएका देखिन्छन्। प्रतियोगीयुक्त ब्रह्मज्ञान गर्ने भनेर कुनै पनि मोक्षपरक श्रुतिहरूले भनेका छैनन्। प्रतिज्ञा अनुसार त्यसै प्रतियोगीविनिर्मुक्त [७]ब्रह्मलाई जानेर अर्थात् ब्रह्मज्ञान गरेर मात्रै मुमुक्षु पुरुष मृत्युभन्दा पारि जान्छ अर्थात् मुक्त हुन्छ। यो भन्दा बाहेकको मोक्ष प्राप्तिको अर्को कुनै मार्ग छैन।

अर्को श्रुतिले पनि [८]बुद्धिमान् ब्रह्मज्ञानीले प्रतियोगिविनिर्मुक्त ब्रह्मलाई जानेर त्यसैको मात्रै चिन्तन गरोस्। अरू चिन्तन गर्नु भनेको व्यर्थको वाणीको श्रममात्र हो, निरर्थक हो भनेको छ। परम पुरुष भगवान्‌को त्यसै पदलाई ज्ञानीहरू शोकरहित अनन्त आनन्दस्वरूप ब्रह्मका रूपमा साक्षात्कार गर्दछन्। संयमशील ज्ञानी पुरुषहरू त्यसैमा आफ्ना मनलाई समाहित गरेर स्थित हुन्छन्। जसरी इन्द्र स्वयं मेघरूपबाट

---

६ श्रीमत्कौषीतकिविद्यावेद्यप्रज्ञापराक्षरम्।
प्रतियोगिविनिर्मुक्तब्रह्ममात्रं विचिन्तये ॥ – कौषीतकिब्राह्मणोपनिषद् १।१

७ तमेव विदित्वाऽति मृत्युमेति नान्यः पन्था विद्यतेऽयनाय ॥
– श्वेताश्वतरोपनिषद् ६।१५

८ तमेव धीरो विज्ञाय प्रज्ञां कुर्वीत ब्राह्मणः।
नानुध्यायाद् बहुञ्छब्दान् वाचो विग्लापनं हि तदिति ॥
– बृहदारण्यकोपनिषद् ४।४।२१

विद्यमान भएका कारण जलका लागि कुवा खन्ने कोदालो आफ्ना साथमा राख्तैनन् । त्यसरी नै ब्रह्मज्ञानी पुरुषहरू पनि ब्रह्मज्ञान भइसकेपछि ब्रह्मज्ञानका साधन भएका गुरु र शास्त्र समेतलाई त्याग गरिदिन्छन् भनेर [९]भागवतले भनेको छ ।

प्रतियोगीविनाको ब्रह्मसाक्षात्कार हुन्छ भन्ने कुराको प्रतीति माथि उल्लेख गरिएका दुइटा श्रुतिवाक्यहरूबाट स्पष्ट हुन्छ । किनभने दुवै श्रुतिहरूमा *'तम् एव'* भनेर आएको छ। तम् ब्रह्म, एव मात्रै भन्ने त्यसको अर्थ हुन्छ। एव शब्दले एक अद्वितीय ब्रह्ममात्रको चिन्तन गर्ने र साक्षात्कार गर्ने भनेर निर्देशन गर्दछ । यहाँ एव शब्दका दुइटा अर्थ गर्नुपर्छ । पहिलोले मात्रै भन्ने र दोस्रोले मायादि मायिक उपाधिको व्यावर्तन । प्रतियोगी पनि मायिक जड पदार्थ भएकाले दोस्रो एवद्वारा त्यसको व्यावर्तन हुन्छ। अतः श्रुतिले उपर्युक्त अनुसार प्रतियोगिविनिर्मुक्त ब्रह्मसाक्षात्कारको निर्देशन कण्ठतः नै गरेको देखिन्छ । श्रुतिको आदेश प्रतिकूल काल्पनिक प्रतियोगी खडा गरेर प्रतियोगी सहितको अद्वय मोक्ष हुनसक्तैन र यस सम्बन्धमा ननु र न च गर्न पनि मिल्दैन ।

जसले ब्रह्ममा हुँदै नभएका नाना प्रतियोगी आदि मायिक तथा मिथ्या वस्तुहरूको अध्यारोप गरेर नानाथरीका कुराको

---

९ तद्वै पदं भगवतः परमस्य पुंसो ब्रह्मेति यद् विदुरजस्र सुखं विशोकम् ।
सध्र्यङ् नियम्य यतयो यमकर्तहेतिं जह्युः स्वराडिव निपानखनित्रमिन्द्रः ॥
– भागवत २।७।४८

कल्पना गर्दछ र ब्रह्ममा नाना सरह देख्तछ भने त्यस्तो मान्छे [10]मृत्युबाट मृत्युमा नै प्राप्त हुन्छ। अर्थात् त्यस्तो मान्छेको कहिल्यै पनि मोक्ष हुँदैन। यस्तो मान्छे अनन्तकालसम्म जन्ममृत्युका दुश्चक्रमा परेर जन्मने र मर्ने काम गरिरहन्छ भनेर श्रुतिले स्पष्ट शब्दमा उद्घोष गरेको छ।

प्रतियोगीविनाको ब्रह्मचिन्तन वा ब्रह्मसाक्षात्कार गर्न मुमुक्षुका लागि धेरै थरी बहिरङ्ग साधन र अन्तरङ्ग साधनहरूको विधान वेदले गरेको छ। बहिरङ्ग साधनहरूमा कर्म र उपासना आदि पर्दछन् भने अन्तरङ्गसाधनहरूमा [11]दर्शन, श्रवण, मनन र निदिध्यासन समेत पर्दछन्। साधनचतुष्टयसम्पन्न मुमुक्षुले विधिपूर्वक गुरूपसत्ति गरेर श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट [12]*'तत्त्वमसि', 'अभयं वै जनक प्राप्तोऽसि'* आदि महावाक्यहरू मध्येमा आफ्ना वेदका शाखा अनुसार श्रवण गर्नुपर्छ। त्यसरी श्रवण गरिसकेपछि मनन, निदिध्यासनसमेतबाट परिपाक भएर अन्तःकरणको आवरण दोष नाश भएर मुमुक्षुको अन्तःकरण अर्थात् बुद्धि शुद्ध ब्रह्मकै सरह अत्यन्त निर्मल, अत्यन्त शुद्ध र अत्यन्त शुद्ध

---

१० मनसैवानुद्रष्टव्यं नेह नानास्ति किञ्चन।
मृत्योः स मृत्युमाप्नोति य इह नानेव पश्यति॥
– बृहदारण्यकोपनिषद् ४।४।१९

११ आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यो मैत्रेय्यात्मनो वा अरे दर्शनेन श्रवणेन मत्या विज्ञानेनेदं सर्वं विदितम्।
– बृहदारण्यकोपनिषद् २।४।५

१२ तत्त्वमस्यादिवाक्योत्थसमग्धी जन्ममात्रतः।
अविद्या सहकार्येण नासीदस्ति भविष्यति॥ – बृहदारण्यकोपनिषद्वार्तिक

हुन्छ। त्यसै बुद्धिमा ब्रह्मसाक्षात्कार हुन्छ। अनि अविद्या र त्यसका सम्पूर्ण कार्य प्रपञ्चको समेत तीनै कालमा तुरुन्तै [१३]बाध हुन्छ।

उपर्युक्त वार्तिकमा भनिए अनुसार [१४]अविद्या र अविद्याका समस्त प्रपञ्चादि कार्यहरू नाश भएर उपर्युक्त अनुसार ब्रह्मसाक्षात्कार भएपछि तुरुन्त नै निषेध्य अविद्या वा अज्ञानका हेतुहरू पनि प्रध्वस्त हुन्छन्। यसमा 'निषेध्यं सर्वं' भन्नाले द्वैत र त्यसको अभाव समेत बुझ्नु पर्दछ। यसमा प्रतियोगी र निषेध दुवैको एकैपटक निषेध हुन्छ। त्यस अवस्थामा प्रतियोगीको अस्तित्व बाँकी रहँदैन। जसरी ध्वंस हुँदा प्राग् अभाव र त्यसको प्रतियोगी दुवैको नाश हुन्छन्।

यसै विषयलाई मधुसूदनसरस्वतीले पनि यसरी व्यक्त गर्नुभएको छ। [१५]निषेधको निषेध भएपछि त्यहाँ नै प्रतियोगीको सत्ता सुरक्षित रहन्छ, जहाँ निषेधको निषेधक बुद्धिद्वारा प्रतियोगीको सत्ता समर्थित होस् र निषेधको मात्र निषेध गरियोस् भन्न मिल्दैन। किनभने जहाँ प्रतियोगी र निषेध दुवैको

---

१३ अज्ञानस्य स्वकार्येण वर्तमानेन प्रविलीनेत वा सह ज्ञानेन निवृत्तिर्बाधः।
– पञ्चपादिकाविवरण।

१४ निरस्ताज्ञानतत्कार्ये लब्ध आत्मन्यथात्मना।
निषेध्यहेतौ प्रध्वस्ते निषेधोऽपि निवर्तते। – बृहदारण्यकोपनिषद्वार्तिक

१५. न च निषेधस्य निषेधे प्रतियोगिसत्त्वापत्तिरिति वाच्यम्। तत्र हि निषेधस्य निषेधे प्रतियोगिसत्त्वमा याति यत्र निषेधस्य निषेधबुद्धया प्रतियोगिसत्त्व व्यवस्थाप्यते निषेधमात्रं निषिध्यते यत्र तु प्रतियोगिसत्त्वं यथा ध्वंससमये प्रागभावप्रतियोगिनोरुभयोरपि निषेधः।
– अद्वैतसिद्धिः द्वितीयमिथ्यात्वविचारः

नै निषेध हुन्छ, त्यहाँ कुनै हालतमा पनि प्रतियोगी सत्ता सुरक्षित रहँदैन। अनन्त जन्मदेखि [१६]अन्तःकरणमा सञ्चित भएर रहेका अज्ञानका समस्त कारणहरूको पनि नाश तुरुन्तै हुन्छ। हेतुको नाश भएपछि त्यसैबाट उद्भूत निषेध्य वस्तु अविद्या वा अज्ञानको पनि तत्कालै नाश हुन्छ।

माथिका पङ्क्तिहरूमा उल्लेख भए अनुसार अविद्याका कार्यहरू र अविद्या समेतको निवृत्ति भएपछि पनि उपनिषद्मा आएको किञ्चन अर्थात् किञ्चित्रूप [१७]प्रमातृत्वपन बाँकी नै रहन्छ। त्यसको निवृत्ति नभई कैवल्यमुक्ति प्राप्त हुँदैन। त्यसको निवृत्ति र त्यसबाट खडा हुने प्रतियोगीको समेत उपनिषद्मा आएको [१८]न इति न इतिबाट निषेध हुन्छ। यसै कुरालाई [१९]रामगीता र माण्डूक्यकारिकाले पनि समर्थन गरेका छन्। अविद्या वा अज्ञानको कार्यसहित निवृत्तिमा योभन्दा ठूलो वेदको अर्को आदेश हुन नै सक्तैन।

---

१६ भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः।
क्षीयन्ते चास्य कर्माणि तस्मिन्दृष्टे परावरे॥ – मुण्डकोपनिषद् २।२।८

१७ प्रमातृत्वादिना यावत् किञ्चिदत्र विवक्षितम्।
तदभावश्च तत्सर्वं नेतीति प्रतिषिध्यते॥ – बृहदारण्यकोपनिषद्वार्तिक

१८ अथात आदेशो नेति नेति। – बृहदारण्यकोपनिषद् २।३।६

१९ नेतिप्रमाणेन निराकृतोऽखिलो हृदासमास्वादितचिद्घनामृतम्।
त्यजेदशेषं जगदात्त सद्रसम्, पीत्वा यथाम्भः प्रजहाति तत्फलम्॥
– रामगीता ३४

स एष नेति नेतीति व्याख्यातं निह्नुते यतः।
सर्वमग्राह्यभावेन हेतुनाजं प्रकाशते॥ – माण्डूक्यकारिका ३।२६

यसरी प्रतियोगिशून्य ब्रह्मज्ञान गर्ने सन्दर्भमा श्रुति, स्मृति र प्रकरण ग्रन्थहरू समेतका वचनहरू उल्लेख गर्दै प्रकाश पार्ने प्रयत्न गरियो। उपर्युक्त विश्लेषणबाट सामान्य जिज्ञासु पाठकलाई निषेध्यहेतु, निषेध, किञ्चन, अत्यन्ताभाव, अभाव, प्रतियोगी र अवशिष्ट वस्तुका बारेमा स्पष्ट हुन नसकेर अलमलमा पर्ने सम्भावना पर्न सक्तछ। अतः यसलाई बुझ्नु पर्दछ। निषेध्यहेतु भनेको कामकर्मादिजन्य सञ्चित कर्म हो। निषेध भनेको अविद्या वा अज्ञान हो। किञ्चन भनेको केही पनि भन्ने हो भने अत्यन्ताभाव र अभाव भनेको नहुनु हो। [२०]प्रतियोगी भनेको कुनै वस्तुको निषेध गरेर त्यसको अभाव भएपछि त्यस अभावका स्थानमा खडा हुने कुनै काल्पनिक वस्तु हो। सबै माया र मायाका कार्यहरू हटेर बाँकी वा अवशिष्ट रहने [२१]संविद्, चैतन्य अर्थात् विशुद्ध मायातीत परब्रह्म हो। [२२]भागवतले त्यसै संविद्‌लाई निषेधपछि शेष रहने अशेष भनेको छ। अझै पनि जिज्ञासा बाँकी रहनसक्तछ, शेष रहने कति हो ? र निषेध हुने कति हो ? यसै जिज्ञासालाई शान्त गर्न वार्तिकले निषेध्य अर्थात् न इति न इति भनेर निषेध गर्दै जाँदा निषेध हुने सबै अतद्‌वस्तु अर्थात् अविद्या र

---

२० अस्याऽभावः सः प्रतियोगी। – न्यायदर्शन

२१ मासाब्दयुगकल्पेषु गतागम्येष्वनेकधा।
नोदेति नास्तमेत्येका संविदेषा स्वयम्प्रभा॥
– पञ्चदशी तत्त्वविवेक प्रकरण ७

२२ निषेधशेषो जयतादशेषः। – भागवत ८।३।२४

अविद्याका कार्यहरू हुन् र निषेध नहुने भनेको वा शेष रहने भनेको आत्मवस्तु अर्थात् संविद् हो भनेको छ।

ज्ञानद्वारा निषेध हुने सबै मायिक पदार्थहरू हुन्। जुन परिच्छिन्न हुन्, जड हुन् र ती सबै दृश्यकोटिमा पर्दछन्। द्रष्टा भनेको आत्मवस्तु मात्रै हो। यो [२३]दृश्यमान परिच्छिन्न जड प्रपञ्च तीनै कालमा छँदैछैन, यो मिथ्या हो भन्ने ठानेर जब आत्मज्ञानद्वारा ज्ञानीले आफ्नो मन अर्थात् अन्तःकरणबाट मिथ्या मायिक जड दृश्यलाई बढारेर फ्याक्तछ, त्यसपछि मात्रै आत्मज्ञानको पराकाष्ठा अर्थात् निर्वाणको उत्पत्ति मुमुक्षुलाई हुन्छ। माया, अविद्या, अज्ञान र त्यसबाट सिर्जित सम्पूर्ण दृश्यप्रपञ्चको अत्यन्ताभावका साथै तत्पश्चात् खडा हुने तथाकथित काल्पनिक अत्यन्ताभावको प्रतियोगी अर्थात् निमित्त वा सम्बन्धीको नाश गरेपछि मात्रै मुमुक्षुले अद्वय ब्रह्मसाक्षात्कार गर्नसक्तछ। अतः सम्पूर्ण मायिक पदार्थको [२४]श्रुतिवचन अनुसार निषेध भएको अवस्थामा द्रष्टा, चित्, संविद्मात्रै बाँकी रहन्छ। संविद् स्वप्रकाशको मायिक प्रतियोगी रहने सम्भावना नै रहँदैन। त्यसैकारण प्रतियोगिविनिर्मुक्त ब्रह्मसाक्षात्कार गर्न सकिन्छ।

आत्मवस्तुमा प्रतियोगिता किं वा निमित्तता अर्थात्

---

२३ दृश्यं नास्तीति बोधेन मनसो दृश्यमार्जनम्।
सम्पन्नं चित्तदुत्पन्ना परा निर्वाणनिर्वृतिः ॥
– योगवासिष्ठ वैराग्यप्रकरण, सर्ग ३ श्लोक ६

२४ अथात आदेशो नेति नेति। – बृहदारण्यकोपनिषद् २।३।६

सम्बन्धिता हुन नसक्ने भनेर चित्सुखाचार्यले पनि आफ्नू मत व्यक्त गर्नुभएको छ । सबै [२५]भावपदार्थहरू अर्थात् अनात्मपदार्थहरूको नै तिनका आश्रयरूपबाट मानिएका स्थान वा आश्रयहरूको अत्यन्ताभाव हुनसक्तछ। त्यस अत्यन्ताभावको नै प्रतियोगी अर्थात् निमित्त खडा हुन्छ। त्यो प्रतियोगिता नै निषेध्य वस्तुको मिथ्यात्व हो। किन्तु सत्स्वरूप, स्वप्रकाश, संविद् निराश्रय ब्रह्मको स्वाश्रयनिष्ठ अत्यन्ताभावको प्रतियोगिताको कल्पना गर्नु हास्यास्पद भएको हुँदा प्रतियोगिविनिर्मुक्त ब्रह्मको चिन्तन र साक्षात्कार गर्न सकिन्छ।

उपर्युक्त अनुसार निषेधको पनि निषेध गरेपछि ब्रह्ममात्रै बाँकी रहन्छ। किन्तु यसको निषेध गर्दै जाने हो भने अनवस्था हुनसक्ने आशङ्कालाई परिहार गर्दै श्रीसुरेशवराचार्यले वार्तिकमा स्पष्टै उल्लेख गर्नुभएको छ। [२६]आत्मवस्तु अर्थात् आत्मादेखि बाहेक अरू माया र मायाका स्थूल र सूक्ष्म कार्यहरू सबै नै निषेध्य हुन् । यसप्रकार आत्मा अर्थात् संविद् ब्रह्मदेखि अतिरिक्त अतद् पदार्थ सबै निषेध भएपछि अभाव र अभावको प्रतियोगी रहने कुरै भएन। यसरी विवेचना गर्दा अभावको नै

---

२५ सर्वेषामपि भावानामाश्रयत्वेन सम्मते।
प्रतियोगित्वमत्यन्ताभावं प्रति मृषात्मता ।। – प्रत्यक् तत्त्वप्रदीपिका १।७

२६ निषेध्यं सर्वमेवैतदनिषेऽध्यात्मवस्तुगम्।
अतो नाभावनिष्ठः स्यादभावस्यापि निह्नवत्।
– बृ.उ. अध्याय२, ब्राह्मण ३, बृ.वार्तिक १९८ (पृ.६९५)

अस्तित्व समाप्त भएपछि केका आधारमा कसलाई मिथ्या सिद्ध गर्न प्रतियोगी खडा हुने ? अतः वृक्षको मूल र जरा समेत काटिएपछि हाँगाबिँगा, पात पलाउने र फूल, फल आदि लाग्ने सम्भावना नै रहँदैन । अर्थात् वृक्षको नै नाश भएपछि त्यसको छाया केका आधारमा रहने ? अतः ब्रह्मसाक्षात्कार गर्दा निषिद्ध अविद्याको स्थानमा प्रतियोगी उत्पन्न हुन नसक्ने भएपछि प्रतियोगिविनिर्मुक्त ब्रह्मसाक्षात्कार हुने भयो । यस सम्बन्धमा अरू बढी ऊहापोह गर्नु आवश्यक नै छैन । ॐ ब्रह्मार्पणमस्तु ।

# २२. पर्यङ्कविद्या

पर्यङ्कविद्याका बारेमा मैले ब्रह्मविद्या २०७० मा प्रकाशन गर्नका लागि विभिन्न निबन्धहरू लेख्ने क्रममा वेदान्तका महत्त्वपूर्ण विषयहरूमा लेख्ने प्रयास गरेँ। त्यसै क्रममा मैले ब्रह्मसूत्रमा आएको साम्परायका बारेमा पनि कलम चलाएँ। त्यसका लागि शाङ्करभाष्य, न्यायनिर्णय, रत्नप्रभा र भामती टीकाको पनि अध्ययन गरेँ। त्यस सन्दर्भमा भामतीकारले उल्लेख गर्नुभएको '*यमनियमादि*' अनुष्ठानसहितको विद्यामा उत्तरमार्ग गमनपूर्वक पर्यङ्कस्थित ब्रह्मप्राप्तिको कारणता श्रुत छ भन्ने पङ्क्ति मैले पढेँ। किन्तु त्यस पङ्क्तिको अर्थ र तात्पर्य समेत मैले राम्रो बुझ्न सकिनँ। यसका लागि अद्वैत वेदान्तका विभिन्न विद्वान्हरू, स्वाध्यायी मित्रहरू, ब्रह्माभ्यासीहरूसमेतसँग मैले जिज्ञासा व्यक्त गरेँ। किन्तु उहाँहरू कसैले पनि मेरो जिज्ञासा शान्त गरिदिने तर्फ कत्ति पनि चाख राख्नु भएन। मेरो जिज्ञासा मनमा कुण्ठित भएर बसिरह्यो र म अनुत्तरित रहेँ।

पराविद्या २०७१ र महाविद्या २०७२ का लागि फेरि मैले निबन्धहरू लेख्न थालेँ, तर पर्यङ्कविद्या बुझ्न नसकेकोमा मेरो चेतना त्यतातर्फ सधैँ आकृष्ट भइरह्यो। विभिन्न ग्रन्थहरूको अनुशीलन गर्ने क्रममा पर्यङ्कविद्याका बारेमा केही सामग्री पाउन म सफल भएको हुँदा त्यसैका

आधारमा केही पङ्क्तिहरू लेख्तै छु।

पर्यङ्कविद्याका सम्बन्धमा निबन्ध लेख्न शुरु गर्नलाई लेखकले सर्वप्रथम ऋग्वेदीय कौषीतकिब्राह्मणोपनिषद् ग्रन्थको अध्ययन गर्‍यो। त्यस उपनिषद्का शुरुमा नै त्यस उपनिषद्मा विद्यमान विषय र त्यस उपनिषद्को प्रयोजन झल्काउने प्रकारको [१]मङ्गलाचरणश्लोक आएको छ। त्यसमा जसले यस उपनिषद्को गुरुबाट विधिपूर्वक श्रवण गर्दछ र तदुपरान्त मनन र निदिध्यासन गर्दछ त्यस्ता मुमुक्षुले प्रतियोगिविनिर्मुक्त ब्रह्मसाक्षात्कार गर्नसक्तछ भनिएको छ।

उपनिषद्को प्रथम अध्यायमा नै गर्गका प्रपौत्र यज्ञकर्ता चित्र र प्रसिद्ध ब्रह्मर्षि आरुणिका बीचमा भएको ब्रह्मचर्चा आएको छ। जसमा दक्षिणायन र उत्तरायण अर्थात् [२]देवयानमार्गको वर्णन गरिएको छ। देवयानमार्गको वर्णन गर्ने क्रममा ब्रह्मलोकस्थ पर्यङ्कस्थित ब्रह्मको वर्णन र त्यहाँ देवयानमार्गबाट पुगेको ब्रह्मवेत्ता उपासक ब्रह्माको सम्पर्कबाट ऐश्वर्यशाली ब्रह्माकै सरह शासक र सर्वव्यापक बनेको वर्णन जिज्ञासु मुनि आरुणिलाई यज्ञकर्ता चित्रले गरेका छन्। त्यतिमै

१ श्रीमत्कौषीतकिविद्यावेद्यप्रज्ञापराक्षरम्।
प्रतियोगिविनिर्मुक्तब्रह्ममात्रं विचिन्तये॥ – कौषीतकिब्राह्मणोपनिषद्

२ देवयानेन पथा पर्यङ्कस्थं ब्रह्माभिप्रस्थितस्य व्यध्वनि सुकृतदुष्कृतयोर्वियोगं कौषीतकिनः पर्यङ्कविद्यायामानन्ति "स एतं देवयानं पन्थानमासाद्याग्निलोकमागच्छति।" (कौषीतकिब्राह्मणोपनिषद् १।३) इति उपक्रम्य स आगच्छति विजरां नदीं तां मनसैवात्येति तत्सुकृतदुष्कृते विधूनुते" (कौषीतकिब्राह्मणोपनिषद् १।४) – ब्रह्मसूत्र ३।३।१६।२७

उपनिषद्को प्रथम अध्याय समाप्त हुन्छ। पर्यङ्कविद्याको सङ्क्षिप्त परिचय यत्ति नै हो।

जोसुकैले पनि अग्निहोत्रादि सत्कर्महरूको अनुष्ठान गर्दछन्। ती सबै यस मृत्युलोकबाट प्रयाण गर्दाखेरि क्रमशः धूम, रात्रि, कृष्णपक्ष, दक्षिणायन आदिका अभिमानी देवताहरूको अधीनमा हुँदै अन्ततोगत्वा चन्द्रलोक अर्थात् स्वर्गमा पुग्दछन्। स्वर्गवासीका इन्द्रिय र प्राणसमेत कृष्णपक्षका चन्द्रमाबाट पुष्ट हुनसक्तैनन्। अर्थात् जीवात्मालाई तृप्ति दिन चन्द्रमा सक्तैनन्।

उपर्युक्त अनुसारको क्षयमा प्राप्त हुने स्वर्गरूपी चन्द्रमालाई त्यागेर जुन साधकले निष्काम धर्मको अनुष्ठान गर्दछ, त्यो साधक नित्य लोक अर्थात् ब्रह्मलोकमा पुग्दछ। स्वर्गलोकको कामना गरेर जानेहरू अन्त्यमा शुभकर्मको फल भोगिसकेपछि पञ्चाग्निहरूमा होमिँदै फेरि जन्ममरणको दुश्चक्रमा पर्न मृत्युलोकमा झर्दछन् र ब्रह्मज्ञान नभएसम्म अनन्त जन्मसम्म विभिन्न योनिमा घुमिरहन्छन्।

श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट आफ्नै वेदका शाखामा रहेको वैदिक महावाक्यको श्रवण, मनन, निदिध्यासन र धेरै समयको ब्रह्माभ्यास गरेर ब्रह्मानुभूति भएपछि एकथरी सद्योमुक्तिमा तुरुन्तै प्राप्त हुन्छन् भने अर्काथरी अर्चिरादि मार्गमा प्रविष्ट हुँदै क्रममुक्तिमा चढ्दछन्।

कौषीतकिब्राह्मणोपनिषद् अनुसार परब्रह्मको उपासक देवयानमार्गमा पुगेर पहिले अग्निलोकमा जान्छन्। त्यसपछि

वायुलोकमा र त्यहाँबाट सूर्यलोकमा जान्छन् । त्यसपछि इन्द्रलोकमा र त्यहाँबाट प्रजापतिलोकमा जान्छन् । त्यहाँबाट ब्रह्मलोकमा जान्छन् । ब्रह्मलोकमा परब्रह्मका उपासकलाई लैजान पाँचसय अप्सराहरू आउँछन् । त्यस उपासकलाई ब्रह्मोचित अलङ्कारहरूले अलङ्कृत गर्दछन् । त्यसपछि उसले ब्रह्माजीको स्वरूपलाई नै प्राप्त गर्दछ। त्यसपछि ब्रह्मवेत्ता आर नामक जलाशयमा पुग्दछ त्यसलाई मनका सङ्कल्पद्वारा नाघ्छ । किन्तु अज्ञानी पुरुष भने त्यस जलाशयमा पुगेर पनि त्यसलाई नाघ्न सक्तैन, त्यहीँ डुब्दछ। परन्तु ब्रह्मवेत्ता भने मुहूर्ताभिमानी येष्टिह नामक देवताका समीप पुग्दछ । तर विघ्नकारी देवता भने ऊदेखि भाग्दछन् । त्यसपछि ऊ विजरा नदीका तटमा आउँछ। त्यस नदीलाई पनि ऊ सङ्कल्पद्वारा नै तर्दछ। त्यहाँ पुण्य र पापलाई उसले झार्दछ। उसले झारेको त्यस धर्मलाई उसका प्रिय कुटुम्बहरूले पाउँछन् भने पाप उसको द्वेष गर्नेहरूले पाउँछन् । ऊ ब्रह्मवेत्ता पुण्य र पापरहित भएर ब्रह्मप्राप्ति गर्दछ।

ब्रह्मलोक जाने मार्गका इल्य वृक्ष आदि धेरै स्थानहरू पार गर्दै ऊ अनन्तः अमितौजा नामक पर्यङ्कका नजिक पुग्दछ । अत्यन्त सुन्दर तथा दिव्य उक्त पर्यङ्कमा ब्रह्माजी बस्नुभएको हुन्छ। तत्त्वज्ञानी ब्रह्मज्ञ त्यस पर्यङ्कमा चढ्दछ।

उपर्युक्त अनुसार उक्त पर्यङ्कमा चढेपछि तिमी को हौ ? भनेर ब्रह्माजी त्यस ब्रह्मवेत्तालाई धेरै प्रश्नहरू गर्दछन् र तिनको उत्तर ब्रह्मवेत्ताले दिन्छ । त्यसपछि जल आदि पाँच महाभूतहरू

आफ्नो स्थान भएको कुरा ब्रह्मवेत्तालाई ब्रह्माजी बताउँछन् । अनि यो उनको लोक पनि जलादितत्त्वप्रधान भएको भन्दै ब्रह्मवेत्ता जीवात्मा ब्रह्माजीको अभिन्न उपासक भएको बताउँदै त्यो ब्रह्मलोक ती उपासकको पनि भएको तथ्य पनि स्पष्ट पार्दछन् ।

ब्रह्माजीको जुन सुप्रसिद्ध विजय अर्थात् सबैलाई नियन्त्रण गर्ने शक्ति र सर्वत्र व्याप्त अर्थात् सर्वव्यापकता हो, ती दुवै समेतलाई पनि त्यो उपासकले प्राप्त गर्दछ । जसले यी कुराहरू जानेर उपासना गर्दछ त्यो उपासक पनि ब्रह्माजी सरह नै सबैको शासक र सर्वव्यापक बन्दछ भन्ने कुरा कौषीतकि-ब्राह्मणोपनिषद्मा आएको छ ।

यस निबन्धको शुरुमा नै पर्यङ्कविद्याका बारेमा लेखकले आफ्नू जिज्ञासा र त्यसका लागि भएको प्रयासको झल्को दिइसकेको छ। यसै जिज्ञासाका सन्दर्भमा ऋग्वेदीय कौषीतकिब्राह्मणोपनिषद्मा रहेको पर्यङ्कविद्याको छोटो परिचयसम्म दिने काम भयो । किन्तु यसबाट मात्र यो लेखक सन्तुष्ट भएको छैन। अतः यस विद्याको खोजी गर्ने काम भविष्यमा पनि गरेर यसबारे अरू बढी ज्ञान प्राप्त भएमा जिज्ञासु पाठक समक्ष प्रस्तुत गरिनेछ।

यस छोटो वर्णनबाट केसम्म ज्ञात हुन्छ भने क्रममुक्तिमा देवयान मार्गबाट ब्रह्मलोक पुगेको ब्रह्मवेत्ता उपासकको योग्यता र क्षमता पनि ब्रह्माजीका सरह हुन्छ। ब्रह्माजी मुक्त पुरुष भएकाले त्यो उपासक ब्रह्माजीका साथै मुक्त हुन्छ भनेर अरू

[३]शास्त्रहरूमा आएको वचन अनुसार अनुमानसम्म गर्न सकिन्छ ।

आद्य जगद्‌गुरु श्रीशङ्कराचार्यले यस उपनिषद्‌बाट ब्रह्मविद्यासम्बन्धी केही महत्त्वपूर्ण मन्त्रहरू आफ्ना भाष्यहरूमा उद्‌धृत गर्नुभएको छ, तर यस उपनिषद्‌मा भाष्य भने लेख्नुभएको पाइँदैन । त्यसो हुनुमा यस लेखकका विचारमा कोषीतकिमा तात्त्विक कुराहरू थोरै तर प्रक्रियागत कुरा र अर्थवादयुक्त उपाख्यान आदि नै प्रायः धेरै भएकाले पनि हुनसक्तछ। जे जस्तो भए तापनि यस उपनिषद्‌को पनि अद्वैत वेदान्तको परम्परामा महत्त्वपूर्ण स्थान रहेको कुरा निर्विवाद छ। ॐ ब्रह्मार्पणमस्तु ।

---

३ ब्रह्मणा सह ते सर्वे सम्प्राप्ते प्रतिसञ्चरे ।
परस्यान्ते कृतात्मानः प्रविशन्ति परं पदम् ॥ – कूर्मपुराण १।१२।२६९
द्रष्टव्य :– साभार कल्याणको उपनिषद् विशेषाङ्क, विक्रमसंवत् २००५ ।

# २३. पाठक्रमादर्थक्रमो बलीयान्

आफ्नू वेदशाखाको महावाक्य कुन हो र मुमुक्षुले श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट विधिपूर्वक कसरी श्रवण गरेमा त्यो मोक्षको साक्षात् साधन हुन सक्तछ भन्ने कुरा मुमुक्षुले बुझ्नु आवश्यक छ।

अरू वेदका शाखाका अध्येताहरूले र मुमुक्षुहरूले गुरुबाट श्रवण गर्नुपर्ने र स्वयंलाई अनुभव हुने वैदिक महावाक्यको चर्चा परिचर्चा यस लेखकले धेरै पटक गरिसकेको हुँदा त्यसतर्फ नलागेर शुक्लयजुर्वेदमाध्यान्दिनीय शाखाध्यायीहरूले गुरुबाट श्रवण गर्नुपर्ने र साधनाको परिपाकपछि मुमुक्षुले स्वयं अनुभव गर्ने वैदिक महावाक्यको प्रकरण अनुरूप सङ्क्षिप्त चर्चा गर्नु नै यस लेखको प्रयोजन हो।

मोक्षको साक्षात् साधन हुनका लागि आफ्नै वेदशाखामा पठित महावाक्य श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट श्रवण गर्नुपर्ने र त्यसको प्रतिकूल अरूका वेदशाखामा पठित महावाक्यको अनाधिकार श्रवण गरेमा मोक्षको साधक नभएर त्यसको प्रतिकूल बाधक नै हुने देखिन्छ। त्यस्ता मुमुक्षुलाई शाखारण्डको संज्ञा पनि शास्त्रहरूले दिएका छन्। यिनै शास्त्रीय वचनहरू समेत दिएर विद्वान् र मुमुक्षुका आँखा खोल्ने प्रयास गरिएको छ। यसका लागि विद्वान् र अध्येताहरूले पूर्वाग्रह, अहंमन्यता, सर्वज्ञता र क्षिद्रान्वेषीपनलाई

समेत चटक्कै त्यागेर खुला हृदयले गहिरो अध्ययन, मनन र चिन्तन गर्नु नै श्रेयस्कर हुने देखिन्छ।

बृहदारण्यकोपनिषद्को प्रथम अध्यायको चारौँ ब्राह्मणको १० औँ मन्त्रमा अनुभवात्मक महावाक्य आएको छ भने श्रवणात्मक महावाक्य भने उक्त उपनिषद्को चारौँ अध्यायको दोस्रो ब्राह्मणको चारौँ मन्त्रमा आएको छ। सामान्यरूपमा सर्वप्रथम गुरुबाट महावाक्यको श्रवण गरेपछि मनन, निदिध्यासन र ब्रह्माभ्याससमेत परिपूर्ण भएर नै ब्रह्मानुभूति अर्थात् ब्रह्मसाक्षात्कार हुने श्रुतिको कथन देखिन्छ। सामवेदशाखाध्यायीका लागि छान्दोग्योपनिषद्मा पहिले [1]त्यो तिमी हौ अर्थात् तिमी सत्‌आत्मा हौ भनेर पिता उद्दालकले उपदेश दिएपछि कालान्तरमा गएर पुत्र श्वेतकेतुलाई [2]उनी आफैँ सत्‌आत्मा भएको अनुभूति भएको देखिन्छ।

किन्तु शुक्लयजुर्वेदशाखाध्यायीका लागि बृहदारण्य-कोपनिषद्मा आएको गुरुबाट श्रवण गर्नुपर्ने [3]महावाक्य उपनिषद्को अन्त्यमा र मुमुक्षु शिष्यले [4]म ब्रह्म हुँ भनेर अनुभूति गर्ने महावाक्य चाहिँ शुरुतिर आएको हुँदा अद्वैतवेदान्तका शास्त्रीय परिपाटीको राम्रो ज्ञान नभएका विद्वान्हरूमा यसबाट भ्रम उत्पन्न भएको देखिन्छ।

---

१ तत्सत्यं स आत्मा तत्त्वमसि श्वेतकेतो। – छान्दोग्योपनिषद् ६।८।६

२ तद्धास्य विजज्ञाविति विजज्ञाविति। – छान्दोग्योपनिषद् ६।११।३

३ अभयं वै जनक प्राप्तोऽसि। – बृहदारण्यकोपनिषद् ४।२।४

४ अहं ब्रह्मास्मि। – बृहदारण्यकोपनिषद् १।४।१०

श्रवण गर्ने महावाक्य बृहदारण्यकोपनिषद्को उपान्तितिर अर्थात् चारौँ अध्यायको दोस्रो ब्राह्मणको चारौँ मन्त्रमा आएको र अनुभवात्मक महावाक्य चाहिँ उक्त उपनिषद्को शुरुमा अर्थात् प्रथम अध्यायको चारौँ ब्राह्मणको दशौँ मन्त्रमा आएको भए तापनि [५]पाठक्रम भन्दा अर्थक्रम बलवत्तर हुने शास्त्रीय वचन भएकाले महावाक्यहरू शुरुमा आए पनि अन्त्यमा आए पनि खास फरक पर्ने देखिँदैन। यस सम्बन्धमा श्रुतिमा [६]अग्निहोत्रमा हवन गर्दछ र यवागू पकाउँछ भन्ने वचन उल्टो पाल्टो भएर आएकोमा अग्निहोत्र गरेर यवागू पकाउन मिल्दैन। किन भने अग्निहोत्र गर्दा हवनीय द्रव्य यवागू भएकाले यवागू पहिले पकाउनु पर्ने हुन्छ। अतः पूर्वमीमांसाले पाठक्रमभन्दा अर्थक्रम बलियो हुन्छ भन्ने नियम बनाएको देखिन्छ। अतः महावाक्यको श्रवण गरेपछि मात्रै ब्रह्मात्मिका अनुभूति हुने उपर्युक्त न्याय यसमा पनि लागू हुने देखिन्छ।

उपर्युक्त सम्बन्धमा पूर्वमीमांसामा विनियोगबोधक [७]श्रुति, लिङ्ग, वाक्य, प्रकरण, स्थान र समाख्या समेतका ६ थरी प्रमाणहरूले उत्तरभन्दा पूर्व प्रबल हुने भनिएको हुँदा वाक्यार्थ अर्थात् पाठक्रमभन्दा श्रुतिक्रम अर्थात् अर्थक्रम नै बलियो हुने देखिन्छ। प्रकृत महावाक्यको सन्दर्भमा पनि अर्थक्रम

---

५ पाठक्रमादर्थक्रमो बलीयान्। – पूर्वमीमांसा

६ अग्निहोत्रं जुहोति यवागूं पचति। – तैत्तिरीयसंहिता १।५।९।१

७ श्रुतिलिङ्गवाक्यप्रकरणस्थानसमाख्यानां समवाये पारदौर्बल्यमर्थविप्रकर्षात्।
– पूर्वमीमांसा ३।३।१३

अनुसार अनुभवात्मक वाक्यभन्दा उपदेशात्मक वाक्य प्रबल हुने तथ्य प्रमाणित हुन्छ। यही नै तथ्य श्रुति अनुकूल देखिन्छ।

उपर्युक्त अनुसार उपनिषद्मा तलमाथि भएर आएका श्रवणात्मक महावाक्य र उपदेशात्मक महावाक्यहरूको पाठक्रम जहाँ भए पनि अर्थक्रम अनुसार बुझ्नुपर्ने अर्थात् श्रवण गर्नुपर्ने र तत्पश्चात् मात्रै ब्रह्मसाक्षात्कार हुन सक्ने देखिएको हुँदा शास्त्रले पाठक्रमभन्दा अर्थक्रम नै बलवत्तर हुने नियम निर्धारण गरेको हुनुपर्दछ। यसै तथ्यलाई स्वीकार गरेर भाष्यकार भगवत्पाद आद्यजगद्गुरु श्रीशङ्कराचार्यले ब्रह्मसूत्रको *'तत्तुसमन्वयात्' (१।१।४।४)* सूत्रको आफ्नू भाष्यमा श्रवणात्मक महावाक्य *'अभयं वै जनक प्राप्तोऽसि।'* *(ब्र.सू. ४।२।४)* लाई पहिले राखेर र अनुभवात्मक महावाक्य *'तदात्मानमेवावेदहं ब्रह्मास्मीति' 'तस्मात्तत्सर्वमभवत्।'* *(बृ.उ.१।४।१०)* लाई पछि राखेर पाठक्रमभन्दा अर्थक्रमलाई मान्यता दिनु भएको देखिन्छ। अतः यसरी विवेचना गर्दा शुक्लयजुर्वेदी मुमुक्षुहरूले श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट श्रवण गर्नुपर्ने वैदिक महावाक्य उपर्युक्त पङ्क्तिहरूमा उल्लिखित *'अभयं वै जनक प्राप्तोऽसि'* नै भएको सबै प्रमाणहरूबाट प्रमाणित हुन्छ। ॐ ब्रह्मार्पणमस्तु।

# २४. पुंसां श्लाघ्यतमं मन्ये

भगवान् श्रीविष्णुलाई भाइको वध गर्ने शत्रु ठानेर उहाँलाई मार्न वैकुण्ठसम्म जान सक्ने दुर्दान्त दैत्यराज हिरण्यकशिपुका पनाति, भगवान् श्रीविष्णुका अनन्य भक्त भक्तशिरोमणि दैत्यराज प्रह्लादका नाति र वदान्य दैत्यराज विरोचनका यशस्वी पुत्र दैत्यराज बलि स्वर्गका राजा थिए। प्रपितामह हिरण्यकशिपुकै सन्तान भए पनि बलिमा हिरण्यकशिपुको जस्तो दुच्छर तथा रजोगुणी स्वभाव नभएर प्रपितामह भक्तराज प्रह्लादको जस्तो शालीन तथा सत्त्वगुणी शान्त स्वभाव थियो।

भगवान् श्रीवामनलाई दानस्वरूप तीन पाउ जमीन दिने प्रतिज्ञा गरेका दानवीर बलिलाई कुलगुरु शुक्राचार्यले रोक्ता रोक्तै पनि गुरुको कोपभाजन समेत भएर पनि उनले तीन पाउ जमीन अर्थात् तीनै लोक दान गर्ने अभूतपूर्व साहस देखाए। दान दिइसकेपछि पनि उनी उल्टै प्रताडित र वरुणपाशबाट बाँधिन पनि पुगे। भगवान्ले जतिसुकै तिरस्कार, बेइज्जत र दुःखसमेत दिएर परीक्षा लिन खोजे पनि उनी धैर्यबाट पटक्कै विचलित भएनन्।

त्यति हुँदा पनि दानराज दानवराज बलिले भगवान्सँग दुःख मनाउ गर्नुको साटो भगवान्बाट दण्डरूपशिक्षा पाएकोमा भगवान्प्रति कृतज्ञता प्रकट गर्दै भगवान्को स्तुति

गर्दै भने – [1]आफ्ना पूजनीय गुरुजनले दिएको दण्ड चाहिँ अत्यन्त शिक्षाप्रद र वाञ्छनीय समेत हुन्छ। किन्तु त्यस्तो दण्ड माता, पिता, भाइ र सुहृद्हरू पनि प्रेमवश वा मोहवश दिनसक्तैनन्। परन्तु [2]हे भगवन्! हजूर आफ्ना माता, पिता, भाइ र सृहृद् भन्दा पनि बढी परोक्ष्यरूपबाट नै भए हामी असुरहरूलाई श्रेष्ठ शिक्षा दिने गर्नुहुन्छ। त्यसका लागि जब हामीहरू आफ्नू धन, कुलीनता, बल आदिका मदले अन्धा हुन्छौँ, तब त्यस अवस्थामा हजूर ती सबै मायिक तुच्छ वस्तुहरू हामीहरूबाट खोसेर हाम्रा आँखा खोलिदिनु हुन्छ। [3]हे भगवन्! हजूरबाट हामी दैत्यहरूको जुन उपकार भएको छ, म त्यसको बयान नै गर्न सक्तिन। किनभने अनन्यभावले योग गर्ने भएका योगीहरूले जुन सिद्धि प्राप्त गर्दछन्, त्यही सिद्धि धेरै असुर र दैत्यहरू हजूरसँग दृढ वैरभाव गर्दाखेरि नै प्राप्त गर्दछन्।

भागवतका दानवीर राजा बलि वस्तुतः संसारी राजा नभएर पूर्ण स्थितप्रज्ञ सन्न्यासी देखिन्छन्। किनभने [4]जुन व्यक्ति दुःख पर्दा उद्विग्न हुँदैन अर्थात् आत्तिदैन र सुखमा

---

१ पुंसां श्लाघ्यतमं मन्ये दण्डमर्हत्तमार्पितम्।
यं न माता पिता भ्राता सुहृदश्चादिशन्ति हि ॥ – भागवत ८।२२।४

२ त्वं नूनमसुराणां नः पारोक्ष्यः परमो गुरुः।
यो नोऽनेकमदान्धानां विभ्रंशं चक्षुरादिशत् ॥ – भागवत ८।२२।५

३ यस्मिन् वैरानुबन्धेन रूढेन विबुधेतराः।
बहवो लेभिरे सिद्धिं यामु हैकान्तयोगिनः ॥ – भागवत ८।२२।६

४ दुःखेष्वनिद्विग्नमनाः सुखेषु विगतस्पृहः।
वीतरागभयक्रोधः स्थितधीर्मुनिरुच्यते ॥ – गीता २।५६

मात्तिदैन, जसका अन्तःकरणबाट राग, भय र क्रोधसमेत हटिसकेका छन्, त्यो नै स्थितप्रज्ञ वा स्थितधी हो भनेर भगवान् श्रीकृष्णले भन्नुभएको छ ।

हे दीनवत्सल ! भगवन् ! जसको यस्तो महिमा र यस्तो अनन्त लीला छ, सोही प्रभुले मलाई दण्ड दिइरहनु भएको छ र [५]वरुणपाशले बाँधिरहनु भएको छ भने यसबाट न मलाई लाज छ, न कुनै दुःख वा व्यथा नै छ। किनभने जे गरे पनि हजूरले मेरो भलाइका लागि नै गरिरहनुभएको छ।

कश्यप वा हिरण्यकशिपुको वंशज हुँ भन्ने भावनाभन्दा पनि बढी भक्तराज प्रह्लादको वंशज हुँ भन्न मन पराउने राजा बलिले सङ्कष्ट पर्दा जहिले पनि प्रह्लादको संझना गरेको पाइन्छ। भगवान्‌बाट सर्वस्व ग्रहण भएपछि पनि आफू वरुणपाशले बाँधिनु परेको त्यस आपत्तिको बेलामा पनि उनले पितामह प्रह्लादकै स्मरण गरेको देखिन्छ । दानवीर बलि भन्छन् – [६]हे प्रभो ! मेरा पितामह प्रह्लादजीको कीर्ति सम्पूर्ण जगत्‌मा प्रसिद्ध छ। हजूरसँग शत्रुभाव राख्नाले हजूरका परम भक्त प्रह्लादजीलाई उहाँका पिता हिरण्यकशिपुले अनेक प्रकारका दुःखहरू दिए, तथापि प्रह्लादजी हजूरको भक्त भई नै रहनुभयो । उहाँले आफ्नो सम्पूर्ण जीवन हजूरलाई समर्पण गर्नुभयो ।

---

५ तेनाहं निगृहीतोऽस्मि भवता भूरिकर्मणा ।
बद्धश्च वारुणैः पाशैर्नातिव्रीडे न च व्यथे ॥ – भागवत ८।२२।७

६ पितामहो मे भवदीयसम्मतः प्रह्लाद आविष्कृतसाधुवादः ।
भवद्विपक्षेण विचित्रवैशसं सम्प्रापितस्त्वत्परमः स्वपित्रा ।
– भागवत ८।२२।८

त्यतिमात्रै नभएर आफ्ना पितामह प्रह्लादजी अत्यन्त विरक्त भएकाले यस मायिक मिथ्या संसारप्रति र आफ्नै मिथ्या शरीरप्रति पनि अर्थात् गौण आत्मा, स्त्री, पुत्र र धनसम्पत्तिप्रति पनि [७]आसक्ति र अभिष्वङ्ग नरहेको वस्तुतथ्यको वर्णन भगवान्लाई गर्दै उनी पितामह प्रह्लादको निश्चय सुनाउँदै भन्दछन्– [८]यस शरीरप्रति अत्यन्त हिरिक्क किन हुने ? जब यो शरीर कुनै न कुनै दिन आत्मालाई त्यागेर शव भइहाल्दछ। आफ्ना स्वजनरूपी डाकाहरूसँग स्नेह गरेर पनि कुनै प्रयोजन छैन, किनभने उनीहरू धनसम्पत्ति हत्याउन नै आफन्त बनेका हुन्छन्। पत्नीसँग पनि के प्रयोजन ? जब पत्नी नै यस मायिक दुश्चक्रमा बारम्बार ल्याएर घुमाइरहने कारण बन्दछिन्। गौण आत्मा मध्येको एक आत्मा मानिने घरले पनि के फाइदा ? जब घरको आसक्ति लिएर त्यस घरमा सुत्ता र वास बस्ताबस्तै आफ्नू आयु समाप्त भएर मृत्यु भइहाल्दछ।

त्यतिमात्रै होइन, मृत्युबाट अभय प्रदान गर्न नसक्ने कोही पनि आफन्त होइनन् भन्ने भगवान् श्रीऋषभदेव उपदेशको स्मरण गर्दै राजा बलि अगाडि भन्दछन् – जसले आफ्ना शिष्य र सम्बन्धीहरूलाई भगवद्भक्ति र आत्मज्ञानको उपदेश दिएर मृत्युको विकराल मुखबाट जोगाउन सक्तैन त्यो [९]गुरु नै

७ असक्तिरनभिष्वङ्ग पुत्रदारगृहादिषु। – गीता १३।८

८ किमात्मनानेन जहाति योऽन्ततः किं रिक्थहारैः स्वजनाख्यदस्युभिः।
किं जायया संसृतिहेतुभूतया मर्त्यस्य देहैः किमिहायुषो व्ययः॥
– भागवत ८।२२।९

९ गुरुर्न स स्यात्स्वजनो न स स्यात्पिता स स्याज्जननी न सा स्यात्।
दैवं न तत्स्यान्न पतिश्च स स्यान्न मोचयेद्यः समुपेतमृत्युम्॥
– भागवत ५।५।१८

होइन, स्वजन पनि स्वजन होइनन्, पिता पनि पिता होइनन्, माता पनि माता होइनन्, इष्टदेव पनि साँच्चै इष्टदेव होइनन् र मृत्युबाट जोगाउन नसक्ने पति पनि पति होइनन् ।

यसै पारमार्थिक सत्यलाई बुझेर [10]निश्चयात्मक बुद्धिले मेरा पितामह प्रह्लादजीले हजूरलाई उनका बाबु, काका र भाइबन्धुहरूका शत्रु र नाशकर्ता भन्ने थाहा पाउँदा पाउँदै पनि हजूर अभयस्वरूप ब्रह्म भएकाले मृत्युको भयबाट अभय प्राप्त गर्न हजूरका भयरहित र अविनाशी चरणकमलहरूलाई ग्रहण गर्नुभयो। हुन पनि प्रह्लादजी संसारदेखि परम विरक्त अगाध बोधले सम्पन्न, उदार हृदय एवं सन्तशिरोमणि थिए।

हे भगवन् ! यदि परम्परागत सोच राखेर [11]विचार गर्ने हो भने हजूर मेरा पनि शत्रु हुनुहुन्छ। यसो हुँदाहुँदै मैले सम्पूर्ण ऐश्वर्य हजूरलाई समर्पण गरेर म हजूरका शरणमा अहिले परेको छु । जे भयो राम्रै भयो। किनभने ऐश्वर्यलक्ष्मीका कारण जीवात्माको बुद्धि जड र स्तब्ध हुन्छ। त्यस मदान्ध पुरुषले आफ्नू जीवन मृत्युका मुखमा पर्दै गएको र जीवन अत्यन्त अनित्य भएको पनि थाहा पाउँदैन।

राजा बलिको उपर्युक्त अभिव्यक्तिमा भगवान्प्रति गुनासो

---

१० इत्थं स निश्चित्य पितामहो महानगाधबोधो भवतः पादपद्मम् ।
ध्रुवं प्रपेदे ह्यकुतोभयं जनाद् भीतः स्वपक्षक्षपणस्य सत्तमः ॥
– भागवत ८।२२।१०

११ अथाहमप्यात्मरिपोस्तवान्तिकं दैवेन नीतः प्रसभं त्याजितश्रीः ।
इदं कृतान्तातिकवर्ति जीवितं ययाध्रुवं स्तब्धमतिर्न बुध्यते ॥
– भागवत ८।२२।११

र आदरभाव दुवै मिश्रित देखिन्छ। त्यतिमात्रै होइन उनको अन्तःकरण एकातर्फ प्रपितामह हिरण्यकशिपुको भगवान्प्रतिको घृणा, वैरभाव र प्रतिशोधभावको प्रसुप्त वासना सूक्ष्मरूपमा लुकेर बसेको भाव पाइन्छ भने अर्कोतर्फ प्रपितामह भक्तराज प्रह्लादको भगवान्प्रतिको अनन्य भक्ति, श्रद्धा र सर्वतो भावेन समर्पण भाव पनि पाइन्छ। राज्यश्री छलकपटपूर्ण तरिकाले अपरण गरिएकोमा भित्रभित्रै प्रतिशोधको आगो सल्किरहेको भाव पनि उनमा देखिन्छ। दैत्यकुलका धमनीमा बहने रक्तकणमा भगवान्प्रतिको जन्मजात वैरभाव प्रक्षिप्तरूपले रहेको भान हुन्छ। उनले आफ्ना कमजोरीहरूलाई लुकाउन भगवान्का जन्मजात परमभक्त र प्रिय पितामह प्रह्लादको नाम बारम्बार लिएको पनि हुनसक्तछ।

उपर्युक्त अनुसार पितामहलाई बारम्बार संझना गरेका समयमा नै वरुणपाशबाट बाँधिएका नाति बलिलाई भेट्न भगवान् वामनरूपी विराट्रूपधारी त्रिविक्रम श्रीविष्णुका समक्ष प्रह्लादजी आइपुगे। बाँधिएका बलिले आँखा भरि आँसु पार्दै र लाज मान्दै प्रपितामह प्रह्लादलाई शिरमात्र झुकाएर नमस्कार गरे। आफ्ना पार्षदहरूले सेवित भगवान्लाई सश्रद्ध साष्टाङ्ग प्रणाम गरेर गदगद वाणीमा स्तुति गर्दै प्रह्लादले भन्न थाले – [१२]हे भगवन् ! हजूरले नै बलिलाई समृद्धिपूर्ण स्वर्गको राज्य

---

१२ त्वयैव दत्तं पदमैन्द्रमूर्जितं हृतं तदेवाद्य तथैव शोभनम्।
मन्ये महानस्य कृतो ह्यनुग्रहो विभ्रंशितो यच्छ्रिय आत्ममोहनात्॥
– भागवत ८।२२।१६

दिनुभएको हो र अहिले आएर फेरि हजूरले नै बलिबाट अपहरण गर्नुभयो। हजूरको दिने काम जति सुन्दर हुन्छ लिने काम पनि उति नै सुन्दर हुन्छ। हजूरले मेरो नाति बलिमाथि अत्यन्त ठूलो कृपा गर्नुभयो भन्ने मैले ठानेको छु। किनभने आत्मालाई मोहित बनाएर पथभ्रष्ट बनाउने स्वर्गको राज्यलक्ष्मीद्वारा बलिलाई छुटकारा दिएर उनको श्रेयोमार्ग हजूरले खोलिदिनु भयो।

त्यतिमात्रै होइन, [१३]भगवन् ! लक्ष्मीका मदद्वारा विद्वान् पनि मोहित हुन्छन्। सम्पत्ति, सत्ता र शक्ति रहुन्जेल आफ्नू वास्तविक ब्रह्मस्वरूपलाई कसैले पनि जान्न सक्तैन। यस परिप्रेक्ष्यमा विचार गर्दा बलिलाई मदमत्त बनाउनसक्ने राज्यसम्पदा, सत्ता र शक्ति समेत अपहरण गरेर हजूरले उनको महान् उपकार गर्नुभयो। सम्पूर्ण जगत्को सञ्चालक, पालक र नियन्त्रक हजूर परमात्मा हुनुहुन्छ। सबैका अन्तःकरणमा अन्तर्यामी र साक्षीका रूपमा अहर्निश बस्नु हुने श्रीनारायणलाई म भक्तिपूर्वक नमस्कार गर्दछु।

भक्तराज प्रह्लाद पूर्वजन्मका भगवान् श्रीविष्णुका पार्षद जयलाई ऋषिका शापका कारण दैत्यराज हिरण्यकशिपु भएर पिता ऋषि कश्यप र दक्षपुत्री माता दितिबाट जन्मेका दैत्यका सन्तान हुन्। वस्तुतः हिरण्यकशिपु नै ऋषिपुत्र हुन् भने प्रह्लादलाई दैत्य वा असुर तमोगुणी कसरी भन्ने ? दैत्यभाव,

१३ यया हि विद्वानपि मुह्यते यतस्तत् को विचष्टे गतिमात्मनो यथा।
तस्मै नमस्ते जगदीश्वराय वै नारायणायाखिललोकसाक्षिणे॥
– भागवत ८।२२।१७

आसुरभाव, आचरण हो, भावना हो, तमोगुणी र रजोगुणी प्रवृत्ति हो। हिरण्यकशिपु अत्यन्त स्वार्थ, क्रोध, असूया, परपीडक प्रवृत्ति भएका दैत्य र राक्षस वा असुर थिए। आसुर सम्पत्ति भनिएको आसुरी प्रवृत्ति हो, किन्तु प्रह्लादमा त्यस्तो रजोगुणी भावना र दुर्गुण थिएन। उनी सत्त्वगुणले सम्पन्न र भगवान्का परम भक्त थिए। तथापि उनमा पनि दैत्यकुलमा जन्मिनु परेकोमा हीनताबोध थियो। त्यो कुरा उनले गरेको भगवान् श्रीनृसिंहको स्तुतिको क्रममा देखापर्दछ। [१४]हे भगवन् ! म अत्यन्त तल्लो तहको असुरवंशमा रजोगुणद्वारा उत्पन्न भएको व्यक्ति हुँ किन्तु हजूर भने शुद्ध स्वरूप ब्रह्म हुनुहुन्छ। हजूरबाट ममाथि जुन असीम कृपा भयो यसका लागि म कृतकृत्य छु। प्रह्लादले यस भनाइबाट पिता हिरण्यकशिपुको पुत्रका नाताले उनका अन्तःकरणमा लुकेर रहेको रजोगुणी संस्कार र वासनाको अभिव्यक्ति परोक्षरूपमा थियो, किन्तु सोझै भने थिएन भन्ने देखिन्छ।

यसरी प्रह्लादजीले आफूलाई सुरेतर अर्थात् असुर कुलमा जन्मिएको भनेर हीनताबोध देखाएका छन्। वस्तुतः सुर र असुर भनेको कुल वा वंश नभएर प्रवृत्ति वा प्रकृतिलाई लिनुपर्दछ। [१५]यस लोकमा दुई प्रकारका प्राणीहरू छन्, ती हुन् दैवी प्रकृति र आसुरी प्रकृति। त्यसैलाई सम्पद् पनि

---

१४ क्वाहं रजःप्रभव ईश तमोऽधिकेऽस्मि-
ञ्जातः सुरेतरकुले क्वं तवानुकम्पा ॥ – भागवत ७।९।२६

१५ द्वौ भूतसर्गौ लोकेऽस्मिन्दैव आसुर एव च। – गीता १६।६

भनिन्छ। दैवी सम्पद्‌मा [16]हिंसा नगर्नु, साँचो बोल्नु, क्रोध नगर्नु, त्याग गर्नु, मनलाई शान्त राख्नु, चुक्ली नगर्नु, दीन दुःखी प्राणीलाई दया गर्नु, विकाररहित हुनु, नरम हुनु, निषिद्ध कर्म गर्न लाज मान्नु र चञ्चल नहुनु पर्दछन्। साथै तेजस्विता, सहनशीलता, धैर्य, शुद्धता, द्रोह नगर्नु र मान नखोज्नु पनि दैवी सम्पद्‌मा पर्दछन्। किन्तु यसका विपरीत आसुरी सम्पद् लिएर जन्मेका पुरुषमा दम्भ, दर्प, अभिमान, क्रोध, कठोरता र अज्ञान समेतका लक्षण देखिन्छन्। उपर्युक्त दैवी सम्पद्‌हरू मोक्षका लागि हुन्छन् भने आसुरी सम्पद् बन्धनका लागि हुने भनेर गीतामा भगवान्‌को भनाइ आएको हुँदा प्रह्लादको भगवान्‌प्रति व्यक्त गुनासो ठीकै देखिन्छ।

यसरी राज्यश्रीसमेतको अपहरण र वरुणपासबाट राजा बलि बाँधिएपछि सबैतिर हाहाकार मच्चियो। दैत्यकुल शोकाकुल, उद्विग्न र उत्तेजित हुन गयो भने देवताहरू सत्ता पुनः प्राप्त हुने भएकाले अत्यन्त हर्षित थिए। बलिका परिवारका सदस्यहरू अत्यन्त दुःखी भए। यो अशुभ समाचार सुनेपछि राजा बलिका हितचिन्तक सबै जना बलि बाँधिएका स्थानमा आइपुगे। आउने मध्ये मूल पुरुष ब्रह्माजीसमेत

---

१६ अहिंसा सत्यमक्रोधस्त्यागः शान्तिरपैशुनम्।
दया भूतेष्वलोलुप्तं मार्दवं ह्रीरचापलम्।
तेजः क्षमा धृतिः शौचमद्रोहो नातिमानिता।
दम्भो दर्पोऽभिमानश्च क्रोधः पारुष्यमेव च।
अज्ञानञ्चाभिजातस्य पार्थ सम्पदमासुरिम्॥
दैवी सम्पद् विमोक्षाय निबन्धायाऽसुरी मता॥ – गीता १६,२,३,४,५

हुनुहुन्थ्यो ।

त्यसै बीचमा राजा बलिकी धर्मपत्नी विन्ध्यावली अत्यन्त विह्वल भएर शिर निहुऱ्याएर स्तुति गर्दै भन्दछिन् – हे भगवन् ! [१७]हजूरले आफ्नै क्रीडाका लागि नै यस सम्पूर्ण जगत्को अर्थात् तीनै लोक सहित अखिल ब्रह्माण्डको रचना गर्नुभएको हो । ती सबै कुबुद्धि अर्थात् बुद्धिविहीन हुन् जसले यस भगवान्प्रदत्त सम्पदालाई आफ्नू ठान्दछन् अथवा आफूलाई यसको स्वामी मान्दछन् । किन्तु यस सम्पूर्ण जगत्का सृष्टिकर्ता, पालनकर्ता र संहारकर्ता हजूर नै हुनुहुन्छ। यस प्रकारको यथार्थ सत्य हुँदाहुँदै पनि हजूरकी अनिर्वचनीया मायाद्वारा मोहित भएर आध्यासिक रूपमा तथाकथित स्वामी र कर्ता आफैँ भएको मान्ने अहङ्कारी र निर्लज्ज अज्ञानीले हजूरलाई केही पनि समर्पण गर्न न गरेर त्यसै मरेर जान्छन् ।

विन्ध्यावलीको उक्त स्तुतिमा नारीसुलभ वेदना करुण पुकार, किंकर्तव्यविमूढता, निरीहता, गुनासो, शास्त्रीय तथ्य र त्याग गर्नु पर्छ भन्ने उदात्तभावना पनि पाइन्छ। यो सम्पूर्ण दृश्य जगत् [१८]भगवान्को लीला हो। भगवान्ले क्रीडाका लागि रचना गर्नुभएको खेलौना हो भन्ने जुन अभिव्यक्ति हो, त्यो अद्वैत वेदान्तसम्मत उद्गार हो। यसका अतिरिक्त

---

१७ क्रीडार्थमात्मन इदं त्रिजगत्कृतं ते स्वाम्यन्तु तत्र कुधियोऽपर ईश कुर्युः ।
कर्तुः प्रभोस्तव किमस्यत आवहन्ति त्यक्तह्रियस्त्वदवरोपितकर्तृवादाः ॥
– भागवत ८।२२।२०

१८ लोकवत्तु लीलाकैवल्यम् । – ब्रह्मसूत्र २।१।११।३३

विन्ध्यावलीले [१९]सांसारिक सम्पदा व्यक्तिको नभएर उही परमात्माको हो भनेर औपनिषद सिद्धान्त बोलेकी थिइन्। अतः यस दृष्टिकोणले पनि उनी सबैभन्दा माथि उच्च आदर्श र उच्च विचार भएकी उदाहरणीया नारी हुन् भन्ने देखिन्छ।

अन्त्यमा भगवान्को स्तुति गर्दै ब्रह्माजी भन्नुहुन्छ – [२०]हे भगवन् ! जुन मनुष्य सोझो मनले उदारतापूर्वक हजूरका चरणमा केवल जल अर्पण गर्दछ र दूबो चढाएर मात्रै पनि हजूरको शुद्ध पूजा गर्दछ उसलाई उत्तम गति प्राप्त हुन्छ भने यी राजा बलिले अत्यन्त प्रसन्न भएर धैर्य र स्थिरतापूर्वक हजूरलाई त्रिलोकीको नै दान गरेका छन्। त्यति मात्रै होइन, हजूरको तेस्रो पाउ राख्नका लागि आफ्नू शिर अर्थात् शरीर नै समर्पण गरिसकेका छन् भने यति ठूला त्यागी र दानी पुरुष कुनै हालतमा पनि दुःखका भागी हुनुहुँदैन।

उपर्युक्त पौराणिक आख्यान सत्य नहुन पनि सक्तछ। भगवान्ले राजा बलिबाट त्रिलोकीको दानमा नलिएको पनि हुनसक्तछ। किन्तु मायिक सम्पदा माथिको कामना र एषणा रहुन्जेल परमात्माको प्रसाद वा अनुग्रह भने साधकले प्राप्त गर्न सक्तैन भन्ने शिक्षा दिनको लागि नै यो उपख्यान भगवतमा

---

१९ ईशा वास्यमिदं सर्वं यत्किञ्च जगत्याञ्जगत्।
तेन त्यक्तेन भुञ्जीथा मा गृधः कस्यस्विद्धनम् ॥ – ईशावास्योपनिषद् १

२० यत्पादयोरशठधीः सलिलं प्रदाय दुर्वाङ्कुरैरपि विधाय सतीं सपर्याम्।
अप्युत्तमां गतिमसौ भजते त्रिलोकीं दाश्वानविक्लवमनाः कथमार्तिमृच्छेत् ॥
– भागवत ८।२२।२३

आएको हुनसक्तछ। ब्रह्माजीलाई सम्बोधन गर्ने क्रममा बलिको सर्वथा कल्याणको लागि नै उनको सर्वस्व हरण र निग्रह समेत गरेको कुरा भगवान्‌ले बताउनु भएको बाट पनि यसको सङ्केत प्राप्त हुन्छ।

अन्त्यमा भगवान् ब्रह्माजीलाई सम्बोधन गर्दै भन्नुहुन्छ– हे ब्रह्माजी ! म जसमाथि कृपा गर्दछु सर्वप्रथम उसको सम्पदा अपहरण गर्दछु। किनभने जबसम्म मनुष्य धनसम्पत्तिका मदले मदमत्त हुन्छ, तबसम्म उसले मेरो र मेरा भक्त ज्ञानीहरूको तिरस्कार र उपेक्षा गर्दछ। मायिक संसारलाई अन्तिम सत्य ठानेर यसैमा हिरिक्क हुने र रमाउने संसारी अज्ञानी आफ्नै सकाम र निषिद्ध कर्महरूबाट प्राप्त कर्मफल भोग्दै विवश भएर विभिन्न चौरासी लाख योनिमा घुमिरहन्छ। यदि कहीँ, कतै, कुनैबेला मेरो कृपा प्राप्त गर्न सकेमा त्यसपछि त्यस दुःखी जीवले मनुष्यको योनि प्राप्त गर्नसक्तछ।

जन्मजन्मान्तरको पुण्यको परिपाक भएपछि जीवले अत्यन्त मुस्किलले धेरै समयपछि मनुष्यको योनि प्राप्त गर्दछ। त्यस्तो अमूल्य र दुर्लभ नरयोनि पाएको बेलामा पनि [२१]यदि मनुष्यलाई आफ्नू कुलीनता, कर्म, अवस्था, रूप, विद्या, ऐश्वर्य आदिका कारण घमण्ड भएन भने र भक्ति र ज्ञानको

---

२१ मामैश्वर्यश्रीमदान्धो दण्डपाणिं न पश्यति।
तं भ्रंशयामि सम्पद्भ्यो यस्य चेच्छाम्यनुग्रहम् ॥ – भागवत १०।२७।१६
जन्मकर्मवयोरूपविद्यैश्वर्यधनादिभिः।
यद्यस्य न भवेत् साम्भस्तत्रायं मदनुग्रहः ॥ – भागवत ८।२२।२६

मार्गमा ऊ प्रवृत्त भइरहन सक्यो भने त्यसमाथि मेरो कृपा भयो भनेर जाने हुन्छ भनेर भगवान्‌ले भन्नुभएको छ ।

कुलीनता आदि यस्ता धेरै कारणहरू छन्, जसले अभिमान र जडता समेत उत्पन्न गरेर मनुष्यलाई कल्याणका सबै साधनहरूबाट वञ्चित गरिदिन्छन् । किन्तु जुन व्यक्ति मेरो शरणमा आउँछन् ती भने त्यस्ता कुलीनता आदिबाट मोहित हुँदैनन् र उनीहरू आत्मकल्याणका मार्गमा सधैँ अग्रसर हुन सफल हुन्छन् ।

राजा बलिको कल्याणका लागि नै भगवान्‌ले कृपा गरेर उनको सर्वस्व हरण गरेको कटुसत्य भगवान्‌को उक्त भनाइबाट ज्ञात हुन्छ । यो आख्यान [२२]श्रुतिमा सङ्क्षिप्तरूपमा आएको छ । त्यसैलाई भगवान् व्यासले भागवतमा साधारणीकरण गरेर बोधप्रसङ्गका रूपमा राजा बलि जस्ता पात्रहरू खडा गरेर प्रस्तुत गरेको देखिन्छ । वस्तुतः यो हाम्रै कथा हो, हाम्रै प्रतिच्छाया हो र अन्ततः हाम्रा नै लागि हो, हाम्रो चेतना भएमा । ॐ ब्रह्मार्पणमस्तु ।

❀

२२ (क) इदं विष्णुर्विचक्रमे त्रेधा निदधे पदम् । समूढमस्य पांसुरे ।
(ख) तद्विष्णोः परमं पदं सदा पश्यन्ति सूरयः । दिवीव चक्षुराततम् ।
– शुक्लयजुर्वेद ५।१५ र ६।५

# २५. पुर्यष्टक

पुर्यष्टक शब्द पुरी र अष्टक मिलेर बन्दछ। पुरी अर्थात् समूह हो भने अष्टक अर्थात् आठ हो। [1]पुर्यष्टकमा आठथरी जमात रहन्छन्। ती हुन् १. वागादि पाँच कर्मेन्द्रियहरू, २. श्रोत्रादि पाँच ज्ञानेन्द्रियहरू, ३. प्राणादि पाँच प्राणहरू, ४. आकाशादि पाँच महाभूतहरू, ५. बुद्धि आदि अन्तःकरणचतुष्टय, ६. अविद्या, काम र कर्म। त्यसैको समूहलाई वा समष्टिलाई सूक्ष्मशरीर भनेर पैङ्गलोपनिषद्मा उल्लेख भएको पाइन्छ। सोही सङ्ख्या नै [2]श्रीशङ्कराचार्यले पनि आफ्नू ग्रन्थमा दिनुभएको छ।

सूक्ष्मशरीरको सूक्ष्मरूपमा परिचय दिँदै श्रीशङ्कर आफ्नू अर्को ग्रन्थ तत्त्वबोधमा लेख्नुहुन्छ – [3]पञ्चीकरण नभएको, महाभूत अर्थात् पञ्चतन्मात्रबाट बनेको, सत्कर्मबाट उत्पन्न भएको र सुखदुःखादिभोगको साधन भएको, पाँच ज्ञानेन्द्रियहरू, पाँच कर्मेन्द्रियहरू, पाँच प्राणहरू, एउटा मन र एउटा बुद्धिसमेत

---

१ अथ ज्ञानेन्द्रियपञ्चकं कर्मेन्द्रियपञ्चकं प्राणादिपञ्चकं विषयादिपञ्चकमन्तःकरणचतुष्टयं कामकर्मतमांस्यष्टपुरम्। – पैङ्गलोपनिषद् २

२ वागादिपञ्च श्रवणादिपञ्च प्राणादिपञ्चाऽभ्रमुखानिपञ्च।
बुद्ध्याद्यविद्यापि च कामकर्मणी पुर्यष्टकं सूक्ष्मशरीरमाहुः॥
– विवेकचूडामणि ९८

३ अपञ्चीकृतपञ्चमहाभूतैः कृतं सत्कर्मजन्यं सुखदुःखादिभोगसाधनं पञ्च ज्ञानेन्द्रियाणि पञ्च कर्मेन्द्रियाणि पञ्च प्राणादयः मनश्चैकं बुद्धिश्चैका एवं सप्तदशकलाभिः सह यत्तिष्ठति तत्सूक्ष्मशरीरम्। – तत्त्वबोध

गरी सत्र तत्त्व वा कलाले बनेको वस्तुलाई सूक्ष्म शरीर भनिन्छ।

उपर्युक्त पुर्यष्टक २७ तत्त्वहरू मिलेर बन्दछ भने सूक्ष्म शरीर चाहिँ १७ तत्त्वहरू मिलेर बन्ने भनिएको छ। पुर्यष्टकलाई पनि सूक्ष्म शरीर नै भनिएको छ। पुर्यष्टक संज्ञक सूक्ष्म शरीरमा आकाशादि पञ्च महाभूत, चित्त, अहङ्कार, अविद्या, काम र कर्मसमेत गरेर १० तत्त्वहरू शुद्ध सूक्ष्म शरीरभन्दा बढी देखिन्छन्। श्रीशङ्कराचार्यले पुर्यष्टकलाई पनि सूक्ष्म शरीर नै भन्नुभएको छ।

पुर्यष्टकको चर्चा अरू आचार्यहरूका ग्रन्थहरूमा पनि पाइन्छ। आचार्य [४]सर्वज्ञात्ममुनिले आफ्नू ग्रन्थ 'सङ्क्षेपशारीरकम्' मा यसको उल्लेख विशदरूपमा गर्नुभएको छ। पैङ्गलोपनिषद्मा र आचार्य शङ्करले उल्लेख गर्नुभए जस्तै मुनिले पनि आठ थरी पुरीमा आठ थरी तत्त्वको पुरिया बनाएर पुर्यष्टक भन्नुभएको छ। पुर्यष्टकको बनावटका बारेमा खास विशेषता नदेखाइएको भए तापनि मुनिले पुर्यष्टकका कार्यका बारेमा विशद चर्चा भने गर्नुभएको छ।

चिदात्मामा स्वतः दुःखको लेशसम्म पनि रहँदै। किन्तु अज्ञानजन्य [५]पुर्यष्टकमा संसर्गाध्यास भएका कारण आत्मा

---

४ कर्मेन्द्रियाणि खलु पञ्च तथाऽपराणि बुद्धीन्द्रियाणि मन आदि चतुष्टयञ्च।
प्राणादिपञ्चकमथो वियदादिकञ्च कामश्च कर्म च तमो पुनरष्टमी पूः॥
– सङ्क्षेपशारीरकम् ३।१६

५ पुर्यष्टकं भवति तस्य परस्य मोहात् तेनान्वितस्य तु नभोमलवद्व्यलीकम्।
दुःखं त्रिधा भवति संसरणाभिधानं नान्यः परादधिकरूपभृदस्ति जीवः॥
– सङ्क्षेपशारीरकम् ३।९

आध्यात्मिक, आधिभौतिक र आधिदैविक त्रिविध दुःखहरूको अनुभव गर्दछ। वास्तवमा आत्मामा मोहका कारण पुर्यष्टक उत्पन्न हुन्छ। त्यसबाट अन्वित आत्मामा संसरण नामक त्रिविध दुःख आकाशगत नीलिमाका समान प्रातिभासिक मात्र हो, वास्तविक होइन।

उपर्युक्त पुर्यष्टकमा २७ तत्त्वहरू र सूक्ष्मशरीरमा १७ तत्त्वहरू हुने कुरा माथि भनिसकियो। सामान्यरूपमा पुर्यष्टक पनि सूक्ष्म शरीर नै भएको कुरा पत्यार लाग्दैन। किनभने सूक्ष्म शरीरमा आकाशादि पञ्चमहाभूतहरू रहन नसक्ने देखिन्छ। किन्तु [६]पुर्यष्टक पनि लिङ्गशरीर अर्थात् सूक्ष्मशरीर नै हो। त्यसैकारण यसलाई पनि कहीँकहीँ लिङ्ग शब्दद्वारा अभिहित गरिन्छ। पुर्यष्टक चाहिँ लिङ्ग शब्दको मुख्य अर्थ होइन। किनभने सत्र तत्त्वको नै लिङ्गशरीर अर्थात् सूक्ष्मशरीर भनेर प्रसिद्ध छ। त्यसैलाई नै जीवभावको लिङ्ग अथवा गमक भनिन्छ। जबसम्म सत्र तत्त्वको लिङ्गशरीर विद्यमान रहन्छ त्यस वेलासम्ममात्रै जीवभावको सत्ता मानिन्छ। लिङ्गशरीर नाश भएपछि जीव जीव रहँदैन, ब्रह्म नै भइहाल्दछ। पुर्यष्टक जीवभावको त्यस्तो उपाधि होइन जुन मोक्षपर्यन्त एउटै रहिरहोस्। पुर्यष्टक प्रत्येक जन्ममा परिवर्तन भइरहन्छ। लिङ्गशरीर अर्थात् १७ तत्त्वयुक्त

---

६ पुर्यष्टकं तदिदमप्यभवद्धि लिङ्गं तेनोच्यते तदपि लिङ्गगिरा क्वचित्तु।
पुर्यष्टकं न खलु लिङ्गगिरोऽभिधेयं मुख्यन्तु सप्तदशकं प्रथितं हि लिङ्गम्॥
– सङ्क्षेपशारीरकम् ३।१९

सूक्ष्मशरीर भने मोक्षपर्यन्त नै रहन्छ। अतः सूक्ष्मशरीर नै लिङ्गपदको मुख्यवाचक हो, पुर्यष्टक होइन।

यसरी विचार गर्दा [७]सत्र तत्त्व पाँच कर्मेन्द्रिय, पाँच ज्ञानेन्द्रिय, पाँच प्राण, मन र बुद्धियुक्त जीवलाई लिङ्ग वा सूक्ष्मशरीर भनिन्छ। यसै सूक्ष्म शरीरसँग संसर्गाध्यास भएर नै प्रत्यगात्मामा जीवत्वभाव खडा हुन्छ। त्यसै अध्यासका कारणले गर्दा नै प्रत्यगात्मालाई पनि जीव भनेर व्यवहार गरिन्छ।

पुर्यष्टकात्मक शरीरत्रयको अध्यास रहेसम्म सुखदुःखादि रहन्छन् र तिनको निवृत्ति भएपछि सुखदुःखादि केही पनि रहँदैनन् भनेर [८]श्रुतिले भनेको छ। अतः पुर्यष्टकको सम्बन्धले गर्दा नै निष्कल तथा शुद्ध आत्मामा सुखदुःख सिद्ध हुन्छ, अन्यथा हुँदैन। वास्तविक नित्य, मुक्त तथा सुखस्वरूपमा पुर्यष्टकको सम्बन्ध सम्भव छैन। त्यो सम्बन्ध अज्ञानद्वारा कल्पित मायिक हो जसलाई अद्वैत वेदान्तका भाषामा आध्यासिक सम्बन्ध भनिन्छ।

सूक्ष्म वा लिङ्ग शरीर र पुर्यष्टकमा सामान्यरूपमा हेर्दा उस्तै र उनै तत्त्वहरूबाट निर्मित भएजस्तो लागे तापनि यिनमा सूक्ष्मरूपमा विवेचना गर्दा विभेद भने देखिन्छ। पुर्यष्टकमा

---

७ इह तावदक्षदशकं मनसा सह बुद्धितत्त्वमथ वायुगणः ।
इति लिङ्गमेतदमुना पुरुषः खलुसङ्गतो भवति जीव इति ॥
— सङ्क्षेपशारीरकम् ३।२०

८ न ह वै सशरीरस्य सतः प्रियाप्रिययोरपहतिरस्ति। अशरीरं वाव सन्तं न प्रियाप्रिये स्पृशतः। — छान्दोग्योपनिषद् ८।१२।१

पञ्चीकृत र अपञ्चीकृत दुवै थरी भूतहरू रहन्छन् भने सूक्ष्मशरीरमा अपञ्चीकृत भूतहरूसमेत इन्द्रियादि बाह्य तत्त्वका साथ सत्र तत्त्व रहन्छन्। यो सूक्ष्मशरीर वा लिङ्गशरीर वासनायुक्त भएर जीवात्माले प्रारब्धकर्मद्वारा प्रदत्त फलको भोग गर्दछ। उसलाई स्वस्वरूपको ज्ञान हुँदैन। वस्तुतः अज्ञानद्वारा सूक्ष्मशरीरको उपाधि प्राप्त गरेर जीवात्मा मोक्ष प्राप्त नभएसम्म विभिन्न योनिहरूमा संसरण गरी नै रहन्छ। स्वस्वरूपको ज्ञान नभएसम्म त्यस सूक्ष्मशरीरलाई जीवात्माको अनादि उपाधि भएको कुरा [९]श्रीशङ्कराचार्यले पनि मान्नुभएको छ।

जीवात्माको सूक्ष्म उपाधि भनेर [१०]रामगीताले पनि सूक्ष्म शरीरको वर्णन गरेको छ। मन र बुद्धि दुइटा अन्तःकरणका तत्त्व, पाँचोटा ज्ञानेन्द्रियहरू, पाँचोटा कर्मेन्द्रियहरू र पाँचोटा प्राणादि समेतले युक्त अपञ्चीकृत पञ्चमहाभूतहरूबाट बनेको सत्रतत्त्वले युक्त सूक्ष्मशरीर जीवको एउटा उपाधि हो। यो सूक्ष्मशरीर जीवात्माको स्थूलशरीरभन्दा फरक हो। जुन स्थूल शरीर जीवात्माले पूर्व जन्ममा आर्जन गरेको शुभाशुभकर्मबाट प्राप्त सुखदुःखादि कर्मफलको भोग गर्ने साधन वा आयतन

---

९ इदं शरीरं शृणु सूक्ष्मसंज्ञितं लिङ्गंत्वपञ्चीकृतभूतसम्भवम्।
सवासनं कर्मफलानुभावकं स्वाज्ञानतोऽनादिरूपाधिरात्मनः॥
– विवेकचूणामणि ९९

१० सूक्ष्मं मनोबुद्धिदशेन्द्रियैर्युतं प्राणैरपञ्चीकृतभूतसम्भवम्।
भोक्तुः सुखादेरनुसाधनं भवेच्छरीरमन्यद्विदुरात्मनो बुधाः॥
– रामगीता २९

हो। स्थूलशरीरभन्दा फरक तर स्थूलशरीरको आधार पाएर स्थूलशरीरभित्र स्थूलशरीरलाई टम्म ढाकेर बसेको सूक्ष्मशरीर नै मोक्ष पर्यन्त जीवको आधार वा उपाधि हो। यसै सूक्ष्म शरीरका कारण नै जीवात्मा जीवभावापन्न हुन्छ।

[११]पुर्यष्टक नै लिङ्गशरीर हो र त्यो प्राणादि सत्र तत्त्वले युक्त हुन्छ। त्यसले बाँधिएमा बद्ध र त्यसबाट नबाँधिएमा मुक्त हुने कुरा पुराण आदिमा पनि आएको पाइन्छ। यस कुराको सङ्केत उपनिषद्हरूमा पनि आएको छ जसमा बृहदारण्यकोपनिषद्को २।२।२ देखि ९ सम्म पठनीय छ। त्यसैगरेर [१२]प्रश्नोपनिषद्मा षोडशकलायुक्त पुरुषको कुरा आउँछ, त्यो पनि पुर्यष्टक वा सूक्ष्मशरीर नै हो। पुर्यष्टक यद्वा सूक्ष्म शरीरका बारेमा प्रश्नोपनिषद्को ४।८ मा पनि उल्लेख भएको पाइन्छ।

[१३]श्रीमद्भागवतमा पनि सूक्ष्मशरीरका बारेमा उल्लेख पाइन्छ। भगवान् नै पञ्चमहाभूतहरूद्वारा यस पाञ्चभौतिक शरीरको निर्माण गरेर यसैमा जीवरूपबाट शयन गर्नुहुन्छ भन्दै भागवतमा त्यस सूक्ष्म शरीरमा पाँच ज्ञानेन्द्रिय, पाँच प्राणहरू

---

११ पुर्यष्टकेन लिङ्गेन प्राणाद्येन स युज्यते ।
तेन बद्धस्य वै बद्धो मोक्षो मुक्तस्य तेन च ।। – ब्रह्मपुराण

१२ एवमेवास्य परिद्रष्टुरिमाः षोडश कलाः पुरुषायणः पुरुषं प्राप्यास्तं गच्छति । – प्रश्नोपनिषद् ६।५

१३ भूतैर्महद्भिर्य इमा पुरोविभुर्निर्माय शेते यदमूषु पुरुषः ।
भुङ्क्ते गुणान् षोडश षोडशात्मकः सोऽलङ्कृषीष्ट भगवान् वचांसि मे ।।
– भागवत २।४।२३

र मनसमेत सोह्र तत्त्वहरू रहन्छन् भनेर १६ तत्त्वको सूक्ष्मशरीर भनिएको छ। अर्कोतर्फ पुर्यष्टकको सम्बन्धमा तत्त्वप्रकाशका व्याख्याकार [14]अघोर शिवाचार्यले पुर्यष्टक नामको प्रतिपुरुषमा नियतरूपले सृष्टिका शुरुदेखि कल्पान्त वा मोक्षपर्यन्त रहने पृथिवीदेखि लिएर कलासम्म तीस तत्त्वात्मक सूक्ष्मशरीर रहन्छ भनेका छन्।

उपर्युक्त अनुसार सूक्ष्मशरीरलाई नै विभिन्न शास्त्राचार्यहरूले पुर्यष्टक पनि भनेको देखिन्छ। जुन शरीरमा सात तत्त्व वा कलादेखि लिएर तीसतत्त्व वा कला रहेको देखिन्छ। पुर्यष्टक र सूक्ष्म शरीर उस्तै भए पनि जन्म र मृत्युमा मोक्ष पर्यन्त जीवका साथ रहने सूक्ष्म शरीर हो, जसमा १७ तत्त्व रहन्छन्। ॐ ब्रह्मार्पणमस्तु।

---

१४ पुर्यष्टकं नाम प्रतिपुरुषं नियतः सर्गादारम्भ कल्पान्त मोक्षान्तं वा स्थितः पृथिव्यादिकलापर्यन्तस्त्रिंशत्तत्त्वात्मकः सूक्ष्मो देहः।

# २६. पूर्वप्रज्ञा

लिङ्ग आत्मामा विभिन्न इन्द्रियहरूको लय भइसकेपछि जीवात्माको उत्क्रमण हुने कुरा [१]श्रुतिमा आएको छ। बुद्धि लिङ्गात्मामा गएर सबै इन्द्रिय एकरूप भइसकेपछि मुमुक्षुको हृदयको अग्रभाग अर्थात् जीवात्माले उत्क्रमण गर्ने मार्ग अत्यन्त प्रकाशित हुन थाल्दछ। त्यसपछि आत्मा नेत्रबाट, मूर्द्धाबाट अथवा शरीरको कुनै अन्य भागबाट बाहिर उत्क्रमण गर्दछ।

उपर्युक्त अनुसार आत्माले उत्क्रमण गरेपछि आत्माका साथ लागेर प्राण उत्क्रमण गर्दछ। त्यसपछि सबै अरू इन्द्रियहरूले पनि उत्क्रमण गर्दछन्। त्यस समयमा यो आत्मा विशेष विज्ञानवान् हुन्छ र विज्ञानयुक्त प्रदेशमा नै त्यो जान्छ। त्यस समयमा त्यस आत्माका साथ ज्ञान, कर्म र पूर्वप्रज्ञा अर्थात् अतीत कर्मफलानुभवको वासना पनि साथसाथै जान्छन्।

उपर्युक्त उपनिषद्का मन्त्रमा प्राणीको मृत्युको अन्तिम समयको कुरा उल्लेख गरिएको छ। मन्त्रको अन्तिम अंशमा

---

१ एतस्य हृदयस्याग्रं प्रद्योतते तेन प्रद्यातेनैष आत्मानिष्क्रामति चक्षुष्टो वा मूर्द्धो वान्येभ्यो वा शरीरदेशेभ्यस्तमुत्क्रान्तं प्राणोऽनुत्क्रामति प्राण-मनूत्क्रामन्तं सर्वे प्राणा अनूत्क्रामन्ति सविज्ञानो भवति सविज्ञानमेवान्व-वक्रामति तं विद्याकर्मणी समन्वारभेते पूर्वप्रज्ञा च।

– बृहदारण्यकोपनिषद् ४।४।२

गएर *'विद्याकर्मणी समन्वारभेते पूर्व प्रज्ञा च'* भन्ने आएको छ। यस आलेखमा केवल विद्या, कर्म र पूर्वप्रज्ञा समेत तीन शब्दहरूको मात्रै विश्लेषण गरिनेछ। साथसाथै आएका विद्या, कर्म र पूर्वप्रज्ञा जीवात्माले शरीरबाट उत्क्रमण गरेर परलोक जाँदा जीवात्माका साथमा नै जाने भनेर श्रुतिले भनेको छ। ती तीनैको प्रतिनिधि शब्दका रूपमा पूर्वप्रज्ञालाई शीर्षकका रूपमा राखेर यो प्रसङ्ग अघि सारिएको हो।

परलोक जाने भएको त्यस आत्माका साथ विद्या र कर्म जान्छन्। यस प्रसङ्गमा विद्या भन्नाले सबै प्रकारका विहित र प्रतिषिद्ध तथा अविहित र अप्रतिषिद्ध विद्या नै पर्दछन्। त्यसै गरेर कर्म पनि विहित र प्रतिषिद्ध तथा अविहित र अप्रतिषिद्ध पर्दछन्। यी दुवै विद्या र कर्म सम्यक् अन्वारम्भ वा अन्वालम्भ अर्थात् अनुसरण गर्दछन्। त्यसै गरेर पूर्वप्रज्ञा वा पूर्वानुभवसम्बन्धिनी प्रज्ञा अर्थात् कर्मफलानुभवको वासना पनि जीवका साथमा नै जान्छन्।

त्यही वासना नै अपूर्व कर्मको आरम्भ र कर्म विपाकमा अङ्ग हुन्छ। अतः यो पनि त्यसका साथमा नै जान्छ। किनभने त्यस वासनाका विना त्यस जीवात्माले कर्म गर्न र त्यसको फलको भोग गर्न सक्तैन। भावी जन्ममा जुन सहज र जन्मजात कुशलता देखापर्दछ त्यो पूर्वप्रज्ञाका कारणले नै हो। त्यो कुरा पूर्वप्रज्ञाका उद्‌बुद्धता र अनुद्‌बुद्धताका कारण हुन्छ। यसैकारण पूर्वप्रज्ञा नभईकन कसैको पनि कर्म अथवा त्यसका कर्मफलमा प्रवृत्ति नै हुँदैन।

उपर्युक्त अनुसार बटुवाको बाटो हिँड्दाको खर्च गर्ने सामग्रीका सरह यी विद्या, कर्म र पूर्वप्रज्ञा समेत देहान्तरका प्राप्ति र उपभोगका साधन हुन्। अतः शुभ विद्या र कर्मादिको नै आचरण गर्नु पर्दछ। यसबाट अभीष्ट देहको प्राप्ति र उपभोग समेत उपलब्ध हुन्छ। यही नै उपर्युक्त श्रुतिको तात्पर्य हो भनेर श्रीशङ्कराचार्यले आफ्नू भाष्यमा लेख्नुभएको छ।

उपर्युक्त उपनिषद्का मन्त्रमा आएका विद्या, कर्म र पूर्वप्रज्ञालाई आधार बनाएर आचार्य सर्वज्ञात्ममुनिले आफ्नू ग्रन्थ [२]सङ्क्षेपशारीरकम्मा यिनको विश्लेषण र समीक्षा समेत गर्नुभएको छ। उहाँले विद्या, कर्म र पूर्वप्रज्ञाको भिन्नाभिन्नै अस्तित्व नमानेर विद्या र पूर्वप्रज्ञा कर्ममा नै अन्तर्भाव हुन्छन् भन्नुभएको छ। किनभने कर्मका साथमा विद्या र पूर्वप्रज्ञा दुवैको सहपाठ छ। अतः पदैकवाक्यताका आधारमा विद्या र पूर्वप्रज्ञाको कर्मपदसँग नै सङ्ग्रह मानिन्छ। यहाँ आएको विद्यापद परब्रह्मविषयक विद्या होइन। त्यसको प्रकरण भिन्नै छ। यस प्रकरणमा आएको विद्यापदबाट प्रपञ्चविषयक ज्ञान भनेर बुझ्नु पर्दछ। यसकारण त्यसको फलभूत संसारमा अविद्याहेतुत्व पनि सङ्गतिपूर्ण हुन्छ। अनेकौँ पूर्वजन्महरूमा सञ्चित भएर रहेको भोगवासना नै पूर्वप्रज्ञा हो। विद्या र पूर्वप्रज्ञा दुवैको कर्मपद नै अजहल्लक्षणाद्वारा सङ्ग्राहक

२ विद्या च विश्वविषयानुभवोत्थपूर्वप्रज्ञा च कर्मवचसैव तु सङ्गृहीते।
बन्धप्रयोजकतया सदृशत्वहेतोरेकत्र च श्रुतिवचस्युपसङ्ग्रहेण॥
– सङ्क्षेपशारीरकम् ३।१७

मानिन्छ। शक्यसम्बन्धी पदार्थमा लक्षणा हुन्छ। अतः *'बन्धप्रयोजकत्व'* पदद्वारा शक्यसम्बन्ध विवक्षित छ भनेर बुझ्नु पर्दछ।

यस [३]उपनिषद्को एउटै मन्त्रमा विद्या, कर्म र पूर्वप्रज्ञाको सहपाठ आएको छ। जस्तै – *'तं विद्याकर्मणी समन्वारभेते पूर्वप्रज्ञा च' (बृ.उ.४।४।२)* यो एक वाक्य हो। यसमा तीनै पदहरू सङ्कीर्तित छन्। यसैकारणले नै कर्म पदलाई विद्या पद र पूर्वप्रज्ञापदको सङ्ग्राहक भनिएको हो। यहाँ आएको विद्यालाई कर्मका नै समान चार प्रकार भनेर सम्झनु पर्दछ। त्यसै गरेर पूर्वप्रज्ञा अर्थात् संस्कार पनि चार प्रकार नै भएका भनेर सम्झनु पर्दछ।

बृहदारण्यकोपनिषद्को ४।४।२ मन्त्रमा संसारको हेतु कर्मलाई भनिएको छ। त्यसै मन्त्रमा विद्या र पूर्वप्रज्ञालाई पनि संसारको हेतु भनिएको छ। यसै कारण कर्मका सरह नै विद्या र पूर्वप्रज्ञालाई पनि संसारको कारण मान्नु पर्ने हुन्छ। जुन कुरा माथि उल्लेख गरिसकिएको छ। जस्तै – कर्म चार प्रकारको हुन्छ। विहित, प्रतिषिद्ध, अविहित र अप्रतिषिद्ध। विद्या पनि चार प्रकारको नै हुन्छ। विहित (उपासनारूप)

---

३ तं विद्येति हि वाक्यमेकमिह च स्पष्टं त्रयं कीर्तितम्,
तस्मात्कर्मवचस्तयोरपि भवेत्सङ्ग्राहकं कारणात्।
विद्या चात्र चतुर्विधाऽप्यभिमतैवाऽऽरम्भिका कर्मवत्,
संस्कारोऽपि तथा चतुर्विध इति ज्ञेयस्तथा सम्भवात्॥
– सङ्क्षेपशारीरकम् ३।१८

निषिद्ध, अविहित अथवा विहित सरह (गङ्गादर्शन आदि रूप) तथा निषिद्धसम (शवसाधनादि) यसै गरेर पूर्व प्रज्ञा पनि चारै प्रकारको हुन्छ। किनभने संस्कार सदैव अनुभव अनुरूप नै हुन्छ।

उपर्युक्त मन्त्रमा जीवात्माले शरीरबाट उत्क्रमण गरेर परलोक जाँदा *'एष आत्मा निष्क्रामति चक्षुष्टो वा मूर्द्धो वान्येभ्यो वा शरीरदेशेभ्यः'* भनेर उल्लेख भएको छ। यसको अर्थ आँखाबाट जीवात्माले उत्क्रमण गरेर गएमा आदित्यलोक प्राप्ति हुन्छ, यदि ज्ञान र कर्मबाट जीवात्माको उत्क्रमण भएमा मूर्द्धा अर्थात् तालुबाट उत्क्रमण गर्दछ भने क्रममुक्तिमा ब्रह्मलोक जान्छ। ती बाहेक शरीरका अरू स्थानबाट उत्क्रमण गरेमा आफ्नू कर्म र साधना अनुरूपको जीवको गति हुनेछ। *'सदा तद्भावभावितः'* भनेर गीताले पनि भनेको छ।

यसरी सारांशमा पूर्वप्रज्ञालाई केन्द्रबिन्दुमा राखेर यस लेखमा विद्या र कर्मको पनि छोटकरीमा उल्लेख गरियो। संसारको पुनरावृत्तिका लागि विद्या, कर्म र पूर्वप्रज्ञाको बराबरको भूमिका रहेको देखिन्छ। जबसम्म पूर्वप्रज्ञा अर्थात् पूर्वसंस्कार मुमुक्षुको ज्ञानरूपी अग्निद्वारा भस्म हुँदैन तबसम्म मुक्ति हुँदैन र संसारको अनन्त दुश्चक्रको संसृतिमा उसले घुमिरहनु नै पर्दछ। ॐ ब्रह्मार्पणमस्तु।

# २७. बहिर्मुख

श्रीमद्भागवत महापुराणमा एउटा बोध प्रसङ्ग आउँछ, जुन अत्यन्त चिन्तनीय र पठनीय पनि छ। सृष्टिको प्रथम प्रभातमा अर्थात् वराहकल्पमा भगवान् श्रीविष्णुले वराह अवतार लिएर सृष्टिकार्यका लागि जलमा आप्लावित पृथ्वीलाई उद्धार गरेर ल्याउन लाग्दा दैत्यराज हिरण्याक्षले अवरोध गरेको हुँदा भगवान्ले त्यसको वध गरेर पृथ्वीलाई यथास्थान स्थापित गर्नुभएको थियो। हिरण्याक्षका दाजु हिरण्यकशिपुले भाइको हत्यारा भगवान् श्रीविष्णुलाई मारेर बदला लिनका लागि भगवान्को निवासस्थान वैकुण्ठमा हातमा डरलाग्दो शूल लिएर गयो। उससँग अत्यन्त डराएझैँ गरेर भगवान्ले लुक्ने स्थान खोज्नुभयो। किन्तु त्यो भयङ्कर दैत्य हिरण्यकशिपु जुन सुकै ठाउँमा पुग्न समर्थ छ भन्ने ठानेर उहाँ *'पराग्दृशः'* अर्थात् बाहिरी दृश्य संसार मात्रै हेर्ने बहिर्मुखी तर भित्र अन्तःकरणतर्फ नहेर्ने स्वभाव भएको त्यस हिरण्यकशिपुका [१]हृदयमा अर्थात् अन्तःकरणमा पसेर लुक्नु भयो।

उपर्युक्त भागवतको सानो प्रसङ्ग सुन्दा बच्चाले सुनाउने दन्त्यकथा जस्तो लाग्दछ। किन्तु यस भित्र उपनिषद् वा

१ यतो यतोऽहं तत्रासौ मृत्युः प्राणभृतामिव।
अतोऽहमस्य हृदयं प्रवेक्ष्यामि पराग्दृशः ॥ – भागवत ८।१९।९

[2]वेदान्तको सारसर्वस्व लुकेको छ। यसको जति व्याख्या गरे पनि पर्याप्त हुँदैन।

भागवतको उक्त भगवद्वचन एकातर्फ उत्प्रेक्षायुक्त देखिन्छ भने अर्कोतर्फ अर्थवादयुक्त पनि देखिन्छ। वैदिकपरम्परामा अर्थवादका मुख्य गरेर विधिशेष अर्थवाद र निषेधशेष अर्थवाद समेत दुई भेद छन्। पहिलो वेदका विधिवाक्यसँग लागेर आउने विधिशेष अर्थवाद हो। त्यस विधिशेष अर्थवादका पनि तीन भेदहरू शास्त्रले बताएको छ। जसमा [3]१.गुणवाद, २. अनुवाद र ३. भूतार्थवाद समेत पर्दछन्। ती मध्ये असम्भव प्रशंसालाई गुणवाद अर्थवाद भनिन्छ। जुन प्रशंसामा असम्भाव्यता हुन्छ र आफैँमा विरोध हुन्छ। उदाहरणका लागि [4]प्रजापतिले आफ्नै पेटबाट आफ्नू झिल्ली वा बोसो निकालेर अग्निमा हवन गरे। जुन असम्भव गुणवाद हो। अर्को अर्थवाद अनुवाद हो। जस्तै [5]अग्नि जाडोको औषधि हो। यो अर्थवादमा लौकिक प्रमाणबाट सबै प्राणीमात्रले थाहा पाएको हुँदा यसले नयाँ अपूर्व कुनै कुरा नभनेको हुँदा यो भनाइ केवल अनुवादमात्रै हो। जहाँ जुन कुरा अरू प्रमाणहरूबाट विरोध र प्राप्ति दुवै हुँदैन। त्यहाँ भूतार्थवाद

२ वेदान्तो नाम उपनिषद् प्रमाणम्।

३ विरोधे गुणवादः स्यादनुवादोऽवधारिते।
भूतार्थवादस्तद्धानादर्थवादस्त्रिधा मतः॥ – बृहदारण्यकवार्तिक

४ प्रजापतिरात्मनो वपामुदखिदत्। – श्रुतिः

५ अग्निर्हिमस्य भेषजम्। – शुक्लयजुर्वेदः २३।१०

अर्थवाद हुन्छ। जस्तै – [६]इन्द्रले वज्रद्वारा वृत्रलाई मारे ।

अर्थवादहरूमध्ये भगवान्‌को उपर्युक्त भनाइ अर्थवादयुक्त भएकोले सामान्य र अज्ञानी व्यक्तिलाई थाहा हुँदैन। किन भने परमात्मा भूतभौतिक [७]सृष्टिका साथै सत्ता र चित्ताका रूपमा भित्र पहिले नै पसिसकेको हुन्छ, अन्यथा जड र चेतन कुनै पनि वस्तुको अस्तित्व पनि रहनसक्तैन। आफ्नू निखिल सृष्टिमा परमात्मा उपादान कारणका रूपमा पहिले पसिसकेकाले फेरि पसिरहनै पर्दैन। जस्तै – माटोबाट बनेको घैँटोमा उपादान कारणका रूपमा घैँटो बन्दैखेरि माटो पसिसकेको हुन्छ, फेरि माटोले घैँटोमा पसिरहनु पर्दैन। किनभने घैँटोको अस्तित्व शतप्रतिशत माटोमा निर्भर हुन्छ, जसको अभावमा घैँटोको अस्तित्व नै रहँदैन। त्यसै गरेर परमात्मामय यस सम्पूर्ण प्रपञ्चमा परमात्मा नै ओतप्रोत छ, अन्यथा यसको अस्तित्व नै रहँदैन।

परमात्माले 'म धेरै होऊँ' भनेर इच्छा वा कामना गरेपछि सम्पूर्ण प्रपञ्च देखा पर्‍यो। परमात्माको कामनाले सृष्टि भयो, फैलियो र परमात्मा त्यसैभित्र अध्यासिकरूपले पसे र तदाकार पनि भए भनेर श्रुतिले भनेको छ। परमात्मा सृष्टिको कामनाले सृष्टिमा नै बाँधिएर छरिनु परेको र फैलिनु परेजस्तै संसारी मनुष्य पनि असीमित कामना वा एषणाद्वारा फैलिन्छ

६ इन्द्रो वृत्राय वज्रमुदयच्छत् । – श्रुतिः

७ तत्सृष्ट्वा तदेवाऽनुप्राविशत् । – तैत्तिरीयोपनिषद् २।६।१

र उम्कनै नसक्ने गरेर कामनाद्वारा सिर्जित आफ्नै जालमा ऊ फस्तछ र उम्कनै नसक्ने भएर त्यसैमा धसिन पुग्दछ।

परमात्मा अन्तर्यामीरूपले स्थूल पृथिवीदेखि लिएर सूक्ष्मवीर्यका अणु, परमाणुभित्रसम्म सूक्ष्मरूपमा पसेर र बसेर सबैलाई नियमन गरिरहेको हुन्छ तर कसैलाई पनि यो थाहा हुँदैन भनेर श्रुति भन्दछ। जस्तै जुन परमात्मा [८]पृथिवीमै रहेर पृथिवीका भित्र बस्तछ, जसलाई पृथिवीले जान्दिनन्। जसको पृथिवी शरीर हो। जुन परमात्मा भित्र बसेर पृथिवीलाई नियमन गर्दछ, त्यही परमात्मा तिम्रो अर्थात् सबैको अन्तर्यामी आत्मा अमृत हो।

त्यही [९]सर्वव्यापक विभु परमात्मा एकबाट धेरै भएर सृष्टि गर्ने कामनाले निर्गुण निराकारबाट सगुण निराकार र सगुण निराकारबाट सगुण साकारमा अवतरित हुन्छन्। आफ्नै निष्प्रतियोगिका भावरूपा अनिर्वचनीया मायाको सहयोग लिएर शुद्ध परमात्मा पनि संसारी जस्तो प्रमाता, कर्ता र भोक्ता भएर बिम्ब, ईश्वर वा साक्षी र प्रतिबिम्ब वा चिदाभास अर्थात् जीवात्माका रूपमा विवर्तित हुन्छ। परमात्मा क्रमशः अनन्त ब्रह्माण्डमा चर र अचर नानारूपमा परिणत हुन्छ।

श्रीमद्भागवत महापुराणमा परमात्माको आगमन,

---

८ यः पृथिव्यां तिष्ठन् पृथिव्या अन्तरो यं पृथिवी न वेद यस्य पृथिवी शरीरं यः पृथिवीमन्तरो यमयत्येष त आत्मान्तर्याम्यमृतः।

– बृहदारण्यकोपनिषद् ३।७।३

९ सो ऽकामयत बहुः स्यां प्रजायेय। – तैत्तिरीयोपनिषद् २।६।१

फैलावट, सृष्टिको क्रम, परमात्माको प्रत्यावर्तन र प्रलयको क्रमलाई अत्यन्त सरल भाषामा वर्णन गरिएको छ। [१०]जुन परमात्माका अत्यन्त सूक्ष्म कलाबाट अनेकौँ नाम र रूपका भेदभावबाट ब्रह्मा आदि देवता, वेद र चराचर लोकहरूको सृष्टि हुन्छ। उदाहरणका लागि [११]जसरी दनदन बलेको आगोका ज्वालाबाट अनन्त झिल्काहरू र जाज्वल्यमान सूर्यबाट उनका किरणहरू बारम्बार निस्कने र फेरि त्यहीँ नै गएर लीन भइरहन्छन् त्यसै गरेर स्वयंप्रकाश परमात्माबाट बुद्धि, मन, इन्द्रिय र शरीर समेत जुन गुणहरूका प्रवाहरूप हुन्, ती बारम्बार प्रकट हुन्छन् र परमात्मामा नै गएर लीन पनि हुन्छन्।

वस्तुतः वा यथार्थतः यद्वा परमार्थतः परमात्मा एक हो, अद्वितीय हो र मायादि उपाधिरहित हो। ऊ अज हो, अविक्रिय हो, निरञ्जन र निर्लेप हो, तर सृष्टिकालमा मायाको उपाधिद्वारा ऊ नाम र रूप लिएर नाना जस्तो देखिन्छ। [१२]परमात्माले मायाद्वारा अनेकरूप लिए जस्तो देखिन्छ भन्दै श्रुति त्यसभन्दा अघि त्यो परमात्मा [१३]रूप रूपको प्रतिरूप भयो भनेर परमात्मा

१० यस्य ब्रह्मादयो देवा वेदा लोकाश्चराचराः।
नामरूपविभिदेन फल्व्या च कलया कृताः॥ – भागवत ८।३।२२

११ यथार्चिषोऽग्नेः सवितुर्गभस्तयो निर्यान्ति संयान्त्यसकृत्स्वरोचिषा।
तथा यतोऽयं गुणसम्प्रवाहो बुद्धिर्मनः खानि शरीरसर्गाः॥
– भागवत ८।३।२३

१२ इन्द्रो मायाभिः पुरुरूप ईयते। – बृहदारण्यकोपनिषद् २।५।१९

१३ रूपं रूपं प्रतिरूपो बभूव। – बृहदारण्यकोपनिषद् २।५।१९

कसरी आध्यासिक उपाधि स्वीकार गरेर अनन्त नामरूपात्मक प्रपञ्चमा विवर्तित र परिवर्तित भयो भन्ने व्यावहारिक तथ्य समेत श्रुति साङ्केतिकरूपमा वर्णन गर्दछ।

यो दृश्यमान् सम्पूर्ण प्रपञ्च मायाको खेल हो र परमात्माको स्वप्न जगत् हो। [१४]जुन परमात्माबाट अविद्यात्मिका भावरूपा अनिर्वचनीया मायाको सहयोग लिएर आकाशादि भूत तन्मात्रा र तिनैबाट यावत् समस्त स्थूल तथा सूक्ष्म चराचर शरीर उत्पन्न हुन्छन् भनेर आचार्य धर्मराजाध्वरीन्द्रले भन्नुभएको छ। किन्तु त्यो परमात्मा सबै वस्तु हो र कुनै वस्तु पनि होइन। किनभने [१५]परमात्मा देवता, असुर, मनुष्य, पशु, पक्षी, स्त्री, पुरुष, नपुंसक केही पनि होइन। त्यतिमात्रै होइन ऊ गुण, कर्म, कार्य, कारण समेत केही होइन। सम्पूर्ण मायिक प्रपञ्चको निषेध भएपछि जुन परम सत्य बाँकी रहन्छ द्रष्टा त्यही नै परमात्मा हो। अरू दृश्य प्रपञ्च सबै मिथ्या हुन्।

प्रकृत प्रसङ्गमा हिरण्यकशिपुको डरले परमात्मा अन्तःकरणमा लुकेको नभएर उत्प्रेक्षा र अर्थवादका रूपमा महाराज बलिका प्रपितामहको प्रशंसा गरेर बलिलाई त्रिलोकीको दान गर्न प्रोत्साहित गर्नुभएको देखिन्छ। अर्को तर्फ भगवान्ले अज्ञ रजोगुणी दैत्यराज हिरण्यकशिपुलाई *'पराग्दृशः'* अर्थात्

---

१४ यदविद्याविलासेन भूतभौतिक सृष्टयः। – वेदान्तपरिभाषा १

१५ स वै न देवासुरमर्त्य तिर्यङ् न स्त्री न षण्ढो न पुमान् न जन्तुः।
नायं गुणः कर्म न सन्न चासन् निषेधशेषो जयतादशेषः॥
– भागवत ८।३।२४

बहिर्मुखीको संज्ञा दिएर औपनिषद गूढ रहस्यको पनि भगवान्‌ले सङ्केत गर्नुभएको छ। बहिर्मुखी संसारी मनुष्यका प्रतीकका रूपमा यहाँ हिरण्यकशिपुलाई पराग्दृक् भनेर लिइएको देखिन्छ। पराग्दृक् प्राणीले उसका अन्तःकरणमा विराजमान अन्तर्यामी परमात्माको साक्षात्कार गर्नसक्तैन।

सृष्टिको प्रारम्भमा सृष्टिको विस्तार गर्ने उद्‌देश्यले पितामह ब्रह्माजीले सर्वप्रथम मनबाट सनत्कुमार आदि चारओटा पुत्रहरूको सृष्टि गर्नुभयो। किन्तु उनीहरू चारैजना पराग्दर्शी अर्थात् बहिर्मुखी थिएनन्। उनीहरू प्रत्यग्दर्शी वा अन्तर्मुखी भएर सृष्टिको कुचक्रमा फस्न चाहेनन् र पिता ब्रह्माको आदेशलाई उनीहरूले अवज्ञा गरे। [१६]त्यसपछि रिसाएर ब्रह्माजीले त्यसपछि जन्मने जीवका अन्तर्मुखी इन्द्रियहरूलाई बाहिर फर्काएर भित्र हेर्न नसक्ने बनाइदिए। यसैकारण जीवात्मा बाहिरी विषयहरूलाई मात्र देख्तछ र भित्र रहेका अन्तरात्मालाई प्रायः देख्तैन। ब्रह्मसाक्षात्कार गर्ने इच्छाले आफ्ना बाहिरतर्फ फर्किएका बहिर्मुखी इन्द्रियहरूलाई भित्र अन्तरात्मातर्फ फर्काएर कुनै धीर मुमुक्षु पुरुषले मात्रै ब्रह्मसाक्षात्कार गर्नसक्तछ भनेर उपनिषद्‌ले भनेको छ।

सृष्टिको प्रारम्भ हुनुभन्दा पहिले [१७]एकमात्र अद्वितीय

---

१६ पराञ्चि खानि व्यतृणत्स्वयम्भूस्तस्मात्पराङ्पश्यति नान्तरात्मन्।
कश्चिद्‌धीरः प्रत्यगात्मानमैक्षदावृत्तचक्षुरमृतत्वमिच्छन्॥
– कठोपनिषद् २।१।१

१७ सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम्। – छान्दोग्योपनिषद् ६।२।१

सत्स्वरूप मात्रै थियो । त्यसबेला स्थूल प्रपञ्च, सूक्ष्म तन्मात्रा र माया समेत थिएनन् । सृष्टि प्रपञ्चको विस्तार गर्न [१८]परमात्माले म धेरै होऊँ भन्ने कामना वा इच्छा गरे र जड र चेतनमा सत्ता तथा चैतन्यरूपले प्रवेश गरे अनि परमात्मा तदाकार भए भनेर श्रुतिको उद्घोष छ ।

बहिर्मुखी अज्ञानीले परमात्मालाई खोज्न चारधाम, मठमन्दिर र संसारै घुमे पनि भगवान् भेट्न सक्तैन, किनभने भगवान् साक्षीरूपले आफ्नै अन्तःकरणमा बसेका छन् । नङ्का टुप्पादेखि रोमका टुप्पासम्म रगतका कणकणमा प्रत्येक श्वास र प्रशवासमा भगवान् व्यप्त छन् । उनको सत्ताविना एक परमाणुको अस्तित्व पनि रहन सक्तैन । यस परमसत्यलाई बुझ्न नसक्ने अज्ञानी, नास्तिक, पामर मनुष्य जस्तै [१९]हिरण्यकशिपुले पनि आकाशपाताल तीनै लोकमा खोज्दा पनि उसले आफ्ना चर्मचक्षुले देख्न पाएन र भेट्न पनि नसकेपछि मेरो भाइको हत्यारा वैरी भगवान् श्रीविष्णु कहिल्यै पनि नफर्कने लोकमा गए भन्ने सम्झ्यो र सन्तोष लियो भनेर भगवान् आफैँले नै उस दैत्यका पनाति राजा बलिलाई सुनाउनु भएको हो ।

प्राचीन हिरण्यकशिपुका नवीन संस्करण पश्चिमी नास्तिक दार्शनिक नित्सेले God is dead ईश्वर मऱ्यो भनेर घोषणा नै

---

१८ तदैक्षत बहुःस्यां प्रजायेयेति । – छान्दोग्योपनिषद् ६।२।३

१९ अपश्यन्निति होवाच मायान्विष्टमिदं जगत् ।
भ्रातृहा मे गतो नूनं यतो नावर्तते पुमान् ॥ – भागवत ८।१९।१२

गरे। भगवान् अर्थात् ब्रह्म कालको पनि काल महाकाल हुनुहुन्छ भनेर तिनीहरूले बुझेनन् वा बुझेर पनि बुझ पचाए। भगवान् स्वयंले [20]म अविनाशी काल हुँ भन्नुभएको छ। त्यतिमात्रै होइन उहाँले म [21]लोकको नाश गर्ने भएको प्रवृद्ध काल हुँ पनि भन्नुभएको छ। भगवान्‌को स्वरूप सम्पूर्ण चराचरलाई भस्मीभूत गर्ने भएको प्रलयकालीन [22]कालाग्नि जस्तो भनेर शास्त्रले भनेको छ।

परब्रह्म परमात्मा कालको पनि काल महाकाल भएको तथ्य श्रुतिले नै भनेको छ। [23]जसका ब्राह्मण अर्थात् ब्रह्मादि देवता लगायत सारा चर प्रणी वा चिदाभास अर्थात् जीवात्मा र क्षत्र अर्थात् जड पदार्थ अखिल ब्रह्माण्ड र मायिक प्रपञ्च समेत भात जस्ता खाद्यपदार्थ हुन्छन् र संसारभरका प्राणीलाई भक्षण गर्ने कालसमेत परमात्मा ब्रह्मका तिहुन, तर्कारी, अचार जस्ता भातलाई मुछेर खाने उपसेचन अर्थात् सित्तन जस्तो मामुली वस्तु बन्दछ। त्यस्तो अकल्पनीय परमात्मालाई अज्ञानी नास्तिक हिरण्यकशिपु र नित्से जस्ता अहङ्कारी अज्ञानीले कसरी जान्न सक्तछन् ? अर्थात् जान्न सक्तैनन्।

---

२० अहमेवाक्षयः कालः। – गीता १०।३३

२१ कालोऽस्मि लोकक्षयकृत्प्रवृद्धः। – गीता ११।३२

२२ कालानलसन्निभानि। – गीता ११।२५

२३ यस्य ब्रह्म च क्षत्रञ्च उभे भवत ओदनः।
मृत्युर्यस्योपसेचनं क इत्था वेद यत्र सः॥ – कठोपनिषद् ३।२५

अतः परमात्मालाई आत्मभावले नबुझेर अन्यथाभावले अर्थात् शत्रुभावले बुझ्ने रजोगुण र तमोगुणले आच्छन्न आदि दैत्य हिरण्यकशिपु जस्ता अज्ञानी बहिर्मुखी जीवात्माहरूले कसरी जान्नसक्तछन् ? परमात्मा विशुद्ध सत्त्वगुणी [२४]सूक्ष्म बुद्धि र सूक्ष्मदृष्टि भएका अन्तर्मुखी ज्ञानी धीर पुरुषले मात्रै जान्न सक्तछन्। अर्थात् ब्रह्मसाक्षात्कार गर्नसक्तछन्। ॐ ब्रह्मार्पणमस्तु।

❀

२४ दृश्यते त्वग्र्यया बुद्ध्या सूक्ष्मया सूक्ष्मदर्शिभिः।

– कठोपनिषद् १।३।१२

# २८. ब्रह्मविद्या

[1]कर्म त्यो हो जुन बन्धनका लागि नहोस् र विद्या त्यो हो जसले बन्धनबाट मुक्त गरिदेओस् । ऋषिहरूले ब्रह्मविद्याका नै आभासमा अर्थात् प्रकाशमा अनन्त सच्चिदानन्द परब्रह्मको साक्षात्कार गरेका थिए । प्रतिपादनपद्धति, विशेष ज्ञातव्य, परम्परा, अधिकारी आदि इत्यादिका भेदले ब्रह्मसाक्षात्कार गर्ने उपाय, साधन आदिको विभिन्न शास्त्रहरूमा विभिन्नता देखियो । अरू त के, ज्ञानका मूल स्रोत वेद र उपनिषद्हरूमा समेत स्थूलमा पार्थक्य देखा पर्न गयो । एउटै उपनिषद्मा विभिन्नता देखा पर्न गयो । यसैलाई समन्वय गरेर मुमुक्षुहरूलाई सही बाटो देखाउन भगवान् वेदव्यासले ५५५ सूत्रहरू भएको ब्रह्मसूत्रको प्रणयन नै गर्नुभयो । जसमा उहाँले प्रमुख मानिने बत्तीस ब्रह्मविद्याहरूको चर्चा गरेर तीमध्ये कुनैको साक्षात्रूपमा र कुनै कुनैको परम्परयाका रूपमा अन्ततोगत्वा शुद्ध ब्रह्ममा नै पुगेर पर्यवसित हुने कुराको समन्वय समेत श्रुति र युक्ति समेत देखाउँदै गर्नुभयो । जसलाई उहाँले [2]भविष्यद्वृत्तिको संज्ञा पनि दिनुभएको छ । त्यो कुरालाई व्यावहारिकरूपमा र

---

१ तत्कर्म यन्न बन्धाय सा विद्या या विमुक्तये ।

२ जीवात्मनोः पृथक्त्वं यत्प्रागुत्पत्तेः प्रकीर्तितम् ।
भविष्यद्वृत्या गौणं तन्मुख्यत्वं हि न युज्यते ॥
– माण्डूक्यकारिका अद्वैतप्रकरण १४

स्थूलरूपमा पनि सामान्य मनुष्यले स्वीकार गर्न आनाकानी गरे तापनि मुमुक्षुहरूले भने स्वीकार्नुभन्दा अरू बाटो पनि छैन। [३]वस्तुतः मोक्षको बाटो यही हो, अर्को छँदैछैन भनेर श्रुतिले उद्घोष गरेको छ।

उपर्युक्त अनुसार ब्रह्मसाक्षात्कारका साधनाका रूपमा विभिन्न उपनिषद्हरूमा रहेका केही विद्याहरूको विहङ्गम दृष्टिले यस लेखमा सूचीकृत गर्न लागिएको छ। ब्रह्मज्ञानका लागि साधनतया प्रयुक्त हुने विद्याहरू चारै वेद र हजारौँ उपनिषद्हरूमा असङ्ख्य हुनसक्तछन्। यहाँ केवल जिज्ञासु पाठकहरूका जानकारीका लागि सङ्ग्रह गरेर प्रस्तुत गर्ने काम गरिएको हो। यीभन्दा बढीको खोजी जिज्ञासु विद्वान् अनुसन्धाताबाट हुने छ भनेर विश्वास गर्दछु।

१. सद्विद्या – छान्दोग्योपनिषद्
२. गायत्री ज्योतिर्विद्या – छान्दोग्योपनिषद्
३. अन्तरादित्यविद्या – छान्दोग्योपनिषद्
४. आकाशविद्या – छान्दोग्योपनिषद्
५. प्राणविद्या – छान्दोग्योपनिषद्, बृहदारण्यकोपनिषद्
६. इन्द्रप्राणविद्या–छान्दोग्योपनिषद्, कौषीतकिब्राह्मणोपनिषद्
७. शाण्डिल्यविद्या, अग्निरहस्योपनिषद्, छान्दोग्योपनिषद्, बृहदारण्यकोपनिषद्
८. नचिकेतसविद्या – कठोपनिषद्

---

३ तमेव विदित्वाऽतिमृत्युमेति नान्यः पन्था विद्यतेऽयनाय।
– श्वेताश्वतरोपनिषद् ६।१५।३

९. आनन्दविद्या – तैत्तिरीयोपनिषद्
१०. उपकोशलविद्या – छान्दोग्योपनिषद्
११. अन्तर्यामिविद्या – बृहदारण्यकोपनिषद्
१२. अक्षरविद्या – मुण्डकोपनिषद्
१३. वैश्वानरविद्या – छान्दोग्योपनिषद्
१४. भूमाविद्या – छान्दोग्योपनिषद्
१५. गार्ग्यक्षरविद्या – बृहदारण्यकोपनिषद्
१६. प्रणवोपास्य परमपुरुषविद्या – प्रश्नोपनिषद्
१७. दहरविद्या – छान्दोग्योपनिषद्, बृहदारण्यकोपनिषद्, तैत्तिरीयोपनिषद्
१८. अङ्गुष्ठप्रमितविद्या – कठोपनिषद्, श्वेताश्वतरोपनिषद्
१९. देवोपास्यज्योतिर्विद्या – बृहदारण्यकोपनिषद्
२०. मधुविद्या – छान्दोग्योपनिषद्, बृहदारण्यकोपनिषद्
२१. संवर्गविद्या – छान्दोग्योपनिषद्
२२. अजाशारीरकविद्या – तैत्तिरीयोपनिषद्, श्वेताश्वतरोपनिषद्
२३. बालाकिविद्या – बृहदारण्यकोपनिषद्, कौषीतकि-ब्राह्मणोपनिषद्
२४. मैत्रेयीविद्या – बृहदारण्यकोपनिषद्
२५. पञ्चाग्निविद्या – छान्दोग्योपनिषद्, बृहदारण्यकोपनिषद्
२६. आदित्यस्थाहर्नामकविद्या – बृहदारण्यकोपनिषद्
२७. अक्षिस्थाहन्नामकविद्या – बृहदारण्यकोपनिषद्
२८. पुरुषविद्या – छान्दोग्योपनिषद्, तैत्तिरीयोपनिषद्
२९. ईशावास्यविद्या – ईशावास्योपनिषद्

३०. उषस्तिकहोलविद्या – बृहदारण्यकोपनिषद्
३१. गायत्रीविद्या–छान्दोग्योपनिषद्, बृहदारण्यकोपनिषद्
३२. सत्यकामविद्या – छान्दोग्योपनिषद्
३३. अग्निब्रह्मविद्या – छान्दोग्योपनिषद्
३४. गार्ह्यपत्याग्निविद्या – छान्दोग्योपनिषद्
३५. अन्वाहार्यपचनाग्निविद्या – छान्दोग्योपनिषद्
३६. आहवनीयाग्निविद्या – छान्दोग्योपनिषद्
३७. धर्मविद्या – बृहदारण्यकोपनिषद्
३८. अन्नविद्या – बृहदारण्यकोपनिषद् तैत्तिरीयोपनिषद्
३९. शिशुविद्या – बृहदारण्यकोपनिषद्
४०. मूर्तामूर्तविद्या – बृहदारण्यकोपनिषद्
४१. याज्ञवल्क्यविद्या – बृहदारण्यकोपनिषद्
४२. ज्योतिर्विद्या – बृहदारण्यकोपनिषद्
४३. अज्ञविद्या – केनोपनिषद्
४४. यक्षविद्या – केनोपनिषद्
४५. उमाविद्या – केनोपनिषद्
४६. ब्रह्मानुसन्धानविद्या – कठोपनिषद्
४७. अश्वस्थविद्या – कठोपनिषद्
४८. ओङ्कारविद्या – प्रश्नोपनिषद्, माण्डूक्योपनिषद्
४९.सृष्टिविद्या – प्रश्नोपनिषद्, ऐतरेयोपनिषद्
५०. पराऽपराविद्या – मुण्डकोपनिषद्
५१. ञअक्षरविद्या – मुण्डकोपनिषद्
५२. ब्रह्मवेधनविद्या – मुण्डकोपनिषद्

५३. ब्रह्मसाक्षात्कारविद्या – मुण्डकोपनिषद्
५४. मोक्षविद्या – मुण्डकोपनिषद्
५५. पञ्चकोशविद्या – तैत्तिरीयोपनिषद्
५६. प्रणवविद्या – श्वेताश्वतरोपनिषद्
५७. ध्यानविद्या – श्वेताश्वतरोपनिषद्
५८. प्राणायामविद्या – श्वेताश्वतरोपनिषद्
५९. उपासनाविद्या – श्वेताश्वतरोपनिषद्
६०. मोक्षविद्या – श्वेताश्वतरोपनिषद्

उपर्युक्त अनुसार विभिन्न उपनिषद्हरूमा असङ्ख्य विद्याहरू छन्। तिनको परिगणना गरेर साध्य छैन। यी विद्याहरूको श्रवण, मनन, निदिध्यासन र अभ्यास गर्नाले मुमुक्षुले मोक्ष प्राप्त गर्नसक्तछ। वस्तुतः यी सबै विद्याहरू कुनै कुनै साक्षात् र कुनै कुनै परम्परया मोक्षका साधन हुन्। साध्य जस्तो साध्य मोक्ष अर्थात् ब्रह्मसाक्षात्कार नै हो। ॐ ब्रह्मार्पणमस्तु।

# २९. ब्रह्मसाक्षात्कारका साधनहरू

ब्रह्मसाक्षात्कारमा अर्थात् ब्रह्मज्ञानमा साक्षात्साधन र परम्परया साधनका बारेमा शास्त्रहरूमा वर्णन गरेको पाइन्छ। जसमा श्रवण साक्षात् साधन हो भने मनन र निदिध्यासन परम्परया अथवा सहकारी साधन हुन्। आचार्य धर्मराजाध्वरीन्द्रले यसका उदाहरणका रूपमा घटादि कार्यलाई दिनुभएको छ। जस्तै घडाका उत्पत्तिमा माटाको डल्लोलाई प्रधान कारण, चक्र, चीवर र डोरी आदिलाई सहकारी कारण मान्नुभएको छ।

उपर्युक्त सम्बन्धमा विवरणकार आचार्य प्रकाशात्मयतिले शक्ति र तात्पर्यबाट विशिष्ट शब्दज्ञान प्रमेय अर्थात् ब्रह्मात्मैक्यरूपवाक्यार्थको ज्ञानमा साक्षात्कारण हुन्छ भनेर लेख्नुभएको छ। किनभने प्रमाण प्रमेयको ज्ञानमा साक्षात् कारण हुन्छ। परन्तु मनन र निदिध्यासन चित्तलाई प्रत्यगात्मश्रवण संस्कारबाट निष्पन्न भएको ब्रह्मैकाग्र्य वृत्ति तयार गराएर ब्रह्मानुभवमा कारण हुन्छ। यसकारण ब्रह्मात्मैक्यरूप वाक्यार्थज्ञानमा साक्षात्कारणीभूत शक्ति एवं तात्पर्यबाट विशिष्ट जुन शब्दज्ञान हो, त्यसमा मनन, निदिध्यासन साक्षात्करण नहुनाले अङ्ग रूपबाट स्वीकृत गरिएका छन्।

जीव ब्रह्म नै हो। केवल उपाधिका कारण जीव र ब्रह्ममा

भेद देखिन्छ। अन्तःकरणमा अनादिकालदेखि जमेर रहेका मलदोष, विक्षेपदोष र आवरणदोषका कारण जीवले आफू ब्रह्म भएको कुरा बिर्सिसकेको छ। निष्काम कर्मद्वारा मलदोष, अहैतुकी भक्तिद्वारा विक्षेपदोष र ज्ञानद्वारा आवरणदोष हटाउनु पर्दछ। त्यसपछि विस्मृत भएको ब्रह्मको बोध हुन्छ। अर्थात् साधक अहं ब्रह्मास्मिको स्थितिमा पुग्नसक्तछ। यसका लागि अनन्त जन्म लाग्न सक्तछ। साधनचतुष्टयसम्पन्न भएपछि श्रोत्रिय ब्रह्मनिष्ठ गुरुका सान्निध्यमा रहेर सर्वप्रथम तत्त्वमसि महावाक्यको जिज्ञासु मुमुक्षुले श्रवण गर्नुपर्दछ। त्यसैकारण वेदान्तमा श्रवणको अत्यन्त महत्त्व छ। आफ्नी जिज्ञासु पत्नी मैत्रेयीलाई उपदेश गर्ने क्रममा ब्रह्मर्षि याज्ञवल्क्यले *'आत्मा वा अरे श्रोतव्यो मन्तव्यो निदिध्यासितव्य ... (बृ.उ.२।४।५)* भन्नुभएको छ। धेरै समयको साधनाको परिपाकपछि मात्रै साधक अहं ब्रह्मास्मिको स्थितिमा पुग्दछ। त्यसैलाई ब्रह्मसाक्षात्कार भनिन्छ।

उपर्युक्त श्रवणादि साधनहरूलाई ब्रह्मज्ञान प्राप्तिका साधनका रूपमा श्रुतिले उल्लेख गरेको छ। यसैलाई परवर्ती शास्त्रहरूले *'श्रोतव्यः श्रुतिवाक्येभ्यो मन्तव्यश्चोपपत्तिभिः। मत्त्वा च शततं धेयं एते दर्शनहेतवः ॥'* भनेको छ। यिनैलाई ब्रह्मसाक्षात्कारका हेतु वा साधन मानिएको छ।

ब्रह्मसाक्षात्कार गर्न वा मुक्ति पाउन कोटिकोटि जन्मको पुण्यपुञ्जको परिपाकबाट मात्र सम्भव छ। यस सम्बन्धमा आद्यजगद्गुरु श्रीशङ्कराचार्यले विवेकचूडामणि ग्रन्थको दोस्रो

श्लोकमा यस्तो उल्लेख गर्नुभएको छ –

जन्तूनां नरजन्म दुर्लभमतः पुंस्त्वं ततो विप्रता
तस्माद्वैदिकधर्ममार्गपरता विद्वत्त्वमस्मात्परम् ।
आत्मानात्मविवेचनं स्वनुभवां ब्रह्मात्मना संस्थितिः
मुक्तिर्नो शतकोटिजन्मसु कृतैः पुण्यैर्विना लभ्यते ॥

अर्थात् जीवलाई सर्वप्रथम त नरजन्म नै दुर्लभ छ। त्यसमा पनि पुरुषत्व, त्यसमा पनि ब्राह्मण भएर वैदिक धर्मको अनुगामी हुनु र त्यसमा पनि विद्वान् हुनु अझै कठिन छ। यी सबै केही गरी भइहाले पनि आत्मा र अनात्माको विवेक हुनु, सम्यक् अनुभव हुनु, ब्रह्मात्मभावमा संस्थिति हुनु र मुक्ति हुनु भने करोडौँ जन्महरूमा गरिएका शुभकर्महरूका परिपाकबाट मात्रै सम्भव छ। ॐ ब्रह्मार्पणमस्तु ।

# ३०. भविष्यद्वृत्ति

यस आलेखको शीर्षक भविष्यद्वृत्ति नामकरण गरिएको छ। सामान्य अर्थमा भविष्यद् भनेको पछि आउने समय र वृत्ति भनेको दृष्टि भन्ने हुन्छ। वृत्तिका अर्थ धेरैथरी हुन्छन् । वृत्तिलाई दर्शनका भाषामा बुद्धिको परिणाम भनिन्छ । बुद्धिको परिणाम भनेको बुद्धिले एउटा विषयलाई छोडेर अर्को विषयको ग्रहण गर्नु भनेको हो । खास गरेर बुद्धिको ज्ञानात्मक व्यापारलाई [१]वृत्ति भनिन्छ। अद्वैत वेदान्तमा यसलाई यसरी बुझाइएको छ । जसरी तलाउको पानी दुलाबाट निक्लेर कुलाको माध्यमबाट खेतका गरामा पस्तछ र त्यस खेतको नै आकार अनुरूप तीन कुने, चार कुने र बाटुलो आकारको बन्दछ, त्यसरी नै तैजस अन्तःकरण पनि चक्षुश्रोत्रादि इन्द्रियहरूका माध्यमद्वारा शरीरबाट बाहिर निस्किएर घटादि विषयसम्म जान्छ र घटादि विषयहरूको आकारमा परिणत हुन्छ। त्यस परिणामलाई वृत्ति भनिन्छ।

उपर्युक्त वृत्तिसँग जोडिएर आएको भविष्यद्वृत्ति भन्नाले भविष्यलाई लक्ष्यमा राखेर गरिने कार्य, दूरदृष्टि वा भविष्यको

---

१ (क) यथा तडागोदकं छिद्रान्निर्गत्य कुल्यात्मना केदारान्प्रविश्यतद्वदेव चतुष्कोणाद्याकारं भवति । तथा तैजसमन्तःकरणमपि चक्षुरादिद्वारा निर्गत्य घटादिविषयदेशं गत्वाविषयाकारेण परिणमते। स एव परिणामो वृत्तिरित्युच्यते । – वेदान्तपरिभाषा प्रत्यक्षपरिच्छेदः ।
(ख) बुद्धेर्ज्ञानात्मको व्यापारः । – वेदान्तपरिभाषा प्रत्यक्षपरिच्छेदः ।

काल्पनिक संसार सम्झनु पर्दछ। यस शब्दावली अर्थात् भविष्यद्वृत्तिलाई सजिलै बुझ्न सकिँदैन। यो वस्तुतः माण्डूक्यकारिकामा हजारौँ वर्ष अघि परमगुरु गौडपादाचार्यले प्रयोग गर्नुभएको अत्यन्त महत्त्वपूर्ण शब्दावली भए तापनि सामान्य बोलीचालीमा नआउने भएकाले सामान्य व्यक्तिका लागि यो भविष्यद्वृत्ति नौलो पनि हुनसक्तछ।

भविष्यद्वृत्तिले भविष्यमा हुने वा गरिने कामको प्रक्षेपण गर्दछ। व्यवहारमा सामान्यरूपमा प्रक्षेपण शब्दद्वारा प्रक्षेपित लक्ष्य पूरा हुन पनि सक्तछ र नहुन पनि सक्तछ। किन्तु वेदले वा शास्त्रले प्रक्षेपण गरेको भविष्यद्वृत्ति भने अचूकरूपमा पूरा हुन्छ। प्रकृत प्रसङ्गलाई आचार्य गौडपादद्वारा रचित कारिकागत अर्थको समीक्षाबाटै सुरु गर्नु सान्दर्भिक हुने देखिन्छ। यसपछि मात्रै वेद र शास्त्रहरूमा विविध परिप्रेक्ष्यमा आएका विभिन्न भविष्यद्वृत्तिका बारेमा चर्चा गर्नु उपयुक्त हुनेछ।

वेदमा असी प्रतिशत मन्त्रहरू जीवात्मा र परमात्माको पृथक्त्व देखाउन नै आएका देखिन्छन्। सृष्टिबोधक उपनिषद् वाक्यहरूद्वारा *'इदं कामः अदः कामः'* इत्यादि प्रकरणद्वारा अनेकौ थरी कामनाहरूका भेदहरूले गर्दा जीवात्मा र परमात्माका बीचमा भेद देखाइएको छ। किनभने कर्मकाण्डबोधक वेदमा कामनाहरूका भेदले नै कर्ममा पनि भेद हुन्छ। त्यसरी नै कर्मका भेदले कर्म गर्ने पुरुषमा अर्थात् अधिकारीमा पनि भेद आउँछ। वेदका कर्मकाण्डमा भनिएको अर्थात् देखाइएको उक्त भेदले परमात्मा र जीवात्माको

एकत्वलाई असङ्गत प्रमाणित गर्दछ। अर्को कुरा उपनिषद्ले जीवदेखि पृथक् [२]'त्यस परमात्माले पृथ्वी र द्युलोकलाई धारणा गऱ्यो' इत्यादि मन्त्रवर्णद्वारा जीव र परमात्माको पृथक्त्व नै वर्णन गरेको देखिन्छ।

उपर्युक्त अनुसार कर्मकाण्डमा आएका उपनिषद्का मन्त्रहरूमा जब स्पष्टरूपमा नै जीवात्मा र परमात्माका बीचको भेद देखिन्छ भने तब केवल ज्ञानकाण्डमा आएका मन्त्रहरूद्वारा भनिएको जीव र ब्रह्मको एकत्व कसरी युक्तियुक्त हुनसक्तछ ? के ज्ञानकाण्डमा आएको अर्थ मात्रै वेदार्थ हो ? के कर्मकाण्डोक्त अर्थ वेदार्थ होइन ? भन्ने प्रश्नहरू उठ्न सक्ने देखिन्छ। अतः दुवैथरी मन्त्रहरूको प्रमाण्य बराबर नै हुने भएकाले ज्ञानकाण्डका मन्त्रहरूलाई मात्र समातेर आत्मा र परमात्माका एकत्वको सिद्धान्त स्थापित गर्न मिल्दैन भन्न पनि सकिन्छ।

उपर्युक्त अनुसारको आशङ्का आउन सक्ने सम्भावना भएपछि त्यसको समाधान पनि माण्डूक्यकारिकामा आएको छ। [३]उत्पत्तिबोधक श्रुतिवाक्यहरूभन्दा पहिले कर्मकाण्डमा जीव र परमात्माको पृथक्त्व भनिएको हो। त्यो भविष्यद्वृत्ति अर्थात् गौण हो। त्यसलाई मुख्यवृत्ति मान्नु उचित होइन।

उपर्युक्त कारिकामा आएको भविष्यद्वृत्तिको तात्पर्य

---

२ हिरण्यगर्भः समवर्तताग्रे भूतस्य जातः पतिरेक आसीत्।
– शुक्लयजुर्वेदः १३।४

३ जीवात्मनोः पृथक्त्वं यत्प्रागुत्पत्तेः प्रकीर्तितम्।
भविष्यद्वृत्त्या गौणं तन्मुख्यत्वं हि न युज्यते॥
– माण्डूक्यकारिका ३।१४

के हो भने [४]जसबाट यी सबै भूतहरू उत्पन्न हुन्छन्, [५]जसरी अग्निका ससाना झिल्काहरू निस्कन्छन्, [६]त्यसैगरी यस आत्माबाट आकाश उत्पन्न भयो, [७]उसले ईक्षण गऱ्यो, [८]उसले तेज सिर्जना गऱ्यो, इत्यादि सृष्टिबोधक वाक्यहरूभन्दा पहिले कर्मकाण्डमा जुन पृथक्त्व भनियो, त्यो पारमार्थिक होइन। त्यो भनेको महाकाशदेखि घटाकाशादिसम्मको भेद जस्तै गौण हो। किनभने *'भविष्यमा भात पाक्तछ'* भन्ने यस भविष्यत् वृत्तिका कारण वर्तमान कालमा पनि चामल पकाउने नभनेर भातै पकाउने भन्ने लोक व्यवहार भएको देखिन्छ। यसैका सरह कर्मकाण्ड-शास्त्रोक्त भेदलाई पनि बुझ्नुपर्दछ। यो भेद गौण हो। किनभने आत्मभेदबोधक वाक्यहरूले स्वाभाविकरूपमा अज्ञानी पुरुषको भेददृष्टिलाई अनुवाद मात्र गर्दछन्। यथार्थरूपमा अर्थात् पारमार्थिकरूपमा भने होइन।

उपनिषद्हरूमा आएका उत्पत्ति र प्रलय समेत बुझाउने वाक्यहरूको तात्पर्य जीव र ब्रह्मको एकत्व देखाउने नै हो। पृथक्त्व देखाउने होइन अर्थात् जगत्को सृष्टिको वर्णन गर्ने श्रुतिवाक्यहरूको तात्पर्य यस मिथ्या मायिक प्रपञ्चको वर्णन

---

४ यतो वा इमानि भूतानि जायन्ते। – तैत्तिरीयोपनिषद् ३।१।१

५ यथाऽग्नेः क्षुद्रा विस्फुलिङ्गाः। – बृहदारण्यकोपनिषद् २।१।२०

६ तस्माद् वा एतस्मादात्मन आकाशः सम्भूतः। – तैत्तिरीयोपनिषद् २।१

७ तदैक्षत बहुस्यां प्रजायेयेति। तत्तेजोऽसृजत। – छान्दोग्योपनिषद् ६।२।३

८ अनोदनेषु तण्डुलेष्वोदनव्यवहारो यथा गौणस्तथाऽभेदे भेदव्यवहारो गौणः
– टिप्पणी, मा.का. ३।१४

गर्नुमा नभएर ब्रह्मज्ञान गराउनुमा नै तात्पर्य छ। जस्तै [९]'आरम्भमा यो एकमात्र अद्वितीय सत् नै थियो। सृष्टिको क्रम बताउने सन्दर्भमा उपनिषद्ले बीचमा आएर त्यस सत्ले ईक्षण गऱ्यो, म धेरै होऊँ, अनेकौँ प्रकारले उत्पन्न होऊँ। त्यसपछि उसले तेज उत्पन्न गऱ्यो' भनेर सारा चराचर प्रपञ्चको सष्टि गरेको कुरा उपनिषद्ले विस्तारपूर्वक वर्णन गरेको देखिन्छ। यसलाई शुद्ध सत् ब्रह्ममा अध्यारोप गरेर अव्यक्त तत्त्वलाई व्यक्त रूपमा साधारणीकरण गरेर जिज्ञासु मुमुक्षुका लागि अपवर्ग प्राप्तिका लागि आलम्बनका रूपमा श्रुतिले वर्णन गरेको पाइन्छ।

उपर्युक्त अनुसार श्रुतिले अध्यारोपद्वारा एक अद्वितीय सत् ब्रह्मबाट क्रमिकरूपले अखिल प्रपञ्चको विस्तार देखाएर अन्त्यमा अपवादद्वारा सबै प्रपञ्चको ब्रह्ममा पर्यवसान हुने देखाएको छ। अन्त्यमा गएर श्रुतिले जीव र ब्रह्मको एकत्व प्रतिपादन गरेको छ। श्रुतिले [१०]यो सबै आत्मा हो, सद्रूप हो, त्यो सत्य हो, त्यो आत्मा हो, हे श्वेतकेतो ! तिमी त्यही नै हौ भनेर उपदेश गरेपछि त्यस सत्आत्मालाई म आफैँ नै हुँ भनेर श्वेतकेतुले जाने भनेको छ।

स्वप्नका मिथ्या वस्तु समान आत्माका मायाद्वारा रचित देहादि सङ्घात पनि मिथ्या नै हो। त्यसै गरेर घटाकाशको

---

९ सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम् । – छान्दोग्योपनिषद् ६।२।१

१० ऐतैतदात्म्यमिदं सर्वं तत्सत्यं स आत्मा तत्त्वमसि श्वेतकेतो इति दद्धास्य विजज्ञाविति विजज्ञाविति । – छान्दोग्योपनिषद् ६।१६।३

उत्पत्तिको भेदादिका सदृश जीवात्माको उत्पत्तिमा भेद छ। श्रुतिमा [११]'मृत्तिका, लोहपिण्ड, विस्फुलिङ्ग आदि दृष्टान्तहरूद्वारा भिन्नभिन्न प्रकारका सृष्टिहरूको वर्णन गरिएको छ। ती सबै सृष्टिका प्रकारहरू हामीहरूलाई जीवात्मा र परमात्माको एकत्वको ज्ञानका लागि आएका प्रसङ्ग हुन् । यसै कारण उत्पत्त्यादिबोधक श्रुतिहरू आत्मैकत्वबोधका लागि नै हुन् । कुनै अरू प्रयोजनका लागि मान्नु ठीक हुँदैन। अतः [१२]त्यस प्रपञ्चलाई रचना गरेर परमात्मा त्यसै भित्र पसे भन्ने आदि सृष्टिबोधक सम्पूर्ण श्रुतिका वाक्यहरू अन्तिममा जीवात्मा र परमात्माको एकता देखाउने प्रयोजनका लागि आएका हुन्, अरू प्रयोजन कदापि छैन। यही नै भविष्यद्वृत्ति हो, जुन ब्रह्मज्ञान गराउनमा गएर पर्यवसित हुन्छ।

अब यस भविष्यद्वृत्तिलाई वेदको एक महत्त्वपूर्ण मन्त्रको उद्धरण गरेर स्पष्ट गरिन्छ। यी पृथ्वी [१३]आदि सृष्टिको

---

११ मृल्लोहविस्फुलाङ्गाद्यैः सृष्टिर्या चोदिताऽन्यथा ।
उपायः सोऽवताराय नास्ति भेदः कथञ्चन ।। – माण्डूक्यकारिका ३।१५

१२ तत्सृष्ट्वा तदेवानुप्राविशत् । – तैत्तिरीयोपनिषद् २।६।१

१३ इयत्यग्रे आसीन्मखस्य ते ऽद्य शिरो राध्यासं देवयजने पृथिव्याः । मखाय त्वा मखस्यत्वा शीर्ष्णे । – शुक्लयजुर्वेदः ३७।५
'इयत्यग्र इति वराहविहतम् (कात्यायन २६।१।७) वराहोत्खात मृदमादाय तूर्ष्णीं कृष्णाजिने वल्मीकवयोत्तरे निदध्यादिति सूत्रार्थः । वराहविहतमृद्देवतं यजुः ब्राह्मी गायत्री । हे पृथिवि ! भगवती अग्रे आदौ वराहोद्धरणसमये इयती । प्रादेशमात्राभिनयेन प्रदर्श्यते । एतत्प्रमाणाा आसीत् 'इयती ह वा इयमग्रे पृथिव्यास प्रादेमात्री (१४।१।२।१२) इत्यादि 'वराह उज्जघनेतिश्रुतेः'
– महीधरकृतवेददीपभाष्य

समयमा अर्थात् भगवान् वराहले पृथिवीलाई रसातलबाट उद्धरण गरेको समयमा अत्यन्त सानी प्रादेशमात्र थिइन् भनेर श्रुतिले रहस्यको उद्घाटन गरेको छ ।

उपर्युक्त वेदवाक्यले अरबौँ वर्ष अघि पृथ्वीको आयतन अत्यन्त सानो प्रादेशमात्रको अर्थात् एक चिम्टी मात्रको भएको बताएको छ । वेदले तिनै स्वल्प काया भएकी पृथ्वीको कुरा गर्नुको तात्पर्य त्यसैबाट अनन्त ब्रह्माण्ड फैलिँदै गइरहेको कुरा भनेको हो । यो वेदको भविष्यद्वृत्तिको परिचायक हो । जुन स्वल्प पृथ्वीभित्र नै अनन्त सृष्टि लुकेको छ भनेर पनि वेदले रहस्य खोलेको देखिन्छ । ।

पश्चिमी धर्मशास्त्रले मानव सृष्टि ईशापूर्व लगभग ४००० वर्षअघिमात्रै भएको भनेर मानेको छ । किन्तु हाम्रो वेद अनुसार हामीहरू मानवसृष्टिको प्रारम्भ १९५५८८५११५ पूर्व मान्दछौँ । मानवसृष्टिमा उनीहरूको कुनै आधिकारिक प्रमाण नभएकाले हचुवाका आधारमा ईसापूर्व ४००० वर्षअघि भने पनि महासृष्टिको कुरामा भने हाम्रो अपौरुषेय ग्रन्थ वेदले भनेको उपर्युक्त भनाइमा नै पश्चिमी दार्शनिक वैज्ञानिकहरू सहमत हुन थालेका देखिन्छन् । वैदिक सिद्धान्त अनुसार सृष्टिको क्रम सूक्ष्म परमाणुदेखि लिएर महान् अनन्त ब्रह्माण्डसम्म र अव्यक्त परमात्मादेखि लिएर व्यक्त चराचरसम्म फैलिएको छ । यसै वैदिक सनातनसिद्धान्त समातेर हाल पश्चिमा देशका वैज्ञानिक र दार्शनिकहरूले महासृष्टिलाई महाविष्फोट अर्थात् Big Bang को नाम दिएका छन् ।

हाम्रो अपौरुषेय वेदले सृष्टिको प्रथम प्रभातमा पृथ्वीको आकार अत्यन्त सानो प्रादेशमात्रको भएको र पछि अनन्तरूपमा फैलिएको हो भने जस्तै गरेर पश्चिमा वैज्ञानिकहरूले पनि महा विस्फोट पछि शुरुमा ब्रह्माण्ड अत्यन्त सानो अर्थात् एउटा चियाको चंचाभित्र अटाउन सक्ने खालको थियो भनेर केही वर्ष अघि घोषणा गरेका छन् । त्यो सानो ब्रह्माण्ड अनन्त गुना भएर फैलिएर अनन्त ब्रह्माण्ड अर्थात् Endless Universe का रूपमा फैलिइरहेको पनि वैज्ञानिकहरूले घोषणा गरेका छन् ।

उपर्युक्त सृष्टिबोधक दुवै सिद्धान्तहरू भविष्यद्वृत्तियुक्त हुन् भन्न सकिन्छ । किनभने महासृष्टि र महाविष्फोट, त्यसको सञ्चालन र फैलिने काम पनि जड पदार्थबाट सम्भव देखिँदैन । अतः त्यसका भित्र परब्रह्मको शक्ति र सत्ता निहित भएर मात्रै त्यसको सिर्जना, सञ्चालन र वृद्धि हुने काम हुनसक्ने र अन्त्यमा त्यसै परमसत्तामा गएर त्यसको महासंवरण अर्थात् Big crunch मा अर्थात् महाप्रलयमा पुगेर पर्यवसित हुन्छ भन्ने दुवै थरी दर्शनको अन्तिम सार देखिन्छ। जुन परमकारणबाट सृष्टि शुरु हुन्छ र त्यसै परमकारणमा पुगेर अन्त्यमा समाप्त पनि हुन्छ भन्ने तथ्यलाई भविष्यद्वृत्ति वा दृष्टि भन्नु पर्दछ । किनभने जति पनि सृष्टि भएका छन् ती चर हुन् वा अचर सबै नै ब्रह्मको सत्ता पाएर सत्तावान् भएका हुन् भन्ने ज्ञान भएपछि प्रत्येक प्राणी ब्रह्म नै रहेछ भन्ने पनि थाहा हुन्छ। उक्त विश्लेषणबाट जीवात्मा र परमात्माको ऐक्यको बोध हुन्छ।

यसै ज्ञानलाई भविष्यद्वृत्ति वा बोध भन्नु पर्दछ।

सम्पूर्ण श्रुतिमन्त्रहरूले गरेको सृष्टिको वर्णन भविष्यद्दृष्टिले गरेको देखिन्छ। त्यस सत् नामक देवताले ईक्षण गऱ्यो र भन्यो [१४]'म यस जीवात्मरूपबाट यी तीन ओटै देवताहरूमा अनुप्रवेश गरौँ र नाम रूपबाट अभिव्यक्त गरौँ।'

अर्को सृष्टिबोधक श्रुतिले भविष्यद्वृत्तिफलक उद्बोध गर्दै भन्दछ – [१५]ती परमात्माले म धेरै होऊँ अर्थात् उत्पन्न भइहालौँ भन्ने कामना गरे र ती परमात्माले तप गरे। तप गरेर यो दृश्यमान् प्रपञ्च सम्पूर्ण बनाए। त्यसरी प्रपञ्च चराचरको रचना गरेर ती परमात्मा पनि त्यसैभित्र प्रवेश गरे, अर्थात् अनुप्रविष्ट भए।

फेरि अर्को श्रुति पनि तदनुरूप नै भन्दछ – [१६]पहिले सृष्टिपूर्वको अवस्थामा एक आत्मा मात्रै थियो। आत्मादेखि बाहेक अर्को कुनै वस्तु थिएन। त्यस आत्माले लोकहरूको रचना गर्ने विचार गऱ्यो। त्यस [१७]आत्माले यस सीमा अर्थात्

---

१४ सेयं देवतैक्षत हन्ताहमिमास्तिस्रो देवता अनेन जीवेनात्मनानुप्रविश्य नामरूपे व्याकरवाणीति।

– छान्दोग्योपनिषद् ६।३।२

१५ सोऽकामयत, बहु स्यां प्रजाययेति, स तपोऽतप्यत, स तपस्तप्त्वा इदं सर्वमसृजत यदिदं किञ्च, तत्सृष्ट्वा तदेवानुप्राविशत्।

– तैत्तिरीयोपनिषद् २।६।१

१६ आत्मा वा इदमेक एवाग्र आसीत्। नान्यत्किञ्चन मिषत्। स ईक्षतलोकान्नु सृजा इति। – ऐतरेयोपनिषद् १।१

१७ स एतमेव सीमानं विदार्यैतयाद्वारा प्रापद्यत। – ऐतरेयोपनिषद् १।३।१२

मूर्द्धालाई नै विदीर्ण गरेर यसैबाट प्रवेश गऱ्यो ।

त्यसै गरेर अर्को श्रुतिले सृष्टिको आरम्भको कुरा गर्दै भविष्यद्वृत्ति वा दृष्टिको प्रक्षेपण गर्दै भन्दछ[१८]जसले सृष्टिका आरम्भमा ब्रह्मालाई उत्पन्न गर्दछ र जसले ब्रह्माका लागि वेदहरूलाई प्रवृत्त गर्दछ इत्यादि ।

यसरी उपर्युक्त श्रुतिहरू जस्ता हजारौँ श्रुतिहरूद्वारा गरिएका वर्णनहरू ईश्वरद्वारा गरिएको सम्पूर्ण सृष्टिको तात्पर्य भविष्यद्दृष्टि नै हो भनेर बुझ्नु पर्दछ । किनभने महाप्रलयका समयसम्म मुक्त हुन नसकेर मायाका गर्भमा लीन भएर अमुक्त अनुशयी जीवहरूलाई तिनीहरूको सञ्चितकर्मबाट उद्भूत हुने प्रारब्ध कर्मजन्य भोग भोगाएर मुक्त गराउन अर्थात् जीव र ब्रह्मको एकत्व गराउने भविष्यद्दृष्टिलाई नै भाषान्तरमा भविष्यद्वृत्ति भनेर गौडपादकारिकामा भनिएको हो । भगवान्[१९]वेदव्यासले वेदस्तुतिमा यसै कुरालाई स्पष्ट पार्नुभएको छ । श्रुतिहरू स्पष्टतः सगुणको नै निरूपण गर्दछन्, परन्तु विचार गर्दाखेरि तिनको तात्पर्य भविष्यद्वृत्ति निर्गुण नै भन्ने ठहर्दछ ।

---

१८ यो ब्रह्माणं विदधाति पूर्वं यो वै वेदांश्च प्रहिणोति तस्मै ।
– श्वेताश्वतरोपनिषद् ६।१८

१९ बुद्धीन्द्रियमनः प्राणान् जनानामसृजत्प्रभुः ।
मात्रार्थञ्च भवार्थञ्च आत्मनेऽकल्पनाय च ।। – भागवत १०।८७।२
बुद्ध्यादीनुपाधीन् जनानामनुशायिनां जीवानां मात्राद्यर्थं प्रभुरीश्वरोऽसृजत् । मीयन्ते इति मात्रा विषयास्तदर्थम् । भवार्थं भवो जन्मलक्षणं कर्म, तत्प्रभृति कर्मकरणार्थमित्यर्थः । आत्मने लोकान्तरगामिने, आत्मनस्तत्तल्लोक-भोगायेत्यर्थः । अकल्पनाय कल्पनानिवृत्तये, भक्तये, इत्यर्थः । – श्रीधरः

भगवान्ले जीवहरूका लागि बुद्धि, इन्द्रिय, मन र प्राणहरूको जुन सृष्टि गरेका छन्, यसैद्वारा मुमुक्षुले अर्थ, धर्म, काम आदि मायिक साधनहरूको सदुपयोग गर्दै अन्त्यमा जीवात्मा र परमात्माको ऐक्य प्राप्त गर्न सकोस् भन्ने दूरदृष्टि राखेर अर्थात् भविष्यद्‌दृष्टिले गरेका हुन् । अन्यथा सृष्टिको अतिरिक्त प्रयोजन नै देखिँदैन ।

उपर्युक्त अनुसार विवेचना गर्दा श्रुतिमा आएका सम्पूर्ण सृष्टिबोधक वाक्यहरूको तात्पर्य [२०]जसबाट यी सबै भूतहरू उत्पन्न हुन्छन्, उत्पन्न भएपछि जसका आश्रयमा जीवित रहन्छन् र अन्त्यमा विनाशोन्मुख भएर जसमा ती सबै लीन हुन्छन्, त्यसै परब्रह्मलाई विशेषरूपमा जान्ने इच्छा गर, त्यो नै ब्रह्म हो भन्ने नै देखिन्छ ।

वेददेखि लिएर सबै शास्त्रहरूको अन्तिम उद्‌देश्य जीवात्मालाई यस दुःखद संसारबाट पार लगाएर आनन्दको सागरमा प्राप्त गराउनु अर्थात् निष्काम कर्म, अहैतुकी भक्ति र ब्रह्मज्ञानद्वारा जीवलाई ब्रह्मभावमा प्राप्त गराउनु नै हो । त्यसै [२१]ब्रह्मलाई जानेर अर्थात् ब्रह्मज्ञान गरेर नै मनुष्य मृत्युबाट पार हुन्छ । अन्धकारदेखि पर आदित्यको जस्तो स्वरूप भएका

---

२० यतो वा इमानि भूतानि जायन्ते येन जातानि जीवन्ति, यत्प्रयन्त्यभिसंविशन्ति । तद्विजिज्ञासस्व, तद्ब्रह्म ।
– तैत्तिरीयोपनिषद् ३।१।१

२१ वेदाहमेतं पुरुषं महान्तमादित्य वर्णं तमसः परस्तात् ।
तमेव विदित्वातिमृत्युमेति नान्यः पन्था विद्यतेऽयनाय ।
– शुक्लयजुर्वेदः ३१।१८ र श्वेताश्वतरोपनिषद् ६।१५

ती महान् परम पुरुषलाई म जान्दछु। यसदेखि बाहेक अर्को मोक्ष प्राप्त गर्ने मार्ग यद्वा साधन छैन भन्ने श्रुतिको निष्कर्ष देखिन्छ।

अन्त्यमा जसरी सारा नदीहरू बगेर घुम्दैफिर्दै सागरमा पुगेर आफ्ना नाम र रूपहरू सबै त्यागेर परम विश्रान्ति पाउँछन्, त्यसरी नै सारा प्रवृत्तिपरक वेदादि शास्त्रहरू पनि मनुष्यको श्रद्धा, रुचि र क्षमता अनुसारका कर्महरू गराउँदै अन्ततोगत्वा निवृत्ति मार्गमा पुऱ्याएर मनुष्यलाई मोक्ष गराउँछन्। सबै शास्त्रहरूको लक्ष्य जीव र ब्रह्मको ऐक्य गराउने नै हो। अर्को शब्दमा भन्ने हो भने सबै शास्त्रहरूको अन्तिम उपदिष्ट तत्त्व ब्रह्म नै हो र उद्देश्य जीवात्मा र परमात्माको ऐक्य गराउनु नै हो। वेदका सृष्ट्यादिबोधक सबै वाक्यहरूको अर्जुनदृष्टि भनेको 'भविष्यद्वृत्ति' नै हो। अतः [२२]बुद्धिमान् मुमुक्षु अर्थात् ब्रह्मज्ञानीले त्यसै शुद्ध ब्रह्मलाई जानेर अथवा ब्रह्मज्ञान गरेर त्यसैमा प्रज्ञा गर्नु पर्दछ। धेरै शब्दहरूको अनुध्यान किं वा चिन्तन गर्नु हुँदैन। त्यसो गर्नु वाणीको श्रममात्र हो। ॐ ब्रह्मार्पणमस्तु।

❀

२२ तमेव धीरो विज्ञाय प्रज्ञां कुर्वीत ब्राह्मणः।
नानुध्यायाद् बहुञ्छब्दान् वाचो विग्लापनं हि तत्॥
– बृहदारण्यकोपनिषद् ४।४।२१

# ३१. महावाक्यको श्रवणविधि

वैदिक महावाक्यहरू कति छन् भन्ने सम्बन्धमा विभिन्न मतमतान्तरहरू शास्त्रहरूमा आएका देखिन्छन् । चार वेदका चार महावाक्यहरूदेखि सयौँ अरू महावाक्यहरूको उल्लेख पनि पाइन्छ । आचार्य श्रीशङ्करले जीव र ब्रह्मको ऐक्य बुझाउने वैदिक महावाक्यहरूलाई उपदेशात्मक र अनुभवात्मक गरी दुई वर्गमा बाँड्नु भएको छ । ब्रह्मसूत्रको आफ्नू भाष्यमा उहाँले अरू वेदशाखाका महावाक्यहरूको उल्लेख गर्नुका साथै शुक्लयजुर्वेदशाखाध्यायीहरूका लागि भने [1]उपदेशात्मक महावाक्य र अनुभात्मक दुवै महावाक्यहरू अर्थक्रम अनुसार दिनुभएको छ । उहाँले वैदिक महावाक्यहरूलाई वाक्य भनेर वाक्यवृत्तिदेखि लिएर भाष्य समेतका आफ्ना सम्पूर्ण रचनाहरूमा उल्लेख गर्नुभएको पाइन्छ ।

शास्त्रहरूले [2]मुमुक्षुका लागि अन्तिम साधन वैदिक महावाक्य हो भनेका छन् । यसैलाई अत्यन्त सरल, सरस र सशक्तरूपमा आचार्य श्रीसर्वज्ञात्ममुनिले आफ्नू ग्रन्थ 'सङ्क्षेपशारीरकम्' ग्रन्थमा लेख्नुभएको छ । साधनचतुष्टय-

---

१ अभयं वै जनक प्राप्तोऽसि *(बृहदारण्यकोपनिषद् ४।४।२)* तदात्मानमेवावेदाहं ब्रह्मास्मीति तस्मात्तत्सर्वमभवत् *(बृहदारण्यकोपनिषद् १।४।१०)* तत्तुसमन्वयात् *(ब्रह्मसूत्र १।१।१।४ शाङ्करभाष्य)*

२ साक्षान्महावचनमेव विमुक्तिहेतुः । – सङ्क्षेपशारीरकम् ३।२९५

सम्पन्न मुमुक्षुले [३]ब्रह्मज्ञानका लागि उपसत्तिपूर्वक श्रोत्रिय ब्रह्मनिष्ठ गुरुका समक्ष गएर उपदेश श्रवण गर्नुपर्दछ। त्यो उपदेश आफ्नै वेदशाखाको उपनिषद्मा पठित हुनुपर्दछ। ब्रह्मज्ञानका लागि गुरुका मुखबाट आफ्ना शाखाको वेदान्तको अर्थात् महावाक्यको श्रवण गरिसकेपछि [४]मनन, निदिध्यासन र [५]ब्रह्माभ्यास समेतका साधनहरूको परिपाकपछि मुमुक्षुलाई ब्रह्मसाक्षात्कार, ब्रह्मानुभूति हुन्छ। मुमुक्षुलाई ब्रह्मसाक्षात्कार स्वतः हुने हो, ब्रह्मसाक्षात्कार गर्ने होइन। ब्रह्मसाक्षात्कार साधनद्वारा सम्भव छैन। निष्काम कर्मादि बहिरङ्ग साधनहरू र श्रवणादि अन्तरङ्ग साधनहरूबाट मुमुक्षुको अन्तःकरण अर्थात् बुद्धिको वृत्ति अत्यन्त निर्मल, अत्यन्त स्वच्छ र अत्यन्त सूक्ष्म ब्रह्माकार भएपछि उसलाई स्वतः ब्रह्मसाक्षात्कार भइहाल्दछ।

ब्रह्मसाक्षात्कारका लागि अन्तिम साधन भने आफ्नै वेदशाखामा पठित वैदिक महावाक्य हो। प्रत्येक वेदशाखामा आएका महावाक्यहरू नै तत् तत् वेदशाखाका अध्येताले सुन्नु पर्ने नियम शास्त्रले निर्धारण गरेको छ।

---

३ तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्।
– मुण्डकोपनिषद् १।२।१२

४ आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यः
– बृहदारण्यकोपनिषद् २।४।५

५ तच्चिन्तनं तत्कथनं तत्परस्परबोधनम्।
एतदेकपरत्वञ्च ब्रह्माभ्यासं विदुर्बुधाः ॥ – लघुवाक्यवृत्तिः १७

अन्यथा [६]ब्रह्मसाक्षात्कार हुनु ता परै जाओस्, त्यसको प्रतिकूल मुमुक्षु [७]प्रत्यवायको भागी बन्दछ।

[८]तत्त्वमसि 'अभयं वै प्राप्तोऽसि' जस्ता महावाक्यको श्रवण पश्चात् स्वच्छ अन्तःकरण भएपछि जीवात्मा र परमात्माको ऐक्य हुन्छ। त्यो ऐक्य नै मुमुक्षुको मोक्ष हो अर्थात् ब्रह्मसाक्षात्कार हो। त्यसका लागि तत्तत् वेदशाखामा पठित वैदिक महावाक्यहरू भने साक्षात्कारका परम्परया साधन नभएर साक्षात्साधन भएको कुरा श्रीशङ्कराचार्यले आफ्नू ग्रन्थ वाक्यवृत्तिमा उल्लेख गर्नुभएको छ।

श्रुतिदेखि लिएर सम्पूर्ण पुराणादि शास्त्रहरूमा, [९]आचार्यहरूका प्रकरण ग्रन्थ, विवरण ग्रन्थ, भाष्य, विवरण, वृत्ति आदि समेतमा पनि मुमुक्षुले गुरुबाट श्रवण गर्ने वैदिक महावाक्य तत्त्वमसिमात्रै नभनेर आदि भनेको देखिन्छ। तत्त्वमसि महावाक्य नौपटकसम्म आवृत्ति गरेर आफ्ना पुत्र श्वेतकेतुलाई पिता उद्दालकले श्रवण गराएको हुँदा यसै गरेर

---

६ श्रोतव्यः श्रुतिवाक्येभ्यो मन्तव्यश्चोपपत्तिभिः।
मत्त्वा च सततं ध्येयं ह्येते दर्शनहेतवः॥ – वेदान्तदर्शन

७ हित्वा स्वस्य द्विजो वेदं यस्त्वधीते परस्य तु।
शाखारण्डः स विज्ञेयः सर्वधर्मबहिष्कृतः॥
– लध्वाश्वलायनस्मृतिः २४।१९

८ तत्त्वमस्यादिवाक्योत्थं यज्जीवपरमात्मनोः।
तादात्म्यं विषयं ज्ञानं तदिदं मुक्तिसाधनम्॥ – वाक्यवृत्तिः ६

९ तत्त्वमस्यादिवाक्योत्थसम्यग्धीर्जन्ममात्रतः।
अविद्या सहकार्येण नासीदस्तिभविष्यति॥ – बृहदारण्यकोपनिषद्वार्तिक

आवृत्तिपूर्वक ब्रह्मसाक्षात्कार नभएसम्म आफ्नै वेदशाखाको महावाक्य मुमुक्षु शिष्यलाई गुरुले श्रवण गराउनु पर्छ भनेर एक प्रसिद्ध आदर्श उदाहरणका लागिमात्रै अद्वैत वेदान्तका आचार्यहरूले उल्लेख गरेको देखिन्छ। सबै वेदीहरूका मुमुक्षुहरूले श्रवण गर्ने महावाक्य *'तत्त्वमसि'* नै हो भनेर किटान गरेर उहाँहरूले लेख्नुभएको छैन। किनभने त्यस्तो लेख्नु श्रुतिविरुद्ध हुनुका साथै अपसिद्धान्त पनि हुने हुँदा आचार्यहरूद्वारा त्यस्तो लेख्नु र भन्नु भएको छ।

प्रकृत लेखको विषय महावाक्य श्रवण गर्दा विधि आवश्यक पर्दछ कि पर्दैन ? पर्दछ भने त्यो के हो ? इत्यादि हो। यो अत्यन्त महत्त्वपूर्ण प्रश्न वा जिज्ञासा भएकाले यसको सङ्क्षिप्त चर्चा गर्नु आवश्यक छ। स्वाध्याय, महावाक्य श्रवण र विधिका सम्बन्धमा प्रत्येक वेदशाखामा कहीँ सङ्केतका रूपमा सङ्क्षेपमा र कहीँ विस्तारमा उल्लेख भएको पाइन्छ। त्यसैलाई सङ्ग्रह गरेर सर्वज्ञात्ममुनिले आफ्नू ग्रन्थमा सङ्केतसम्म गर्नुभएको छ। त्यसको छोटकरीमा उल्लेख गरेपछि वेदशाखा र त्यस अन्तर्गत आएका नियम र विधिको पनि सङ्क्षिप्त चर्चा यथाशक्य गर्ने प्रयास हुनेछ।
[१०]जुन महावाक्य आफ्नै वेदशाखाको वेदान्तभाग अर्थात् उपनिषद्मा आएको छ, जसलाई नियमविधिपूर्वक

---

१० स्वाध्यायधर्मपठितं निजवेदशाखा वेदान्तभूमिगतमादरपालितञ्च।
सन्न्यासिना परदृशा गुरुणोपदिष्टं साक्षान्महावचनमेव विमुक्तिहेतुः ॥
– सङ्क्षेपशारीरकम् ३।२९५

स्वाध्यायका द्वारा प्राप्त गरिएको छ, जुन श्रद्धापूर्वक दीर्घ समयसम्म आराधित छ र जुन महावाक्य श्रोत्रिय ब्रह्मनिष्ठ आचार्यकाद्वारा उपदिष्ट छ, त्यसै महावाक्यले मात्रै साक्षात् साधनका रूपमा मुमुक्षुलाई ब्रह्मसाक्षात्कार गराउन सक्तछ। स्ववेदशाखा इतरका अरू महावाक्यको श्रवणबाट मुमुक्षुले ब्रह्मसाक्षात्कार गर्न सक्तैन।

माथि उद्धरण गरिएको श्लोकमा आएको *'धर्मपठितम्'* पदलाई लिएर सर्व प्रथम चर्चा गर्नु सान्दर्भिक हुनेछ। धर्म पठितंको अर्थ विधिपूर्वक भन्ने हुन्छ। यसबाट प्रत्येक वेदका शाखामा आफ्नू अधिकार अनुसार संहितादेखि लिएर उपनिषद्सम्म गुरुबाट पढ्दा र अन्त्यमा निवृत्तिमार्गमा लागेर मुक्त हुन चाहने मुमुक्षुले पनि निर्धारित विधिपूर्वक नै महावाक्यको श्रवण गर्नुपर्ने श्रुतिमा नै उल्लेख भएको देखिन्छ। सामान्यरूपमा यमनियमादिको परिपालन गर्दै गुरुका समक्ष अत्यन्त विनीत र नम्र भएर साष्टाङ्गदण्डवत्पूर्वक शिष्यले उपसत्ति गर्नु पर्दछ। [११]तदनन्तर ब्राह्मणले विनाकारण र विना स्वार्थ विधिपूर्वक अर्थसमेत षडङ्गसहित आफ्नै वेदशाखाको अध्ययन गर्नुपर्दछ। श्रुतिमा आएको ब्राह्मण शब्दले भविष्यद्वृत्तिको सङ्केत गरेको हो। आफ्ना आफ्ना वेदशाखा अर्थसहित अध्ययन गरिसकेपछि मात्रै आफ्नो योग्यता र इच्छा अनुसार निवृत्ति वा प्रवृत्तिमार्गमा प्रवेश गर्न सकिने

---

११ ब्राह्मणेन निष्कारणो धर्मः षडङ्गो वेदोऽध्येयो ज्ञेयश्च। – श्रुतिः

भएकाले श्रुतिले निष्कारण भनेको देखिन्छ।

वेदको अध्ययन गर्दा प्रत्येक अध्येताले समानरूपले धारणा र पालना गर्नुपर्ने सामान्य विधि माथि सङ्केत गरियो। किन्तु चारै वेदका प्रत्येक वेदशाखाले आफ्नो शाखाको वेद अध्ययन गर्दा पालना गर्नुपर्ने विधि र नियम भने आआफ्ना शाखामा अत्यन्त सरलदेखि लिएर अत्यन्त कठिन विधिको उल्लेख गरेको पाइन्छ। शुरुदेखि लिएर ब्रह्मसाक्षात्कार गर्दासम्म त्यो शाखा अध्ययन गर्ने सबैले त्यही नै विधि समानरूपमा पालना गर्नुपर्ने देखिन्छ।

यस लेखमा सबै वेदशाखाहरूको अध्ययनविधि उल्लेख गर्न सम्भव नभएकाले केहीको मात्र उल्लेख गर्नु पर्याप्त हुने ठान्दछु। सर्वप्रथम अथर्ववेदको मन्त्रभागमा आएको मुण्डकोपनिषद्‌मा उल्लेख गरिएको विधिको यहाँ उल्लेख गरिन्छ। [१२]जुन अधिकारी कर्मानुष्ठानमा लागेको छ, श्रोत्रिय र ब्रह्मनिष्ठ छ, अर्थात् अपर ब्रह्ममा लागेर परब्रह्मको ज्ञान गर्न इच्छुक छ, यसका साथै स्वयं श्रद्धायुक्त भएर एकर्षि नामक अग्निमा जसले हवन गर्दछ त्यस्तो शुद्ध चित्त भएको ब्रह्मविद्याको पात्रभूत उत्तम अधिकारीलाई यो ब्रह्मविद्या

---

१२ (क) क्रियावन्तः श्रोत्रिया ब्रह्मनिष्ठाः स्वयं जुह्वत एकर्षि श्रद्धवन्तः।
तेषामेवैषां ब्रह्मविद्यां वदेत शिरोव्रतं विधिवद्यैस्तु चीर्णम्॥
– मुण्डकोपनिषद् ३।२।१०

(ख) तदेतत्सत्यमृषिरङ्गिराः पुरोवाच नैतदचीर्णव्रतोऽधीते।
– मुण्डकोपनिषद् ३।२।११

उपदेश गर्नुपर्दछ।

जुन अधिकारीले शिरमा अग्नि धारण गर्ने शिरोव्रत अर्थात् जुन अथर्ववेदीहरूका लागि वेदव्रतका नामबाट प्रसिद्ध पनि छ र त्यस्तो वेदव्रत जुन मुमुक्षुले विधिवत् अनुष्ठान गरेको छ त्यस्ता उत्तम अधिकारीलाई मात्रै गुरुले यो ब्रह्मविद्या श्रवण गराउनु पर्दछ, अरूलाई हुँदैन। उपर्युक्त अनुसारको अचीर्ण व्रत अर्थात् शिरोव्रतको आचरण जुन पुरुषले गरेको छैन, त्यस्ताले ब्रह्मविद्या अध्ययन गर्न सक्तैन। किनभने जसले उक्त व्रतको आचरण गरेको छ, उसैलाई यो ब्रह्मविद्या संस्कार सम्पन्न भएर फलवती हुन्छ भनेर श्रुतिले स्वयं स्पष्टरूपमा भनेको कुरालाई श्रीशङ्कराचार्यले आफ्नू भाष्यद्वारा अझै स्पष्ट पार्नुभएको छ।

अरू वेदका शाखाध्यायीहरूका लागि अथर्ववेदको जस्तो कठिन विधिहरू नभए पनि अध्ययन गर्दा पालना गर्नुपर्ने नियमविधिको भने उल्लेख भएको पाइन्छ।

पालना गर्नुपर्ने नियम र विधिका अतिरिक्त प्रत्येक वेदाध्ययन र ब्रह्मज्ञानका निमित्त आफ्ना समक्ष आएका शिष्यलाई उसको योग्यता, पात्रता र समर्पणभाव हेरेर गोसेवा, अग्निसेवा, समाजसेवा आदिमा नियुक्त गरेर अध्ययन र ज्ञानको लागि तयार गरेको देखिन्छ। उनीहरूलाई पात्रता हेरेर छोटो समयदेखि लिएर सयौँ वर्षसम्म ब्रह्मचर्यपालनापूर्वक तपस्या गर्न लगाएको र विभिन्न विषयहरू दिएर ब्रह्माभ्यास समेत गराएको विभिन्न उपनिषद्हरूबाट थाहा पाइन्छ।

प्रत्येक वेदका संहितादेखि लिएर उपनिषद्सम्मका

आआफ्ना शाखाहरूमा शुरुदेखि अन्तसम्मको अध्ययनविधि सामान्यरूपमा एउटै हो तापनि विधिपूर्वक आफ्नू शाखाको वेद षडङ्ग र अर्थसहित पढिसकेपछि प्रत्येक स्नातकले आफ्नू इच्छा अनुसार प्रवृत्तिमार्ग वा निवृत्तिमार्गतर्फ प्रवृत्त हुन पाउँछ। प्रवृत्तिमार्गमा लाग्नेले [१३]धर्मको जिज्ञासातर्फ प्रवेश गर्ने र निवृत्तिमार्गमा लाग्नेले [१४]ब्रह्मको जिज्ञासा गर्नुपर्ने हाम्रो गौरवपूर्ण परम्परा छ। त्यसको विशेष विधि श्रुतिमा पाइन्छ। त्यो हो जुन पुरुषले साधनचतुष्टय सम्पन्न भएर [१५]ब्रह्मसाक्षात्कार गर्न चाहन्छ त्यस मुमुक्षुले हातमा समिधा लिएर ब्रह्मज्ञानका लागि श्रोत्रिय ब्रह्मनिष्ठ गुरुका समक्ष गएर उपसत्तिपूर्वक ब्रह्मजिज्ञासा गर्नु पर्दछ। किन्तु पछि गएर आचार्य श्रीवाचस्पति मिश्रको भामतीप्रस्थानमा श्रवण आदिमा नियमविधिको आवश्यकता मानिएको छैन भने आचार्य श्रीप्रकाशात्मयतिको विवरण प्रस्थानमा चाहिँ श्रवण आदि नियमविधिको आवश्यकता मानिएको छ। किन्तु परवर्ती आचार्यहरूका प्रस्थानमा जेसुकै भनिएको भए तापनि विभिन्न उपनिषद्हरू र शाङ्करभाष्यमा समेत श्रवणका अङ्गका रूपमा नियमविधिलाई लिइएको हुँदा मुमुक्षुले तदनुरूप महावाक्यको श्रवण गर्नु नै पर्ने देखिन्छ। त्योभन्दा अघि अरू ग्रन्थका साथै श्रीपद्मपादाचार्यले आफ्नू

---

१३ अथातो धर्मजिज्ञासा। – मीमांसासूत्रम् १।१।१

१४ अथातो ब्रह्मजिज्ञासा। – ब्रह्मसूत्रम् १।१।१।१

१५ तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्।
– मुण्डकोपनिषद् ३।२।१२

पञ्चपादिकाग्रन्थको प्रथम वर्णकमा *'श्रोतव्यः श्रुतिवाक्येभ्यः'* मा नियमविधिको प्रतिपादन गर्नुभएको छ।

गुरूपसत्तिपश्चात् मुमुक्षुको पात्रताको परीक्षा गरेर अन्त्यमा सम्बन्धित वेदशाखाको महावाक्यको श्रवण गुरुले मुमुक्षु शिष्यलाई विधिपूर्वक गराउँदछन्। विधिका सम्बन्धमा केही [१६]उपनिषद्ले विनियोग, अङ्गन्यास, करन्यास, दिग्बन्धनादि-पूर्वक श्रवण गरेर जप्नुपर्ने विधान गरेको पाइन्छ। किन्तु एकातर्फ *'तत्त्वमसि'* आदि महावाक्यहरू अङ्गन्यासादि इतिकृत्यपूर्वक जप्ने मन्त्र नभएर गुरुले शिष्यलाई उपदेश गर्ने महावाक्य हुन् भनेको छ भने अर्कोतर्फ यिनै वाक्यहरूलाई जप्ने मन्त्र भनेको छ। जो मन्त्र जप्तछ त्यसलाई [१७]मन्त्रविद् भनिन्छ, आत्मविद् भनिँदैन। आत्मविद्को मात्रै मुक्ति हुन्छ, मन्त्रविद्को हुँदैन भनेर अर्को उपनिषद्ले भनेको हुँदा महावाक्य मनन, निदिध्यासन आदि गरेर ब्रह्मसाक्षात्कार गर्ने साक्षात् साधन हो, तर श्रवणपछि जप्ने मन्त्र होइन भन्ने स्पष्ट हुन्छ। अतः आ-आफ्ना वेदशाखा समेतमा उल्लेख भएको अनुरूप नै महावाक्यको श्रवणविधि हो भनेर मुमुक्षुले बुझ्नु आवश्यक छ। ॐ ब्रह्मार्पणमस्तु।

❁

---

१६ तत्त्वमसीत्यभेदवाचकमिदं ये जपन्ति ते शिवसायुज्यमुक्तिभाजो भवन्ति।
– शुकरहस्योपनिषद्, कृष्णयजुर्वेदः

१७ सोऽहं भगवो मन्त्रविदेवास्मि नात्मविच्छ्रुतं ह्येव मे भगवद्दृशेभ्यस्तरति शोकमात्मविदिति। – छान्दोग्योपनिषद् ७।१।३

# ३२. मुमुक्षु आफैँले जान्नुपर्ने

मुमुक्षु आफैँले जान्नुपर्ने धेरै विषयहरू पर्दछन् । अद्वैत वेदान्तमा प्रमाता नै वेदान्त श्रवणको [१]अधिकारी हो। जुन प्रमाता संसारको आवागमन र जन्ममरणको दुश्चक्रबाट पार भएर परमानन्दस्वरूप ब्रह्म बन्न चाहन्छ, मुमुक्षु त्यही हो। वेदान्तवाक्य श्रवण गर्न त्यही उत्तम अधिकारी हो जसले वेद र वेदाङ्ग निष्कारण अर्थसहित गुरुमुखी भएर विधिवत् अध्ययन गरेको छ। त्यतिमात्रै होइन, जसले यस जन्ममा अथवा पूर्वजन्ममा काम्य र निषिद्ध कर्महरूको परित्यागपूर्वक नित्य कर्म, नैमित्तक कर्म, प्रायश्चित्त कर्म र उपासनाद्वारा अन्तःकरणका सम्पूर्ण कल्मषहरू नाश गरेर नितान्त निर्मल बनाएको छ, जुन पुरुष साधनचतुष्टयद्वारा सम्पन्न छ त्यो प्रमाता नै अधिकारी हो र मुमुक्षु हो।

प्रमाता नै मुमुक्षु हो। धर्म, अर्थ, काम र मोक्षहरूमध्ये चारौँ पुरुषार्थ जस्तो पुरुषार्थ परम मोक्ष हो। मुमुक्षुत्व नै मुमुक्षुको धर्म हो। साधनचतुष्टय मध्येको अन्तिम मुमुक्षा जुन प्रमातामा रहन्छ, त्यही मुमुक्षुत्व हो। मुमुक्षुत्व धर्म नहुने मुमुक्षु हुन सक्तैन।

---

१ अधिकारी तु विधिवदधीतवेदवेदाङ्गत्वेनापाततोऽधिगताखिलवेदार्थोऽस्मिन् जन्मनि जन्मान्तरे वा काम्यनिषिद्धवर्जनपुरःसरं नित्यनैमित्तिक-प्रायश्चित्तोपासनानुष्ठानेन निर्गतनिखिलकल्मषतया नितान्तनिर्मलस्वान्तः साधनचतुष्टयसम्पन्नः प्रमाता। – वेदान्तसार ४

मुमुक्षुत्वको अर्थ हो मोक्ष प्राप्त गर्ने इच्छा । यो नै आत्मज्ञानको प्रधान साधन हो । अन्यथा प्रमाता यसतर्फ प्रवृत्त नै हुनसक्तैन । संसारका प्रति तीव्र वैराग्य हुनुपर्छ । [2]जसरी यस लोकमा कृषि आदि कर्मद्वारा सम्पादित धान्यादि फल क्षीण हुन्छन्, त्यसै गरेर पुण्यद्वारा सम्पादित स्वर्गादि फल पनि क्षीण हुन्छन् भनेर श्रुतिले भनेको मुमुक्षुले राम्ररी आत्मसात् गर्नुपर्दछ ।

उपर्युक्त अनुसार ऐहिक र पारलौकिक भोगहरूको असारता देखेपछि मुमुक्षु अधिकारी वेदान्त श्रवणका निमित्त गुरुसमक्ष जानु पर्ने विधान गर्दै अर्को श्रुतिले भनेको छ । [3]कर्मद्वारा प्राप्त भएका यस लोकका र परलोकका फलहरूको समेत परीक्षा गरेर ब्राह्मण अर्थात् मुमुक्षु विरक्त बनोस् । किनभने नित्य वस्तु ब्रह्म अनित्य कर्मद्वारा प्राप्त हुनसक्तैन भन्ने बुझेर नित्य वस्तु ब्रह्मको साक्षात् ज्ञान प्राप्त गर्नका लागि मुमुक्षु हातमा समिधा लिएर आफ्ना वेदशाखाका श्रोत्रिय तथा ब्रह्मनिष्ठ गुरुका समक्ष जाओस् ।

[4]जसको मन शान्त भएको छ, जसका इन्द्रियहरू

---

२ तद्यथेह कर्मजितो लोकः क्षीयत एवमेवामुत्र पुण्यजितो लोकः क्षीयते ।
– छान्दोग्योपनिषद् ८।१।६

३ परीक्ष्य लोकान्कर्मचितान्ब्राह्मणो निर्वेदमायन्नास्त्यकृतः कृतेन ।
तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम् ।
– मुण्डकोपनिषद् १।२।१२

४ शान्तो दान्त उपरतस्तितिक्षुः समाहितोभूत्वाऽऽत्मन्येवात्मानं पश्यति ।
– बृहदारण्यकोपनिषद् ४।४।२३

प्रशान्तचित्ताय जितेन्द्रियाय च प्रहीणदोषाय यथोक्तकारिणो ।
गुणान्वितायानुगताय सर्वदा प्रदेयमेतत्सततं मुमुक्षवे ।। – वेदान्तसार

विषयहरूबाट निवृत्त भएका छन्, जसले गुरुबाट ब्रह्मोपदेश प्राप्त गरेको छ, जुन मुमुक्षु प्रिय र अप्रियबाट विचलित हुँदैन, जसको चित्त ब्रह्मचिन्तनमा एकाग्रभावले तल्लीन छ, त्यस्तो मुमुक्षुले नै ब्रह्मसाक्षात्कार गर्न सक्तछ। यस्तै उत्तम अधिकारीलाई नै गुरुले ब्रह्मोपदेश गरून् भनेर श्रुतिले निर्देश गरेको छ।

[५]संसारमा मनुष्यत्व, मुमुक्षुत्व र श्रोत्रिय ब्रह्मनिष्ठ गुरु र ब्रह्मोपदेश प्राप्त गर्न पाउनु अत्यन्त दुर्लभ छ। भगवान्‌का कृपाद्वारा नै यी सबै प्राप्त हुन्छन् अन्यथा सम्भव छैन। यस प्रकार [६]यस दुर्लभ मनुष्य जन्म र पुरुषत्व समेत पाएर पनि जुन मनुष्यले आफ्नो मुक्तिका लागि प्रयत्न गर्दैन भने त्यस्तो मनुष्य निश्चय नै आत्मघाती हो। यस मिथ्या संसारमा हिरिक्क भएर नै त्यस अभागी मनुष्यले आफैँले आफूलाई विनष्ट गरिरहेको छ भन्ने आचार्य शङ्करको भनाइ देखिन्छ।

मुमुक्षुले उपर्युक्त अनुसार श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट मोक्षका लागि वेदान्तवाक्यको श्रवण गर्ने भनेर श्रुतिले विधान गरेको परिप्रेक्ष्यमा कुन र कस्तो वाक्य गुरुबाट श्रवण गर्ने हो भन्ने जिज्ञासा उत्पन्न हुन सक्तछ। सर्वप्रथम [७]ब्राह्मणले विनाकारण

---

५ दुर्लभं त्रयमेवैतद्देवानुग्रहहेतुकम्। मनुष्यत्वं मुमुक्षुत्वं महापुरक्षसंश्रयः।
– वेदान्तसन्दर्भ

६ लब्ध्वा कथञ्चिन्नरजन्म दुर्लभं तत्रापि पुंस्त्वं श्रुतिसारदर्शनम्।
यः स्वात्ममुक्तौ न यतेत मूढधीः स ह्यात्महा स्वं विनिहन्त्यसद्ग्रहात्॥
– विवेकचूडामणि ३।४

७ ब्राह्मणेन निष्कारणो धर्मः षडङ्गो वेदोऽध्येयो ज्ञेयश्च। – श्रुतिः

विधिपूर्वक षडङ्गसहित अर्थ समेत बुझेर गुरुबाट वेद पढ्नु पर्ने कुरा श्रुतिले भनेको छ। उक्त श्रुतिले अरू कुराका अतिरिक्त महत्त्वपूर्ण ब्राह्मण र धर्म भन्ने दुई शब्दहरू प्रयोग गरेको छ। अद्वैत वेदान्तका दृष्टिले यी शब्दहरूको अति ठूलो महत्त्व देखिन्छ। यसमा आएको ब्राह्मण शब्दले [८]भविष्यद्वृत्तिको दृष्टिले वेदान्तवाक्यको श्रवणपछि कालान्तरमा ब्रह्मज्ञान गर्ने ब्रह्मज्ञानीलाई भनेको देखिन्छ। [९]जसले ब्रह्म जान्दछ त्यो नै ब्राह्मण हो भन्ने शास्त्रको मत देखिन्छ। यसमा आएको ब्राह्मण शब्द जात्या ब्राह्मणलाई नभएर ब्रह्मज्ञान गरेर ब्रह्म भएको ब्राह्मणका लागि हो भनेर बुझ्नु पर्दछ।

अर्को शब्द धर्म हो। यो [१०]वेदप्रतिपादित कामनायुक्त धर्म नभएर गुरुबाट वेदान्तवाक्य श्रवण गर्दा शिष्यले पालना गर्नुपर्ने [११]नियमलाई भनिएको हो, जसलाई श्रुतिले विधि भनेको छ। आफ्नू शाखाको वेद गुरुबाट अध्ययन गर्दा विधिपूर्वक गर्नुपर्ने श्रुतिको निर्देश भएको कुरा माथि पादटिप्पणी ७ मा उल्लेख गरिसकियो। ब्रह्मज्ञानका लागि चित्तशुद्धिदेखि

---

८ जीवात्मनोः पृथक्त्वं यत्प्रागुत्पत्तेः प्रकीर्तितम् ।
भविष्यद्वृत्त्या गौणं तन्मुख्यत्वं हि न युज्यते ॥
– माण्डूक्यकारिका प्र.अ. १४

९ ब्रह्म जानाति ब्राह्मणः ।

१० चोदनालक्षणोऽर्थो धर्मः । – पूर्वमीमांसादर्शन १।१।२

११ क्रियावन्तः श्रोत्रिया ब्रह्मनिष्ठाः स्वयं जुह्वत एकर्षिं श्रद्धयन्तः ।
तेषामेवैषां ब्रह्मविद्यां वदेत शिरोव्रतं विधिवद्यैस्तु चीर्णम् ॥
– मुण्डकोपनिषद् ३।२।१०

लिएर आवरण भङ्गसम्मका दुईथरी साधनहरू हुने कुरा शास्त्रहरूले उल्लेख गरेका छन् । जसमा [१२]विविदिषा अर्थात् जिज्ञासाका लागि परम्परया साधन हुन्छन्, ती सबै बहिरङ्ग साधन हुन् भने जुन साधन साक्षात् ब्रह्मज्ञानका लागि हुन्छन् ती अन्तरङ्ग साधन हुन् । यसलाई श्रुतिले स्पष्टरूपमा नै [१३]बहिरङ्गसाधन र [१४]अन्तरङ्गसाधन अर्थात् साक्षात्साधन भनेर स्पष्टै विधान गरेको छ ।

ब्रह्मसाक्षात्कार गर्न अग्रसर तीव्र वैराग्ययुक्त साधनचतुष्टय-सम्पन्न मुमुक्षुले वेदाध्ययन गर्दा शुरुदेखि नै पालना गर्नुपर्ने श्रुतिसम्मत श्रवणविधिको सामान्य सङ्केतसम्म माथिका केही पङ्क्तिहरूद्वारा गरियो । त्यसलाई श्रुतिले [१५]स्वाध्याय भनेको छ । आफ्नै वेदशाखा गुरुबाट विधिपूर्वक श्रवण गर्नु नै [१६]स्वाध्याय हो । यस श्रुतिवाक्यभन्दा प्रतिकूल गरिएको श्रवण स्वाध्यायको परिभाषा भित्र पर्दैन । त्यसलाई केवल स्वाध्यायलाई सघाउने सामान्य अध्ययन र जानकारीका रूपमा मात्रै लिन सकिन्छ ।

---

१२ यत्श्रुतं विविदिषोदयाय यत् सर्वमेव बहिरङ्गसाधनम् ।
अन्तरङ्गमवगच्छ तत्पुनर्यत्परावगतिसाधनं श्रुतम् ॥
– सङ्क्षेपशारीरकम् ३।३०

१३ तमेतं वेदानुवचनेन ब्राह्मणा विविदिषन्ति यज्ञेन दानेन तपसाऽनाशकेन ।
– बृहदारण्यकोपनिषद् ४।४।२२

१४ तस्मादेवंविच्छान्तोदान्त उपरतस्तितिक्षुः समाहितो भूत्वाऽऽत्मन्येवात्मानं पश्यति । – बृहदारण्यकोपनिषद् ४।४।२३

१५ स्वाध्यायमधीयीत । – तैत्तिरीय आरण्यक १७९

१६ स्वाध्यायोऽध्येतव्यः । – शतपथब्राह्मण ११।५।७।२

जसरी श्रोत्रविधि अनुसार शुरुमा गुरुबाट वेदाध्ययन गरिएको हुन्छ त्यसरी नै मुक्तिको साक्षात्कारण भएको महावाक्यको श्रवण गर्नुपर्ने कुरा श्रुतिको सारसङ्ग्रहका रूपमा आएको आचार्य सर्वज्ञात्ममुनिको भनाइ मुमुक्षुका लागि अत्यन्त मननीय छ। जस्तै जुन [१७]महावाक्य आफ्नो वेदशाखामा पढिएको छ, विधिपूर्वक स्वाध्यायद्वारा प्राप्त गरिएको छ, श्रद्धापूर्वक दीर्घ समयसम्म आराधित छ र त्यो महावाक्य श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट श्रवण गरिएको छ त्यो नै मोक्षको साक्षात् हेतु अर्थात् साधन हुनसक्तछ, अन्यथा सम्भव छैन।

भगवत्पाद श्रीशङ्कराचार्यले पनि महावाक्यको विधिपूर्वकको श्रवणबाट मुमुक्षुले ब्रह्मसाक्षात्कार गर्नसक्तछ र त्यो ज्ञान नै जीव र परमात्माको तादात्म्य गराउने साधन हो भनेर आफ्नो ग्रन्थ [१८]वाक्यवृत्तिमा उल्लेख गर्नुभएको छ। यसै प्रकारको मत [१९]सुरेश्वराचार्य लगायतका आचार्यहरूको पनि रहेको छ।

---

१७ स्वाध्यायधर्मपठितं निजवेदशाखावेदान्तभूमिगतमादरपालितञ्च।
सन्न्यासिना परदृशा गुरुणोपदिष्टं साक्षान्महावचनमेव विमुक्तिहेतुः॥
– सङ्क्षेपशारीरकम् ३।२९५

१८ तत्त्वमस्यादि वाक्योत्थं यज्जीवपरमात्मनोः
तादात्म्यविषयं ज्ञानं तदिदं मुक्तिसाधनम्॥ – वाक्यवृत्तिः ६

१९ तत्त्वमस्यादिवाक्योत्थसम्यग्धीर्जन्ममात्रतः।
अविद्या सह कार्येण नासीदस्ति भविष्यति॥ – बृहदारण्यकोपनिषद्वार्तिक

उपर्युक्त अनुसार वेदान्तवाक्यको श्रवणपछि दीर्घकालसम्मको मनन र निदिध्यासनबाट मुमुक्षु साधनाको परिपाक भएपछि देहपात अनन्तर सद्योमुक्ति वा क्रममुक्तिमा प्राप्त हुन सक्तछ। देहपात नभएसम्म ब्रह्मज्ञानी स्थितप्रज्ञ वा जीवन्मुक्तिको अवस्थामा रहन्छ। वस्तुतः ब्रह्मज्ञानी ब्रह्मसाक्षात्कार भएपछि [20]ब्रह्म नै हुन्छ भनेर श्रुतिले भनेको छ। त्यस्ता ब्रह्मज्ञानीको स्थिति, चालचलन, बोलीचाली आदि लक्षणहरू शास्त्रहरूले उल्लेख गरेको पाइन्छ। किन्तु त्यस प्रकारको स्थिति र अवस्थामा नपुगेका र साधनाको परिपाक नभएका मुमुक्षु ज्ञानी साधकहरूका बारेमा सामान्य मानिसलाई थाहा हुन सक्तैन। त्यतिमात्रै होइन, मुमुक्षु आफैँलाई पनि आफ्नू साधना र ज्ञानको स्थिति कुन स्तरमा पुग्यो भन्ने थाहा पाउन मुस्किल पर्ने देखिन्छ। अतः त्यसतर्फ मुमुक्षुले सचेत भएर आफ्नू परीक्षण र आन्तरिक निरीक्षण गरिरहनु अति आवश्यक छ। अन्यथा पतन हुने भय हुन्छ।

मुमुक्षुले आत्मनिरीक्षण गर्दा तलका मुख्य बुँदाहरूमा ध्यान दिनुपर्ने देखिन्छ। शास्त्रहरूले यस सम्बन्धमा प्रशस्त चर्चा गरेका छन्। जबसम्म मुमुक्षुमा भय रहन्छ तबसम्म ब्रह्मज्ञानको स्तर बढेको नहुन सक्तछ। अतः सर्वप्रथम मुमुक्षु निर्भय हुनु आवश्यक छ। भय अर्कोबाट हुन्छ। [21]अर्को भनेको द्वैत हो।

---

२० ब्रह्मवेद ब्रह्मैव भवति। – मुण्डकोपनिषद् ३।२।९

२१ यत्र हि द्वैतमिव भवति तदितर इतरं पश्यति।
– बृहदारण्यकोपनिषद् २।४।१४

द्वैत भनेको माया र मायाको कार्य हो। त्यो भनेको मुमुक्षुको अन्तःकरणमा रहेको वासना हो। जबसम्म वासना क्षय हुँदैन तबसम्म अभय स्थिति प्राप्त हुनसक्तैन। अभय हुनलाई द्वैत नाश हुनु पर्दछ। द्वैतको थोरै अन्तर वा लेश रहेसम्म पनि द्वैत रहन्छ। त्यो रहुन्जेल [२२]भय रहन्छ। अतः अभयता मुमुक्षुको पहिलो लक्षण हो। यसलाई श्रीमद्भगवद्गीताले दैवी सम्पत् पनि भनेको छ। श्रुतिले [२३]अभयलाई ब्रह्म भनेको छ। उपनिषद्मा मुमुक्षु राजा जनकले अभय ब्रह्म प्राप्त गरेको [२४]उद्घोष ब्रह्मज्ञानी गुरु याज्ञवल्क्यले गरेको देखिन्छ। श्रीमद्भागवतमा पनि राजा परीक्षित्ले आफू [२५]अभय ब्रह्म भएको अनुभव गुरु श्रीशुकदेवलाई सुनाएको देखिन्छ। अभयता नै ब्रह्मप्राप्तिको साधन र साध्य पनि हो भन्ने मुमुक्षुले आत्मसात् गरेर भय अर्थात् मृत्युको अभिनिवेशबाट मुक्त भएर अभय हुने प्रयास गर्नु परम आवश्यक छ।

मुमुक्षुले श्रीमद्भगवद्गीताको १३ औँ अध्यायमा ज्ञानका साधनहरूको उल्लेख भएको छ। तिनको अनुसरण र तदनुरूप आचरण गर्दै आफू कुन अवस्थामा छु भन्ने कुरा सजग र सतर्क भएर आफ्नू परीक्षण आफैँले गर्दै रहनु पर्दछ। अरूको सम्मान गर्नु तर आफूले भने मान नखोज्नु, ढोङ्गी नहुनु

---

२२ उदरमन्तरं कुरुते अथ तस्य भयं भवति। – तैत्तिरीयोपनिषद् २।७।१

२३ अभयं हि ब्रह्म। – माध्यन्दिनीय शतपथब्राह्मण १४।७।२१।३१

२४ अभयं वै जनक प्राप्तोऽसि। – बृहदारण्यकोपनिषद् ४।२।४

२५ भगवंस्तक्षकादिभ्यो मृत्युभ्यो न विभेम्यहम्।
प्रविष्टो ब्रह्मनिर्वाणमभयं दर्शितं त्वया॥ – भागवत १२।६।५

अर्थात् दम्भरहित हुनु। मन, वचन र शरीरले समेत कुनै प्राणीलाई पीडा नपुऱ्याउनु। अरूले आफूलाई बिगार वा दुःख दिए पनि सहनु र क्षमाशील हुनु। प्रतिशोधको भावना पटक्कै नराख्नु। निष्कपट अर्थात् कुटिलतारहित हुनु। ज्ञानदाता सद्गुरुप्रति श्रद्धा राख्नु। सर्वथा शुद्ध रहनु। मोक्षमार्गमा दृढ भएर लाग्नु। आत्मविनिग्रह गर्नु। विषयासक्त नहुनु। अहंभावरहित हुनु। जन्म, मृत्यु, जरा र व्याधि आदिमा दुःखरूप दोष देख्नु। कुनै सामान्य विषयमा पनि आसक्ति नराख्नु। आफ्नै [२६]मिथ्या आत्मा शरीर तथा छोरा, पत्नी, धन, सम्पत्ति, घर आदि गौण [२७]आत्मामा हिरिक्क भएर अभिष्वङ्ग अर्थात् विशेष आसक्ति नराख्नु। इष्ट र अनिष्ट कुरा आइपर्दा हर्षशोकादि विकारमा प्राप्त नहुनु। एकान्त र पवित्र ठाउँमा बस्नु। विषयासक्त अज्ञानी जनसमूहका बीचमा नबस्नु। आत्मज्ञान अर्थात् [२८]ब्रह्मचिन्तनमा सधैँ लागिरहनु। जीवात्मा र परमात्माको एकत्व प्रतिपादन गर्ने आफ्नै वेदशाखामा पठित महावाक्यको गुरूपदेश पछि अहोरात्र

---

२६ गौणमिथ्यात्मनोऽसत्त्वे पुत्रदेहादिबाधनात्।
सद्ब्रह्मात्माहमित्येवं बोधे कार्यं कथं भवेत्॥
– ब्रह्मसूत्र ४।१।४ सुन्दरपाण्ड्या

२७ किमात्मनानेन जहाति योऽन्ततः किं रिक्थहारैः स्वजनाख्यदस्युभिः।
किं जायया संसृतिहेतुभूतया मर्त्यस्य गैहैः किमिहायुषो व्ययः॥
– भागवत ८।२२।९

२८ आमुक्तेरामृते कालं नयद् वेदान्तचिन्तया।
दद्यान्नावसरं किञ्चित्कामादीनां मनागपि॥ – वेदान्तसन्दर्भ।

मनन, निदिध्यासन, [२९]ब्रह्माभ्यास र चिन्तन गरिरहनु अर्थात् सधैँभरि ब्रह्मकै चिन्तन गर्नु, ब्रह्मकै बारेमा बोल्नु वा प्रवचन गर्नु, मुमुक्षुहरूका बीच आफू आफूमा पनि ब्रह्मकै चर्चा गर्नु, एक मुमुक्षुले अर्को मुमुक्षुलाई ब्रह्मचिन्तनतर्फ उत्प्रेरित गर्नु र आफ्नू अन्तिम लक्ष्य नै ब्रह्मसाक्षात्कार हो भन्ने सम्झनु ब्रह्माभ्यास हो ।

[३०]साधनचतुष्टयसम्पन्न ब्रह्मजिज्ञासु र मुमुक्षायुक्त मुमुक्षुले उपर्युक्त ज्ञानका साधनहरूलाई विना प्रमाद जीवनमा आचरण गर्दै आफूलाई तदनुकूल बनाएर अनवरत ब्रह्मचिन्तन गर्नुपर्दछ । आफ्नू साधना र चिन्तन तीव्र बनाउँदै लानुको साथै आफैँले आफ्नू स्थितिको अध्ययन, निरीक्षण र परीक्षण पनि गर्दै जानु अति आवश्यक छ। परीक्षण र निरीक्षण गर्दा आफ्ना अन्तःकरणमा जन्मजन्मान्तर, युगयुगान्तर र कल्पकल्पान्तरदेखि जमेर रहेका वासनात्मक मलदोष, विक्षेपदोष र आवरणदोष समेतका त्रिदोषहरूको के कति प्रक्षालन हुनसक्यो सर्वदा ध्यान दिनु पर्दछ । यसमा आत्मकृपा, गुरुकृपा, शास्त्रकृपा र ईश्वरकृपाको ठूलो भूमिका रहन्छ। यसरी सबै दोषादि नाश गर्दै लगेपछि अन्त्यमा तीव्र साधनाको परिपाक भएर ब्रह्माकारित चरम बुद्धिवृत्ति भएपछि मुमुक्षु मुक्त हुनसक्तछ । ॐ ब्रह्मार्पणमस्तु ।

२९ तच्चिन्तनं तत्कथनं तत्परस्परबोधनम् ।
एतदेकपरत्वञ्च ब्रह्माभ्यासं विदुर्बुधाः ॥ – लघुवाक्यवृत्तिः १७

३० अथातो ब्रह्मजिज्ञासा । – ब्रह्मसूत्र १।१।१।१

# ३३. मोक्षको परम कारण

मोक्ष साधनबाट प्राप्त हुने वस्तु होइन। मोक्ष भनेको ब्रह्म नै हो। सामान्यरूपमा चार थरी पुरुषार्थहरूमा मोक्षलाई पनि पुरुषार्थ भनेर शास्त्रहरूले भनेका छन्। पुरुषका प्रयत्नले प्राप्त हुने वा प्राप्त गर्न सकिने वस्तुलाई नै पुरुषार्थ भनिन्छ। किन्तु मोक्ष भने सिद्ध वस्तु भएकाले धर्म, अर्थ र कामहरू जस्तो पुरुषार्थद्वारा प्राप्त हुन नसक्ने वस्तुतथ्य अद्वैतपरक शास्त्रहरूले बताएका छन्। अविद्याको कार्य र अविद्यासमेत हटेपछि मुमुक्षुले मोक्ष स्वतः प्राप्त गर्दछ। साधनहरूको काम अविद्या, काम, कर्म र त्यसको फललाई समेत निर्मूल गरेर हटाउने वा प्रक्षालन गर्नेसम्म हो। त्यसपछि सिद्ध वस्तु मोक्ष मुमुक्षुले स्वतः प्राप्त गर्न सक्तछ। यसैकारण नै [1]ज्ञान अर्थात् मोक्षका लागि प्रयत्न गर्नु पर्दैन, किन्तु अनात्मबुद्धि अर्थात् मायिक उपाधिको निवृत्तिका लागि मात्रै प्रयत्न गर्नुपर्दछ भनेर आचार्य श्रीशङ्करले भन्नुभएको हो।

अविद्यानिवृत्तिका लागि दुई थरी साधनहरूको चर्चा शास्त्रहरूले गरेका छन्। जसमा बहिरङ्ग साधन र अन्तरङ्ग साधन समेत पर्दछन्। सामान्य रूपमा अन्तःकरणको मलदोष प्रक्षालनका लागि सम्पादन गरिने निष्काम भगवद् अर्पित

१ ज्ञाने यत्नो न कर्तव्यः किन्तु अनात्मबुद्धिनिवृत्तौ एव।
– शाङ्करभाष्य, गीता १८।५०

कर्म र विक्षेपदोष हटाउन गरिने अहैतुकी भगवद्भक्ति बहिरङ्ग साधनमा पर्दछन् भने [२]अन्तरङ्ग साधनमा श्रवण, मनन र निदिध्यासनलाई लिइएको छ।

[३]अन्तरङ्ग साधन र बहिरङ्ग साधनका सम्बन्धमा सर्वज्ञात्ममुनिको विचार अत्यन्त सान्दर्भिक देखिन्छ। मोक्षका लिप्सु मुमुक्षुका निमित्त अन्तरङ्ग साधन ठूलो यत्नद्वारा सम्पादनीय छ। किन्तु पतनको भयले भीरु मुमुक्षुले भने बहिरङ्ग साधनलाई यत्नपूर्वक त्याग्नु पर्दछ।

बहिरङ्ग साधन र अन्तरङ्ग साधनहरूको परिभाषा गर्दै मुनि अगाडि भन्नुहुन्छ – जुन [४]विविदिषा अर्थात् जिज्ञासाका लागि श्रुत छन्, ती सबै बहिरङ्ग साधनहरू हुन् भने जुन साधनहरू ब्रह्मज्ञानका लागि भनिएका छन्, ती अन्तरङ्ग साधन हुन्। यसलाई अझै स्पष्टै रूपमा व्याख्या गर्ने हो भने [५]यस आत्मालाई ब्राह्मणहरू वेदको स्वाध्याय, यज्ञ, दान र

---

२ आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यो
मैत्रेय्यात्मनो वा अरे दर्शनेन मत्या विज्ञानेनेदं सर्वं विदितम्।
– बृहदारण्यकोपनिषद् २।४।५

३ अन्तरङ्गमपवर्गकाङ्क्षिभिः कार्यमेव यतिभिः प्रयत्नतः।
त्याज्यमेव बहिरङ्गसाधनं यत्नतः पतनभीरुभिर्भवेत्॥
– सङ्क्षेपशारीरकम् ३।३२८

४ यत् श्रुतं विविदिषोदयाय तत् सर्वमेव बहिरङ्गसाधनम्।
अन्तरङ्गमवगच्छ तत्पुनर्यत्परावगतिसाधनं श्रुतम्॥
– सङ्क्षेपशारीरकम् ३।३०

५ तमेतं वेदानुवचनेन ब्राह्मणा विविदिषन्ति यज्ञेन दानेन तपसानाशकेन
विदित्वा मुनिर्भवति। – बृहदारण्यकोपनिषद् ४।४।२२

निष्काम तपद्वारा जान्ने इच्छा गर्दछन् आदि श्रुतिहरूमा आउका जुन यज्ञ, दान आदि कर्महरू छन् ती विविदिषा अर्थात् जिज्ञासाद्वारा श्रवणादि अङ्गहरूमा प्रवर्तक देखिन्छन्। ती सबै बहिरङ्ग साधनहरू हुन्।

उपर्युक्त अनुसार बृहदारण्यकोपनिषद्को चारौँ अध्यायको चारौँ ब्राह्मणमा पठित बाइसौँ मन्त्रमा ब्रह्मसाक्षात्कारको परम्परया बहिरङ्ग साधनको कुरा आएको छ भने त्यसैको तेइसौँ मन्त्रमा अन्तरङ्ग साधनको वर्णन आएको छ। जस्तै [६]अतः यस प्रकार जान्ने भएको मुमुक्षु शान्त, दान्त, उपरत, तितिक्षु र समाहित भएर आत्मामा नै आत्मा देख्तछ भन्ने शम, दम, श्रवण, मनन तथा निदिध्यासन समेत ब्रह्मज्ञानका साक्षात् अन्तरङ्ग साधन मानिन्छन्। वस्तुतः मोक्षका साधनहरू ती बहिरङ्ग र अन्तरङ्ग साधनहरू अन्तःकरणलाई ढाकेर बस्ने मल, विक्षेप र आवरण आदि दोष वा मायिक उपाधिलाई मार्जन गरेर स्वच्छ पार्ने साधनहरू हुन्। अन्तःकरण अत्यन्त निर्मल, अत्यन्त स्वच्छ र अत्यन्त सूक्ष्म भएपछि ब्रह्म त्यसैमा प्रतिस्फलित भएर साक्षात्कार भइहाल्दछ।

सबैथरी शास्त्र र दर्शनहरू पनि श्रवणबाट नै शुरु हुन्छन्।

---

६ तस्मादेवंविच्छान्तो दान्त उपरतस्तितिक्षुः समाहितो भूत्वात्मन्येवात्मानं पश्यति। – बृहदारण्यकोपनिषद् ४।४।२३

भक्तिशास्त्रमा वर्णित नवधा भक्ति पनि [७]श्रवणबाट शुरु भएर आत्मनिवेदनमा पर्यवसित हुन्छ। अद्वैत वेदान्तमा पनि [८]श्रवणबाट शुरु भएर ब्रह्मसाक्षात्कार पछि श्रवणको फल ब्रह्मज्ञान प्राप्त हुन्छ।

प्रकृत प्रसङ्ग 'मोक्षको परम कारण' भएकाले त्यसैतर्फ यस लेखलाई केन्द्रीकृत गर्ने प्रयास गरिन्छ। किनभने माथि उल्लेख गरिएका बहिरङ्ग र अन्तरङ्ग साधनहरू साक्षात् हेतुका परिपूरक वा परिकर हुन् भनेर बुझ्नु पर्दछ।

[९]तत्त्वमसि आदि वैदिक महावाक्यहरूको श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट श्रवण गरेपछि ब्रह्मज्ञान हुन्छ। त्यसबाट अविद्या वा अज्ञानका साथै मुमुक्षुका भूत, वर्तमान र भविष्यका कर्महरू समेत नाश हुन्छन्। त्यसपछि मुमुक्षु जीव पहिले पनि ब्रह्म थियो र अध्यारोपित मायिक उपाधिको उच्छेद भएपछि फेरि तुरुन्तै ब्रह्म भइहाल्दछ भनेर सुरेश्वराचार्यले भन्नुभएको छ।

श्रीसुरेश्वराचार्यका साक्षात् गुरु श्रीशङ्कराचार्यले त्योभन्दा

---

७ श्रवणं कीर्तनं विष्णोः स्मरणं पादसेवनम् ।
अर्चनं वन्दनं दास्यं सख्यमात्मनिवेदनम् ॥ – भागवत ७।५।२३

८ श्रोतव्यः श्रुतिवाक्येभ्यो मन्तव्यश्चोपपत्तिभिः ।
मत्त्वा च सततं ध्येयं ह्येते दर्शनहेतवः ॥ – वेदान्तसन्दर्भ

९ तत्त्वमस्यादिवाक्योत्थसम्यग्धीर्जन्ममात्रतः ।
अविद्या सह कार्येण नासीदस्ति भविष्यति ॥
– बृहदारण्यकवार्तिक ४।४।६९७

अघि नै [१०]तत्त्वमसि आदि महावाक्यको श्रवणपश्चात् जीवात्मा र परमात्माको तादात्म्यविषयक ज्ञान हुन्छ, त्यही नै मुक्तिको साक्षात् साधन हो भनेर लेख्नु भएको छ।

[११]वैदिक महावाक्यको श्रवण पश्चात् मनन, निदिध्यासन र ब्रह्माभ्यास गर्नुपर्ने शास्त्रीय वचन छ। महावाक्य श्रवण गर्दा आफ्नै वेदशाखाको वेदान्तभाग अर्थात् उपनिषद्मा आएको महावाक्यको गर्नु पर्दछ। त्यो महावाक्य [१२]स्वाध्याय गर्दा मर्यादापूर्वक पढिएको र आदर एवं श्रद्धासँग परिपालित पनि हुनुपर्दछ। त्यतिमात्रै होइन, उक्त महावाक्य श्रोत्रिय तत्त्वदर्शी आचार्यद्वारा विधिपूर्वक श्रवण गरिएको अवश्य नै हुनुपर्दछ। यस्तो महावाक्य मात्रै [१३]मुक्तिको साक्षात्साधन हुन्छ भनेर आदरणीय आचार्य श्रीसर्वज्ञात्म मुनिले भन्नुभएको छ।

यसरी विचार गर्दा मोक्षको साक्षात् हेतु आफ्नू वेदशाखामा आएको उपनिषद्मा पठित महावाक्य रहेछ भन्ने स्पष्ट थाहा हुन्छ। जुन महावाक्य आफ्ना श्रोत्रिय ब्रह्मज्ञानी गुरुबाट

१० तत्त्वमस्यादि वाक्योत्थं यज्जीवपरमात्मनोः।
तादात्म्यविषयं ज्ञानं तदिदं मुक्तिसाधनम्॥ – वाक्यवृत्तिः ६

११ तच्चिन्तनं तत्कथनं तत्परस्परबोधनम्।
एतदेकपरत्वञ्चच्च ब्रह्माभ्यासं विदुर्बुधाः॥ – लघुवाक्यवृत्तिः १७

१२ स्वाध्यायमधीयीत। – तैत्तिरीय आरण्यक १७९।
स्वाध्यायोऽध्येतव्यः। – शतपथब्राह्मण ११।५।७।२

१३ स्वाध्यायधर्मपठितं निजवेदशाखावेदान्तभूमिगतमादरपालितञ्च।
सन्न्यासिना परदृशा गुरुणोपदिष्टं साक्षान्महावचनमेव विमुक्तिहेतुः॥
– सङ्क्षेपशारीरकम् ३।२९५

विधिपूर्वक श्रवण गरेको हुनुपर्दछ । श्रवणपछि अत्यन्त श्रद्धापूर्वक र आदरका साथ मनन तथा निदिध्यासन गरेको हुनुपर्दछ ।

आफ्नू वेदशाखाको महावाक्य नियमपूर्वक उपर्युक्त अनुसार श्रवण गरेपछि मुमुक्षु मुक्त भइहाल्दछ त ? यस्तो जिज्ञासा उत्पन्न हुनसक्तछ । यस सम्बन्धमा दुईटा तथ्य बुझ्नु आवश्यक छ । सर्वप्रथम त साक्षात् विमुक्तिको हेतु मानिने महावाक्यको श्रवण गर्ने योग्यता प्राप्त गर्नु नै अत्यन्त मुस्किल छ । किनभने गुरुकुलमा ब्रह्मचर्य व्रतमा रहेर [१४]ब्राह्मणले विना कारण नै विधिपूर्वक ६ ओटै वेदका अङ्गहरू सहित अर्थसमेत छर्लङ्ग बुझेर आफ्नू शाखाको वेद योग्य गुरुसँग नियमपूर्वक पढ्नु पर्दछ भनेर श्रुतिले भनेको छ ।

यसरी नियमपूर्वक अङ्गसहित अर्थ बुझेर प्रत्येक ब्राह्मणले अनिवार्यरूपमा वेद अध्ययन गर्नु पर्ने भनेर श्रुतिले आदेश गरे अनुसार वेदको अध्ययन नगरेमा र अरूतर्फ लागेमा द्विज द्विज नभएर ऊ जीवित अवस्थामा नै छोरा, नाति सहित तुरुन्तै शूद्रत्वमा पुग्ने छ भनेर [१५]मनुमहाराजले भन्नुभएको छ ।

द्विजातिले आफ्नू वेद अनिवार्यरूपमा अध्ययन गरिसकेपछि उसलाई जुनसुकै आश्रम र वेदविहित कर्ममा जाने मूलद्वार खुल्दछ । रुचि, योग्यता र आवश्यकता अनुसार त्यस

१४ ब्राह्मणेन निष्कारणो धर्मः षडङ्गो वेदोऽध्येयो ज्ञेयश्च । – श्रुतिः

१५ योऽनधीत्य द्विजो वेदमन्यत्र कुरुते श्रमम् ।
स जीवन्नेव शुद्रत्वमाशु गच्छति सान्वयः ।। – मनुस्मृति : २।१६८

वेदपाठी द्विज गृहस्थाश्रम, वानप्रस्थाश्रम र सन्न्यास आश्रममा समेत जान सक्तछ। वेदै नपढेको द्विजलाई कर्म, उपासना र ज्ञानमार्गमा समेत प्रवेश गर्ने अधिकार प्राप्त हुँदैन। यसै कारण उसलाई शूद्र सरह हुन्छ भनेर मनुले भन्नुभएको देखिन्छ।

वेदाध्ययनपछि त्रैवर्णिकलाई आफ्नो योग्यता, चाख र प्रारब्ध कर्म अनुसार आत्मोद्धारका मार्गहरू प्रशस्त हुन्छन्। स्वर्गको कामना भएमा धर्मको जिज्ञासा लिएर गुरु समक्ष जान सकिन्छ। जसलाई *'अथातो धर्मजिज्ञासा'* बाट प्रवेश गर्ने सम्बन्धमा पूर्वमीमांसाले विधान गरेको छ। त्यसै गरेर भक्ति र अन्य विधाहरूमा पनि प्रवेश गर्न पाउने विधान शास्त्रहरूले गरेका छन्। हाम्रो सनातन वैदिक परम्पराले सर्वत्र विहित मार्गमा जान खुला राखेका छन्। किन्तु निषिद्ध मार्गमा जान भने शास्त्रहरूले कडा प्रतिबन्ध नै लगाएका छन्। प्रतिबन्ध हुँदा हुँदै पनि कुनै द्विजले निषिद्ध आचरण गर्दछ भने त्यो सर्वधर्म बहिष्कृत हुन्छ।

जुनसुकै आश्रममा भए पनि यदि उपर्युक्त अनुसार [१६]वेदाध्ययन गरेर पनि ब्राह्मणले वेदान्त चिन्तन गर्दैन भने त्यस्तो पुरुष पुत्रपौत्रादि सहित शूद्र जस्तै हुन्छ भनेर शास्त्रले भनेको छ। किन्तु त्यस्तो जिज्ञासु मुमुक्षुले [१७]साधनचतुष्टय

---

१६ योऽधीत्य विधिवद् वेदं वेदान्तं न विचारयेत्।
स साऽन्वयः शूद्रकल्पः सपद्यं स प्रपद्यते॥ – औसनसस्मृति ३।८२

१७ नित्यानित्यवस्तुविवेकः। इहामुत्रार्थभोगविरागः।
शमदमादिषट्सम्पत्तिः। मुमुक्षुत्वञ्च।
– ब्रह्मसूत्र, शाङ्करभाष्य १।१।१।१

सम्पन्न भएर [१८]ब्रह्मज्ञानका लागि आफ्नै वेदशाखाको श्रोत्रिय ब्रह्मनिष्ठ गुरुसमक्ष गएर उपसत्तिपूर्वक ब्रह्मजिज्ञासा गर्नुपर्दछ।

मुमुक्षुले लामो समयसम्म निष्काम तथा भगवद् अर्पित कर्मद्वारा चित्तमा जन्मजन्मान्तरदेखि जमेर रहेको मलदोषको निर्मोचन गर्दछ। यसैका लागि नै सर्वप्रथम एषणा र कामनारहित भएर साधना गर्न सकेमा एकै जन्ममा पनि चित्त शुद्ध हुनसक्तछ, अन्यथा यसैका लागि नै कैयौँ जन्म व्यतीत हुन पनि सक्तछन्।

मुमुक्षुले अत्यन्त निष्ठा, श्रद्धा र मनोयोगपूर्वक मोक्षका लागि परम्परया साधनहरू भनेर शास्त्रले निर्धारण गरेका निष्काम तथा भगवद् अर्पित कर्मद्वारा अन्तःकरण शुद्ध भए तापनि विक्षेप दोष बाँकी रहुन्जेल ब्रह्मचिन्तन गर्न नसकिने हुन्छ। अतः विक्षेपदोष हटाउन भगवान्को अनन्य र अहैतुकी भक्तिको आवश्यकता छ। *'भक्तिर्ज्ञानाय कल्पते'* अर्थात् भगवद्भक्ति नै ज्ञानको साधन भएको शास्त्रले भनेको छ। अन्तःकरण शुद्ध भएर विक्षेपदोष समेत हटेपछि मात्रै मुमुक्षुलाई ब्रह्मजिज्ञासा पैदा हुन्छ। अन्यथा ब्रह्मजिज्ञासा कुनै हालतमा पनि उत्पन्न हुनै सक्तैन।

अन्तःकरणको शुद्धि भनेको चित्तको शुद्धि हो। चित्त भन्नाले बुद्धिलाई पनि लिइन्छ। उपनिषद्को भाषामा यसैलाई

---

१८ परीक्ष्य लोकान्कर्मचितान्ब्राह्मणो निर्वेदमायन्नास्त्यकृतः कृतेन।
तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्।
– मु.उ. १।२।१२

सत्त्व भनिन्छ। उपनिषद्ले अन्तःकरणको शुद्धिलाई सत्त्वशुद्धि भनेको छ। अन्तःकरणको मलदोष भन्नाले शरीरमा टाँसिएको मयल जस्तो होइन । शरीरको मयललाई साबन र पानी लगाएर शुद्ध गर्न सकिन्छ भने अन्तःकरणमा जमेको मयललाई निष्काम तथा भगवद् अर्पित विहित तथा सात्त्विक कर्मबाट शुद्ध गर्न सकिने शास्त्रीय वचन तत्तत् प्रसङ्गमा उल्लेख गरिसकिएको छ।

अन्तःकरणको मयल वा मलदोष भनेको अनन्त जन्मजन्मान्तरदेखि मनुष्यका अन्तःकरणमा जमेर बसेका शुभ र अशुभ कर्महरूका संस्कार, वासना र सञ्चित कर्मसमेतलाई लिनुपर्दछ। अन्तःकरणमा त्यो मयल कसरी टाँसिन्छ त भन्ने जिज्ञासा उत्पन्न हुनसक्तछ। यसलाई राम्ररी बुझे मात्रै त्यसको परिमार्जन गर्न सकिन्छ। अतः त्यसको सङ्क्षेपमा चर्चा गर्नु सान्दर्भिक हुन्छ।

[१९]आहारशुद्धि भएपछि अन्तःकरण शुद्ध हुन्छ। अन्तःकरण शुद्ध भएपछि निश्चल स्मृति हुन्छ र निश्चल स्मृति प्राप्त भएपछि सम्पूर्ण ग्रन्थिहरू अर्थात् वासनाहरू क्षीण हुने कुरो श्रुतिले बताएको छ। आहार भनेर सामान्यतया प्राणीले आफ्ना मुखमा राखेर पेटमा पुऱ्याइने खानपान आदिलाई भनिन्छ जसलाई षड्उर्मि मध्येमा प्राणसँग सम्बन्धित मानिन्छ। किन्तु उपनिषद्को भाषामा जसलाई

१९ आहारशुद्धौ सत्त्वशुद्धिः सत्त्वशुद्धौ ध्रुवा स्मृतिः स्मृतिलम्भे सर्वग्रन्थीनां विप्रमोक्षः। – छान्दोग्योपनिषद् ७।२६।२

[20]आहरण गरिन्छ त्यसलाई आहार भनिन्छ। जुन भोक्ताका भोगका लागि शब्दादि विषयविज्ञानलाई आहरण गरिन्छ, त्यसै विषयोपलब्धिरूप आहारको शुद्धि नै 'आहारशुद्धि' हो। अर्थात् रागद्वेष, मोह आदि दोषहरूबाट असंसृष्ट विषयविज्ञान नै आहारशुद्धि हो।

अन्तःकरणमा रहेका त्रिदोषहरू मध्ये उपर्युक्त दुई दोषहरू हटे पनि आवरणदोष नहटेसम्म ब्रह्मज्ञान हुन असम्भव नै छ। *'ऋते ज्ञानान्न मुक्तिः'* अर्थात् ब्रह्मज्ञान नभईकन मुक्ति नहुने भनेर श्रुतिले नै कण्ठतः सोझै भनेको छ। अतः त्यसका लागि श्रोत्रिय ब्रह्मनिष्ठ गुरुसमक्ष मुमुक्ष जानुपर्ने श्रुतिवाक्य माथि उल्लेख गरिसकिएको छ। मुमुक्षुले माथि उल्लेख भएको प्रक्रिया र विधिविधान अनुसार साक्षात् मोक्षको हेतु भएको महावाक्य गुरुबाट श्रवण गर्नुपर्छ। त्यसको परिपाक भएपछि आवरणदोष समेत हटेपछि मुमुक्षु मुक्त हुन्छ। केवल श्रवण गरेर मात्रै मोक्ष हुँदैन। त्यति मात्रै होइन, सबै कुरा सम्पन्न भए तापनि मुक्ति चाहिँ मुमुक्षुले उसका विगतका [21]करोडौँ जन्ममा सम्पादन गरिएका पुण्यपुञ्जको अर्थात् शुभकर्मको उदय भएपछि प्राप्त गर्दछ भनेर भगवत्पाद आचार्य श्रीशङ्करले भन्नुभएको छ। ॐ ब्रह्मार्पणमस्तु।

२० आह्रियत इति आहारः शब्दादिविषयविज्ञानं भोक्तुर्भोगायाह्रियते तस्य विषयोपलब्धिलक्षणस्य विज्ञानस्य शुद्धिराहारशुद्धी रागद्वेषमोहदोषैरसंसृष्टं विषयविज्ञानमित्यर्थः – छान्दोग्योपनिषद्, शाङ्करभाष्य ७।२६।२

२१ मुक्तिर्नो शतकोटिजन्मसु कृतैः पुण्यैर्विना लभ्यते। – विवेकचूडामणि २

# ३४. मोक्षको साक्षात्साधन

संस्कृत वाङ्मय अत्यन्त प्राचीन, विशाल र महनीय समेत भएको कुरामा कसैको वैमत्य छैन र हुन पनि सक्तैन। यस भाषामा लेखिएका विविध विषयहरू अध्ययन गरेर बुझ्न भने एक जन्ममा त के कुरा, अनेकौँ जन्ममा पनि सम्भव छैन। यस वाङ्मयमा अनन्त विधा र प्रकारहरू छन्। साक्षात् ब्रह्म बनाउने अलौकिक शास्त्र र दर्शनदेखि लिएर अत्यन्त भौतिकवादी चार्वाक दर्शनसमेत यसै वाङ्मयभित्र समाविष्ट छन्। खगोल, भूगोलदेखि लिएर अनन्त ब्रह्माण्डको यात्रा विना यन्त्र, विना यान र विना कुनै साधन सशरीर गर्न सकिने अलौकिक शास्त्र र दिव्य मन्त्र पनि यसै वाङ्मयभित्र छन्।

संस्कृत वाङ्मयमा ज्योतिर्विज्ञान, आयुर्विज्ञान, साहित्य, विविध दर्शन, वेद, उपनिषद्, रामायण, महाभारत, पुराण, वेदाङ्ग, धर्मशास्त्र, नीतिशास्त्रसमेत असङ्ख्य विधाहरू छन्। यी सबै दर्शन, वेद, उपनिषद्, सूत्र, महाभारत, रामायण, साहित्यशास्त्रले समेत आ-आफ्ना दृष्टि र दर्शन अनुसार महावाक्यहरूको विभिन्न शैलीमा व्याख्या गरेका छन्। यसको चर्चा गरेर साध्य छैन। यस छोटो लेखमा उपर्युक्त सबै महावाक्यहरूको चर्चा गर्नेतर्फ नलागेर वैदिक महावाक्यको मात्रै चर्चा गरिनेछ। वैदिक महावाक्यहरू चार वेद र तिनका शाखाहरूमा धेरैओटा भएको शास्त्रहरूमा उल्लेख पाइन्छ।

तिनको गणना, व्युत्पत्ति र विश्लेषणतर्फ नलागेर यसमा [1]उपनिषद्मा उल्लेख भए अनुसार चार वेदका चार महावाक्यहरूको मात्रै चर्चा गर्नु सान्दर्भिक हुनेछ। आचार्यहरूले आफ्नो प्रकरणग्रन्थ, विवरणग्रन्थ, सूत्रग्रन्थ, भाष्य, वृत्ति, वार्तिक, टीका समेतमा योग्य आचार्यहरूद्वारा अधिकार प्राप्त आफ्ना आफ्ना वेदशाखामा आधारित भएर सम्प्रदाय अनुसार नियम र विधिपूर्वक [2]ब्राह्मणले कुनै पनि कारण र कामना विना षडङ्ग वेद पढ्नु र जान्नुपर्दछ भन्ने श्रुतिको वचन अनुसार नै लेख्नुभएको छ।

नियम र विधिपूर्वक आचार्यसँग आफ्नो वेद षडङ्गसमेत पढेर स्नातक भइसकेपछि साधनचतुष्टय सम्पन्न भएको उत्तम अधिकारीलाई निवृत्तिमार्गतर्फ प्रवृत्त हुने उत्कट इच्छा भएमा समित्पाणि भएर आफ्ना वेदका श्रोत्रिय ब्रह्मनिष्ठ गुरुसमक्ष गएर उपसत्तिपूर्वक आफ्ना वेदका शाखाको वैदिक महावाक्य नियम र विधिपूर्वक श्रवण गर्नुपर्दछ। साधनचतुष्टययुक्त विरक्त [3]मुमुक्षु उत्तम अधिकारीलाई मात्र महावाक्य श्रवण गर्ने

---

१ अथ महावाक्यानि चत्वारि। यथा ॐ प्रज्ञानं ब्रह्म, ॐ अहं ब्रह्मास्मि, ॐ तत्त्वमसि, ॐ अयमात्मा ब्रह्म।

– शुकरहस्योपनिषद्

२ ब्राह्मणेन निष्कारणो धर्मः षडङ्गो वेदोऽध्येयो ज्ञेयश्च। – श्रुतिः

३ परीक्ष्य लोकान्कर्मचितान्ब्राह्मणो निर्वेदमायान्नास्त्यकृतः कृतेन
तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्।

– *मुण्डकोपनिषद् १।२।१२*

अधिकार हुन्छ। संसारी सबैलाई श्रवण गर्ने अधिकार हुँदैन र सुनेमा पनि त्यसबाट मोक्ष प्राप्त हुन सम्भव छैन।

महावाक्यलाई साध्यका रूपमा नभएर साधन अर्थात् हेतुका रूपमा शास्त्रहरूले वर्णन गरेका छन्। श्रोत्रिय ब्रह्मनिष्ठ गुरुका मुखबाट वैदिक महावाक्य श्रवण गर्ने अधिकार पाएका र योग्यता भएका अधिकारीले आ-आफ्नू ऋषिपरम्परा र सम्प्रदाय अनुसार श्रवण गर्नुपर्दछ। जुन परम्परा वेद चार ओटा शाखामा विभाजन भएदेखि अनादिकालबाट नै द्विजजातिमा चल्दै आएको छ। तदनुसार प्रत्येक वेदका अध्येता मुमुक्षुका लागि वेदका प्रत्येक शाखामा सामवेदीका लागि छान्दोग्योपनिषद्मा उल्लेख भएको 'तत्त्वमसि' महावाक्य जस्तै महावाक्यहरू नियत गरिएका छन्। त्यस कुरातर्फ ध्यान नदिई सतही अध्ययनको आधारमा उदाहरणका रूपमा आएको 'तत्त्वमसि' महावाक्य नै सबै वेदीहरूको भनेर अध्यापन, अध्ययन गर्नु, प्रवचन र स्वाध्याय गर्दै हिँड्नसमेत अद्वैत वेदान्तका विद्वान्हरूलाई सुहाउने विषय होइन। यसका लागि म आद्य जगद्गुरु श्रीशङ्कराचार्यका प्रशिष्य तथा सुरेश्वराचार्यका शिष्य प्रसिद्ध आचार्य सर्वज्ञात्ममुनिबाट व्यक्त शास्त्रीयरूपमा सङ्कलित, सारगर्भित, सङ्क्षिप्त, सुस्पष्ट र मुमुक्षुका लागि ज्ञातव्य अत्यन्त महत्त्वपूर्ण अभिव्यक्तिलाई तल उद्धृत गर्दछु, जसतर्फ विद्वान्हरूको ध्यान आकर्षित हुने छ भन्ने विश्वास लिएको छु।

[४]जुन महावाक्य आफ्नू वेदका शाखामा आएको छ, विधिपूर्वक स्वाध्यायका द्वारा प्राप्त भएको छ, श्रद्धापूर्वक दीर्घसमयसम्म आराधित छ र जुन महावाक्य श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट श्रवण गरिएको छ त्यस्तो वैदिक महावाक्यमात्रै साक्षात् मुक्तिको हेतु बन्दछ। अरू वाक्यहरू बन्न सक्तैनन्।

उपर्युक्त सारगर्भित भनाइलाई बुँदागतरूपमा सङ्क्षिप्त विवेचनापूर्वक बुझेर हृदयङ्गम गर्ने प्रयास गरौँ। 'स्वाध्यायधर्मपठितम्' यो वाक्य महावाक्यको विशेषणका रूपमा आएको छ। यसमा स्वाध्याय र धर्म दुई शब्द आएका छन्। मुमुक्षुले आफ्नै वेदका शाखामा पढिएको महावाक्य अध्ययनविधि अनुसार सुन्नुपर्दछ। अरू शाखाको महावाक्य सुनेर मोक्ष प्राप्त हुन सम्भव छैन भनेको हो भनेर बुझ्नुपर्दछ। [५]श्रुतिले पनि सोही कुरा स्पष्टै भनेको छ। त्यस्तो महावाक्य धर्मपठित अर्थात् आ-आफ्ना स्वाध्यायविधि अनुसार विधिपूर्वक पढिएको हुनुपर्दछ। शुरुदेखि मोक्षपर्यन्त वेदका प्रत्येक शाखामा भिन्नाभिन्नै रूपमा प्रत्येक श्रुतिले अध्ययनविधिको विधान गरेका छन्। नियमविधिको

---

४ स्वाध्यायधर्मपठितं निजवेदशाखावेदान्तभूमिगतमादरपालितञ्च।
सन्न्यासिना परदृशा गुरुणोपदिष्टं साक्षान्महावचनमेव विमुक्तिहेतुः॥
— *सङ्क्षेपशारीरकम् ३।२९५*

५ (क) स्वाध्यायमधीयीत। (तैत्तिरीय आरण्यक २।१०,१२)
(ख) स्वाध्यायोऽधेतव्यः। (शतपथब्राह्मण १५।५।७।२)
(ग) स्वाध्यायप्रवचनाभ्यां न प्रमदितव्यम्। (तै.उ.१।११)

परिपालन गरेर वेदको अध्ययन गर्ने पुरुषले नै कर्म र ज्ञानको फल प्राप्त गर्दछ अन्यथा प्राप्त गर्न सक्तैन भन्ने मत [६]श्रीशङ्कराचार्यको भाष्यमा आएको छ।

उपर्युक्त विधिलाई आनन्द गिरिले दुई भागमा [७]विधि र नियम भनेर विभाजन गर्नुभएको छ। योभन्दा पनि अत्यन्त कडा र दुरूह अध्ययनविधिहरू सबै श्रुतिहरूमा पाइन्छन्। सबैको उल्लेख गर्दा लेख लामु हुने भएकाले उदाहरणका लागि अथर्ववेदको अध्ययनविधि मात्रै यहाँ उल्लेख गर्नु उपयुक्त हुने देख्तछु। जुन [८]अधिकारी कर्मानुष्ठानमा संलग्न छ, श्रोत्रिय र ब्रह्मनिष्ठ छ, अर्थात् अपरब्रह्ममा लागेर परब्रह्मको ज्ञान गर्न इच्छुक छ, स्वयं श्रद्धायुक्त भएर एकर्षि नामक अग्निमा जसले हवन गर्दछ त्यस्ता शुद्धचित्त एवं ब्रह्मविद्याको पात्रभूत उत्तम अधिकारीलाई यो ब्रह्मविद्या उपदेश गर्नुपर्दछ। जुन अधिकारीले शिरमा अग्निधारण गर्ने शिरोव्रत लिएको छ अर्थात् जुन व्रत अथर्ववेदीहरूका लागि वेदव्रतका नामबाट प्रसिद्ध छ, जुन अधिकारीले उक्त उत्तम वेदव्रत विधिवत्

---

६ एवं हि नियमवताऽधीतो वेदः कर्मज्ञानफलप्राप्तये भवति नान्यथा।
– छान्दोग्योपनिषद् ८।१५।१ शाङ्करभाष्य

७ एवं हि नियमवताऽधीतो वेदः कर्मज्ञानफलप्राप्तये भवति नान्यथेत्यभिप्रायः। भिक्षाशनस्नानाचमनादिर्विधिः। किमित्येष नियमोऽध्ययने कथ्यते। – छान्दोग्योपनिषद् ८।१५।१ आनन्दगिरिटीका

८ क्रियावन्तः श्रोत्रिया ब्रह्मनिष्ठाः स्वयं जुह्वत एकर्षिं श्रद्धयन्तः। तेषामेवैषां ब्रह्मविद्यां वदेत शिरोव्रतं विधिवद्यैस्तु चीर्णम्॥ तदेतत्सत्यमृषिरङ्गिराः पुरोवाच नैतदचीर्णव्रतोऽधीते। – मुण्डकोपनिषद् ३।२।१०,११

अनुष्ठान गरेको छ त्यस्ता उत्तम अधिकारीलाई मात्रै यो ब्रह्मविद्या श्रवण गराउनुपर्दछ।

उपर्युक्त अनुसारको अचीर्ण व्रत अर्थात् शिरोव्रतको आचरण जुन पुरुषले गरेको छैन, त्यस्ताले ब्रह्मविद्या अध्ययन गर्न पाउँदैन। किनभने जसले उक्त व्रतको आचरण गरेको छ, उसैलाई यो ब्रह्मविद्या संस्कार सम्पन्न भएर फलवती हुन्छ भनेर श्रुतिले स्पष्टै भनेको छ। यसलाई उपर्युक्त अनुसार श्रीशङ्कराचार्यले आफ्नू भाष्यद्वारा स्पष्ट गर्नुभएको छ।

शुक्लयजुर्वेद माध्यन्दिनीय वाजसनेयी शाखाको अध्ययन गर्ने नियम र विधि अथर्ववेदीको जस्तो कठोर नभएर अरू वेदका विधिसँग मिल्दो छ तापनि पारस्करगृह्यसूत्रको गदाधर भाष्य, विश्वनाथभाष्यसमेतमा यस विधिको विशेष उल्लेख पाइन्छ।

प्रत्येक वेदका अध्ययनविधिका साथै प्रत्येक वेदका छुट्टाछुट्टै शिक्षाग्रन्थहरू पनि छन्। जसमा [९]ऋग्वेदको एक, [१०]शुक्लयजुर्वेदको एक, [११]कृष्णयजुर्वेदको एक, [१२]सामवेदका तीन र [१३]अथर्ववेदको एउटा छ। शिक्षाग्रन्थ बाहेक वेदका संहिताहरूका प्रातिशाख्य ग्रन्थहरू पनि छन्। जसमा शौनकद्वारा रचित ऋग्वेद प्रातिशाख्य, कात्यायनद्वारा रचित

९ पाणिनीय शिक्षा।

१० याज्ञवल्क्य शिक्षा।

११ व्यास शिक्षा।

१२ गौतमी शिक्षा, लोमशी शिक्षा, नारदीय शिक्षा।

१३ माण्डूकी शिक्षा।

शुक्ल यजुर्वेदको र कृष्ण यजुर्वेदका प्रातिशाख्यहरू एवं शौनकद्वारा रचित अथर्ववेदको प्रातिशाख्य छ।

उपर्युक्त अनुसार आफ्ना शाखामा आएको महावाक्यलाई प्रत्येक वेदमा गरिएका विधान, नियम र विधि अनुसार पढ्नुपर्दछ। त्यसका लागि उपर्युक्त प्रत्येक वेदका शिक्षाग्रन्थ र प्रातिशाख्यका साथै अन्य ग्रन्थहरूमा उल्लेख गरेको पाइन्छ। सर्वप्रथम विनाकारण नै विधिपूर्वक षडङ्ग सहितको आफ्नू वेदशाखाको द्विजले यज्ञयागादिकर्म गर्न र ज्ञानका लागि पनि अर्थसहित अध्ययन गर्नुपर्छ र जान्नु पनि पर्दछ। तदनन्तर तीव्र वैराग्य उत्पन्न भएर मुमुक्षा जागेमा प्रवृत्तिमार्गलाई त्यागेर निवृत्ति मार्गतर्फ अग्रसर भएको मुमुक्षुले साधनचतुष्टय सम्पन्न भएर आफ्नै शाखाका श्रोत्रिय ब्रह्मनिष्ठ जीवन्मुक्त गुरुबाट आफ्नै वेदशाखाको महावाक्य विधिपूर्वक [१४]श्रवण गर्नुपर्दछ। त्यसबाट प्रमाणगत सन्देह समाप्त हुन्छ।

त्यसरी श्रवण गरिएको महावाक्यलाई अत्यन्त आदरका साथ लामु समयसम्म ऊहापोहपूर्वक [१५]मनन गर्नुपर्दछ। मननपछि [१६]निदिध्यासन गर्नुपर्दछ। लामु समयसम्म गरिएको

---

१४ श्रवणं नाम वेदान्तवाक्यानामद्वितीये ब्रह्मणि तात्पर्यावधारणानुकूला मानसी क्रिया। – *वेदान्तपरिभाषा, प्रयोजनपरिच्छेद*

१५ मननं नाम शब्दावधारितेऽर्थे मानान्तरविरोधशङ्कायां तन्निराकरणानुकूल-तर्कात्मज्ञानजनको मानसो व्यापारः। – *वेदान्तपरिभाषा, विषयपरिच्छेद*

१६ निदिध्यासनं नाम अनादिदुर्वासनया विषयेष्वाकृष्यमाणचित्तस्य विषयेभ्योऽपाकृष्यात्मविषयकस्थैर्यानुकूलो मानसो व्यापारः।

– *वेदान्तपरिभाषा, विषयपरिच्छेद*

आदरपूर्वकको निदिध्यासनबाट प्रमेयगत सन्देह समाप्त हुन्छ । निदिध्यासन भनेको अनादि दुर्वासनाका कारण विषयतर्फ जाने चित्तलाई विषयबाट तानेर आत्मामा स्थिर गर्नु हो। श्रद्धापूर्वकको लामु [१७]ब्रह्माभ्यासको परिपाकपछि नै ब्रह्मसाक्षात्कार हुन्छ। यही नै ब्रह्मसाक्षात्कारको हेतु वा साधन हो भनेर आचार्य शङ्करले भन्नुभएको छ। ब्रह्मसाक्षात्कार भनेको ब्रह्मकै सरह आफ्नो बुद्धिको वृत्ति अत्यन्त निर्मल, अत्यन्त स्वच्छ र अत्यन्त सूक्ष्म हुनु हो, अरू केही होइन। त्यस्तो अवस्थामा पुगेको मुमुक्षुलाई नै श्रुतिले त्यस्ता [१८]ज्ञानीका प्राणले उत्क्रमण गर्दैनन्, ऊ ब्रह्म थियो र देहपातपछि पनि ऊ ब्रह्म नै हुन्छ भनेको छ।

मुमुक्षुले गुरुबाट श्रवण गर्ने वैदिक महावाक्यहरू तत्त्वमसि आदि चारै वेदका भिन्नाभिन्नै भएको तथ्य श्रुति, स्मृति, शास्त्र, प्रकरण, विवरण समेतका सबै ग्रन्थहरूमा आएको छ। श्रुतिमा स्पष्टैसँग आएका महावाक्यहरूलाई श्रीशङ्कराचार्यले *'तत्त्वमस्यादि वाक्योत्थम्' (वाक्यवृत्तिः ६)* र सुरेश्वराचार्यले *'तत्त्वमस्यादि वाक्योत्थ' (बृ.उ.वार्तिक)* भनेर सङ्केत गर्नुभएको हो। तत्त्वमसिसँग जोडिएर आएको आदि शब्दले तत्त्वमसि जस्ता अरू पनि श्रवणात्मक वैदिक

---

१७ तच्चिन्तनं तत्कथनं तत्परस्परबोधनम् ।
एतदेकपरत्वञ्च ब्रह्माभ्यासं विर्दुबुधाः ॥ – *लघुवाक्यवृत्तिः १७*

१८ न तस्य प्राणा उत्क्रामन्ति ब्रह्मैव सन् ब्रह्माप्येति ।
– *बृहदारण्यकोपनिषद् ४।४।६*

महावाक्यहरू छन् भनेको हो । यसबाट सबै वेदीहरूले गुरुबाट श्रवण गर्ने एउटै तत्त्वमसि महावाक्यमात्रै हो भन्ने उपदेष्टहरूको भनाइ स्वतः खण्डित हुन्छ ।

जहाँसम्म अनुभवात्मक महावाक्य सबै वेदीको एउटै 'अहं ब्रह्मास्मि' हो भन्ने भनाइ छ, त्यसको चर्चा गरिरहनु आवश्यक नै छैन । किनभने ब्रह्मसाक्षात्कारको अवस्थालाई लिएर त्यसको सङ्केतसम्म श्रुतिले गरेको हो । त्यो अवस्था शब्दातीत र त्रिगुणातीत भएकाले शब्दद्वारा अव्यक्त अवस्था हो । जुन मुक्त पुरुषले अनुभव गर्नेमात्रै हो । त्यो अव्यक्तावस्था भएकाले चर्चा गर्न सकिँदैन । त्यस अवस्थाको अनुभवलाई कसैले व्यक्त गर्न सक्तैन । त्यो मौन अवस्था हो ।

यसरी अपौरुषेय श्रुतिदेखि लिएर पौरुषेय श्रोत्रिय ब्रह्मनिष्ठ आचार्यहरूले रचना गरेका पूर्ण श्रुतिसम्मत प्रकरण र विवरण ग्रन्थहरूमा समेत आएका अकाट्य प्रमाणहरूको अध्ययन र मनन नै नगरी अद्वैत वेदान्तका वरिष्ठ विद्वान्, महात्मा, संन्यासी र गुरुहरूले समेत सबै मुमुक्षुहरूका लागि श्रवण गर्ने वैदिक महावाक्य 'तत्त्वमसि' मात्रै हो र अनुभवात्मक वैदिक महावाक्य चाहिँ 'अहं ब्रह्मास्मि' नै हो भनेर ब्रह्मजिज्ञासा र मुमुक्षासमेत नभएका आचारहीन संसारी जनसमूह जम्मा पारेर प्रवचन गर्दै हिँड्नु, स्वाध्यायको नियमविरुद्ध स्वाध्याय, अध्ययन, अध्यापन गर्नु गराउनु र लेख्नु कतिसम्म सुहाउने काम हो ? यसका साथै साधन र साध्य नै नबुझी साधनलाई साध्यको रूपमा व्याख्या गर्दा उहाँहरूलाई के अलिकति

पनि सङ्कोच र लज्जाबोध हुँदैन ?

अन्त्यमा विद्वान्हरूले शास्त्रविरुद्धका प्रवचन, अध्ययन, स्वाध्याय गर्न र ग्रन्थसमेत लेखन गर्न छोडेर शान्त भएर सोच्नुका साथै मनोयोगपूर्वक शास्त्रहरूको गहिरो अध्ययन र मनन गर्नु परम आवश्यक छ। सीमित अध्ययन र ज्ञानको भरमा म जे बोल्दछु त्यही नै अन्तिम ब्रह्मवाक्य हो भन्ने नसम्झेर बोल्ने, लेख्ने र पढाउने गर्नुभए जिज्ञासु मुमुक्षुका साथै तपाईंहरूको आफ्नै पनि कल्याण हुने थियो। अन्यथा तपाईंहरूको अहंजन्य अज्ञानले तपाईंहरूलाई नै घर न घाटको बनाउन बेर छैन। एकपटक अहं फ्याँकेर सोच्ने हो कि ? यसो गर्न सके राम्रो नै होला। ॐ ब्रह्मार्पणमस्तु।

# ३५. मौन व्याख्यान

व्याख्यान भनेको कुनै पनि विषयमा र कुनै पनि भाषामा मुखबाट बोलेर स्पष्टरूपमा गरिने व्याख्या हो। कुनै पनि विषयको व्याख्यान नबोलीकन गर्न सम्भव हुँदैन। किन्तु त्यस्तो स्पष्ट बोलेर अरूलाई बुझाउन सकिने वाणीको विषयलाई मौन विशेषण दिइएको छ, जुन आफैँमा अनौठो छ। किनभने एकातर्फ व्याख्यान छ अर्कोतर्फ मौन छ। यी दुई शब्दहरू आफैँमा एक अर्काका पूरक नभएर आपाततः प्रतियोगी जस्ता देखिन्छन्, तर अत्यन्त मनोयोगपूर्वक मनन गर्ने हो भने यी मौन र व्याख्यान प्रतियोगी नभएर एक अर्काका पूरक प्रमाणित हुन्छन्।

ज्ञानार्थक मनु धातुबाट 'उच्चै मनुते जानाति यः' विग्रहबाट इन् प्रत्यय भएर मुनि शब्द बन्दछ। जसका ऋषि, महात्मा, सन्त, भक्त, सन्न्यासी आदि धेरै अर्थहरू हुन्छन्। मुनिसँग जोडिएर धेरै थरी अर्थहरू हुन्छन्। यसै मुनि शब्दबाट भावमा मुनेर्भाव विग्रहबाट अण् प्रत्यय भएर मौन शब्द बन्दछ। यसका अर्थहरू चुप, मूकभाव, *'मौनं सर्वार्थसाधनम्'* आदि उदात्त तथा पवित्रभावयुक्त अर्थहरू निष्पन्न हुन्छन्।

वर्तमान समयमा पनि नबोल्ने मौनी बाबाहरू पाइन्छन्। कसैले केही समय नबोल्ने मौन व्रत लिएका हुन्छन् र केहीले चाहिँ आजीवन नबोल्ने मौनव्रत लिएका हुन्छन्।

कसैले देखासिकीमा बिहान बेलुका भात खाँदा मौन व्रत लिन्छन् भने कसैले साधारणतया बाह्रवर्ष पुगेपछि उद्यापन गरेर मौनव्रत फुकाउँछन्। मैले पनि ८ वर्षको हुँदा व्रतबन्ध गरेपछि विना ज्ञान र विना अर्थ अरूको देखासिकी गरेर केही वर्ष लहडमा बिहानबेलुका भात खाँदा नबोल्ने मौन व्रत लिएको थिएँ। केही वर्षपछि विना उद्यापन र विना साङ्गे मैले मौनव्रत समाप्त गरेँ। अहिले मौनव्रतको कुरा लेख्ता कतै त्यसै प्रकारको मौन ता होइन ? भन्ने नकारात्मक सोचाइ पनि यदाकदा ममा उत्पन्न हुन्छ। किन्तु प्रकृत प्रसङ्गमा भने कुनै लहडी वा ढोँगीको मौनव्रत जस्तो नभएर पारमार्थिक मौन व्रतको महनीय चर्चा गर्न लागिएको छ।

ब्रह्मसाक्षात्कार भएपछि जीवन्मुक्त ब्रह्मज्ञानी, तीव्र वैराग्यमा प्राप्त विरक्त पुरुष, सन्न्यास अवस्थाको परम हंस महापुरुष, महा अवधूत महात्माहरू प्रायः जसो मौन अवस्थामा रहन्छन्। करुणावश यदाकदा परम जिज्ञासु मुमुक्षुलाई ब्रह्मज्ञान प्रदान गरेर मुक्त गराउनु पर्ने भएमा मात्रै विरलै रूपमा मात्रै मौनी महात्माहरू बोल्ने गर्दछन्। अन्यथा बोल्दैनन्। यस सन्दर्भमा केही उदाहरण दिनु सान्दर्भिक हुने देख्तछु। [१]श्रीशुकदेव स्वामी जन्मँदै तीव्र वैरागी भएर उपनयन यज्ञोपवीतादि संस्कारै नगरीकनै मौन व्रत लिएर सन्न्यासी भएका थिए। किन्तु राजापरीक्षित्लाई ब्रह्मोपदेश गराएर मुक्त गराउन उनी बोलेका थिए। तदुपरान्त बोलेको देखिँदैन।

१ यं प्रवजन्तमनुपेतमपेतकृत्यम्। – भागवत १।२।२

[२]ब्रह्मज्ञानी जीवन्मुक्त जडभरत पनि तीव्र वैराग्यका कारण अध्ययन आदि लौकिक कृत्यहरू सबै त्याग गरेर सधैँ ब्रह्मचिन्तन गरेर अरूका दृष्टिमा पागल, मूर्ख, अन्धो, बहिरो, लाटो जस्तो भएर संसारबाट माथि उठेर अवधूत भएर मौन विचरण गर्दथे। उनी राजा रहूगणको कल्याण गर्न एकपटक मात्रै ब्रह्मोपदेशार्थ बोलेको देखिन्छ। त्यसपछि मौन अवस्थामा नै उनी ब्रह्मलीन भए।

[३]जुन महात्मा कुनै आश्रमको चिह्न नभएर पनि भित्रबाट आत्मानुसन्धानमा मग्न छ, अत्यन्त विचारशील छ, बाहिरबाट हेर्दा बौलाहा र बालक जस्तो देखिन्छ त्यस्तो महात्माले अत्यन्त प्रतिभाशाली भएर पनि मनुष्यको अगाडि लाटो जस्तो भएर मौन व्रत लिएर शान्तभावमा अवधूत जस्तो भएर हिँड्ने र आवश्यक भए कहिलेकहीँ कल्याणार्थ ब्रह्मोपदेश गरेको पनि देखिन्छ। यस्ता महात्माहरू मध्येमा महाब्रह्मज्ञानी गुरु दत्त्रात्रेय मुनि देखिन्छन्। उनले भक्तराज प्रह्लाद र राजा यदुलाई ब्रह्मोपदेश गरेका थिए।

---

२ जडान्धबधिरस्वरूपेण दर्शयामास लोकस्य। – भागवत ५।९।३

३ अव्यक्तलिङ्गो व्यक्तार्थो मनीष्युन्मत्तबालवत्।
कविर्मूकवदात्मानं स दृष्ट्या दर्शयेन्नृणाम्॥ – भागवत ७।१३।१०
अत्राप्युदाहरन्तीममितिहासं पुरातनम्।
अवधूतस्य संवादं यदोरमिततेजसः।
अवधूतं द्विजं कञ्चिच्चरन्तमकुतो भयम्।
कविं निरीक्ष्य तरुणं यदुः पप्रच्छ धर्मवित्॥ – भागवत ११।७।२४,२५

विरह, विरक्ति र अत्यन्त वैराग्यका कारण साम्राज्य, राजपाट, घर, परिवार र धनसम्पत्ति समेतलाई मलवत् चटक्कै त्यागेर सन्न्यास लिएर हिँड्नेहरूमा वैदिक कालदेखि वर्तमान समयसम्म राजामहाराजादेखि सामान्य मनुष्यसम्म धेरैथरी देखिन्छन्। त्यसरी प्रवजन गर्दा लुगाफाटो, गहना, शृङ्गार त्याग्ने वा पुराना थोत्रा लुगा धारण गर्ने, कसैले पनि नचिनिने भएर जड, अन्धो बहिरो, लाटो, पिशाच र बहुला जस्तो भएर अवधूतको भेष लिएर हिँडेको देखिन्छ। त्यसमा मुख्य मौन हुनु नै तीव्र वैराग्यको लक्षण देखिन्छ।

त्यसरी प्रव्रज्या गर्नेमा वैदिक कालमा धेरै महात्माहरू थिए। जसमध्येमा प्रतिनिधि पात्रका रूपमा ऋषि [४]याज्ञवल्क्यलाई लिन सकिन्छ। त्यसै गरेर पौराणिक कालमा राजा [५]ऋषभदेखि लिएर [६]राजा युधिष्ठिर, उपान्तमा राजा [७]परीक्षित् र ऐतिहासिक कालमा राजकुमार सिद्धार्थसमेतलाई

४ मैत्रेयीति होवाच याज्ञवल्क्य उद्यास्यन्वा अरेऽहमस्यास्थानादस्मि हस्त तेऽनया कात्यायन्यान्तं करवाणीति। एतावदरे खल्वमृतत्वमिति होक्त्वा याज्ञवल्क्यो विजहार। – बृहदारण्यकोपनिषद् २।४।१ र ४।५।१५

५ जडान्धमूकबधिरपिशाचोन्मादवदवधूवेषोऽभिभाष्यमाणोऽपि जनानां गृहीतमौनव्रतस्तूष्णीं बभूव। – भागवत ५।५।२९

६ विसृज्य तत्र तत्सर्वं दुकूलवलयादिकम्।
निर्ममो निरहङ्कारः संछिन्नशेषबन्धनः॥
वाचं जुहाव मनसि तत्प्राण इतरे च तम्।
मृत्यावपानं सोत्सर्गं त पञ्चत्वे ह्यजोहवीत्॥ – भागवत १२।६।२

७ अनुजानीहि मां ब्रह्मन् वाचं यच्छाम्यधोक्षजे।
मुक्तकामाशयं चेतः प्रवेश्य विसृजाम्यसुन्॥ – भागवत १२।६।६

प्रतिनिधि प्रतीकका रूपमा लिन सकिन्छ। सिद्धार्थले रातैमा स्त्री, पुत्र र दरबार समेत सम्पूर्ण त्याग गरेर सन्न्यास लिएका थिए। ती मध्ये कोही सुरुदेखि नै र कोहीले ब्रह्मसाक्षात्कार गरेपछि स्वतः मौन भएका थिए।

मौन व्रतलाई ज्ञान र वैराग्यका प्रतीकका रूपमा शास्त्रहरूले ग्रहण गरेका छन्। कर्मकाण्डदेखि ज्ञानकाण्डसम्म यसको महत्त्व देखिन्छ। यदि प्रातरनुवाकको आरम्भ भएपछि परिधानीया ऋचाको उच्चारणभन्दा पहिले ब्रह्माले बोले भने उनले केवल एक मार्गको मात्रै संस्कार गर्दछन्, दोस्रो मार्ग नष्ट हुन्छ र ब्रह्मा नबोलेमा कुनै पनि मार्ग नष्ट हुँदैन भनेर [८]वेदले पनि कर्मकाण्डमा यज्ञको विधिमा मौनव्रतको महत्त्व देखाएको छ।

ज्ञानकाण्ड अर्थात् मोक्षमार्गमा मौन व्रतको ठूलो महत्व छ। शुरुमा मुमुक्षुले आफ्नो वाणीलाई पूर्ण नियन्त्रण गर्दै लगेपछि ब्रह्मसाक्षात्कार भएपछि वाणी समेत परदेवतामा गएर मिल्दछ। मुक्त पुरुषले नबोल्ने प्रयास गर्नु नै पर्दैन। [९]मौन व्रत शुरुमा नबोल्न प्रयास गर्दा कर्म हुन्छ भने ज्ञान भएपछि स्वतः मौन अर्थात् वाणीको निवृत्ति वा उपसम हुन्छ। ब्रह्मज्ञानीको उत्तम लक्षण नै मौनता हो। अन्यथा

---

८ प्रातरनुवाके पुरा परिधानीयाया ब्रह्मा व्यववदति ... यज्ञो रिष्यति ... न पुरा परिधानीयाया ब्रह्मा व्यववत्युभे एव वर्तनी संस्कुर्वन्ति।
– छान्दोग्योपनिषद् ४।१६।३,५

९ आरुरुक्षोर्मुनेर्योगं कर्म कारणमुच्यते।
योगारूढस्य तस्यैव शमः कारणमुच्यते॥ – गीता ६।३

ब्रह्मज्ञानी चिन्न सकिँदैन। अपवाद बाहेक ब्रह्मज्ञानीले कसैलाई पनि उपदेश गर्दैनन्, उनको आश्रम हुँदैन, शिष्यको मण्डली हुँदैन र कसैसँग पनि बोल्दैनन्, ब्रह्मज्ञानी जनसमूहदेखि टाढा बस्न र विचरण गर्न मन पराउँदछन्। जीवन्मुक्तको सञ्चित कर्म, वासना र संस्कार पनि भस्मसात् भइसकेका हुँदा संसारी मायिक प्रपञ्चले उनलाई छुँदैन। उनी पानीको कमल जस्तो संसारमा रहेर संसारबाट अस्पृश्य नै रहन्छन्।

[१०]जीवन्मुक्त पुरुष आफ्नू प्रारब्धकर्मले तोकेको अवधिसम्म पाञ्चभौतिक स्थूलशरीरलाई धानेर बाँचिरहन्छन्। आफ्ना परिवारसँग घरमा सँगै बस्तछन्, दिएको खान्छन्, लुगा लाउँछन् र सामान्य गृहस्थको व्यवहार पनि गर्दछन्, तर उनी असंलग्न भएर बस्तछन्। ब्रह्मज्ञानी जीवन्मुक्त पुरुष आफूसँग साथमा बसेका पुत्रकलत्रादिसहित आफ्नू शरीरलाई पनि सपनाको प्रपञ्च जस्तो मिथ्या ठानेर पुनः संलग्न हुँदैनन् र त्यसलाई स्वीकार गर्दैनन्।

[११]मौन रहनु भनेको मुनिभाव हो। मनको निग्रह गर्नु हो। मनको निरोध भएपछि साधक मुनि बन्दछ। एकाग्र भएर

---

१० देहोऽपि दैववशगः खलु कर्म यावत् स्वारम्भकं प्रतिसमीक्षत एव सासुः।
तं सप्रपञ्चमधिरूढ समाधियोगः स्वाप्नं पुनर्न भजते प्रतिबुद्धवस्तुः॥
– भागवत ३।२८।३८

११ मौनं मुनिभाव एकाग्रतयात्मचिन्तनं निदिध्यासनाख्यं वाक्संयमहेतुर्मनः संयमो मौनम्। – मधुसूदनसरस्वती, श्रीमद्भगवद्गीता १७।१६

आत्मचिन्तन गर्नु निदिध्यासन गर्नु हो । मनको संयम भएपछि मात्रै मुमुक्षु मौन धारणा गर्न समर्थ हुन्छ। अन्यथा सम्भव हुँदैन भनेर मधुसूदनसरस्वतीले भनेका छन्। यसका साथै उनले गुप्त राख्नु पर्ने कुराहरूमा मौन पनि म नै हुँ भन्ने भगवान् श्रीकृष्णको गीतामा विभूतियोगका सन्दर्भमा आएको उक्तिको टीका गर्दै [१२]गोप्यहरूमध्ये सन्न्यासश्रवणमननपूर्वक आत्माको निदिध्यासन लक्षण मौन म नै हुँ भनेर लेखेका छन्।

यसरी श्रीमद्भगवद्गीताको विभूतियोगमा भगवान् श्रीकृष्णले मौन व्रतलाई म आफैँ हुँ भन्नु भएको हुँदा पनि मौनधारणा गर्नु अत्यन्त ठूलो मोक्षको साधन भएको तथ्य प्रमाणित हुन आउँछ। [१३]जुन आत्मा अर्थात् अक्षर पुरुषमा द्युलोक, पृथिवी, अन्तरिक्ष र सम्पूर्ण प्राणहरूसहित मन ओतप्रोत छ, त्यसै अद्वितीय आत्मालाई जान, अरू सबै संसारका मायिक वाणीहरूलाई त्याग गर। मोक्ष प्राप्तिको साक्षात् साधन ब्रह्मवाचक ॐ मात्रै हो । यसैको ध्यान संयमित भएर गर भनेर श्रुतिले भनेको छ र [१४]बुद्धिमान् ब्रह्मज्ञानीले ब्रह्मलाई

---

१२ गुह्यानां गोप्यानां मध्ये सन्न्यासश्रवणमननपूर्वकमात्मनो निदिध्यासनलक्षणं मौनं वाहमस्मि । – मधुसूदन सरस्वती, गीता १०।३८

१३ यस्मिन्द्यौः पृथिवी चान्तरिक्षमोतं मनः सह प्राणैश्च सर्वैः ।
तमेवैकं जानथ आत्मनमन्यो वाचो विमुञ्चथामृतस्यैष सेतुः ।
ओमित्येवं ध्यायथ आत्मानम् ।। – मुण्डकोपनिषद् २।२।५,६

१४ तमेव धीरो विज्ञाय प्रज्ञां कुर्वीत ब्राह्मणः ।
नानुध्यायाद् बहूञ्छब्दान् वाचो विग्लापनं हि तत् ।।
– बृहदारण्यकोपनिषद् ४।४।२१

नै जानेर अथवा ब्रह्मज्ञान गरेर त्यसै ब्रह्ममा आफ्नो प्रज्ञा लगाओस्। धेरै शब्दहरूको चिन्तन वा अनुध्यान नगरोस्। धेरै शब्द अनुध्यान गर्नु वाणीको व्यर्थ श्रममात्रै हो पनि भनेको छ।

यसरी श्रुति, स्मृति आदि सबै शास्त्रहरूले वाणीको संयम मौन व्रतलाई जोड दिएका छन्। मुमुक्षुले यसलाई ब्रह्मसाक्षात्कारको साक्षात् साधनका रूपमा लिनु पर्दछ। ब्रह्मसाक्षात्कार गरेका जीवन्मुक्तको वाणी स्वभावतः नै विरमित भइहाल्दछ। [१५]किनभने ब्रह्मज्ञानी ब्रह्म नै हुन्छ भन्ने श्रुतिको भनाइ भएकाले वाग्व्यवहार हुन सम्भव नै हुँदैन। यदि अपवादका रूपमा त्यस्तो देखा परेमा यसको विशेषकारण हुनसक्ने तर्फ दृष्टि दिनुपर्ने हुन्छ।

ब्रह्मसाक्षात्कार गरेका जीवन्मुक्त पुरुषहरू पनि परमात्माको आदेश अनुसार सृष्टिचक्र सञ्चालनमा परमात्मालाई सहयोग गर्न विना सञ्चित कर्म र विना वासनाका आधिकारिक पुरुषहरू संसारमा अवतीर्ण हुने कुरा [१६]ब्रह्मसूत्रमा आएको छ। यसबाट कुनै तीव्र वैराग्य भएको मुमुक्षुलाई ब्रह्मोपदेश गरेर मुक्त गराउने परमात्माको असीम कृपा भएर कुनै मुक्तात्मा आधिकारिक पुरुष हुनसक्ने देखिन्छ। यसलाई अपवादका रूपमा लिनु पर्दछ। सामान्य अवस्थामा ब्रह्मज्ञानी र मुक्तात्मा जीवन्मुक्त पुरुषहरू

---

१५ ब्रह्मवेद ब्रह्मैव भवति। – मु.उ. ३।२।९

१६ यावदधिकारमवस्थितिराधिकारिकाणाम्। – ब्रह्मसूत्र ३।३।१९।३२

चिनिँदैनन् र कथङ्कदाचित् सौभाग्यले कुनै भाग्यमानीले चिनिहाले पनि उपदेश गर्दैनन् र बोल्दैनन् पनि।

तीव्र वैराग्य भएपछि निवृत्ति मार्गमा प्रवृत्त भएको मुमुक्षु पुरुष [17]ब्रह्मज्ञानका लागि समित्पाणि भएर श्रोत्रिय ब्रह्मनिष्ठ गुरुका समक्ष जाओस् भनेर श्रुतिले निर्देश गर्नुका साथै [18]गुरुबाट ब्रह्मज्ञान प्राप्त गरेको मुमुक्षुले मोक्ष प्राप्त गर्दछ भन्दै त्यस्ता ब्रह्मज्ञानीका लागि मुक्त हुन त्यति समयमात्रै ढिलो हुन्छ, जबसम्म उसको देहपात हुँदैन भन्ने पनि श्रुतिको भनाइ पाइन्छ।

उपर्युक्त अनुसार श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट उपदेश प्राप्त गरेपछिमात्रै मुमुक्षुले ब्रह्मसाक्षात्कार गर्न सक्तछ। किन्तु त्यस्तो ज्ञानी श्रोत्रिय ब्रह्मनिष्ठ गुरु न बोल्ने र मौन अवस्थामा रहने हो भने उपदेश गर्ने ब्रह्मज्ञानी गुरु मुमुक्षुले प्राप्त गर्न नसक्ने हुन आउँछ। किनभने श्रुतिले नै [19]ब्रह्मसाक्षात्कार गरेपछि मुनि हुन्छ अर्थात् मौन हुन्छ भनेको छ।

यसरी ब्रह्मसाक्षात्कार गरेको जीवन्मुक्त पुरुष बोल्दैनन् र मौन बन्दछन् भन्ने श्रुतिको भनाइ सर्वथा सत्य देखिन्छ। कुनैकुनै अति सौभाग्यशाली मुमुक्षुलाई भगवद्कृपा भएर

---

१७ तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्।
– मुण्डकोपनिषद् १।२।१२

१८ आचार्यवान्पुरुषो वेद। तस्य तावदेव चिरं यावन्नविमोक्ष्येऽथ सम्पत्स्य, इति। – छान्दोग्योपनिषद् ६।१४।२

१९ एतमेव विदित्वा मुनिर्भवति। – बृहदारण्यकोपनिषद् ४।४।२३

मुक्त पुरुषबाट ब्रह्मोपदेश हुने गर्दछ। जसरी श्रीशुकदेव मुनिबाट राजा परीक्षित्लाई, श्रीसनत्कुमार मुनिबाट देवर्षि श्रीनारदमुनिलाई र राजा पृथुलाई, ब्रह्मज्ञानी जडभरतबाट राजा रहूगणलाई र अवधूत शिरोमणि ब्रह्मज्ञानी दत्तात्रेय मुनिबाट राजा यदुलाई ब्रह्मोपदेश भएको प्रसङ्ग शास्त्रहरूमा पाइन्छ।

विशिष्ट अवस्थामा पुगेको उत्तम अधिकारीलाई ब्रह्मसाक्षात्कार गरिसकेको जीवन्मुक्त परम गुरुले ज्ञानमुद्रा वा तर्कमुद्राका माध्यमबाट मौन भाषामा उपदेश गरेको देखिन्छ। यिनै गुरुलाई भगवत्पाद श्रीशङ्कराचार्यले गुरु दक्षिणामूर्तिका रूपमा वर्णन गर्दै दक्षिणमूर्तिस्तोत्र लेख्नुभएको छ। दक्षिणामूर्तिलाई परम शिवको सारतम स्वरूप मानिन्छ। उहाँले परम मुमुक्षु शिष्य सनत्कुमारहरूलाई तर्कमुद्रा वा ज्ञानमुद्राका सङ्केतको माध्यमबाट मौन भाषामा उपदेश गर्नुभयो र योग्य शिष्यहरूले त्यसै मौन भाषाका माध्यमबाट आफ्ना संशयहरूलाई नाश गरेर ब्रह्मज्ञान प्राप्त गरे।

उक्त बोधप्रसङ्ग मुमुक्षुहरूका जागृतिका लागि आएको देखिन्छ। युवा दक्षिणामूर्ति गुरुले वटवृक्षका फेदमा शान्त मुद्रामा बसेर आफ्ना वृद्ध शिष्यहरूलाई ज्ञानोपदेश गर्नुभयो। युवा गुरुका त्यस मौन व्याख्यानबाट बूढा शिष्यहरूका संशयहरू छिन्नभिन्न भए। त्यो अत्यन्त आश्चर्यलाग्दो उपदेश हो। यस प्रसङ्गमा [२०]चित्रं, वृद्धाः शिष्या र गुरुर्युवा समेत गरी तीन थरी

२० चित्रं वटतरोर्मूले वृद्धाः शिष्याः गुरुर्युवाः।
गुरोस्तु मौनं व्याख्यानं शिष्यास्तु छिन्नसंशयाः ॥ – श्रीदक्षिणामूर्तिस्तोत्रम्

शब्दहरू आएका छन्। शिष्य सनकादिलाई बूढा भनिएको कारण ब्रह्माका सृष्टिमा *'पूर्वेषामपि पूर्वजाः'* अर्थात् सबैभन्दा पहिले ब्रह्माजीका मनबाट जन्मिएका हुनाले वृद्धा भनिएको हुनसक्तछ। अथवा मानव शरीरधारी सनकादिमा पनि [२१]षड्भावविकार हुने हुनाले पनि वृद्ध भनिएको हुनसक्तछ। गुरु दक्षिणामूर्ति परम शिव नै भएकाले आत्मस्वरूप र औपनिषद पुरुष हुनुहुन्छ। उहाँ [२२]कलाहीन, क्रियाहीन, शान्त, अनिन्द्य, निर्लेप, अमृतस्वरूप, सनातन पुरुष तथा षड्भावविकाररहित हुनु भएकाले चिरनूतन युवा गुरु भनिएको देखिन्छ।

अर्को चित्रं शब्द आएको छ। वाणी, ज्ञानेन्द्रिय र मनले पनि जान्न नसकिने अगोचर, दुर्विज्ञेय, कुनै प्रमाणहरूबाट पनि जान्न नसकिने अप्रमेय, त्यस परमतत्त्व आत्मा, परमात्मा वा शुद्ध ब्रह्मका बारेमा गरिएको उपदेश धेरै [२३]मानिसहरूलाई श्रवण गर्नका लागि पनि अवसर प्राप्त हुँदैन। आत्मतत्त्वको उपदेश श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट श्रवण गरेर पनि बुझ्न सकिँदैन । त्यस आत्मतत्त्वको निरूपण गर्ने गुरु पनि आश्चर्यरूप हुन्, त्यस आत्मतत्त्वलाई प्राप्त गर्ने पनि

---

२१ जायते अस्ति वर्धते अपक्षीयते विपरिणमते नश्यति। – निरुक्तः

२२ निष्कलं निष्क्रियं शान्तं निरवद्यं निरञ्जनम् ।
अमृतस्य परं सेतुं दग्धेन्धनमिवानलम् ॥ – श्वेताश्वतरोपनिषद् ६।१९

२३ श्रवणायापि बहुभिर्यो न लभ्यः शृण्वन्तोऽपि बहवो यं न विद्युः ।
आश्चर्यो वक्ता कुशलोऽस्य लब्धाश्चर्यो ज्ञाता कुशलानुशिष्टः ॥
– कठोपनिषद् १।२।७

आश्चर्यरूप कुनै निपुण पुरुष नै हुन्छन् र कुशल गुरुद्वारा उपदेश गरिएका आत्मतत्त्वका ज्ञाता पनि आश्चर्यरूप नै हुन् भनेर श्रुतिले भनेको छ। यसै कारण श्रुतिमा आएको आश्चर्य शब्दका स्थानमा चित्रं शब्द आएको देखिन्छ।

यही कुरालाई श्रीमद्भगवद्गीताले पनि भिन्न शैलीमा वर्णन गरेको छ। त्यस [२४]अज्ञेय तथा अप्रमेय आत्मालाई कुनै महात्मा ब्रह्मज्ञले नै आश्चर्यमय वस्तुका रूपमा देख्तछ। अर्को कुनै ब्रह्मज्ञले यस आत्मतत्त्वलाई आश्चर्य जस्तो गरेर भन्दछन्। अर्को कुनै पुरुषले सुनेर, देखेर र भनेर पनि त्यस आश्चर्यरूप आत्मतत्त्व अर्थात् ब्रह्मलाई जान्दैन।

मान र मौनको तुलना गर्दै मौनको महत्त्व दर्शाउँदै अन्धा राजा धृतराष्ट्रलाई सनत्कुमार मुनिले उपदेश गर्नुभएको पावन प्रसङ्ग महाभारतको सनत्सुजातीय गीतामा पाइन्छ। [२५]जसमा मान र मौन सधैँ एक व्यक्तिमा एककालावच्छेदेन साथसाथै रहन सक्तैनन्। किनभने प्रत्यक्ष देखापरेको यो मिथ्या मायिक प्रपञ्च मानको विषय हो भने मौनको विषय परमात्मा हो। [२६]तत् ब्रह्मको नाम हो भने अतद् मिथ्या प्रपञ्च हो। अतः

---

२४ आश्चर्यवत्पश्यति कश्चिदेनमाश्चर्यवद्वदति तथैव चान्यः।
आश्चर्यवच्चैनमन्यः शृणोति श्रुत्वाप्येनं वेद न चैव कश्चित्॥
– गीता २।२९

२५ न वै मानश्च मौनञ्च सहितौ वसतः सदा।
अयं मानस्य विषयो ह्यसौ मौनस्य तद्विदुः॥
– महाभारत, उद्योगपर्व ४१।४१

२६ ॐ तत्सदितिनिर्देशो ब्रह्मणस्त्रिविधस्मृतः। – गीता १७।२३

तत्शब्दवाच्य ब्रह्म मौनको विषय हो । मौनबाट नै ब्रह्मसाक्षात्कार हुन्छ । वस्तुतः [२७]मनका साथ वेद परमात्मामा पुग्न सक्तैन र फर्केर आउँछ । यसकारण पनि परमात्मालाई मौन भन्न सकिन्छ । श्रुतिले पनि [२८]जहाँबाट मनका साथ वाणी परब्रह्मसम्म पुग्न नसकेर फर्कन्छ भनेको छ । अतः वाणीको अविषय त्यो परब्रह्म नै मौन हो भनेर बुझ्नु पर्दछ । यस कुराको पुष्टि हिरण्यगर्भसंहिताले पनि गरेको छ ।

त्यस्तो गुणातीत तथा अप्रमेय आत्मतत्त्व अर्थात् ब्रह्म वाणीको विषय नभएको र परम शिवस्वरूप गुरु दक्षिणामूर्ति पनि शब्दातीत, गुणातीत, मायातीत र निरञ्जन भएकाले अनुभूति गम्य ब्रह्मतत्त्वको उपदेश ज्ञानमुद्राको मौन भाषामा उहाँले साधनचतुष्टयसम्पन्न तीव्रवैराग्यवान् उत्तम अधिकारी सनकादिलाई गर्नुभएको हो । त्यसपछि शिष्यहरूले पनि त्यस आत्मतत्त्वको तुरुन्तै साक्षात्कार गरेर अन्तःकरणका सम्पूर्ण सञ्चित कर्म र वासना समेत नाश भएर हृदयग्रन्थि भेदन भएको देखिन्छ । यसै कुरालाई [२९]श्रुतिले पनि स्पष्ट शब्दमा भनेको छ ।

एकातर्फ श्रुतिहरूले *'आचार्यवान्पुरुषो वेद' (छा.उ.६।१४।२)*

---

२७ यतो न वेदा मनसा सहैनमनुप्रविशन्ति ततः स मौनम् ।
यत्रोत्थितो वेदशब्दस्तथायं स तन्मयत्वेन विभाति राजन् ॥
– महाभारत, उद्योगपर्व ४२।२

२८ यतो वाचो निवर्तन्ते अप्राप्य मनसा सह ।
आनन्दं ब्रह्मणो विद्वान् न बिभेति कुतश्चन । – तैत्तिरीयोपनिषद् २।४।१

२९ भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः ।
क्षीयन्ते चास्य कर्माणि तस्मिन्दृष्टे परावरे ॥ – मुण्डकोपनिषद् २।२।८

*'तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत्' (मु.उ.१।२।१२)* भनेका छन् भने प्रकरणग्रन्थले *'सन्न्यासिना परदृशा गुरुणोपदिष्टम्' (सङ्क्षेपशारीरकम् ३।२९५)* पनि भनेको छ । जसको अर्थ हुन्छ – सन्न्यासी भनेको श्रोत्रिय र परदृक् भनेको ब्रह्मनिष्ठ आदि गुरुबाट नियम र विधिपूर्वक वेदान्त अर्थात् आफ्नू वेदशाखामा पठित वैदिक महावाक्यको श्रवण गर्ने मुमुक्षुले नै ब्रह्मसाक्षात्कार गर्न सक्तछ। यही नै मुक्तिको साक्षात् हेतु वा साधन हो । अर्कोतर्फ ब्रह्मज्ञानी ब्रह्मज्ञान वा ब्रह्मसाक्षात्कार भएपछि मौन हुन्छ भनेपछि कसरी कुन कस्तो गुरुबाट वेदान्तको श्रवण गरेर मुमुक्षुले मोक्ष प्राप्त गर्ने त भनेर जिज्ञासा उत्पन्न हुनसक्ने देखिन्छ।

उपर्युक्त जिज्ञासा वा चिन्ता अत्यन्त स्वाभाविक देखिन्छ। परमात्माको विशेष कृपा नभईकन कुनै मुक्त महापुरुष उपदेष्टा गुरुका रूपमा मुमुक्षुले पाउन सक्तैन । किन्तु माथि पादटिप्पणी १७ मा उल्लेख भएका श्रोत्रिय ब्रह्मनिष्ठ गुरु भने मुमुक्षुले पाउन सक्ने भएकाले ठूलो चिन्ता गर्नुपर्ने देखिँदैन तापनि त्यस्तो उपदेष्टा सच्चा गुरु प्राप्त गर्न पनि मुमुक्षुलाई प्रारब्धले साथ दिनै पर्दछ। त्यस्तो गुरु श्रुतिमा वर्णन गरिए अनुसारको श्रोत्रिय र ब्रह्मनिष्ठ चाहिँ हुनु आवश्यक छ।

श्रोत्रिय गुरुले प्रथमतः आफ्नू वेदशाखा विधिपूर्वक गुरुमुखी भएर अर्थसहित साङ्गोपाङ्ग अध्ययन गरेका हुनु पर्दछ। उपर्युक्त अनुसार अध्ययन ता गरेका छन् तर ब्रह्मनिष्ठ छैनन् भने पनि गुरु हुन सक्तैनन्। किनभने जुन पुरुष वेदमा चाहिँ पारङ्गत

विद्वान् छ तर ब्रह्मज्ञानशून्य छ भने त्यस्तो पुरुष गुरु हुन योग्य हुँदैन। अतः ब्रह्मसाक्षात्कार गरेका मुक्तपुरुष चिन्न र पाउन मुस्किल पर्ने र पाइए पनि उपदेश गर्न छोडेर मौन भइसकेका हुँदा काम लाग्दैनन्। ब्रह्मनिष्ठ भनेका सबै एषणा र कामना छोडेर प्रपञ्चदेखि माथि उठेको, सधैँ ब्रह्मचिन्तन गर्ने अद्वितीय ब्रह्ममा नै निष्ठा भएको तर ब्रह्मसाक्षात्कार भई नसकेको श्रोत्रिय गुरुसँग नै श्रवण गर्नु पर्दछ। सामान्यरूपमा ब्रह्मज्ञानी गुरुबाट हुने मौन व्याख्यान प्राप्त हुन सम्भव छैन र भए पनि बुझ्न सकिने अवस्था रहँदैन। यो मौन व्याख्यानको प्रसङ्ग मुमुक्षुलाई प्रेरणा दिने उद्‌देश्यले मात्रै मैले उल्लेख गरेको हुँ। वस्तुतः मुमुक्षुले उपर्युक्त योग्यता भएका गुरुबाट वेदान्तवाक्य श्रवण गर्नु नै व्यावहारिक हुन्छ र त्यस्ता गुरु उपलब्ध हुनसक्ने सम्भावना पनि देखिन्छ। अत्यन्त असम्भव पारमार्थिक दक्षिणामूर्ति जस्ता परम आदर्शस्वरूप मौनव्याख्याता दिव्य गुरु प्राप्त गर्ने दिवास्वप्न पालेर बस्नुभन्दा श्रुतिले योग्यता निर्धारण गरेको श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट वेदान्तवाक्य श्रवण गर्दा नै कल्याण हुने देखिन्छ।

भगवान् शिवको दक्षिण मुखलाई नै दक्षिणामूर्ति गुरु भनेर [३०]श्रुतिले र [३१]स्मृतिले पनि भनेको हुँदा त्यस प्रसङ्गलाई आदरका साथ स्वीकार गर्नुपर्दछ। त्यस्ता साक्षाद् ब्रह्मस्वरूप

---

३० रुद्र यत्ते दक्षिणं मुखं तेन मां पाहि नित्यम्।

– भूमिका, श्रीदक्षिणामूर्तिस्तोत्रम्

३१ परमाद्वैतविज्ञानं कृपया वै ददाति यः।
सोऽयं गुरुवरः साक्षाद् दक्षिणामूर्तिनामकः॥

– भूमिका, श्रीदक्षिणामूर्तिस्तोत्रम्।

दिव्य गुरु दक्षिणामूर्तिलाई स्वान्तमा आदर्श र प्रतीक बनाएर तिनैको प्रतिकृति सम्झेर उपलब्ध श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट मौन व्याख्यानको साटो वैखरी वाणीका माध्यमबाट वेदान्त वाक्य श्रवण गरेर मुमुक्षुले ब्रह्मसाक्षात्कार गर्नका लागि मनन, निदिध्यासन र ब्रह्माभ्यासको मार्गतर्फ अग्रसर हुनु समीचीन हुने देखिन्छ।

भगवत्पाद [३२]श्रीशङ्कराचार्यले मौनको निरूपण गर्ने प्रसङ्गमा मौनलाई ब्रह्मरूप नै हो भन्नु भएको छ। जुन ब्रह्मलाई वाणी र मन समेत प्राप्त गर्न नसकेर फर्कन्छन्। त्यस्तो इन्द्रियादि अतीत ब्रह्मलाई मौन अवस्थामा रहेका ज्ञानीहरूले प्राप्त गर्दछन् अर्थात् साक्षात्कार गर्दछन्। किनभने अन्तःकरणमा जन्मजन्मान्तर, युगयुगान्तर र कल्पकल्पान्तरदेखि जम्मा भएर रहेका वासनालाई ज्ञानाग्निद्वारा भस्म गरेर मौन अवस्थामा पुगिसकेको ज्ञानीले मात्रै मौनरूप ब्रह्मसाक्षात्कार गर्न सक्तछ।

ब्रह्मसाक्षात्कारको बहिरङ्ग र अन्तरङ्गसाधनका रूपमा योगदर्शनमा वर्णित अष्टाङ्ग योगलाई पनि अद्वैत वेदान्तले स्वीकार गरेको छ। जसमा यम, नियम, आसन, प्राणायाम र प्रत्याहारलाई बहिरङ्ग साधन र धारणा, ध्यान तथा समाधिलाई अन्तरङ्ग साधनका रूपमा नै लिएको छ। अझ त्यसमा पनि निर्विकल्प समाधिलाई समीपतरवर्ती साधनका रूपमा आचार्यहरू र शास्त्रहरूले पनि वर्णन गरेका छन्। निर्विकल्प

---

३२ यस्माद्वाचो निवर्तन्ते अप्राप्य मनसा सह।
यन्मौनं योगिभिर्गम्यं तद्भवेत्सर्वदा बुधः ॥ – अपरोक्षाऽनुभूति १०७

समाधिलाई साधनका रूपमा लिएर भगवत्पाद [३३]श्रीशङ्कराचार्यले त्यस अवस्थामा पुग्न अर्थात् निर्विकल्प समाधिमा पुग्न सर्वप्रथम प्रथमद्वारका रूपमा मौनतालाई नै लिनु भएको छ। त्यसपछि मात्रै उहाँले अरू साधनहरूको वर्णन गर्नु भएको छ।

उपर्युक्त भनाइलाई नै अरू व्याख्या गर्दै [३४]वाणीलाई मनमा लय गर, मनलाई बुद्धिमा लय गर, बुद्धिलाई बुद्धिको साक्षी आत्मामा र बुद्धिको साक्षी कूटस्थलाई निर्विकल्प पूर्णब्रह्ममा लय गरेर परम शान्तिको अनुभव गर भनेर आफ्ना शिष्यहरूलाई आचार्यले उपदेश दिनुभएको छ। यसै कुरालाई विभिन्न [३५]श्रुतिहरूले पनि समर्थन गरेका छन्। अतः मौन हुँदै निर्विकल्प समाधिमा पुग्ने र त्यहाँबाट ब्रह्मसाक्षात्कार हुन्छ भन्ने पनि शास्त्रमा उल्लेख भएको तथ्य यहाँ दर्शाइयो। वस्तुतः ब्रह्मज्ञानका लागि मौन परम्परया साधन हो र ब्रह्मज्ञान भएपछि जीवन्मुक्तको अवस्था पनि मौन नै हो। अन्ततः मौनलाई साधन र साध्य दुवै मान्दा अन्यथा हुने देखिँदैन। ॐ ब्रह्मार्पणमस्तु।

---

३३ योगस्य प्रथमं द्वारं वाङ्‌निरोधोऽपरिग्रहः।
निराशा च निरीहा च नित्यमेकान्तशीलता॥ – विवेकचूडामणि ३६८

३४ वाचं नियच्छात्मनि तं नियच्छ बुद्धौ धियं यच्छ च बुद्धिसाक्षिणी।
तं चापि पूर्णात्मनि निर्विकल्पे विलाप्य शान्तिं परमां भजस्व॥
– विवेकचूडामणि ३७०

३५ शान्तो दान्त उपरतस्तितिक्षुः समाहितो भूत्वात्मन्येवात्मानं पश्यति।
– बृहदारण्यकोपनिषद् ४।४।२३

# ३६. मृत्युको भय

आफूले गर्नुपर्ने कर्तव्य पूरा नगरेका कारण [1]मनुष्य मृत्युसँग सदा सर्वदा डराइरहन्छ। मुख्यरूपमा विचार गर्ने हो भने [2]भय र अभय दुवै परब्रह्मकै विभूति हुन्। भय, शोक, विषाद आदि तमोगुणी हुन्, यिनले मनुष्यलाई पतनका मार्गतर्फ प्रवृत्त गराउँदछन्।

प्रवृत्ति र निवृत्तिको परम कारकतत्त्व नै भय हो। अभय भएपछि मनुष्य निवृत्तिमार्गतर्फ अर्थात् ब्रह्मज्ञानतर्फ प्रवृत्त हुन्छ। जबसम्म द्वैतबुद्धि रहिरहन्छ तबसम्म मान्छे कामनानिर्मुक्त हुनसक्तैन। कामनाले मनुष्यलाई कामी, क्रोधी र लोभी बनाउँछ। [3]नरकका द्वार नै यिनै काम, क्रोध र लोभ हुन्। यिनले जीवात्मालाई आफ्नू स्वरूपानुभूति गर्न दिँदैनन्। जीवात्माको मोक्षको मार्ग नै यिनले बन्द गरिदिन्छन्। अतः मुमुक्षुले यिनलाई त्याग्नुपर्छ। उपलक्षणको रूपमा यसैलाई आत्माको नाश भनेर गीताले भनेको छ।

मनुष्य भएर पनि मनुष्यले गर्नुपर्ने कर्तव्य पूरा नगरेका धेरै जसो मनुष्यहरूलाई अन्तिम समयमा मृत्युको भय हुने गर्दछ। किन्तु आफ्नू कर्तव्य पूरा गरेको अर्थात् सत्कर्म गरेर भक्ति र

---

१ प्रायेणाऽकृतकृत्यत्वान्मृत्योरुद्विजते जनः। – वेदान्तसन्दर्भ

२ भयञ्चाभयमेव च। – श्रीमद्भगवद्गीता १०।४

३ त्रिविधं नरकस्येदं द्वारं नाशनमात्मनः।
कामःक्रोधस्तथा लोभस्तस्मादेतत्त्रयं त्यजेत्॥ – गीता १६।२१

ज्ञानद्वारा कृत्यकृत्य भएको मनुष्य मृत्युसँग भयभीत हुँदैन। यस सम्बन्धमा कृत मनुष्य र अकृत मनुष्यका बीचमा के फरक छ भन्ने सम्बन्धमा दुइओटा लौकिक बोधप्रसङ्गको उल्लेख गर्नु सान्दर्भिक ठान्दछु।

प्राचीन समयमा कुनै एउटा राजाका अत्यन्त धार्मिक तथा परोपकारी मन्त्री रहेछन्। उदारमना र सबैका सहयोगी भएका हुँदा उनी राजाभन्दा जनप्रिय भएछन्। यसबाट राजामा असूयाभाव उत्पन्न भएछ। चिन्तित भएर मन्त्रीलाई मृत्यु दण्ड दिने निर्णयमा राजा पुगेछन्। मन्त्रीलाई मृत्युदण्ड दिने दिन अपराह्नपख मन्त्रीलाई त्यसको सूचना राजाले मन्त्रीका निवासस्थानमा नै दिन राजकर्मचारीलाई पठाएछन्। किन्तु त्यस दिन संयोगवश धार्मिक मन्त्रीका घरमा पूजा, आजा, भजनकीर्तन आदिको आयोजना गरिएको रहेछ। राजाले त्यसै दिन बेलुका आफूलाई मृत्युदण्ड दिने कुरा थाहा पाएपछि त्यस समारोहमा उपस्थित आफ्ना परिजनहरूलाई चिन्ता र भयरहित भएर मन्त्रीले त्यो त्रासदीपूर्ण जानकारी सुनाएछन्। त्यस खबरबाट मर्माहत भएर उपस्थित सबै जना रुन र कराउन थालेछन् र भजन, कीर्तन, गानाबजाना बन्द गर्न भनेछन्। किन्तु मेरो मृत्युको यस अपूर्व समयमा कार्यक्रम बन्द गर्नुको साटो सबैले अपूर्व प्रसाद ग्रहण गर्नुका साथै भजनकीर्तन र नाच गरेर मृत्युलाई उत्सवका रूपमा परिणत गर्न मलाई साथ दिनुहोस् भनेर मन्त्रीले सबैलाई अनुरोध गरेछन्। मेरो मृत्युपर्यन्त यो चलिरहोस्। यस्तो शुभक्षण

मनुष्यले पाउन मुस्किल पर्दछ। मृत्युको यस्तो शुभ संयोग प्रदान गर्नुहुने राजाप्रति म कृतज्ञता व्यक्त गर्दछु। यो कार्यक्रम म नगएसम्म खुशीका साथ चालु राखिदिनुहुन आग्रह गर्दछु भन्ने मन्त्रीको स्थितप्रज्ञ, जीवन्मुक्त ज्ञानीको जस्तो निर्भयता र आनन्दपूर्ण अभिव्यक्ति सुनेर सबै जना आश्चर्यचकित भएछन्। मन्त्रीको अन्तिम इच्छा सम्झेर भजनकीर्तन, गाना बजाना र प्रसाद ग्रहण गर्ने काम पनि चलिरह्यो। त्यो घटना बडो विचित्रको थियो।

मृत्युदण्ड सुनाउने राजाले मर्ने भयले मन्त्री भाग्छ कि भन्ने आशङ्काले आफ्ना गुप्तचर र सिपाहीहरूलाई मन्त्रीनिवासमा पठाएका थिए। मृत्युदण्ड सुनेर मन्त्री भाग्नु, रुनु कराउनुको साटो भजन, कीर्तन, नाचगान र भोजभतेर समेत गरेर मृत्युको उत्सव मनाइरहेको खबर सुनेर राजा आश्चर्यचकित भए। मृत्युको सजाय सुनेर मन्त्री रुँदै कराउँदै क्षमा याचना गर्न आउला वा भाग्ला भन्ने राजाले ठानेका थिए। किन्तु आनन्दित भएर मन्त्रीले मृत्युको स्वागत गरेको भन्ने कुरा पत्याउन नसकेर राजा आफैँ मन्त्रीलाई भेट्न गए। मन्त्रीले खुशी भएर राजाको स्वागत गर्दै त्यस्तो सुन्दर मृत्यु दिने राजालाई धन्यवाद प्रदान गरे। त्यति मात्रै होइन, आफ्ना घरमा आयोजित नाचगान र भोजमा सहभागी हुन पनि मन्त्रीले राजालाई अनुरोध गरे।

उपर्युक्त अनुसारको मृत्युञ्जय मन्त्रीको व्यवहार देखेर राजा छक्क मात्रै नपरेर तीन छक्क नै परे। मृत्युलाई जितिसकेको

मृत्युञ्जय, निर्भय, ब्रह्मज्ञानी मन्त्रीलाई गल्तीले मृत्युदण्ड सुनाएर ठूलो भूल गरेकोमा राजाले पश्चात्ताप गरेछन् । अन्तिममा राजाले भयनिर्मुक्त मन्त्रीको मृत्युदण्ड माफ मात्रै गरेनन्, बरु त्यसको प्रतिकूल गलत निर्णय गरेकोमा मन्त्रीका दुवै पाउ समातेर माफी मागेर अर्धमृत बन्दै राजा दरबार फर्किएछन् ।

उपर्युक्त बोधप्रसङ्ग मृत्युलाई विजय गरेको कृतकृत्य मृत्युञ्जय जीवन्मुक्तको हो भने अब उल्लेख गरिने प्रसङ्ग चाहिँ मृत्युसँग सधैँ त्रस्त भइरहने अकृतकृत्य जीवन्मृतको कहानी हो ।

परापूर्व कालमा एउटा घमण्डी अहङ्कारी राजा कुनै देशमा रहेछन् । उनी सधैँ मृत्युसँग डराइरहँदा रहेछन् । नभन्दै एक दिन स्वयं मृत्यु आएर अर्को दिन बेलुका ६ बजे उनलाई लिन आउँछु तयार भएर बस्नु भनेर गएछ । कुनताको डरछेरुवा काँतर राजा त्यसमाथि पनि मृत्यु नै आएर मृत्युको कुरा सुनाएपछि उनी तुरुन्तै बेहोस भएछन् । होसमा आएपछि राजाले आफ्नू मृत्युको खबर आफ्ना दरबारका मन्त्री र भाइभारदारलाई भेला गराएर सुनाएछन् । उपस्थित सबैसँग राजाले रुँदै मृत्युसँग कसरी जोगिने हो भनेर जुक्ति, बुद्धि र सल्लाह मागेछन् ।

राजाको करुणपुकार र आर्तनाद सुनेपछि मन्त्रीलगायतका दरबारियाहरू स्तब्ध र शोकाकूल भएछन् । मृत्युबाट जोगिन कसैले पूजा, पाठ, दान, धर्म आदि गर्ने भनेछन् र केहीले

लुक्ने, भाग्ने आदि सुझाव पनि दिएछन्। राजाको चित्त बुझेनछ। अन्त्यमा एक जना पुरानो बुझक्कड मन्त्रीले मृत्युले नभेट्ने दुर्गम र अनकण्टार हिमाली भेगमा जाने राय दिएछन्। त्यसका भोलिपल्ट बिहानै दौडन सक्ने तेजिलो घोडाको व्यवस्था मन्त्रीले गरिदिने वचन पनि दिएछन्। त्यो थियो रातको सल्लाह। तदनुरूप वायुपङ्खी घोडामा सवार भएर राजा अर्को दिन सबेरै तर एक्लै त्यता हिँडेछन्। नभन्दै बेलुकाको ६ बज्न केही क्षण अघि उनी त्यस अनकण्टार तथा दुर्गम हिमालको फेदीमा पुगेर आफू कालको मुखमा पर्नबाट जोगिएको ठानेर प्रफुल्लित हुँदै त्यहाँसम्म ल्याइदिएकोमा खुशी हुँदै घोडालाई स्याबासी दिँदै भूमिमा उत्रिएछन्। किन्तु दुर्भाग्य, त्यहीँ नै पहिलेदेखि नै राजाको प्रतीक्षा गरेर बसिरहेको मृत्युले पनि ठीक समयमा राजालाई मेरो अगाडि ल्याइदिएकोमा भन्दै घोडालाई स्याबासी दिएर राजालाई आफ्नो गाँस बनाएछ।

उपर्युक्त दुईथरी बोध प्रसङ्गबाट के थाहा हुन्छ भने अकृतकृत्य कर्तव्यच्युत मान्छे सदासर्वदा मृत्युसँग डराइरहेको हुन्छ र टार्नै नसकिने मृत्युबाट बच्न ऊ हुँदा नहुँदाका उपायहरू गरिरहन्छ। त्यस्तो मान्छे मृत्यु आउनुभन्दा पहिले नै धेरैपटक मर्दछ। किन्तु कृतकृत्य कर्तव्यपरायण मान्छे भगवान्को भक्ति र ब्रह्मज्ञान गरेर मृत्युलाई नै उल्टो हाँक दिइरहेको हुन्छ। त्यस्तो मान्छे मरेर पनि अमर हुन्छ।

मृत्यु प्रत्येक देहधारी प्राणीले जन्मँदा आफैँसँग लिएर

आएको हुन्छ र जाँदा पनि सँगै लिएर जान्छ। केवल मृत्युलाई ब्रह्मज्ञानीले मात्रै जित्न सक्तछ, अरू कसैले पनि जित्न सक्तैन। यस सम्बन्धमा प्रसिद्ध पौराणिक मृत्युकथा दिँदा बुझ्न स्पष्ट हुन सक्तछ।

पाण्डववंशका शिरोमणि राजा परीक्षित्‌को मृत्युका सम्बन्धमा दुईओटा पुराणहरूमा परस्पर विरोधी दुईथरी कथाहरू पाइन्छन्। श्रीमद्‌देवीभागवत अनुसार ऋषिको शाप परेपछि राजापरीक्षित् मृत्युबाट जोगिन आफ्नै दरबारको बुइँगलमा चढेर पूरा सुरक्षाका साथ लुकेका र त्यहीँ तक्षक नाग पुगेर डसेपछि उनको मृत्यु भएको देखिन्छ। राजा परीक्षित्‌को सर्पको डसाइ र बुइँगलरूपी अन्तरिक्षमा मृत्यु भएकाले उनी दुर्गतिमा परेको देखिन्छ। देवीभागवतको श्रवण गरेपछि उनको प्रेतयोनि छुटेको हो भन्ने पनि वर्णन पाइन्छ।

उपर्युक्त कथामा वर्णित राजा परीक्षित् अहङ्ग्रस्त र मृत्युदेखि सधैँ भयभीत र अकृत देखिन्छन्। किन्तु श्रीमद्‌भागवतमा वर्णित राजा परीक्षित् भने अहंशून्य र निर्भीक देखिन्छन्। ऋषिको शाप परेपछि उनी विरक्त भएर राजपाट सबै त्यागेर गङ्गाद्वारमा ऋषिमुनिका सभामा गएर ब्रह्मज्ञानी श्रीशुकदेवसँग ब्रह्मज्ञान गरेर [४]अभय ब्रह्म भएको कुरा राजा

४ भगवंस्तक्षकादिभ्यो मृत्युभ्यो न बिभेम्यहम्।
प्रविष्टो ब्रह्म निर्वाणमभयं दर्शितं त्वया॥
ब्रह्मभूतस्य राजर्षेर्देहोऽहिगरलाग्निना।
बभूव भस्मसात् सद्यः पश्यतां सर्वदेहिनाम्॥ – श्रीमद्‌भागवत १२।६।५,१३

परीक्षित्‌बाट नै व्यक्त भएको भागवतमा देखिन्छ। उनी ब्रह्म भइसकेपछि उनको देहलाई तक्षक नागले डसेको र दंशित देह सबैले हेर्दाहेर्दै खरानी भएको वर्णन पनि भागवतमा आएको छ।

यसरी एउटै व्यक्ति पनि संस्कार, चिन्तन र साधनाको भेदले गर्दा दुर्गति र सुगतिमा गएको देखिन्छ। एउटै व्यक्तिको मृत्युका सम्बन्धमा पुराणहरूमा दुईथरीको अर्थात्‌ सुगति मोक्षमा प्राप्त भएको र अगति नरकमा परेको वर्णन पाइन्छ। सामान्यरूपमा लौकिक दृष्टिले सो कुरा सहज हुन सक्तछ। किन्तु पारमार्थिक दृष्टिले भने यस कुरालाई सूक्ष्मरूपले विचार गर्नु उपयुक्त हुने देखिन्छ।

उपर्युक्त वर्णन अर्थवादयुक्त देखिन्छ। हाम्रा धर्मशास्त्रहरूमा अज्ञानीको मृत्यु अन्तरिक्षमा भएमा वा सर्प आदि प्राणीहरूले टोकेर वा कुनै दुर्घटना परेर अकाल मृत्यु भएमा सुगति नभएर दुर्गति पर्ने उल्लेख छ। त्यसैलाई आधार मानेर देवीभागवत, महाभारत आदिमा राजा परीक्षित्‌ दुर्गतिमा परेको र पछि पुराण सुनाएर मुक्त गराएको देखिन्छ। किनभने मृत्युको भयले आफ्नै दरबारको माथिल्लो तला वा बुइँगलरूपी अन्तरिक्षमा लुकेर बसेको बेला तक्षक नागले डसेर उनको मृत्यु भएको भनिएको हो। यो अज्ञानी राजा परीक्षित्‌को मृत्युको कुरा भयो। किन्तु श्रीमद्‌भागवतमा वर्णित ब्रह्मज्ञानी राजा परीक्षित्‌को कुरा भन्ने फरक देखिन्छ।

भागवतका राजा मृत्युसँग भय मानेर भागेनन्‌। बरु तीव्र

वैराग्ययुक्त भएर राजपाट सबै छाडेर एषणानिर्मुक्त भएर गङ्गाका पवित्र तीरमा श्रोत्रिय ब्रह्मनिष्ठ ज्ञानी गुरु श्रीशुकदेवमुनिसँग वैदिक महावाक्यको श्रवण गरेर ब्रह्मसाक्षात्कार भएपछि सद्योमुक्तिमा प्राप्त भए। अन्त्यमा राजा परीक्षित्को देहलाई तक्षक नागले डसेको र त्यसपछि उनको देह तुरुन्तै खरानी भएको थियो। श्रीमद्भागवतमा वर्णित राजा परीक्षित्लाई पनि अन्त्यमा सर्पले डसेको थियो तर उनी भने देवीभागवत आदिमा उल्लेख भए अनुसार अगति परेनन्। किनभने उनी तक्षकले डस्नुभन्दा पहिले नै ब्रह्ममा स्थित भइसकेका थिए। त्यस डसाइले केवल मिथ्या देहमात्रै सबैका अगाडि डढेर भस्म भएको थियो।

अद्वैत वेदान्तअनुसार ज्ञानीले [५]काशीमा देह त्यागोस् वा चाण्डालको घरमा त्यागोस्, परन्तु ब्रह्मज्ञानी ब्रह्मसाक्षात्कारका समयमा नै अन्तःकरणको मल समाप्त भएर मुक्त भइसकेको हुन्छ। वास्तवमा ब्रह्मसाक्षात्कार भएपछि ज्ञानीका मृत्युलाई देश, काल, वस्तु र निमित्तले कुनै प्रभाव पार्न सक्तैनन्।

[६]भगवान् अच्युतका चरणकमलको नित्यनिरन्तर चिन्तन गर्नु नै मनुष्यका लागि परम कल्याणकारी साधन हो। यो नै मोक्ष हो र सर्वथा भयशून्य हो। देह, गेह आदि तुच्छ र असत्

---

५ तनुं त्यजतु वा काश्यां श्वपचस्य गृहेऽथ वा।
ज्ञानसम्प्राप्तिसमये मुक्तोऽसौ विगताशयः॥ – तत्त्वबोध

६ मन्येऽकुतश्चिद्भयमच्युतस्य पादम्बुजोपासनमात्र नित्यम्।
उद्विग्नबुद्धेरसदात्मभावाद् विश्वात्मना यत्र निवर्तते भीः॥
– भागवत ११।२।३३

पदार्थमा अहन्ता र ममता राख्नाले जसको चित्तवृत्ति उद्विग्न भइरहेको छ, त्यस्ता संसारीको भय पनि यसबाट पूर्णरूपमा निवृत्त हुन्छ। किन्तु ईश्वरदेखि विमुख मनुष्यलाई भगवान्का मायाले गर्दा आफ्ना स्वरूपको विस्मृति हुन्छ। त्यसै विस्मृतिले गर्दा नै उसले म देवता हुँ, मनुष्य हुँ भन्ने अध्यासद्वारा भ्रमात्मक धारणा सिर्जना हुनजान्छ। मायिक मिथ्या देहमा र गौण आत्मा स्त्री, पुत्रादिमा आत्मभाव राखेर तिनमा नै अत्यन्त आसक्ति, अभिष्वङ्ग र तन्मयता राख्नाका कारणले नै अज्ञानीमा अनेकथरी भय उत्पन्न हुन्छन्। यसप्रकार उत्पन्न हुने [७]अभिनिवेश अर्थात् मृत्युका भयलाई अपसरण गरेर निर्भय हुनका लागि सर्वप्रथम गुरु र परमात्माका शरणमा जानु पर्ने कुरा श्रीमद्भागवतले बताएको छ।

कामना र एषणात्रय पुत्रैषणा, वित्तैषणा र लोकैषणाले आक्रान्त देवता, मनुष्य र दैत्य जो भए पनि पराधीन र सधैँ भयभीत भइरहने गर्दछ। यो संसारको सृष्टिचक्र नै परमात्माको भयले चलेको छ। [८]दिक्पाल इन्द्रादि देवता परमात्माका भयले आ-आफूले गर्नुपर्ने काम तलमाथि नपारीकन गरेर परमात्मालाई सृष्टिचक्र सञ्चालन गर्न सगाइरहेका हुन्छन्। परमेश्वरका भयले अग्निले सारा सृष्टिलाई तातो र प्रकाश

---

७ भयं द्वितीयाभिनिवेशतः स्यादीशादपेतस्य विपर्ययोऽस्मृतिः।
तन्माययातो बुध आभजेत्तं भक्त्यैकयेशं गुरुदेवतात्मा॥
– भागवत ११।२।३७

८ भयादस्याग्निस्तपति भयात्तपति सूर्यः।
भयादिन्द्रश्च वायुश्च मृत्युर्धावति पञ्चमः॥ – कठोपनिषद् २।३।३

प्रदान गर्दछन् । परमात्माका भयले सूर्य नियमितरूपमा उदाउँछन् र अस्ताउँछन् र ऊष्मा र प्रकाश चराचरलाई दिन्छन् । त्यसै गरेर परमात्माका भयले नै देवराज इन्द्र, वायु र पाँचौ मृत्यु समेत आ-आफ्ना निर्धारित काममा सर्वदा कर्तव्यपरायण भएर लागिरहेका छन् ।

जबसम्म मायिक अध्यासका कारण नानाथरी उपाधिहरू लिएर कर्तृत्व र भोक्तृत्व अन्तःकरणमा बोकेर मानिस संसारको भवाटवीमा हेलिन्छ तबसम्म उसले शान्ति पाउँदैन । जहिलेसम्म म र मेरो, तँ र तेरो भन्ने बुद्धि रहन्छ, जहाँ [९]अद्वैत पनि भ्रमले द्वैत जस्तो हुन्छ त्यसपछि एकले अर्कालाई सुँघ्दछ, एकले अर्कालाई देख्तछ । जुन मनुष्य भेदबुद्धि राखेर परमात्मालाई उपास्य र आफूलाई उपासक सम्झेर भेदबुद्धि राख्तछ, त्यसलाई भय हुन्छ । त्यतिमात्रै होइन, जसले [१०]यसमा अलिकति मात्रै पनि भेद गर्दछ उसलाई भय प्राप्त हुन्छ भनेर श्रुतिले भनेको छ ।

मानिसलाई प्रायः नगरेको धर्म र गरेका पापको भय हुन्छ । जुन मानिसले युवा अवस्थामा सत्ता, सम्पदा र रूपले अनमत्त भएर कर्तव्य र अकर्तव्य सबै बिर्सिएर मनपरी गरेर अगम्यागमन, अभक्षाभक्ष, भ्रष्टाचार, अत्याचार गरेको छ भने त्यस्तो मानिसको सम्पूर्ण जवानीको जोस र सामर्थ्य

---

९ यत्र हि द्वैतमिव भवति तदितर इतरं जिघ्रति तदितर इतरं पश्यति ।
– बृहदारण्यकोपनिषद् ३।४।१४

१० यदा ह्येवैष एतस्मिन्नुदरमन्तरं कुरुते, अथ तस्य भयं भवति ।
– तैत्तिरीयोपनिषद् २।७।१

समाप्त भएपछि वृद्ध अवस्थामा एक्लै बसेर झोक्राइरहन्छ र आसन्न मृत्युका भयले डराएर शेष समय यापन गर्दछ। किन्तु जवानीमा जुन व्यक्ति सत्ता, सम्पदा आदिबाट सम्पन्न भएर पनि आफ्नू सीमा उल्लङ्घन नगरेर कर्तव्यपथमा अडिग रहेको छ त्यस मानिसले वृद्ध अवस्थामा पनि भगवद्भक्ति र ब्रह्मचिन्तन गरेर निर्भयताका साथ आनन्दले जीवन बिताइरहेको हुन्छ। जन्मने प्रत्येक प्राणीले एक दिन प्रारब्ध अनुसार मर्नै पर्ने ईश्वरीय अकाट्य अवश्यम्भावी विधानलाई स्वीकार गरेर ऊ मृत्युसँग डराउँदैन, बरु स्वागत गर्न तत्पर रहन्छ।

जुन [11]पुरुष इन्द्रियहरूको वशीभूत छ, वनमा गए तापनि त्यसलाई जन्ममरणको भय बनिरहन्छ। किनभने अनियन्त्रित मन र पाँचोटा ज्ञानेन्द्रियहरूसमेत ६ ओटा शत्रुहरू उसको पछि लाग्न कहिल्यै पनि छोडदैनन्। जुन बुद्धिमान पुरुष घरैमा बसेर इन्द्रियहरूलाई नियन्त्रणमा राखेर भगवद्भक्ति र ब्रह्मचिन्तन गरेर आत्माराम हुँदै आफ्ना दिनहरू व्यतित गर्दछ भने त्यस्ता पुरुषलाई जीवन्मुक्त नै मान्नु पर्दछ। त्यस्ता आदर्श गृहस्थलाई मृत्युको भय सर्वथा रहँदैन।

वस्तुतः भय त्यसै व्यक्तिलाई हुन्छ, जो सांसारिक वस्तुको सङ्ग्रह, कामना र अदम्य लालसामा चुर्लुम्म डुबेको हुन्छ, परिवार, स्त्री, पुत्र र धनादि मिथ्या वस्तुमा हिरिक्क भएर

---

११ भयं प्रमत्तस्य वनेष्वपि स्याद् यतः स आस्ते सहषट्सपत्नः ।
जितेन्द्रियस्यात्मरतेर्बुधस्य गृहाश्रमः किन्नु करोत्यवद्यम् ॥
– श्रीमद्भागवत ५।१।१७

लागेको हुन्छ र जसको नाशमा म आफैँ नासिन्छु भन्ने आध्यासिक भयले सधैँ आक्रान्त रहन्छ। जबसम्म यी सबै मिथ्या मायिक वस्तुसँगको तादात्म्यलाई चटक्कै बिर्सेर ब्रह्मचिन्तन गर्दैन भने तबसम्म उसलाई भय भइरहन्छ। अरू सम्पूर्ण मायिक वस्तुहरू भययुक्त हुन्, केवल ब्रह्म मात्रै अभय हो। [१२]ब्रह्म नै अभय हो भनेर श्रुतिले पनि भनेको छ।

अतः अकृतकृत्य अर्थात् आफूले मनुष्य भएर गर्नुपर्ने कर्तव्य पूरा गर्न नसकेको मनुष्यलाई सधैँ मृत्युको भय भइरहन्छ। किन्तु ऊ जुन दिन, जुन क्षणमा यो मिथ्या संसारको माया मोहलाई चटक्कै छोडेर ब्रह्मचिन्तनमा लाग्छ, त्यसपछि ऊ भयरहित निर्भय ब्रह्म भइहाल्दछ। ऊ [१३]ब्रह्म भएर फेरि ब्रह्म नै हुन्छ। ॐ ब्रह्मार्पणमस्तु।

१२ अभयं हि ब्रह्म। – माध्यन्दिनीय शतपथ ब्राह्मण ।१४।७।२१।३१

१३ ब्रह्मैव सन् ब्रह्माप्येति। – बृहदारण्यकोपनिषद् ४।४।६

# ३७. साक्षात् अपरोक्ष ब्रह्म

बृहदारण्यकोपनिषद्मा याज्ञवल्कीय काण्डनामक ब्रह्मचर्चा सम्बन्धी प्रसिद्ध आख्यायिका आएको छ। ब्रह्मचर्चा राजा जनकले आफ्ना दरबारमा आफ्नै उपस्थितिमा आयोजना गरेका थिए। ब्रह्मसभामा कुरु र पाञ्चाल देशहरूका विद्वान् ब्राह्मणहरू एकत्रित थिए। उक्त सभामा उपस्थित ब्राह्मणहरू मध्येमा अनूचानतम अर्थात् बोल्नमा कुशल वा सर्वश्रेष्ठ ब्रह्मिष्ठ को रहेछ ? भनेर जान्ने इच्छा राजालाई भयो। यसका लागि राजाले सर्वश्रेष्ठ ब्रह्मज्ञानीलाई सिङमा दस दस पाद सुवर्ण बाँधिएका एक हजार गाई पुरस्कार प्रदान गर्ने घोषणा गरे।

राजाको उक्त घोषणापछि उपस्थित कुनै ब्राह्मणले पनि आफू ब्रह्मिष्ठ भएको घोषणा गर्ने साहस गर्न सकेनन्। यसै बीच कुलपति ब्रह्मिष्ठ याज्ञवल्क्यले आफ्ना ब्रह्मचारी शिष्य सामश्रवालाई ती स्वर्णशृङ्गी गाईहरू लैजान आदेश दिए र शिष्यले लगे पनि। त्यसपछि सभामा उपस्थित ब्राह्मणहरू रिसाउँदै हे याज्ञवल्क्य तपाई कसरी ब्रह्मिष्ठ हुनु भयो र गाई लानु हुन्छ ? भन्ने प्रश्न गर्दै शास्त्रार्थका लागि याज्ञवल्क्यलाई तयार हुन हुङ्कार गरे।

उपर्युक्त पृष्ठभूमिमा जल्पकथाका आधारमा शास्त्रार्थ अर्थात् ब्रह्मचर्चा शुरु भयो। त्यस जल्पकथामा होता अश्वल,

आर्तभाग, भुज्यु, उषस्त, आरुणि, गार्गी र शाकल्य समेतका विद्वान् विदुषीहरूले ब्रह्मज्ञानी गुरुसँग पूर्वपक्ष उठाउँदै विभिन्न प्रश्नहरू गरे। यस आलेखमा ती सबैले गरेका प्रश्नहरू र प्राप्त उत्तरहरूको चर्चा नगरेर माथि शीर्षकमा आएको पूर्वपक्षीको प्रश्न र त्यसको उत्तरलाई मात्र समेटेर छोटो चर्चा गरिनेछ।

ब्रह्मज्ञानी गुरु याज्ञवल्क्यसँग शास्त्रार्थको क्रममा चारौँ विद्वान् उषस्त चाक्रायणले [1]जुन साक्षात् अपरोक्ष ब्रह्म नै सर्वान्तर आत्मा हो, त्यसको मलाई व्याख्या गर्नुहोस् भनेर जिज्ञासा व्यक्त गरे। त्यसपछि पाँचौं विद्वान् कहोल कौषीतकेयले पनि याज्ञवल्क्यलाई सम्बोधन गर्दै [2]जुन साक्षात् परोक्ष ब्रह्म नै सर्वान्तर आत्मा हो, त्यसको मलाई व्याख्या गर्नुहोस् भन्दै माथि उषस्तले गरेकै प्रश्नलाई नै जोड दिँदै आफ्नू जिज्ञासा व्यक्त गरे।

यसरी दुवै प्रश्नका विषयहरू र प्रयुक्त शब्दावलीहरू समेत प्रायः समान छन्, केवल कहोल प्रश्नका शुरुका वाक्यमा 'यत्' पछि 'एव' शब्द आएको देखिन्छ। त्यतिमात्र फरक देखिन्छ। त्यो एव शब्दद्वारा पूर्वोक्त उषस्तको प्रश्नलाई नै समर्थन गर्दै उही प्रश्न नै कहोलले दोहोऱ्याएको प्रतीत हुन्छ।

---

१ यत्साक्षादपरोक्षाद्ब्रह्म य आत्मा सर्वान्तरस्तन्मे वाचक्ष्व।
– बृहदारण्यकोपनिषद् ३।४।१

२ यदेव साक्षादपरोक्षाद्ब्रह्म य आत्मा सर्वान्तरस्तन्मे व्याचक्ष्व।
– बृहदारण्यकोपनिषद् ३।५।१

ती दुवै प्रश्नहरूको उत्तर पनि 'यो [३]तिम्रो आत्मा नै सर्वान्तर हो' भनेर याज्ञवल्क्यले दिएका छन् ।

उपर्युल्लिखित दुवै मन्त्रहरूमा समानरूपमा आएका साक्षात्, अपरोक्षात्, ब्रह्म, आत्मा, यत्, यः र सर्वान्तर शब्दहरूको छोटो विश्लेषण गरेपछि किन दुवै विद्वान्हरूले समान प्रश्न गरे ? र यसमा के पृथक् रहस्य छ ? भन्ने सम्बन्धमा पछि चर्चा गरिनेछ। [४]ब्रह्म साक्षात् कुनै भिन्न वस्तुबाट व्यवधान वा न छेकिएको र द्रष्टादेखि अपरोक्ष अर्थात् अगौण हो, श्रोत्रं ब्रह्म, मनो ब्रह्म जस्तो होइन । उपर्युक्त 'साक्षात्' शब्द अव्यय हो भने 'परोक्षात्' शब्द परोक्ष हो। त्यो ब्रह्मको विशेषण हो, पञ्चम्यन्त शब्द होइन । जुन आत्मा सर्वान्तर अर्थात् सबैको अभ्यन्तर हो। 'यत्' र 'यः' पदहरूले प्रसिद्ध आत्मा वा ब्रह्मलाई बुझाउँछन् । त्यस्तो आत्मा अर्थात् ब्रह्मको जिज्ञासा उषस्त र कोहल दुवैले ब्रह्मज्ञानी याज्ञवल्क्यसँग गरेका थिए।

यसरी दुवैको जिज्ञासा उस्तै र उही भएकाले यसलाई अर्थवाद नमानेर उषस्तले सोधेको प्रश्न क्षेत्रज्ञसँग सम्बन्धित

---

३ एष त आत्मा सर्वान्तरः । – बृहदारण्यकोपनिषद् ३।४।१, ३।५।१

४ यद् ब्रह्म साक्षाद् अव्यहितं केनचिद् द्रष्टुरपरोक्षाद् अगौणम्, न श्रोत्रब्रह्मादिवत् । किं तत् ? य आत्मा आत्मशब्देन प्रत्यगात्मोच्यते, तत्र आत्मशब्दस्य प्रसिद्धत्वात् । सर्वस्याभ्यन्तरः सर्वान्तरः, यद् यः शब्दाभ्यां प्रसिद्ध आत्मा ब्रह्मेति तं आत्मानम् ।
– बृहदारण्यकोपनिषद् ३।४।१ शा.भा.

छ भने कोहलले सोधेको प्रश्न परमात्मासँग सम्बन्धित छ भनेर केही विद्वान्ले व्याख्या गरेको पाइन्छ। किन्तु दुइटा आत्माको कुरा नभएर एउटै आत्माका बारेको नै प्रश्न र उत्तर पनि हो भन्ने श्रुतिको आशय देखिन्छ।

जिज्ञासा दुवैको समान भए तापनि सायद आधिकारिकता, योग्यता र पात्रताको भेदले गर्दा उत्तर वा उपदेश फरक आएको उपनिषद्बाट देखिन्छ। उषस्तले प्रतिप्रश्न गर्दै सर्वान्तर आत्मा कुन हो ? भनेर सोधेकोमा [५]जसले प्राणद्वारा प्राणन क्रिया गर्दछ, त्यो तिम्रो आत्मा सर्वान्तर हो, जसले व्यानद्वारा व्यानक्रिया गर्दछ, त्यो तिम्रो आत्मा सर्वान्तर हो र उदानद्वारा जसले उदानक्रिया गर्दछ, त्यो तिम्रो आत्मा सर्वान्तर हो भनेर कार्यकरणसङ्घात अर्थात् देहेन्द्रियसङ्घातयुक्त उत्तर दिइएको छ। त्यो जुन आत्माद्वारा आत्मवान् हुन्छ, त्यही नै साक्षात् अर्थात् अव्यवहित र अपरोक्षात् अर्थात् अगौण बृहत्तम ब्रह्म हो। यही आत्मा नै सर्वान्तर हो भनेर याज्ञवल्क्यले जबाफ दिएका थिए।

कहोलको प्रश्न वा जिज्ञासा समान नै भए पनि उषस्तका प्रश्नमा आत्माको प्रयोजकसहित बन्धको कुरा आएको छ।

---

५ कतमो याज्ञवल्क्य सर्वान्तरो यः प्राणेन प्राणिति स त आत्मा सर्वान्तरौ येऽपानेनापानीति स त आत्मा सर्वान्तरो यो व्यानेन व्यानीति स त आत्मा सर्वान्तरो य उदानेनोदानीति स त आत्मा सर्वान्तर एष त आत्मा सर्वान्तरः।
– बृहदारण्यकोपनिषद् ३।४।१

यसमा आत्मा र बुद्धिका बीचको संसर्गाध्यास र तादात्म्याध्यासद्वारा जड बुद्धिका साथ अन्योऽन्याध्यास भएर निष्कल, निष्क्रिय, शान्त, निरवद्य र निर्लेप आत्मामा कार्य र करणको सङ्घात अर्थात् देहेन्द्रियसंयोग हुन जान्छ। शुद्ध आत्मा गौण आत्मा र मिथ्या आत्माको जालोमा बेरिएर प्रमाता, कर्ता र भोक्ता बनेर संसारको दुरन्त दुश्चक्रमा अनन्तकालसम्म फस्तछ। देह र इन्द्रियादिमा जुन आत्माभिमान हुन्छ, त्यो गौण र मिथ्या हो भनेर लौकिक व्यवहारका लागि मात्र आएको हो, वस्तुतः त्यसरी भेदको प्रतीति हुनसक्तैन। किन्तु आध्यासिक सम्बन्ध नै भए पनि शुद्ध आत्मा देहादि मायिक उपाधि बोकेर बद्ध जस्तो भएर देखापर्दछ।

अर्कोतर्फ कहोलको प्रश्न यो सर्वान्तर आत्मा कुन हो ? भन्ने थियो। त्यसको उत्तरमा याज्ञवल्क्यले गौण र मिथ्या आत्माको उपदेश गरेका थिए। [६]जुन आत्मा क्षुधा, पिपासा, शोक, मोह, जरा र मृत्युभन्दा पर छ।

उपर्युक्त दुईथरी प्रश्नहरू एकै जस्ता भए तापनि याज्ञवल्क्यका उत्तरहरू भने फरक फरक थिए। पहिलो पुत्र, देहादि उपाधिले उपहित संसारी आत्माको उपदेश हो भने दोस्रो उपदेश उपर्युक्त उपाधिरहित शुद्ध आत्माको हो। पहिलो साधनतया उपदेश थियो। साध्य जस्तो साध्य आत्माको

६ कतमो याज्ञवल्क्य सर्वान्तरो योऽशनयापिपासे शोकं मोहं जरां मृत्युमत्येति। – बृहदारण्यकोपनिषद् ३।५।१

उपदेशलाई जब प्रमाताले [७]अबाधित परिपूर्ण सर्वसाक्षी म नै हुँ भनेर बुझ्दछ तब उसलाई पुत्र, देह आदिको बाध हुन्छ। अर्थात् उसलाई यो सबै माया मात्रै हो, वास्तविक होइन भन्ने निश्चय हुन्छ। यसरी पुत्र, दारा, देह आदिमा रहेको आत्मभाव वा आत्माभिमानको निवृत्ति भएपछि उसका विधि, निषेध आदि समस्त लौकिक व्यवहारहरू समाप्त भएर जान्छन्।

पहिलो उषस्तको प्रश्नको उत्तर प्रमातृत्वयुक्त आत्माको हो, जसलाई प्रत्यगात्माका रूपमा श्रुतिले बताएको छ भने दोस्रो कोहलको प्रश्नको उत्तर [८]प्रमातृत्वादिबाट निवृत्त आत्माको हो। किनभने जुन शुद्ध आत्माको ज्ञान गर्नुछ, त्यसको ज्ञान हुनु भन्दा पहिले आत्मा प्रमाता बन्दछ। प्रमातालाई आफ्नू स्वरूपको बोध भएपछि त्यही प्रमाता क्षुधा, पिपासा, शोक मोह, जरा, मृत्यु आदिबाट निवृत्त भएर ऊ नै शुद्ध ब्रह्म बन्दछ। श्रुत्यन्तरले पनि यही कुरा भनेको छ। जस्तै – [९]जुन आत्मा सर्वपापशून्य, जरारहित, मृत्युरहित, शोकरहित, अशनायारहित, पिपाशाशून्य, सत्यकाम र

---

७ गौणमिथ्यात्मनोऽसत्त्वे पुत्रदेहादिबाधनात्।
सद्ब्रह्मात्माहमित्येवं बोधे कार्यं कथं भवेत्॥

८ अन्वेष्टव्यात्मविज्ञानात्प्राक्प्रमातृत्वमात्मनः।
अन्विष्टः स्यात्प्रमातैव पाप्मदोषादिवर्जितः॥
– आचार्य सुन्दर पाण्डया, ब्रह्मसूत्र शा.भा. १।१।४

९ य आत्मापहतपाप्मा विजरो विमृत्युर्विशोकोऽविजिघत्सोऽपिपासः सत्यकामः सत्यसङ्कल्पः सोऽन्वेष्टव्यः स विजिज्ञासितव्यः।
– छान्दोग्योपनिषद् ८।४।१

सत्यसङ्कल्प हो, त्यसै आत्माको अन्वेषण गर्नुपर्दछ।

पहिलो प्रश्नको उत्तरले प्रमाताको कुरा प्रष्ट्याएर दोस्रो प्रश्नको उत्तरले सन्न्यासको कुरा गरेको छ। पहिलो उत्तर संसारीका लागि हो भने दोस्रो उत्तर तीव्र वैराग्ययुक्त साधनचतुष्टयसम्पन्न मुमुक्षुका लागि हो। किनभने उपनिषद्‌ले उपदेश गरेको [10]आत्मा क्षुधा, पिपासा, शोक, मोह, जरा र मृत्युभन्दा पर हो भन्ने बोध भएपछि त्यसै आत्माको ज्ञान गरेर ब्रह्मज्ञानी पुत्रैषणा, वित्तैषणा र लोकैषणा समेतलाई त्यागेर भिक्षाचरण गर्दछन्, अर्थात् सर्वकर्म र फलको समेत त्याग गरेर सन्न्यासी हुन्छन्। त्यसपछि सधैँका लागि मुक्त हुन्छन्।

सर्वकर्म र फलको समेत त्याग गरेको जीवन्मुक्त पुरुषले नै [11]ब्रह्म सत्य र सम्पूर्ण मायिक जगत् मिथ्या हो भन्ने पारमार्थिक सत्यको बोध गर्दछ। त्यस्तो ज्ञानी पुरुषले नै सत् शास्त्र बुझेको ठहर्दछ भनेर वेदान्तले उद्घोष गरेको कुरा श्रीशङ्कराचार्यले आफ्नू ग्रन्थमा लेख्नुभएको छ।

उपर्युक्त मन्त्रहरूमा आएको अपरोक्षत्वादिरूपेण यद्यपि वेद्यतत्त्वको प्रतीतिमा समानता नै देखिन्छ तथापि उपाधिका भेदबाट वेद्यमा भेद देखापर्दछ। किनभने दुवैमा उपाधिको

---

१० एतं वै तमात्मानं विदित्वा ब्राह्मणाः पुत्रैषणायाश्च वित्तैषणायाश्च लोकैषणायाश्च व्युत्थायाथ भिक्षाचर्यञ्चरन्ति।

– बृहदारण्यकोपनिषद् ३।५।१

११ ब्रह्म सत्यं जगन्मिथ्या जीवो ब्रह्मैव नापरः।
अनेन वेद्यं सच्छाशास्त्रमिति वेदान्तडिण्डिमः॥

– ब्रह्मज्ञानावलीमाला २०

भाव र अभावको उल्लेख छ। यसरी उपास्यतावच्छेदक धर्मद्वारा उपास्यमा भेद र उपास्यभेदद्वारा उपासनापरक विद्यामा पनि भेद हुने भएकाले उपर्युक्त ब्राह्मणहरूमा वर्णित आत्मामा भेद हुन्छ भन्ने वादीको भनाइ देखिन्छ।

बृहदारण्यकोपनिषद्मा आएका उपर्युक्त दुवै मन्त्रहरू उपासनाका विधायक नभएर वस्तुस्वरूपका प्रतिपादक हुन्। एउटै वस्तुस्वरूपलाई [१२]पुनः पुनः प्रतिपादन गर्नु मोक्ष शास्त्रमा दोष मानिँदैन। किनभने प्रकृत प्रसङ्गमा आएका वैदिक वाक्यहरूलाई पुनरुक्त भनेर सर्वथा भन्न सकिँदैन। प्रकृत प्रसङ्गमा ३।४।१ मा आएको मन्त्रमा कार्यकरण-व्यतिरेक ब्रह्मको प्रतिपादन गरिएको छ भने ३।५।१ मा आएको मन्त्रमा भने अशनायादिको अभाव भएको ब्रह्मको प्रतिपादन गरिएको छ।

यसरी दुवै मन्त्रहरूमा सर्वान्तरत्वेन स्वात्माको समानरूपमा निर्देशन भएका कारण एउटै आत्माको दुवै मन्त्रहरूमा श्रुतिले उपदेश गरेको देखिन्छ। दुईथरी आत्माको उपदेश गरेको होइन। आत्मा अद्वितीय भएकाले दुईथरी आत्मा भन्ने प्रसङ्ग नै आउन सक्तैन। त्यो आत्मा अन्तर्यामीका रूपमा सबै भूतभौतिक वस्तुमा ओतप्रोत भएर रहेको कुरा शास्त्र र अनुभवबाट पनि प्रतीत हुन्छ। वेदमा वर्णित अद्वितीय आत्माको साक्षात्कारबाट मात्रै जिज्ञासु

---

१२ आवृत्तिरसकृदुपदेशात्। – ब्रह्मसूत्र ४।१।१।१

मुमुक्षुको मुक्ति सम्भव छ, मुक्तिको अरू कुनै [१३]बाटो छैन भनेर वेदले उद्घोष गरेको छ।

वस्तुतः त्यो आत्मा देश, काल र वस्तुबाट अपरिच्छिन्न र स्वप्रकाश हो। जुन अविद्यारूपी अन्धकारदेखि पर छ। त्यो [१४]आत्मा विदित अर्थात् मायाका कार्य चक्षु, वाक्, मन आदिबाट अग्राह्य र अविदित अर्थात् माया भन्दा पर छ। अतः आत्मा दुर्दर्श भएको कुरा श्रुतिले भनेको छ।

त्यस आत्मालाई जानेर मात्रै मनुष्य मुक्त बन्न सक्तछ। [१५]वेदरूप वायुको गन्धमात्रैबाट पनि मुमुक्षुको कल्याण हुन्छ भनेर शास्त्रले भनेको छ भने [१६]श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट विधिपूर्वक आफ्ना वेदका शाखामा पठित महावाक्यको श्रवण गरेर त्यसपछि मनन र निदिध्यासन गरेमा मुमुक्षु अवश्य मुक्त हुने कुरामा कुनै शङ्का छैन। अतः उपर्युक्त मन्त्रहरूमा उपदिष्ट आत्मा अद्वितीय एउटै आत्मा हो। यसैको ज्ञानबाट नै मुमुक्षुको कल्याण हुन्छ। ॐ ब्रह्मार्पणमस्तु।

१३ वेदाहमेतं पुरुषं महान्तमादित्यवर्णं तमसः परस्तात्।
तमेव विदित्वाऽतिमृत्युमेति नान्यःपन्था विद्यतेऽयनाय॥
— शुक्लयजुर्वेदः ३१।१८

१४ तद्विदितादथो अविदितादधि। — केनोपनिषद् १।३

१५ जिघ्रन्ति कर्णविवरैः श्रुतिवातनीतम्॥ — भागवत ३।९।५

१६ (क) तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्।
— मुण्डकोपनिषद् १।२।१२

(ख) स्वाध्यायधर्मपठितं निजवेदशाखा वेदान्तभूमिगतमादरपालितञ्च।
सन्न्यासिना परदृशा गुरुणोपदिष्टं साक्षान्महावचनमेव विमुक्तिहेतु॥
— सङ्क्षेपशारीरकम् ३।२९५

# ३८. ये हि वृत्तिं विजानन्ति

वृत्ति भनेको बुद्धिको ज्ञानात्मक व्यापार हो। बुद्धिले यसको सहायताबाट घटपटादि यावत् मायिक सांसारिक वस्तुको ज्ञान गर्दछ। जस्तै तलाउको पानी क्षिद्रबाट निक्लिएर कुलोद्वारा बग्दै खेतका गरामा पुग्दछ र त्यसैका आकार जस्तै भएर चारकुने आदि आकारमा परिणत हुन्छ। त्यस्तै गरेर तैजस अन्तःकरण पनि चक्षुः श्रोत्रादि इन्द्रियहरूका माध्यमद्वारा शरीरबाट बाहिर निस्किएर घटादि विषयसम्म जान्छ र घटादि विषयका आकारमा परिणत हुन्छ। त्यसै परिणामलाई नै वृत्ति भनेर आचार्य श्रीधर्मराजध्वरीन्द्रले आफ्नो [1]ग्रन्थमा लेख्नुभएको छ। यसैलाई छोटो शब्दमा भन्नुपर्दा विषयावच्छिन्न चैतन्य र अन्तःकरणावच्छिन्न चैतन्यको एकलोली भएर बुद्धिले जुन ज्ञान गर्दछ त्यसै ज्ञान गर्ने क्रिया वा व्यापारलाई नै वृत्ति भनिन्छ।

वस्तुतः वृत्ति नचलीकन कुनै ज्ञान हुँदैन। [2]ज्ञान हुन विषय चाहिन्छ। जस्तै [3]बुद्धि र बुद्धिमा रहेको चिदाभास समेत दुवैले

---

१ यथा तडागोदकं छिद्रान्निर्गत्य कुल्यात्मना केदारान्प्रविश्य तद्वदेव चतुष्कोणाद्याकारं भवति। तथा तैजसमन्तःकरणमपि चक्षुरादिद्वारा निर्गत्य घटादिविषयदेशं गत्वा घटादिविषयाकारेण परिणमते। स एव परिणामो-वृत्तिरित्युच्यते। – वेदान्तपरिभाषा १

२ ज्ञानेच्छाकृतयः सविषया भवन्ति।

३ बुद्धितस्थचिदाभासौ द्वावेतौ व्याप्नुतो घटम्।
तत्राज्ञानं धिया नश्येदाभासेन घटः स्फुरेत्॥ – पञ्चदशी तृप्तिदीपप्रकरण ९१

घटलाई व्याप्त गर्दछन् । ती दुईमध्ये बुद्धिले घटको अज्ञानलाई नाश गर्दछ भने चिदाभासबाट घटको ज्ञान हुन्छ । यस कुरालाई संसारी उदाहरणबाट बुझ्न सकिन्छ । बत्तीले अँध्यारामा रहेका घटपटादि वस्तुहरूलाई विषय बनाएर तिनलाई ढाकेर बसेको अन्धकारलाई हटाउँछ र आफ्ना प्रकाशद्वारा ती घटपटादिलाई प्रकाशित पनि गर्दछ । किन्तु [४]ब्रह्मज्ञानमा भने सोझै वृत्तिको उपयोगिता छैन । किनभने ब्रह्मलाई ढाकेर बसेको अज्ञानको नाश गर्नका लागि मात्रै वृत्तिव्याप्तिको अपेक्षा रहन्छ, तर स्वयंप्रकाश ब्रह्ममा भने चिदाभास अर्थात् फलको आवश्यकता पर्दैन । जस्तै झलझलाकार सूर्यको ज्ञान गर्न धिपधिपे बत्तीको आवश्यकता पर्दैन ।

यो भावरूपवृत्ति बुद्धिको परिणाम अर्थात् बुद्धिको ज्ञानात्मक व्यापार हो भन्नेमा सबै सहमत छन् । अब जिज्ञासा उत्पन्न छ कि त्यो वृत्तिको सङ्ख्या कति छ ? र त्यसको अन्तिम सङ्ख्या कतिसम्म हुन सक्तछ ? यसको उत्तर खोज्न श्रीमद्भागवतमा प्रवेश गर्नुपर्ने हुन्छ । यी वृत्तिहरू मनका एघार विकारहरू हुन् । प्रथम अवस्थामा ती वृत्तिहरू [५]द्रव्य अर्थात् विषय, स्वभाव अर्थात् परिणामहेतु, आशय अर्थात् संस्कार, कर्म अर्थात् अदृष्ट र काल अर्थात् क्षोभकका द्वारा सयौँ, हजारौँ, लाखौँ र करोडौँ

---

४ ब्रह्मण्यज्ञाननाशाय वृत्तिव्याप्तिरपेक्षिता ।
स्वयं स्फुरणरूपत्वान्नाभास उपयुज्यते ॥ – पञ्चदशी तृप्तिदीपप्रकरण ९२

५ द्रव्यस्वभावाशयकर्मकालैरेकादशामी मनसो विकाराः ।
सहस्रशः शतशः कोटिशश्च क्षेत्रज्ञतो न मिथो न स्वतः स्युः ॥
– भागवत ५।११।११

अर्थात् असङ्ख्यरूपमा सिर्जित हुन्छन्। किन्तु यस वृत्तिको वृद्धि क्षेत्रज्ञ आत्माको शक्ति र सत्ता पाएर हुन्छ। यसको वृद्धि वृत्तिहरू परस्पर मिलेर र एक्लो वृत्तिबाट मात्र पनि हुन सक्छ।

प्रत्येक प्राणीमा त्यसमा पनि मनुष्यमा जन्मदेखि मृत्यु पर्यन्त उपर्युक्त प्रकारले अनन्त वृत्ति सिर्जित हुन्छन् र कालक्रमले प्रायः गरेर पुराना वृत्तिहरू तिरोहित हुने र नयाँ वृत्तिहरू उद्भूत भइरहन्छन्। ती वृत्तिहरू प्रायः यसै वर्तमान जन्मका संस्कार र वासना लिएर प्रवृत्त हुन्छन् भने कतिपय वृत्तिहरू अवचेतन मनमा सञ्चित भएर रहेका संस्कार र वासनाले युक्त पनि हुन्छन्। धेरैजसो संसारी मनुष्यहरूका वृत्तिहरू मायिक अर्थात् विषयवासनाबाट प्रभावित हुन्छन्। त्यस्ता वृत्तिहरू विषयासक्त एषणाहरू, कामनाहरू र मनोभावबाट उद्भावित भएका पनि हुन्छन्। खास गरेर अथाह पुत्रैषणा, वित्तैषणा र लोकैषणा बोकेर हिँड्ने कामी मान्छेका रजोगुणी वृत्तिहरूले उसलाई मृत्युपर्यन्त संसारमा अथक रूपमा घुमाइरहन्छन्। तिनै क्षुद्र वृत्तिका कारण मनुष्य बारम्बार विभिन्न योनिमा जन्मने र मर्ने गरिरहन्छ। उसले कहिल्यै मुक्ति पाउँदैन।

मनुष्यले आफ्ना ती अधोमुखी कामना, वासना र एषणाबाट मलिन र उच्छृङ्खल अनन्त [६]चित्तवृत्तिहरूलाई जबसम्म [७]यम[८]नियमादि साधनहरूबाट निग्रह गर्दै लगेर

---

६ योगश्चित्तवृत्तिनिरोधः – योगसूत्र १।२

७ अहिंसासत्यास्तेयब्रह्मचर्यापरिग्रहा यमाः। – योगसूत्र २।२०

८ शौचसन्तोषतपः स्वाध्यायेश्वरप्रणिधानानि। – योगसूत्र २।३२

ऊर्ध्वमुखी बनाउन सक्तैन तबसम्म ऊ मनुष्योचित मार्गमा प्रवृत्त हुनसक्तैन । आफ्ना त्यस्ता निरङ्कुश अधोगामी अर्थात् भ्रमांशतर्फ उन्मुख विषयासक्त मलिन बुद्धिको अनन्त वृत्तिहरूलाई नियन्त्रण गर्दै लगेर तिनलाई भगवद्अर्पित निष्काम कर्मद्वारा पखाल्नु पर्दछ । त्यसपछि अनिमित्ता तथा अहैतुकी भक्तिद्वारा अत्यन्त विक्षिप्त चित्तका वृत्तिहरूलाई निश्चल बनाउनु पर्दछ ।

आफ्ना यत्रतत्र छरिएर रहेका बहिर्मुखी मलिन तथा चञ्चल अनन्त वृत्तिहरूलाई समेट्तै लगेर निष्काम कर्मबाट धोएर सफा गरी अहैतुकी भक्तिबाट स्थिर बनाउन जुन साधन चतुष्टय सम्पन्न मुमुक्षु सफल हुन्छ, ऊ नै मुमुक्षु हो । त्यस्तो तीव्र वैराग्य र मुमुक्षायुक्त उत्तम अधिकारीमात्रै ब्रह्मजिज्ञासातर्फ प्रवृत्त हुन योग्य हुन्छ । त्यसपछि गुरूपसत्तिपूर्वक मुमुक्षु ब्रह्मज्ञानका लागि श्रवण, मनन, निदिध्यास आदि साधनहरूद्वारा चित्तका अधोमुखी वृत्तिहरूलाई समाप्त गर्दै लगेर ज्ञानको परिपाकद्वारा अन्त्यमा ब्रह्माकाराकारित अर्थात् ब्रह्मचैतन्य आरूढ चरमवृत्तिमा पुग्न सफल हुन्छ ।

उपर्युक्त अनुसारको [९]ब्रह्मवृत्ति वा चरमवृत्तिलाई जुन मुमुक्षुहरूले जान्दछन्, प्राप्त गर्दछन् र त्यसलाई स्थिर राख्तै ब्रह्मचिन्तनबाट अझ सुदृढ बनाउँदै लैजान्छन् त्यस्ता

---

९ ये हि वृत्तिं विजानन्ति ज्ञात्वापि वर्धयन्ति ये ।
ते वै सत्पुरुषा धन्या वन्द्यास्ते भुवनत्रये ॥ – अपरोक्षानुभूतिः १३१

ज्ञानी पुरुषहरू सत्पुरुष हुन् । तिनीहरू संसारमा धन्य हुन् र पूजनीय समेत हुन् भनेर भगवत्पाद श्रीशङ्कराचार्यले भन्नुभएको छ ।

जुन मुमुक्षुको अन्तःकरणको वृत्ति निष्कामकर्मबाट अत्यन्त निर्मल, अहैतुकी भगवद् भक्तिद्वारा अत्यन्त स्वच्छ र ब्रह्मज्ञानद्वारा अत्यन्त सूक्ष्म भएको छ, त्यस्तो वृत्ति नै ब्रह्मकाराकारित वृत्ति भनेर बुझ्नु पर्दछ । [१०]सबै भूतप्राणीहरूका अन्तःकरणमा लुकेर बसेको त्यो आत्मा बाहिर देखापर्दैन । त्यस आत्मालाई सूक्ष्मदर्शी ज्ञानी पुरुषहरूले आफ्ना तीव्र र सूक्ष्म बुद्धिका वृत्तिद्वारा नै देख्नसक्तछन् भनेर श्रुतिले स्पष्टै रूपमा भनेको छ ।

[११]ब्रह्मचिन्तनबाट जुन मुमुक्षुको बुद्धिको वृत्ति राम्रोसँग परिपाक हुन्छ त्यस मुमुक्षुलाई ब्रह्मसाक्षात्कार हुन्छ । किन्तु जसले ब्रह्मसाक्षात्कार नगरीकनै केवल मुखले मात्रै 'अहं ब्रह्मास्मि' म ब्रह्म हुँ भनी हिँड्दछ भने त्यस्तालाई ब्रह्मसाक्षात्कार भएको भन्न मिल्दैन ।

संसारी कामनामा अत्यन्त आसक्त मनुष्य बहिर्मुखी हुन्छ । अन्तःकरण दूषित भएको व्यक्तिले ब्रह्मज्ञान गर्नसक्तैन । उसका

---

१० एष सर्वेषु भूतेषु गूढोत्मा न प्रकाशते ।
दृश्यते त्वग्र्यया बुद्ध्या सूक्ष्मया सूक्ष्मदर्शिभिः ॥ – कठोपनिषद् १।३।१२

११ येषां वृत्तिः समा वृद्धा परिपक्वा च सा पुनः ।
ते वै सद्ब्रह्मतां प्राप्ता नेतरे शब्दवादिनः ॥ – अपरोक्षानुभूतिः १३२

[12]इन्द्रियहरूले बाहिरको मिथ्या संसार र मायिक विषयहरूलाई विषय गर्दछन् । किन्तु भित्र अन्तःकरणमा विराजमान अन्तर्यामी प्रत्यगात्मालाई देख्न सक्तैन । किनभने जीवात्माका इन्द्रियहरूलाई परमात्माले बाहिरतर्फमात्र हेर्न सक्ने गरेर तिनलाई बाहिरतर्फ फर्काइदिएका छन् । त्यसकारण जीव बाहिरी विषयहरूमात्र देख्तछ, अन्तरात्मालाई देख्तैन । किन्तु जसले मोक्ष प्राप्त गर्ने इच्छा गर्दै आफ्ना बहिर्गामी इन्द्रियहरूलाई अर्थात् वृत्तिहरूलाई नियन्त्रण गरेर अर्थात् भित्रतिर फर्काएर आत्मचिन्तन गर्दछ त्यस्ता धीर मुमुक्षुले नै ब्रह्मसाक्षात्कार गर्न सक्तछ । बहिर्मुखी इन्द्रिय भएको संसारी पुरुषले ब्रह्मसाक्षात्कार गर्न सक्तैन भनेर उपनिषद्ले भनेको छ ।

ब्रह्मचिन्तनमा लागेका मुमुक्षुले बिहान बिउँभेदेखि रातमा नसुतेसम्म र जन्मेदेखि मृत्युपर्यन्त ब्रह्मचिन्तन गरिरहनु पर्दछ । मुमुक्षुले संसारी कामनालाई आफ्ना वृत्तिद्वारा अन्तःकरणमा प्रवेश गरेर दूषित हुने मौका कुनै हालतमा दिनु हुँदैन । किनभने [13]जसरी ब्रह्मा आदि देवताहरू, सनक आदि मुनिहरू र शुकदेव आदि ब्रह्मज्ञानीहरू सबै समयमा ब्रह्मलीन भएर रहन्छन् । अर्थात् आफ्ना अन्तःकरणका वृत्तिहरूलाई बाहिर प्रवाहित

---

१२ पराञ्चि खानि व्यतृणत्स्वयम्भूस्तस्मात्पराङ्पश्यति नान्तरात्मन् ।
कश्चिद्धीरः प्रत्यगात्मानमैक्ष दावृत्तचक्षुरमृतत्वमिच्छन् ॥
– कठोपनिषद् २।१।१

१३ निमेषार्धं न तिष्ठन्ति वृत्तिं ब्रह्ममयीं विना ।
तथा तिष्ठन्ति ब्रह्माद्याः सनकाद्याः सुकादयः ॥ – अपरोक्षानुभूतिः १३४

हुन नदिएर भित्रतर्फ फर्काएर ब्रह्ममय बनाइरहन्छन्। त्यसै गरेर मोक्षको इच्छा गर्ने भएका मुमुक्षुले ब्रह्ममयी वृत्तिरहित भएर अर्थात् ब्रह्मानुसन्धान विना आधा निमेष पनि बस्नु हुँदैन। यस भनाइको तात्पर्य मुमुक्षुले सधैँ नै आफ्नो अन्तःकरणको वृत्तिलाई ब्रह्ममय अर्थात् अत्यन्त निर्मल, अत्यन्त स्वच्छ र अत्यन्त सूक्ष्म बनाएर ब्रह्मकाराकारित वृत्तिमा रहनु पर्दछ।

वृत्तिलाई ब्रह्माकाराकारित बनाउन अरू बहिरङ्ग साधनहरूका अतिरिक्त अन्तरङ्ग साधनहरूको आवश्यकता पर्दछ। त्यसमा बुद्धिका वृत्तिलाई अत्यन्त निर्मल, स्वच्छ र सूक्ष्म पार्ने साधनको आवश्यकता पर्दछ। यसका लागि [१४]श्रवणादि अन्तःरङ्गसाधनका साथै आहारशुद्धिलाई पनि अत्यन्त महत्त्व दिएको देखिन्छ। मुमुक्षुको [१५]आहारशुद्धि भएपछि अन्तःकरणको शुद्धि हुन्छ। अन्तःकरणको शुद्धि भएपछि निश्चय नै ब्रह्मज्ञान हुन्छ। ब्रह्मज्ञान भएपछि अन्तःकरणमा जमेर रहेका सम्पूर्ण ग्रन्थिहरू अर्थात् कर्मको निवृत्ति अर्थात् नाश हुन्छ।

श्रुतिमा आएको उक्त आहारशुद्धि आदि शब्दहरू समेतको भाष्य गर्दै भगवत्पाद आचार्य शङ्करले यिनको विशेष व्याख्या

---

१४ श्रोतव्यः श्रुतिवाक्येभ्यो मन्तव्यश्चोपपत्तिभिः ।
मत्त्वा च सततं ध्येयं एते दर्शन हेतवः ॥

१५ आहारशुद्धौ सत्त्वशुद्धिः सत्त्वशुद्धौ ध्रुवा स्मृतिः स्मृति लम्भे सर्वग्रन्थीनां विप्रमोक्षः । – छान्दोग्योपनिषद् ७।२६।२

गर्नुभएको छ। मुखावभासको हेतुभूत ऐनाको विशुद्धि आवश्यक भएजस्तै ब्रह्मसाक्षात्कार हुनाका लागि हेतुभूत साधनका रूपमा उपनिषद्मा *'आहारशुद्धौ'* आदि वचनहरू आएका छन्। जसलाई बाहिरबाट भित्र अन्तःकरणमा आहरण गरिन्छ, त्यसलाई आहार भनिन्छ। भोक्ताका भोगका लागि बाहिरबाट जुन शब्द आदि विषयविज्ञानको भित्र आहरण गरिन्छ, त्यसै विषयोपलब्धिरूप विज्ञानको शुद्धि नै आहारशुद्धि हो। अर्थात् राग, द्वेष, मोह आदि दोषहरूबाट असंसृष्ट विषयविज्ञान नै आहारशुद्धिको अर्थ हो भनेर बुझ्नुपर्दछ।

इन्द्रियजयी मुमुक्षुका इन्द्रियहरूले तत् तत् विषयहरूको ग्रहण नगरे तापनि ब्रह्मसाक्षात्कार नहुँदासम्म विषयसम्बन्धी रस वा रागको निवृत्ति नहुने कुरा श्रीमद्भगवद्गीताले पनि भनेको छ। अतः आहारशुद्धि भनेको मुमुक्षुका बुद्धिवृत्तिले विषयको राग अर्थात् सूक्ष्मवासनाको समेत परित्याग गर्नु भनेको हो भनेर बुझ्नु पर्दछ।

उपर्युक्त अनुसार आहारशुद्धि भएमा त्यसले युक्त अन्तःकरण वा बुद्धि अथवा सत्त्वको शुद्धि हुन्छ अर्थात् निर्मल हुन्छ। अन्तःकरणको शुद्धि भएमा उपनिषद्मा वर्णित र गुरूपदिष्ट भूमा अर्थात् ब्रह्मज्ञानको अचल स्मृति भइरहन्छ। त्यसरी ब्रह्मज्ञान भएपछि अनेकौँ जन्मजन्मान्तरदेखि अनुभव गरिएका र भावनाद्वारा सशक्त पारिएका अविद्याकृत अनर्थ पाशरूप हृदयस्थित ग्रन्थिहरूको नाश हुन्छ। माथि वर्णित सबै अरू साधनहरू आहारशुद्धिमूलक रागद्वेषादिबाट

निर्मुक्त निर्मल बुद्धिको चरमवृत्ति नै ब्रह्मसाक्षात्कारको अभ्यर्हित साक्षात् साधन हो। अतः बुद्धिका वृत्तिको संशुद्धिलाई नै श्रुतिले प्राथमिकता दिएको देखिन्छ।

गीताले अत्यन्त निर्मल भएर उत्कर्षमा पुगेको बुद्धिका वृत्तिबाट नै ब्रह्मसाक्षात्कार गरेर मुमुक्षु मुक्त हुन्छ भनेको छ। किनभने ब्रह्मज्ञान भएपछि त्यस ज्ञानरूपी अग्निले अन्तःकरणमा रहेका सबै कर्महरू र तिनको वासना समेतलाई आगोले सुकेको दाउराको राशि डढाएर भस्म गरेझैँ भस्म गरिदिन्छ। त्यसपछि बुद्धिवृत्ति निर्मल, स्वच्छ र सूक्ष्म हुन्छ। यसै कारण श्रीशङ्कराचार्यले वृत्तिलाई जसले जान्दछन् र बढाउँछन्, तिनै सत्पुरुषहरू धन्य हुन्, ती ज्ञानीहरू तीनै लोकका वन्दनीय हुन् भन्नुभएको छ। ॐ ब्रह्मार्पणमस्तु।

# ३९. रसो वै सः

रसः शब्द रस् अच् भएर बन्दछ । यसका सामान्य अर्थहरू पारो, कुनै वस्तुको सार, गुलियो, अमिलो, नुनिलो, पीरो, तीतो हुन्छ । शरीरमा रहने सातथरी धातुहरू – रगत, पित्त, बोसो, मासु, मांसी, हाड र वीर्यलाई पनि रस नै भनेर लिइन्छ । सरबत, रूख वा लहरो आदिको चोप वा दूध, शिलाजित समेतलाई पनि रसमा नै शास्त्रहरूले गणना गरेका छन् ।

साहित्यशास्त्रमा मुख्य रस नौ प्रकारका मानिएका छन् – शृङ्गार, हास्य, करुण, रौद्र, वीर, भयानक, बीभत्स, अद्भुत र शान्त । साहित्यदर्पणमा वात्सल्यलाई पनि रस मानेर रसको सङ्ख्या दश पुऱ्याइएको छ । रुद्रट नामका विद्वान्ले प्रेयान्लाई लिएर दशम रस मानेका छन् । त्यस्तै विद्वान् भानुदत्तले *‘रसतरङ्गिणी’* मा वात्सल्य, लौल्य, भक्ति र कार्पण्यलाई पनि रस भनेका छन् । यसरी रसका सम्बन्धमा अनेक मत भए तापनि आलङ्कारिकहरूले काव्य वा [१]नाट्यका लागि मुख्य नौ रस नै मान्नु उचित देखिन्छ भनेका छन् । यही कुरा पण्डितराज जगन्नाथले पनि आफ्नो ‘रसगङ्गाधर’ ग्रन्थमा भनेका छन् । किन्तु नाटकमा शान्तरसलाई प्रयोग गर्न सकिँदैन भन्ने विद्वान्हरूको धारणा छ । विश्वनाथले रसलाई काव्यको

---

१ शृङ्गारहास्यकरुणरौद्रवीरभयानकाः ।
बीभत्साद्भुतसंज्ञौ चेत्यष्टौ नाट्ये रसाः स्मृताः । – काव्यप्रकाशः

प्राण भनेका छन् । [२]साहित्यदर्पणमा शान्तरस नवौँ रस मानिएको छ। वात्सल्य रसलाई दशम रस मानिएको छ। साहित्यमा रसलाई सर्वस्व मानिएको छ र यसलाई [३]ब्रह्मानन्दको सहोदर पनि भनिएको छ ।

उपर्युक्त अनुसार रस शब्दको सामान्य अर्थ भए तापनि अद्वैत वेदान्तमा भने यसको अर्थ ब्रह्म हुन्छ। ब्रह्म रस हो र रस नै आनन्द हो। आनन्द नै ब्रह्म हो। श्रुतिले रसरूप ब्रह्मको वर्णन गर्ने क्रममा पहिले जगत् अव्याकृत ब्रह्मरूप नै थियो, त्यसैबाट सत् अर्थात् नामरूपात्मक व्यक्तको उत्पत्ति भयो, त्यसै सत्‌ले स्वयं आफूलाई नै नामरूपात्मक जगद्रूप बनायो, यसैकारण त्यसलाई स्वयं बनेको भनिन्छ, त्यो जुन प्रसिद्ध [४]सुकृत हो, त्यो नै रस हो र यसै रसलाई पाएर नै पुरुष आनन्दी हुन्छ भनेको छ।

यसै रसरूप आनन्दको बयान गर्दै श्रुति अगाडि भन्दछ – यदि हृदयाकाशमा स्थित यो आनन्द स्वरूप आत्मा नहुँदो हो त कुन प्राणी सास फेर्न सक्तथ्यो, यसैले नै प्राणीलाई आनन्दित गर्दछ । त्यतिमात्रै होइन, जुन समयमा मुमुक्षु ज्ञानी यस अदृश्य, अवर्णनीय र अधिष्ठानस्वरूप ब्रह्ममा अभयस्थिति प्राप्त गर्दछ, त्यस समयमा उसले अभय प्राप्त गर्दछ। यदि

२ निर्वेदस्थायिभावोऽस्ति शान्तोऽपि नवमो रसः ।
वाक्यं रसात्मकं काव्यम् इति । – साहित्यदर्पण

३ सत्त्वोद्रेकादखण्डस्वप्रकाशानन्दचिन्मयः ।
वेद्यान्तरस्पर्शशून्यो ब्रह्मास्वादसहोदरः ॥ – साहित्यदर्पण ३।२

४ यद्वै तत्सुकृतं रसो वै सः । रसं ह्येवायं लब्ध्वाऽऽनन्दी भवति ॥
– तैत्तिरीयोपनिषद् २।७।१

उसले अलिकति पनि त्यस रसरूप ब्रह्ममा भेद गऱ्यो भने उसलाई भय प्राप्त हुन्छ। त्यो रसरूप ब्रह्म भेददर्शी विद्वान्का लागि भने अभय नभएर भयङ्कर भयरूप हुन्छ भन्ने श्रुतिको कथन छ।

लोकमा प्रसिद्ध आयुर्वेदमा अत्यन्त महत्त्व राख्ने औषधीलाई पनि रसादि भनिन्छ। यो जीवनदायी औषधी हो। रस भनेर धेरै वस्तुलाई भनिने कुरा परिचयका क्रममा नै उल्लेख गरिसकिएको छ। प्रसिद्ध सुकृत रस नै वास्तविक रस हो। सन्तुष्टि वा तृप्ति दिने आनन्ददायी सबै पदार्थलाई रस नै भनिन्छ। ज्ञानी वा भक्तलाई पनि यसै कारण रसिक भनिन्छ, किनभने रसराज ब्रह्मरसमा चुर्लुम्म डुबेर मस्त हुने हुनाले नै ज्ञानीलाई रसिक भनिएको हो। निश्चय नै त्यो ब्रह्मरस नै हो। सांसारिक अरू रस मायिक हुन् र क्षणिक हुन् तर ब्रह्मरस स्थायी रस हो। मुमुक्षु ज्ञानीले त्यस रसको स्वाद पाएपछि अरू सबै रस उसका लागि फिक्का हुन्छन्।

रासरूपी ब्रह्म रसमा डुबेका गोपीहरूको कृष्णरस बाहेक अरू नीरस हुन्थ्यो। ब्रह्मरसको स्वाद लिइसकेका गोपीहरू संसारी अरू रसतर्फ कसरी लाग्न सक्तथे ? रस नै रास हो। रसको समूह नै रास हो। त्यसै कारण भगवान् श्रीकृष्णलाई रासेश्वर भनिएको हो। ती गोपीहरूले रसस्वरूप म [५]ब्रह्मलाई प्राप्त गरे भनेर श्रीकृष्णले भन्नुभएको छ।

रसरूप त्यो ब्रह्म भूमा हो। [६]भूमा प्राप्त भएपछि सारा

---

५ ब्रह्म मां परमं प्रापुः सङ्गाच्छतसहस्रशः। – भागवत ११।१२।१३

सांसारिक तापहरू समाप्त हुन्छन्। निश्चय नै जुन भूमा हो त्यो महान् हो। त्यो निरतिशय आनन्द हो। त्यो भूमा सर्वोच्च रस र निरतिशय परमानन्द हो। त्यसभन्दा तलका संसारी पदार्थहरू नीरस हुन्, सातिशय हुन् र न्यूनाधिक हुन्। त्यसै कारण अल्प हुन्। त्यस्तो त्रिपुटीयुक्त सुख सुख होइन, सुखको आभास वा भ्रम हो। ब्रह्मरस नै स्थायी आनन्द हो।

उपनिषद्ले भूमा ब्रह्मरसको मुक्त कण्ठले परिचय दिएको छ। त्यस रसरूप भूमा लक्षण बताउँदै उपनिषद् अगाडि भन्दछ– जहाँ अरू केही देख्तैन, अरू केही सुन्दैन र अरू केही [७]जान्दैन त्यो नै निश्चितरूपमा भूमा हो। यसका विपरीत अरू केही देख्तछ, अरू केही सुन्दछ र अरू केही जान्दछ भने त्यो अल्प हो र थोरै हो। जुन रसरूप भूमा हो त्यो अमृत हो र ब्रह्म हो। जुन अल्प हो, त्यो मायिक हो र त्यो मर्त्य हो।

त्यो जुन प्रसिद्ध सुकृत हो, त्यो नै रस हो। यसै रसलाई पाएर नै पुरुष आनन्दी हुन्छ भने पछि अगाडि श्रुति आनन्द नै ब्रह्म हो भन्दछ। [८]आनन्दलाई ब्रह्म हो भनेर जान। किनभने आनन्दबाट नै यी सबै प्राणीहरू उत्पन्न हुन्छन्। उत्पन्न

---

६ यो वै भूमा तत्सुखं नाल्पे सुखमस्ति भूमैव सुखं भूमात्वेव विजिज्ञासितव्य इति। – छान्दोग्योपनिषद् ७।२३।१

७ यत्र नान्यत्पश्यति नान्यच्छृणोति नान्यद्विजानाति स भूमाथ यत्रान्यत्पश्यत्यन्यच्छृणोत्यन्यद्विजानाति तदल्पं यो वै भूमा तदमृतं यदल्पं तन्मर्त्यम्। – छान्दोग्योपनिषद् ७।१४।१

८ आनन्दो ब्रह्मेति व्यजनात्, आनन्दाद्ध्येव खल्विमानि भूतानि जायन्ते। आनन्देन जातानि जीवन्ति। आनन्दं प्रयन्त्यभिसंविशन्ति।
– तैत्तिरीयोपनिषद् ३।५।१

भएपछि आनन्दद्वारा नै जीवित रहन्छन् । अन्त्यमा आनन्दमा नै मिल्दछन् । अतः रसात्मक आनन्द नै सबै भूतप्राणी, स्थावर, जङ्गम र अखिल ब्रह्माण्डको सृष्टिकर्ता, स्थितिकर्ता र लयकर्ता हो भन्ने थाहा हुन्छ ।

यो सम्पूर्ण सृष्टिचक्र रसात्मक ब्रह्मको विवर्त हो । आनन्द ब्रह्मको स्यानो लवलेश पाएर प्राणी आनन्दित भएर बाँच्तछ । सामान्य प्राणीमा लवलेश रहेको आनन्दरसका मात्रा गुणित हुँदै गएर ब्रह्मा र अकामहत श्रोत्रिय ब्रह्मज्ञानीसम्म पुगेर चुलिन्छ । परमानन्द ब्रह्ममा सबै आनन्दहरू समेटिन्छन् । [९]त्यसै परमानन्दको लेशमात्रबाट सारा प्राणीहरू आनन्दपूर्वक जीवित रहन्छन् ।

मुमुक्षुले श्रुतिमा आएको [१०]*'नेति नेति'* प्रमाणद्वारा मायाको सम्पूर्ण कार्यप्रपञ्च र माया समेतलाई समाप्त गरेर आफ्नो शुद्ध अन्तःकरणद्वारा ब्रह्मानन्दरूपी अमृतको पान गर्नुपर्दछ । जसरी तिर्खाएको मान्छेले नरिवल भित्रको पानीलाई पान गरेर बाहिरको बोक्रो फ्याँकिदिन्छ त्यसरी नै मुमुक्षुले ब्रह्मरसलाई आत्मैक्यका रूपमा आत्मसात् गरेर यस नीरस असार संसारलाई चटक्कै त्यागिदिनुपर्दछ । यसैमा कल्याण छ । अतः रस भनेको परब्रह्म परमात्मा नै हो । अरू संसारी मायिक रसहरू त्यस ब्रह्मरसका लवलेशमात्रै हुन् । ॐ ब्रह्मार्पणमस्तु ।

---

९ एतस्यैवानन्दस्थान्यानि भूतानि मात्रामुपजीवन्ति ।
– बृहदारण्यकोपनिषद् ४।३।३२

१०. नेति प्रमाणेन निराकृताऽखिलो हृदा समास्वादित चिद्घनाऽमृतः ।
त्यजेदशेषं जगदात्तसद्रसं पीत्वा यथाम्भः प्रजहाति तत्फलम् ॥
– रामगीता ३४

# ४०. वाचारम्भणं विकारः

द्वैतवादी दर्शनका विद्वान्‌हरू कार्य र कारण दुवैलाई सत्य मान्दछन्। जुन पदार्थ प्रत्यक्ष र अनुमान दुवै प्रमाणहरूले कारण ब्रह्मबाट कार्यका रूपमा विवर्तित यस अखिल प्रपञ्चलाई जबसम्म बाध गर्दैनन् तबसम्म ब्रह्म जस्तै ब्रह्मको कार्य प्रपञ्च पनि परमार्थतः सत्य नै हो। प्रपञ्चलाई सत्य र शाश्वत मान्दा ब्रह्मको ब्रह्मत्वमा कुनै हानि हुँदैन। बरु ब्रह्मको महत्ता नै ख्यापन हुन्छ। अतः ब्रह्म र प्रपञ्च दुवै पारमार्थिक सत्य हुन् भन्ने ती दार्शनिकहरूको मत देखिन्छ।

उपर्युक्त सम्बन्धमा अद्वैतवादी दर्शनका विद्वान्‌हरूले केवल प्रत्यक्ष र अनुमानबाट मात्रै प्रपञ्चलाई सत्य मान्न मिल्दैन। परन्तु तेस्रो सबैभन्दा शक्तिशाली आगम प्रमाणतर्फ पनि विचार गर्नुपर्दछ भन्दछन्। किनभने [1]ब्रह्मलाई आचार्यको उपदेशपूर्वक मनद्वारा देख्नु पर्दछ। ब्रह्ममा नाना केही पनि छैन। जसले ब्रह्ममा नाना सरह देख्तछ त्यो मृत्युबाट मृत्युमा नै प्राप्त हुन्छ। उसले बारम्बार यस मृत्युलोकमा आइरहनुपर्दछ। त्यस्तो द्वैतवादीको मुक्ति हुँदैन। बरु बारम्बार जन्म र मृत्युको कुचक्रमा अनन्तकालसम्म ऊ घुमिरहन्छ।

---

१ मनसैवानुद्रष्टव्यं नेह नानास्ति किञ्चन।
मृत्योः स मृत्युमाप्नोति य इह नानेव पश्यति ॥
– बृहदारण्यकोपनिषद् ४।४।१९

उपर्युक्त श्रुतिबाट भेद अर्थात् द्वैतको बाध वा निषेध हुन्छ। मायाको विकारजन्य नानात्व भेद र नानात्वशून्य अभेद एउटै स्थानमा रहन सक्तैनन्। किनभने प्रत्यक्षरूपमा एक चन्द्रमा दुई हुनसक्तैन। अद्वितीय निराकार ब्रह्ममा ब्रह्माकार र जगदाकार दुई थरी आकारहरू हुनसक्तैनन्। ब्रह्म आकारयुक्त होइन। ब्रह्म प्रत्यक्ष प्रमाण र अनुमान प्रमाणबाट जान्न सकिँदैन। किनभने ब्रह्म शास्त्रैकवेद्य हो। कार्य कारणभन्दा भिन्न होइन। कारण पारमार्थिक सत् हो। उदाहरणका लागि श्रुतिले स्पष्ट नै भनेको छ। छान्दोग्योपनिषद्मा पिता उद्दालकले पुत्र श्वेतकेतुलाई हे सोम्य ! भनेर सम्बोधन गर्दै उपदेश गरेका छन्। [२]जसरी एउटा माटाको डल्लोबाट बनेका सबै माटाका विकार वा कार्यहरू माटोदेखि पृथक होइनन्। किनभने विकार वाणीमा आधारित छ। त्यो नाम मात्र हो असत्य हो भने माटो चाहिँ सत्य हो। यसलाई आरम्भण भनिन्छ। यहाँ माटो सत्य हो र त्यसको विकार अर्थात् माटोरूपी उपादान कारणबाट निस्किएका घैंटो, सुराही, अटल, घ्याम्पो, मकल, गमला, चिलिम, पातो, सुल्पा आदि विकारहरू नाममात्रका असत्य हुन्। अन्ततः तिनको उपादानकारण एक मृत्तिका मात्रै व्यावहारिक सत्य हो।

उपर्युक्त श्रुतिवचनलाई पुष्ट पार्दै भगवान् वेदव्यासले ब्रह्मसूत्रमा एउटा [३]वाचारम्भण नामक सूत्रको नै प्रणयन गर्नु

---

२ यथा सोम्यैकेन सर्वं मृन्मयं विज्ञातं स्याद्वाचारम्भणं विकारो नामधेयं मृत्तिकेत्येव सत्यम्। – छान्दोग्योपनिषद् ६।१।१

३ तदन्यत्वमारम्भणशब्दादिभ्यः। – ब्रह्मसूत्र २।१।६।१४

भएको छ। जुन सूत्रको अर्थ कारण ब्रह्मभन्दा बाहेक कुनै अर्को कार्य जगत्को सत्ता छैन भन्ने हुन्छ। किनभने विकार केवल वाचारम्भणमात्र हो। अन्ततः मृत्तिका मात्रै सत्य हो। [४]परमकारण मात्रै सत्य हो। सबै सद्रूप हो। [५]यो सम्पूर्ण आत्मा हो, ब्रह्म नै हो इत्यादि श्रुतिवचनहरूबाट घटादि माटाका सारा विकारहरू असत्य भएर तिनको उपादानकारण मृत्तिकामात्रै व्यावहारिक सत्य भए जस्तै सारा प्रपञ्चको उपादानकारण ब्रह्म मात्रै परमार्थिक सत्य हो र प्रपञ्च अर्थात् कार्य जगत् मिथ्या हो भन्ने नै हो।

उपादानकारण माटोबाट बनेका घटादिका आकारबाट प्रतीत हुने पदार्थहरू व्यावाहारिकरूपमा केवल विभिन्न आकारयुक्त भएर माटोबाट पृथक् जस्ता देखिए तापनि पारमार्थिकरूपमा ती सबै माटोमात्रै हुन्। अतः माटोको ज्ञान भएपछि ती सबैको ज्ञान हुन्छ। हुन त मृत्तिकाबाट बनेका घटादि आँखाद्वारा देखिन्छन् तापनि मृत्तिकादेखि अतिरिक्त तिनको कुनै अर्को स्वरूप वा आकार छैन। यो घट हो, यो सुराही हो, यो चिलिम हो भन्नु केवल वागिन्द्रियद्वारा उच्चार्यमाण नाममात्र हो। ती सबै मृत्तिका नै हुन् र मृत्तिकाका विकार भएकाले मिथ्या हुन्। मृत्तिका घटादि विकार नहुँदा पनि विद्यमान रहन्छ। अतः यो सत् हो। किन्तु घटादि विकारहरू उपादान कारणका अभावमा रहन नसक्ने भएकाले मिथ्या हुन्।

---

४ ऐतदात्म्यमिदं सर्वं तत्सत्यं स आत्मा। – छान्दोग्योपनिषद् ६।४।७

५ आत्मैवेदं सर्वम्। – छान्दोग्योपनिषद् ७।२५।२

जुन वस्तु [६]पहिले भूतकालमा थिएन, पछि भविष्यमा पनि रहँदैन र केवल बीच वर्तमानकालमा मात्रै झुलुक्क देखिन्छ भने त्यो मिथ्या हो। [७]भूत, भविष्य र वर्तमान तीनै कालमा यथावत् रहने वस्तु नै सत्य हो भनेर शास्त्रले भनेको छ। मृत्तिकारूप उपादानकारणबाट विकाररूप घटादि कार्यको उत्पत्ति हुने भएकाले मृत्तिका सत्य हो र घटादि कार्य मृत्तिकाबाटै बनेका हुँदा मृत्तिका नै हुन्। केवल वाचारम्भण अर्थात् वाणीद्वारा मात्रै घटादिको नामकरण गरेर भिन्नता व्यवहार भएको हो भनेर केवल व्यवहारिकरूपमा बुझाउनका लागि मात्रै शास्त्रले माटा र माटाका विकारलाई उदाहरणका लागि मात्रै उपनिषद्ले देखाएको हो। वास्तविकरूपमा माटो र घैंटो आदि विकार पनि मायिक वस्तु भएकाले सबै मिथ्या नै हुन्। पारमार्थिकरूपमा ब्रह्म नै सत्य हो र ब्रह्मको सत्तामा विवर्तित प्रपञ्च व्यावहारिकरूपमा पृथक् देखिए तापनि ब्रह्मदेखि अभिन्न हो। यसबाट समुद्रतरङ्गन्यायले मृत्तिकामा घटादि र ब्रह्ममा जगदादि प्रपञ्चको भेद र अभेद दुवै प्रतीत हुन्छ। किनभने पारमार्थिकरूपमा अभेद र व्यावहारिकरूपमा भेद देखिन्छ।

भेद र अभेदरूपमा काष्ठरूप उपादान कारणमा देखापर्ने दण्ड, कमण्डलु र कुण्डलादि कार्यहरूलाई लिन सकिन्छ।

---

६ आदावन्ते च यन्नास्ति वर्तमानेऽपि तत्तथा।
वितथैः सदृशाः सन्तोऽवितथा इव लक्षिताः॥ – माण्डूक्यकारिका २।६

७ त्रिकालाऽबाध्यत्वं सत्यत्वम्।

त्यस्तै काँचो सुनरूपी उपादानकारणमा देखापरेका विभिन्न गहनारूप विकारहरूलाई पनि लिन सकिन्छ। अर्को उदाहरणका रूपमा [८]समुद्रको जलरूपी उपादान कारणमा देखा परेका बुद्बुद, तरङ्ग, फिँज आदिलाई लिन सकिन्छ। ती सबै उपादानतया अभिन्न र कार्यतया भिन्न जस्ता देखिन्छन्। वस्तुतः ती सबै कार्य वा विकारहरू पारमार्थिकरूपमा उपादानकारणका दृष्टिले अभिन्न र व्यावहारिक दृष्टिले भिन्न जस्ता देखिन्छन्। त्यसैगरेर जीव र ब्रह्ममा पनि कार्यतया भेदजस्तो र कारणतया अभेद अर्थात् सबै ब्रह्ममात्रै देखिन्छ। किनभने यो प्रपञ्च ब्रह्मकै विवर्त हो। ब्रह्मबाहेक अरू नाना केही छैन। जीव र ब्रह्मको नानात्व वा भेद आदि वास्तविक हुन्थ्यो भने एकत्व ज्ञानद्वारा त्यस नानात्व वा भेदको बाध हुने थिएन। अतः भेद वा नानात्व वाचारम्भणमात्रै हो, वास्तविक होइन।

उपर्युक्त अनुसार पारमार्थिकरूपमा ब्रह्ममा नानात्व छँदैछैन। किन्तु ब्रह्ममा जसले [९]नानात्व देख्तछ, त्यो बारम्बार जन्म र मृत्युको कुचक्रमा परेर मिथ्या संसारमा अनन्तकालसम्म घुमिरहन्छ भनेर श्रुतिले भेद वा नानात्वको निषेध गरेको छ। ॐ ब्रह्मार्पणमस्तु।

❀

८ सत्यपि भेदापगमे नाथ तवाहं न ममाकीनस्त्वम्।
सामुद्रो हि तरङ्गः क्वचन समुद्रो न तारङ्गः ॥ – षट्पदीस्तोत्रम् ३

९ मनसैवानुद्रष्टव्यं नेह नानास्ति किञ्चन।
मृत्योः स मृत्युमाप्नोति य इह नानेव पश्यति ॥
– बृहदारण्यकोपनिषद् ४।४।१९

# ४१. विद्या र विद्वान्

## १. **विद्या**

श्रुतिले [१]परा र अपरा गरी दुईथरी विद्या हुन्छन् भनेको छ। पराविद्याबाट अक्षर परमात्मा अर्थात् अक्षर ब्रह्मको ज्ञान हुन्छ। यो निवृत्तिपरक विद्या हो। यसलाई नै विद्या भनिन्छ।

विद्यामा निष्णात पुरुषलाई नै विद्वान् भनिन्छ। [२]विद्वान् नै आत्मविद् हो। [३]आनन्द ब्रह्मको साक्षात्कार गरेको विद्वान् कसैसँग कहीँ पनि डराउँदैन भन्ने श्रुतिको भनाइ छ। त्यस्तो विद्वान्ले आफ्नो नाम र रूपलाईसमेत विसर्जन गरिसकेको हुन्छ। वस्तुतः जसले पराविद्याद्वारा परब्रह्मको साक्षात्कार गरेको छ, त्यही नै विद्वान् हो। किनभने ब्रह्मलाई [४]औपनिषद पुरुष भनेर उपनिषद्ले नै भनेको छ। यस सम्बन्धमा

---

१ द्वे विद्ये वेदितव्ये – परा चैवापरा च। तत्रापरा, ऋग्वेदो यजुर्वेदः सामवेदो-ऽथर्ववेदः शिक्षा कल्पो व्याकरणं निरुक्तं छन्दो ज्योतिषमिति। अथ परा यया तदक्षरमधिगम्यते। – मुण्डकोपनिषद् १।१।५

२ सक्ताः कर्मण्यविद्वांसो यथा कुर्वन्ति भारत।
कुर्यादविद्वाँस्तथाऽसक्तश्चिकीर्षुर्लोकसङ्ग्रहम्॥
न बुद्धिभेदं जनयेदज्ञानां कर्मसङ्गिनाम्।
जोषयेत्सर्वकर्माणि विद्वान्युक्तः समाचरन्॥
– विद्वान् आत्मविद् (मधुसूदन सरस्वती) गीता ३।२५, २६

३ आनन्दं ब्रह्मणो विद्वान्नबिभेति कुतश्चन। – तैत्तिरीयोपनिषद् २।४

४ तं त्वौपनिषदं पुरुषं पृच्छामि तं (त्वा त्वां विद्याभिमानिनं पुरुषम्) चेन्मे न विवक्ष्यसि मूर्धा ते विपतिष्यतीति। – बृहदारण्यकोपनिषद् ३।९।२६

बृहदारण्यकोपनिषद्‌मा शाकल्यलाई सम्बोधन गर्दै श्रोत्रिय ब्रह्मनिष्ठ गुरुले प्रश्न गर्नुभएको छ। त्यसैकारण 'वेदान्तो नाम उपनिषत्प्रमाणम्' अर्थात् उपनिषद् प्रमाणबाटमात्रै जानिने पुरुष नै ब्रह्म हो भन्ने हुन्छ। उपनिषद्‌बाट ब्रह्मज्ञान नभएको मनुष्य विद्वान् हुनसक्तैन। अझै स्पष्ट शब्दमा भन्ने हो भने सेतो कागजमा लेखिएको कालो अक्षर बाह्रखरीलाई घोकेर कण्ठ पारिएको पनि विद्या होइन। त्यो त विद्यामा पुग्ने साधनमात्रै हो। [५]श्रवण, मनन, निदिध्यासन आदिद्वारा शुद्ध भएको बुद्धिको वृत्ति अर्थात् [६]विशुद्ध ज्ञानको प्रकाशद्वारा प्रकाशित वृत्ति नै विद्या हो। त्यसैलाई ब्रह्मचैतन्यआरूढ वा ब्रह्मकाराकारित चरमवृत्ति भनिन्छ। अतः त्यस अवस्थामा मुमुक्षुलाई साक्षात्साधनतया पुग्न सहयोग गर्ने विद्या हो भने त्यस अवस्थामा पुगेको ब्रह्मज्ञानी नै विद्वान् हो। अन्यथा विद्वान् होइन।

यसरी श्रुतिले भने अनुसार विचार गर्दा विधिपूर्वक [७]षडङ्गसहित आफ्नू वेदशाखा अर्थसहित अध्ययन गरेर आद्योपान्त कण्ठस्थ गरे तापनि यदि ब्रह्मज्ञान वा बह्मसाक्षात्कार भएको छैन भने त्यो अध्ययन गृहस्थले थारी गाई घरमा पालेजस्तै व्यर्थ हुन्छ। अतः वेदाध्ययनको सार्थकता ब्रह्मसाक्षात्कारबाटमात्रै हुन्छ। त्यतिमात्रै होइन, स्वर्ग जानका

---

५ अथातो ब्रह्मजिज्ञासा – ब्रह्मसूत्र १।१।१

६ विशुद्धविज्ञानविरोञ्चनाञ्चिता विद्यात्मवृत्तिश्चरमेति भण्यते।
– रामगीता १५

७ शब्दब्रह्मणि निष्णातो न निष्णायात् परं यदि।
श्रमस्तस्य श्रमफलो ह्यधेनुमिव रक्षतः ॥ – भागवत ११।११।१८

लागि ऋग्वेदादि अपराविद्याको अध्ययन गर्ने पुरुष आत्मविद् नभएर मन्त्रविद्मात्रै हो भन्ने कुरा सनत्कुमार र नारदको संवादका रूपमा छान्दोग्योपनिषद्मा आएको प्रसङ्गबाट थाहा हुन्छ। किनभने [८]आत्मविद्ले मात्रै मुक्ति प्राप्त गर्नसक्तछ, तर मन्त्रविद्ले मुक्ति प्राप्त गर्न सक्तैन, ऊ शोकादिबाट सन्तप्त भइरहन्छ भन्ने उक्त उपनिषद्को आशय देखिन्छ।

यस प्रसङ्गलाई श्रीमद्भागवतमहापुराणसँग पनि जोडेर हेर्न सकिन्छ। श्रीशुकदेवमुनिले राजा परीक्षित्लाई ब्रह्मसाक्षात्कार गराउन ब्रह्मोपदेश गर्ने क्रममा उपान्ततिर गएर [९]'म नै सर्वाधिष्ठान परब्रह्म हुँ र ब्रह्मात्मक सर्वाधिष्ठान पनि म नै हुँ' भनेर चिन्तन गर, यसैबाट तिमीलाई ब्रह्मसाक्षात्कार हुन्छ भन्ने उपदेश गरेको देखिन्छ। यस मन्त्रको व्याख्या गर्दै श्रीधरस्वामीले 'यो जुन म हुँ त्यो ब्रह्म हो र जुन ब्रह्म हो त्यो म हुँ' भन्ने विचार गरेमा अर्थात् भागवतमा पहिले आएको *'अहं ब्रह्म'*को भावनाले जीवमा शोकादिको निवृत्ति हुने र दोस्रो व्यत्यय भएर आएको 'ब्रह्माहम्' को भावनाले चिन्तन गरेमा ब्रह्मको पारोक्षको निवृत्ति हुन्छ भन्नुभएको छ। यसरी उपनिषद्मा आएको आत्मविद् नै शोकादिबाट अर्थात् संसारबन्धनबाट मुक्त हुन्छ भन्ने कुरा नै

---

८ तरति शोकमात्मविद् इति। – छान्दोग्योपनिषद् ७।७।३

९ अहं ब्रह्म परं धाम ब्रह्माहं परमं पदम्।
एवं समीक्षन्नात्मानमात्मान्याधाय निष्कले॥
यो ऽहं स ब्रह्मैव यद् ब्रह्म तदहमेवेति समीक्षन्। तत्राहं ब्रह्मेति भावनया जीवस्य शोकादिनिवृत्तिः। ब्रह्माहमिति भावनया च ब्रह्मणः पारोक्ष्यनिवृत्तिर्भवतीति। – भागवत १२।५।११ – श्रीधरीटीका सहित

श्रीशुकदेव स्वामीको राजा परीक्षित्‌लाई दिएको अन्तिम उपदेशबाट पनि थाहा पाइन्छ।

यस सम्बन्धमा वेद्य विषय के हो भने जुन महावाक्य आफ्नू वेदशाखाको वेदान्तभागमा आएको छ, [10]स्वाध्याय गर्दा मर्यादासँग पढिएको छ, आदरपूर्वक परिपालित पनि छ र तत्त्वदर्शी संन्यासी गुरुद्वारा उपदिष्ट भएको छ त्यही वाक्य नै साक्षात् मोक्षको हेतु हुन्छ। विद्या त्यही हो र मोक्षको साक्षात् साधन पनि त्यही हो भन्ने सङ्क्षेपशारीरककारको भनाइ पाइन्छ। यसको तात्पर्य जुन महावाक्य आफ्नू शाखामा आएको छ, विधिपूर्वक श्रोत्रिय ब्रह्मनिष्ठ आचार्यद्वारा उपदिष्ट छ, स्वाध्यायद्वारा प्राप्त गरिएको छ र श्रद्धापूर्वक दीर्घ समयसम्म आराधित पनि छ भने विद्या त्यही हो र त्यहीबाट नै साक्षात् अपरोक्ष ज्ञान उत्पन्न हुन्छ भन्ने हो। असम्प्रदायविद् गुरुका मुखबाट सुनेको र आफूखुशी आफैँले पढेको उपनिषद्वाक्यबाट चरमवृत्ति अर्थात् विद्या निष्पन्न हुनसक्तैन र सो नभईकन मुमुक्षु अर्थात् विद्वान् मुक्त हुनसक्तैन।

## २. शिक्षा

उपर्युक्त विद्या निवृत्तिमार्गपरक विद्या हो। त्यसमा निष्णात

---

१० स्वाध्यायधर्मपठितं निजवेदशाखावेदान्तभूमिगतमादरपालितञ्च।
सन्न्यासिना परदृशा गुरुणोपदिष्टं साक्षान्महावचनमेव विमुक्तिहेतुः॥
– *सङ्क्षेपशारीरकम् ३।२९५*

स्वाध्यायमधीयीत। – *तैत्तिरीयआरण्यक १७९*

स्वाध्यायोऽध्येतव्यः। – *शतपथब्राह्मण ११।५।७।२*

मुमुक्षु नै विद्वान् हो । किन्तु श्रुतिमा आएको पराविद्या बाहेकको अर्को विद्या [11]अपराविद्या हो । ऋग्वेद, यजुर्वेद, सामवेद, अथर्ववेद, शिक्षा, कल्प, व्याकरण, निरुक्त छन्द र ज्योतिषसमेत अपराविद्या हुन् । [12]यिनले मनुष्यलाई प्रवृत्तिमार्गतर्फ प्रवृत्त गराउँछन् । वस्तुतः [13]ब्राह्मणले विनाकारण विधिपूर्वक षडङ्गसहित आफ्नू वेदशाखाको अध्ययन अर्थसहित गर्नुपर्दछ भन्ने श्रुतिको आदेश छ । उपर्युक्त अनुसार गुरुकुलमा वेदको अध्ययन गरिसकेपछि स्नातक भएर एकथरी विद्यार्थीहरू गृहस्थाश्रममा गुरुको आदेश लिएर प्रवेश गर्दछन् । गृहस्थाश्रममा प्रवेश गर्ने ब्रह्मचारीलाई उपकुर्वाण भनिन्छ । स्नातक भएर घर जान लागेका ती शिष्यलाई आचार्यले सदाचारको उपदेश दिन्छन् । त्यसलाई उपनिषद्ले शिक्षा भनेको छ । त्यसमा मुख्य गरेर [14]सत्य बोल, धर्मको आचरण

११ तत्रापरा, ऋग्वेदो यजुर्वेदः सामवेदोऽथर्ववेदः शिक्षा कल्पो व्याकरणं निरुक्तं छन्दो ज्योतिषमिति । – मुण्डकोपनिषद् १।१।५

१२ अथातो धर्मजिज्ञासा (पूर्वमीमांसा १।१।१) स्वर्गकामो यजेत ।
– ताण्डिमहाब्राह्मण १६।१५।५

१३ ब्राह्मणेन निष्कारणो धर्मः षडङ्गो वेदोऽध्येयो ज्ञेयश्च । – *श्रुतिः*

१४ वेदमनुच्याचार्योऽन्तेवासिनमनुशास्ति । सत्यं वद । धर्मञ्चर । स्वाध्यायान्मा प्रमदः । आचार्याय प्रियं धनमाहृत्य प्रजातन्तुं मा व्यवच्छेत्सीः । सत्यान्न प्रमदितव्यम् । धर्मान्न प्रमदितव्यम् । कुशलान्न प्रमदितव्यम् । भूत्यै न प्रमदितव्यम् । स्वाध्यायप्रवचनाभ्यां न प्रमदितव्यम् ॥१॥ देवपितृकार्याभ्यां न प्रमदितव्यम् । मातृदेवो भव । पितृदेवो भव । आचार्यदेवो भव । अतिथिदेवो भव । यान्यस्माकं सुचरितानि । तानि त्वयोपास्यानि ॥२॥ नो इतराणि । ये के चास्मच्छ्रेयांसो ब्राह्मणाः । तेषां त्वयासनेन प्रश्वसितव्यम् । श्रद्धया देयम् । अश्रद्धयाऽदेयम् । श्रिया देयम् । ह्रिया देयम् । भिया देयम् । संविदा देयम् । अथ यदि ते कर्मविचिकित्सा वा वृत्तविचिकित्सा या स्यात् ॥३॥
– तैत्तिरीयोपनिषद् १।११

गर, स्वाध्यायमा प्रमाद नगर, आचार्यलाई अभीष्ट धन ल्याएर देऊ, सन्तानपरम्पराको उच्छेद नगर । मातालाई देवता मान । पितालाई देवता मान । आचार्यलाई देवता मान । अतिथिलाई देवता मान भन्ने आदि शिक्षा अर्थात् उपदेश दिएर घर पठाएको शिष्यले तदनुरूप व्यवहार गरे मात्रै त्यो शिक्षित ठहर्छ । अन्यथा त्यसलाई साक्षर मात्रै मान्न सकिन्छ ।

### ४. शिक्षित

उपर्युक्त परिप्रेक्ष्यमा विद्वान्, शिक्षित र साक्षरको पहिचान गर्नुपर्ने आवश्यकता देखिन्छ । वेद, वेदाङ्ग अर्थसहित पढेर पनि ब्रह्मज्ञानतर्फ प्रवृत्त नहुने अमुक व्यक्तिलाई विद्वान् नभनेर शिक्षितमात्र मान्न सकिन्छ । किन्तु माथि शिक्षावल्लीमा उपदेश गरे अनुसारको आचरण गृहस्थाश्रममा नगरेमा त्यस्तो व्यक्तिलाई शिक्षित भन्न मिल्दैन, त्यो केवल साक्षरमात्रै ठहरिन जान्छ । यसप्रकारको समस्या अहिलेमात्रै नभएर वैदिक र उपनिषद्कालमा पनि देखिन्छ । उपनिषद्कालका एकजना [१५]ब्रह्मज्ञानी पिताले पुलपुलिएको आफ्नो छोरालाई ढिला गरेर गुरुकुलमा वेदाध्ययन गर्न पठाएको र ऊ वेद पढिसकेर आचार्यको शिक्षा लिएर घर फर्किंदाखेरि उसमा आचार्यले दिएको शिक्षाको प्रतिकूल उद्दण्डता, अहंमन्यता र सर्वज्ञता आदि आचरण देखिएपछि ब्रह्मज्ञानी पिताले घरमा नै सर्वप्रथम

---

१५ स ह द्वादशवर्ष उपेत्य चतुर्विंशतिवर्षः सर्वान् वेदानधीत्य महामना अनूचानमानी स्तब्ध एयाय । तं ह पितोवाच श्वेतकेतो यन्नु सोम्येदं महामना अनूचानमानी स्तब्धोऽस्युत तमादेशमप्राक्ष्यः ॥ – छान्दोग्योपनिषद् ६।१।२

श्रुतिअनुकूलको शिक्षा दिएर शिक्षित बनाएपछिमात्रै छोरालाई आत्मज्ञानको उपदेश गरेको देखिन्छ। उपदेश गर्दा जुन आदेश जानेपछि [१६]अश्रुत श्रुत हुन्छ, अमत मत हुन्छ र अविज्ञात विज्ञात हुन्छ। त्यसको सम्बन्धमा धेरैथरी [१७]उदाहरण दिएर उद्दण्ड, अविनीत र अनुशासनशून्य छोरालाई शिक्षा दिएपछि छोराको आचरणमा सुधार आएको देखिन्छ। तदुपरान्त ब्रह्मज्ञानी पिताले आत्मोपदेश गरे। धेरै पटकको उपदेशपछि उसलाई अन्तिममा गएर [१८]आत्मज्ञान भएको कुरा श्रुतिले स्पष्टैरूपमा उल्लेख गरेको छ। अतः पढेलेखेर विभिन्न उपाधि लिँदैमा विद्वान् र शिक्षितसमेत भएको ठहर्दैन भन्ने यसबाट थाहा हुन्छ।

## ५. साक्षर

विद्यावारिधिसमेतका उपाधि लिएका विद्वान्हरू जसले विभिन्न विश्वविद्यालयहरूमा समेत अध्यापन गरिरहेका छन्, त्यस्ता व्यक्तिहरू विद्वान्, शिक्षित अथवा साक्षरमात्रै के हुन् भन्ने सम्बन्धमा हाम्रो सनातन वैदिक शिक्षा अनुसार विश्लेषण गर्नुपर्ने देखिन्छ। आजीवन जतिसुकै लौकिक किताबहरूको अध्ययन गरे पनि र जतिसुकै ठूलाठूला उपाधिहरू ग्रहण गरेर

---

१६ येनाश्रुतंश्रुतं भवत्यमतं मतमविज्ञातं विज्ञातमिति। – छान्दोग्योपनिषद् ६।१।३

१७ यथा सौम्यैकेन मृत्पिण्डेन सर्वं मृन्मयं विज्ञातं स्याद्वाचारम्भणं विकारो नामधेयं मृत्तिकेत्येव सत्यम्॥ – छान्दोग्योपनिषद् ६।१।४

१८ स यथा तत्र नादाह्येतैतदात्म्यमिदं सर्वं तत्सत्यं स आत्मा तत्त्वमसि श्वेतकेतो इति तद्धास्य विजज्ञाविति विजज्ञाविति। – छान्दोग्योपनिषद् ६।१६।३

महत्त्वपूर्ण पदहरूमा आसीन भए पनि ब्रह्मज्ञान नभएका व्यक्तिलाई विद्वान् भन्न मिल्दैन। तिनलाई शिक्षित भन्न पनि मिल्ने देखिँदैन। किनभने उपनिषद्को शिक्षा अनुसारको आचरण गर्नेहरूलाईमात्र शिक्षित भन्न मिल्दछ। अन्ततः त्यस्ता व्यक्तिहरूलाई साक्षरमात्र भन्न सकिन्छ।

उपर्युक्त विषयलाई स्पष्ट पार्न एउटा उदाहरण दिनु उपयुक्त हुने देखिन्छ। काठमाडौँमा एक दम्पतीले सुखदुःख गरेर घर निर्माण गर्नुका साथै आफ्नो एकमात्र छोरालाई दुःख गरेर पढाए। छोरा पनि पढ्दै गएर अन्त्यमा आधुनिक उच्च शिक्षा प्राप्त गर्न सफल भयो। त्यस्तालाई शिक्षाको आधुनिक परिभाषामा अत्यन्त माथिल्लो तहको शिक्षित व्यक्ति मान्ने गरिएको छ। मातापिताले शिक्षाको स्तर अनुसारकै कन्यासँग छोराको विवाह गरिदिए। दुई बाबुआमा, छोरा र बुहारीसमेत चार जनाको त्यो परिवार सुखी परिवार थियो। समयको क्रमसँगै पढेलेखेका ती छोराबुहारीले शिक्षावल्लीमा गरिएको उपदेशको प्रतिकूल आमा र बाबुलाई देवता नमानेर बिस्तारै घरमा नोकरको रूपमा व्यवहार गर्न लागे। छोराबुहारी दुवै पढाउन जाने र अन्य काममा पनि अत्यन्त व्यस्त हुने भएकाले घरको सम्पूर्ण काम वृद्ध मातापिताका जिम्मामा छोडिएको थियो। शिक्षित छोराबुहारी स्वदेश र विदेशको भ्रमणमा पनि बारम्बार जान्थे। उनीहरूको आर्थिकस्तर बिस्तारै उच्च हुँदै गयो। उनीहरूले घरमा गाडीसमेत खरिद गरे। भरसक सन्तान नजन्माउने र जन्माए पनि ढिलो जन्माउने सिद्धान्तअनुसार ती छोराबुहारीले

पश्चिमी संस्कार र संस्कृतिबाट अभिभूत भएर सन्तानका ठाउँमा दुईओटा ठूलठूला एल्सिसिएन् भालेपोथी कुकुरहरू ल्याएर पाले। छोराबुहारी एकातिर मूलढोकामा तिनै जोडी कुकुरको चित्रसमेत दिएर 'कुकुरदेखि सावधान' भन्ने सूचनापाटी झुण्ड्याएर 'अतिथिदेवो भव'को परिचायक बने भने अर्कातिर घरमा वृद्ध मातापितालाई दास र दासीको स्थानमा राखेर 'मातृदेवो भव' र 'पितृदेवो भव'को व्रत पनि उनीहरूले पालना गरे। घरमा पालिएका कुकुरहरूलाई खुवाउने र तिनको हेरविचार गर्ने काम पनि शिक्षित छोराबुहारीले वृद्ध तथा रोगी मातापिताकै जिम्मा लगाइदिए। एक दिनको कुरा हो, बेरामी भएका मातापितालाई अस्पताल जानुपर्ने भयो। उता छोराबुहारीले आफ्ना सन्तानका रूपमा पालेका कुकुरहरूलाई पनि त्यसै समयमा औषधी गर्न पशुअस्पतालमा लानुपर्ने भयो। बिहान सबेरै उठेर छोराले आफ्नो गाडीमा राखेर मान्छेको अस्पतालमा जँचाउन लैजान्छ कि भनेर प्रतीक्षामा रहेका मातापितालाई एकातिर पन्साएर कुकुरका जोडीलाई पशुअस्पतालमा औषधी गर्न लैजानुपर्ने भएकाले तपाईंहरू आफ्नै खुशीमा अस्पताल जानुहोस् भनेर छोराले आदेश दियो। अशक्त बिरामी मातापिता अस्पताल जान सकीनसकी धुलाम्य बाटोमा हिँड्दै गए। किन्तु अस्पताल जाने कुनै साधन नभेटिएकाले साधनको प्रतीक्षामा बाटामा उभिएकै बेला पाल्तु जोडी कुकुरलाई आफ्नो गाडीमा राखेर दुईतिरका झ्यालबाट सर्र हावा खुवाउँदै वृद्ध मातापितामाथि सडकको कुइरीमण्डल धूलो उडाउँदै शिक्षित छोरा र बुहारी

त्यतैबाट अगाडि हुइँकिए । त्यो असह्य परिदृश्य देखेपछि पिताले आफूलाई जसोतसो थाम्न सके पनि कोमल मातृहृदय भएकी आमा क्रूर छोराबुहारीको निर्दयता देखेर त्यसै सडकको छेउमा बसेर डाँको छोडेर रोइन् । त्यसै बाटोमा हिँडिरहेका कुनै अविज्ञात पुरुषले रोइरहेकी ती वृद्धा महिला र किंकर्तव्यविमूढ भएर उभिएका वृद्ध पुरुषलाई देखेपछि दया लागेर अस्पताल जाने वाहनको व्यवस्था मिलाइदिए । छोराबुहारीले आफूहरूप्रति गरेको त्यो अमानवीय व्यवहारको असह्य वेदना पनि बूढाबूढीले तिनै अविज्ञात पुरुषलाई सुनाए ।

यो भयो वर्तमान समयका तथाकथित शिक्षित आधुनिक छोराले आफ्ना वृद्ध मातापिताप्रति गरेको *'मातृदेवो भव' 'पितृदेवो भव'*को एउटा ज्वलन्त उदाहरण । यस्तालाई शिक्षित भन्न मिल्ला त ? के विश्वविद्यालयको प्राध्यापक भन्न मिल्ला त ? के नानाथरीका उपाधिले विभूषित मान्छे भन्न मिल्ला त ? अवश्य मिल्दैन । यस्ता व्यक्तिहरू वर्तमान समयमा प्रत्येक घरमा हुनसक्तछन् । तिनले वृद्ध मातापितालाई देवता मान्ने होइन, बरु मौका परे उल्टै नोकरनोकर्नी बनाउने र वृद्धाश्रममा लगेर थन्क्याउने समेत गर्दछन् । यस्ता तथाकथित शिक्षित व्यक्तिलाई के भन्ने ? यिनलाई कुनै पनि संज्ञा नै दिन सकिँदैन । यस्ता व्यक्तिलाई त सामान्य साक्षर पनि नभनेर निर्दयी पाशव वृत्ति भएका जीव भन्नुपर्ने हुन्छ । अतः यस्तालाई साक्षरभन्दा तलका प्राणी हुन् भन्ने नामकरण गर्नु उपयुक्त हुने देखिन्छ ।

अन्त्यमा, पराविद्याद्वारा ब्रह्मज्ञान गर्नेलाई विद्वान्, उपनिषद्मा आएको शिक्षा वा उपदेशअनुकूल आचरण गर्नेलाई शिक्षित र त्यसको विपरीत आचरण गर्नेलाई साक्षर पनि होइन दुईखुट्टे जनावर मान्नु ठीक हुन्छ। सामान्यतः साक्षरमात्र भएको व्यक्ति सोझो हुन्छ। त्यस्तो व्यक्ति तथाकथित उपाधिधारी शिक्षित व्यक्तिभन्दा ज्ञान र कर्मले माथि नै हुन्छ। ॐ ब्रह्मार्पणमस्तु।

# ४२. व्यपदेश

व्यपदेश शब्द अतिसर्जन अर्थ भएको दिश धातुबाट अगाडिपट्टि वि र अप उपसर्ग लाग्नुका साथै पछाडिपट्टि घञ् प्रत्यय लागेर बन्दछ। *'अतिसर्जनं दानम्'* भनेर वार्तिककारले लेखेका छन्। यस शब्दका सामान्य अर्थहरू निरूपण, सन्देश, सूचना, नामकरण, नाम, अभिधान, उपाधि, कीर्ति, यश, प्रसिद्धि, चाल, बहाना, उपाय, चालवाजी, चलाखी, निन्दा, उजुरी, व्याख्या, सूचना, कुल, छल, कपट आदि धेरैथरी हुन्छन्। यस शब्दको दर्शनशास्त्रमा प्रशस्त प्रयोग भएको पाइन्छ।

विभिन्न अर्थ, कारक र शैलीमा अद्वैत वेदान्तका प्रस्थानत्रयी अर्थात् उपनिषद्, गीता र ब्रह्मसूत्रका साथै आकरग्रन्थहरू, प्रकरणग्रन्थहरू र विवरण ग्रन्थहरूमा समेत यस शब्दको विशदरूपमा प्रयोग गरिएको देखिन्छ। उदाहरणका रूपमा ब्रह्मसूत्रको सूत्रमा नै व्यपदेश शब्दहरू व्यपदिश्यते, व्यपदिष्ट शब्द, व्यपदेशात्, व्यपदेशाभ्याम्, व्यपदेशेभ्यः आदि आएका देखिन्छन्। प्रसङ्ग अनुसार यसका हजारौँ रूप र अर्थहरू हुने कुरा संस्कृत व्याकरणको उदात्त प्रकृति अनुसार स्वाभाविक देखिन्छ।

ब्रह्मसूत्रमा आएका [१]व्यपदेश शब्दहरू मध्ये एउटा मात्रैको यहाँ उल्लेख गरिन्छ। *'ते हेमे प्राणा अहं श्रेयसे विवदमानाः'* इत्यादि श्रुतिहरूमा केवल प्राणको मात्रै कथन छैन, बरु प्राणादि

१ अभिमानिव्यपदेशस्तु विशेषानुगतिभ्याम्। – ब्रह्मसूत्रम् २।१।३।५

अभिमानी देवताहरूको पनि कथन छ। किनभने 'एता ह वै देवता' यसप्रकार चेतनवाचक देवताशब्दबाट प्राण विशेषित छ। यसमा *'अग्निर्वाग्भूत्वा'* इत्यादि मन्त्र र अर्थवादमा सबै ठाउँमा प्राणादि अभिमानी देवताहरूको अनुगमन भनिएको छ। यसबाट अचेतन जगत् चेतनबाट विलक्षण भएको कारण चेतनको विकार प्राकृतिक होइन भन्ने बुझिन्छ।

उपर्युक्त सूत्रभन्दा पहिले आएको [२]सूत्रको भाष्यमा देखाइएको अचेतन [३]माटो बोल्यो, पानी बोल्यो, [४]तेजले हेऱ्यो आदिको निराकरणार्थ प्रकृत सूत्रमा 'तु' शब्द आएको हो। 'तु' को आशय उपर्युक्त श्रुतिहरू मृदादि र वागादि इन्द्रियहरूमा साक्षात् चेतनत्वको अभिधान गर्दैनन्। किन्तु तिनका अधिष्ठाता देवगणहरूमा ध्वनित गर्दछन्, जुन चेतन नै हुन्। अतः यी श्रुतिहरूका आधारमा मृदादि र वागादि इन्द्रियहरूमा चेतनत्व रहन्छ। चेतन तत्त्व साक्षात् नरहे तापनि चेतन देवताहरूका अनुग्रहबाट चेतनत्व अध्याहार मृदादि, वागादि र तेज आदिमा गर्नु नै व्यपदेश हो, अर्थात् भनाइ हो।

व्यपदेश शब्दको शास्त्रहरूमा प्रयोग सर्वत्र पाइन्छ। भागवतमा त्यसको प्रयोग कसरी भएको छ, उदाहरणका रूपमा प्रस्तुत गरिन्छ। जुन [५]उत्पत्तिभन्दा पहिले थिएन र

---

२ न विलक्षणत्वादस्य तथात्वञ्च शब्दात्। – ब्रह्मसूत्र २।१।३।४

३ मृदब्रवीत्, आपोऽब्रुवन्। – शतपथब्राह्मण ६।१।३।२।४

४ तत्तेज ऐक्षत। – छान्दोग्योपनिषद् ६।२।३।४

५ न यत्पुरस्तादुत यत्र पश्चान्मध्ये च तन्न व्यपदेशमात्रम्॥

– भागवत ११।२८।२१

प्रलयपछि पनि रहँदैन। त्यतिमात्रै होइन उत्पत्ति र प्रलयका बीचमा पनि त्यो हुँदैन भन्ने सम्झनु पर्दछ। छ भनेर सम्झनु केवल व्यपदेशमात्र अर्थात् कल्पनामात्र हो। तीनै कालमा रहने सत्य मात्रै हो, व्यभिचारी अर्थात् कहिले हुने र नहुने वस्तु असत्य हो अर्थात् मिथ्या हो। त्यो [६]व्यपदेशमात्र हो, कल्पनामात्र हो र भनाइ मात्र हो।

व्यपदेश शब्दको आशयलाई शब्दतः र अर्थतः पनि गौडपादाचार्यले माण्डूक्यकारिकामा व्यापकरूपमा प्रयोग गर्नुभएको छ। उहाँको अजातवाद यसै व्यपदेशमा आधारित देखिन्छ। हुँदै नभएको प्रपञ्चको कल्पना गर्नु व्यपदेशमात्र हो, भनाइमात्र हो र मिथ्या कपोलकल्पनामात्र हो भन्ने नै माण्डूक्यकारिकाको परम सिद्धान्त हो।

जुन वस्तु [७]आदि र अन्त्यमा असद्रूप हुन्छ भने वर्तमान अवस्थामा पनि त्यसलाई असत् नै मानिन्छ। मृगतृष्णिका आदि असत् वस्तुहरूका समान भएर पनि यस प्रपञ्चलाई अनात्मज्ञपुरुषहरू सत्रूप नै सम्झन्छन्। यही नै व्यपदेश हो। ॐ ब्रह्मार्पणमस्तु।

❀

---

६ एवं कालत्रयेऽप्यव्यभिचारिणः सत्यत्वमुक्तम्। व्यभिचारिणस्त्व-सत्यत्वमाह। मध्ये च तत्पृथक् नास्ति किन्तु व्यपदेशमात्रम्।
– श्रीधरी भागवत ११।२८।२१

७ आदावन्ते च यन्नास्ति वर्तमोनऽपि तत्तथा।
वितथैः सदृशाः सन्तोऽवितथा इव लक्षिताः॥ – माण्डूक्यकारिका २।६

# ४३. शब्दब्रह्म

शब्दब्रह्मका बारेमा शास्त्रहरूमा प्रशस्त चर्चा परिचर्चा पाइन्छ। जुन पुरुष [१]वेदमा षडङ्गसहित अर्थमा पनि पारङ्गत छ, किन्तु उसलाई ब्रह्मज्ञान भएको छैन भने त्यसले अर्थसहित वेद अध्ययन गरेको त्यसरी नै निष्फल हुन्छ, जसरी घरमा थारी गाई पाल्नेले त्यसको जति सुसार गरे पनि त्यस गाईबाट अमृत सरहको दूध प्राप्त गर्न सक्तैन।

[२]वेदको नाम नै शब्दब्रह्म हो। त्यो परमात्माको मूर्ति हो। यसै कारण वेदको रहस्य बुझ्न अत्यन्त मुस्किल पर्दछ। त्यो परमात्मा अर्थात् शब्द ब्रह्म परा, पश्यन्ती र मध्यमा वाणीका रूपमा प्राण, मन र इन्द्रियमय हो। त्यो शब्द ब्रह्म समुद्र सरह सीमारहित र अत्यन्त गहिरो भएकाले बुझ्न अत्यन्त कठिन छ।

शब्दब्रह्म पनि स्थूल र सूक्ष्म गरेर दुई प्रकारको छ। स्थूललाई शब्दका रूपमा बाहिरबाट मात्रै सुन्न सकिन्छ, तर सूक्ष्मलाई भने जान्न सकिँदैन। त्यो अत्यन्त दुर्विज्ञेय छ। शब्दब्रह्मका चार रूप छन् भनेर [३]श्रुतिले भनेको छ। ती चार

---

१ शब्दब्रह्मणि निष्णातो न निष्णायात्परे यदि ।
श्रमस्तस्य श्रमफलो ह्यधेनुमिव रक्षतः ॥ – भागवत ११।११।१८

२ शब्दब्रह्म सुदुर्बोधं प्राणेन्द्रियमनोमयम् ।
अनन्तपारं गम्भीरं दुर्विगाह्यं समुद्रवत् ॥ – भागवत ११।२१।३६

३ चत्वारि वाक्परिमिता पदानि तानि विदुर्ब्राह्मणा ये मनीषिणः ।
गुहा त्रीणि निहिता नेङ्गयन्ति तुरीयं वाचो मनुष्या वदन्ति ॥ – ऋग्वेद १।१६४।१०

ओटा वाणीहरू मध्ये पनि वैखरी बाहेकका अरू तीन परा, पश्यन्ती र मध्यमा वाणीलाई अन्तर्दृष्टि भएका ज्ञानीले मात्र जान्दछन् । तिनले आफ्नू स्वरूपलाई बाहिर प्रकट गर्दैनन् । सामान्य मनुष्यहरूले मुखबाट बोलिने वैखरी वाणीलाई मात्रै जान्दछन् र बोल्दछन् । केवल बोल्दछन् मात्रै, किन्तु तत्त्वतः जान्दैनन् ।

जसले वाणी अर्थात् [४]शब्दलाई ब्रह्म भनेर उपासना गर्दछ त्यो नै ब्रह्मणस्पति हो । वाक् अर्थात् शब्द ब्रह्म हो । त्यसको यो पति हो । त्यसै कारण यो ब्रह्मणस्पति हो । शैलिनी जित्वाले वाक् अर्थात् [५]शब्द नै ब्रह्म हो भने आदि शब्द ब्रह्मको वर्णन विभिन्न उपनिषद्हरूमा आएको छ ।

ॐ यस एक [६]अक्षरले ब्रह्मलाई अर्थात् ब्रह्मको स्वरूपलाई लक्ष्य गर्ने भएको ॐकारको उच्चारण गर्दै र त्यसको अर्थरूप म ब्रह्मलाई सम्झँदै अर्थात् चिन्तन गर्दै मृत्युमा प्राप्त हुने मुमुक्षु मुक्त हुन्छ भनेर भगवान् श्रीकृष्णले गीतामा भन्नुभएको छ । शब्दब्रह्म भनेर ॐकारलाई नै [७]योगदर्शनले पनि भनेको छ । ॐकार नै वेदजननी भएको कुरा वेददेखि लिएर सबै शास्त्रहरूले भनेका छन् । माण्डूक्योपनिषद् लगायत धेरै उपनिषद्हरूले शब्दब्रह्मरूप

---

४ स यो वाचं ब्रह्मेत्युपास्ते । – छान्दोग्योपनिषद् ७।२।२

५ जित्वा शैलिनिर्वाग्वै ब्रह्मेति । – बृहदारण्यकोपनिषद् ४।१।२

६ ओमित्येकाक्षरं ब्रह्म व्याहरन्मामनुस्मरन् । – गीता ८।१३

७ तस्य वाचकः प्रणवः । – पातञ्जलयोगदर्शन १।२७

ॐकारको वर्णन गरेका छन् । माण्डूक्योपनिषद्ले आद्योपान्त शब्द ब्रह्मकै वर्णन गरेको छ । ॐ नै सबैथोक हो भन्दै आफ्नू स्वल्पकाय केवल बाह्रओटा मन्त्रमा मात्रै सीमित भए तापनि यस उपनिषद्को प्रतिपाद्य विषय नै शब्दब्रह्म भएको देखिन्छ । [८]ॐ अक्षर नै सबै कुरा हो भन्दै यो सम्पूर्ण भूत, भविष्यत् र वर्तमान पनि उसैको व्याख्या हो । यस कारण यो सबै ॐकार नै हो। यस बाहेक अर्को जुन त्रिकालातीत हो त्यो पनि ॐकार नै हो भनेको छ ।

ब्रह्मसूत्रमा शब्द ब्रह्मका बारेमा [९]*'अक्षरमम्बरान्तधृतेः, सा च प्रशासनात्'* र *'अन्यभावव्यावृत्तेश्च'* समेतका सूत्रहरूले अक्षर ब्रह्म अर्थात् शब्दब्रह्मको वर्णन गरेका छन्। श्रुतिमा आएको अक्षर शब्द ॐकारवाचक हो भन्दै जसलाई अव्याकृत ब्रह्म र सबैको आधार हो भनिएको छ। अतः सबै श्रुतिहरूमा वर्णित अक्षर ब्रह्मले शब्दब्रह्मलाई जनाउँछ र शब्दब्रह्म भनेको परब्रह्म नै हो भनेर ब्रह्मसूत्रले पनि भनेको छ।

[१०]जसरी नशाहरूद्वारा सम्पूर्ण पातहरू व्याप्त छन्, त्यसै गरेर सम्पूर्ण वाक् अर्थात् शब्द व्याप्त रहन्छ । यसकारण सबै व्यक्त अव्यक्त जे जति छ सबै ब्रह्म हो भनेर अर्को श्रुतिले पनि

---

८ ओमित्येतदक्षरमिदं सर्वं तस्योपाख्यानं भूतं भवद्भविष्यदिति सर्वमोङ्कार एव । यच्चान्यत्त्रिकालातीतं तदप्योङ्कार एव । – माण्डूक्योपनिषद् १

९ ब्रह्मसूत्रम् १।३।३।१०–१२

१० यथा शङ्कुना सर्वाणि पर्णानि संतृण्णन्येवमोङ्कारेण सर्वा वाक्संतृण्णोङ्कार एवेदं सर्वम् । – छान्दोग्योपनिषद् २।२३।३

भनेको छ। अक्षर नै अर्थात् शब्द ब्रह्म भएको कुरा श्रीमद्भागवदगीतामा धेरै ठाउँमा आएको छ। [११]महद्ब्रह्म भनेर प्रकृतिलाई र [१२]शब्दब्रह्म अर्थात् परब्रह्म भनेर शुद्ध ब्रह्मलाई भनिएको छ।

सामान्यरूपमा शब्दब्रह्म भनेर सृष्टिकर्ता ब्रह्मालाई पनि भनिन्छ। किनभने ब्रह्माजी [१३]शब्दब्रह्मस्वरूप हुन्। उनी वैखरीरूपले व्यक्त र ॐकाररूपले अव्यक्त हुन्। ब्रह्मभन्दा पर अर्थात् शब्दब्रह्मरूप व्यक्त तत्त्वभन्दा पर सर्वत्र परिपूर्ण ब्रह्म हो। सबैलाई [१४]निषेध गर्दै गएर निषेधपछि शेष रहने तत्त्व नै अशेष हो र परब्रह्म हो भनेर श्रुतिले भनेको छ। त्यही [१५]परब्रह्म मायाद्वारा, मायारूपी नाना उपाधिद्वारा विकसित इन्द्रादि अर्थात् देव, तिर्यङ्, मनुष्यादिरूपमा बिम्ब र प्रतिबिम्बरूपले प्रतिभासित अर्थात् प्रकट हुन्छ।

[१६]वेदहरू पनि अत्यन्त विस्तृत छन्। वेदहरू पढेर बुझ्न पनि मुस्किल पर्दछ। विद्वान्हरूले वेद पढेर पनि मन्त्रहरूमा वर्णित वज्रहरू तत्त्वादि चिह्नहरूले युक्त इन्द्रादि

---

११ मम योनिर्महद्ब्रह्म। – गीता १४।३

१२ अक्षरं ब्रह्म परमम्। गीता ८।३

१३ शब्दब्रह्मात्मनस्तस्य व्यक्ताव्यक्तात्मनः परः।
ब्रह्मावभाति विततो नानाशक्त्युपबृंहितः॥ – भागवत ३।१२।४८

१४ निषेधशेषो जयतादशेषः। – भागवत ८।३।२४

१५ इन्द्रो मायाभिः पुरुरूप ईयते। – बृहदारण्यकोपनिषद् २।५।१९

१६ शब्दब्रह्मणि दुष्पारे चरन्त उरुविस्तरे।
मन्त्रलिङ्गैर्व्यवच्छिन्नं भजन्तो न विदुः परम्॥ – भागवत ४।२९।४५

देवताका रूपमा थरीथरीका कर्महरूद्वारा यजन आदि गर्दछन् । वस्तुतः त्यस परब्रह्म परमात्माकै यजन पूजन गर्दछन्, तर कर्मी अर्थात् अज्ञानी भएकाले ब्रह्मवाचक शब्दब्रह्म वेदलाई मात्र जान्दछन्, वाच्य ब्रह्मलाई जान्दैनन् । शब्दब्रह्म [१७]उपलक्षण भएको वेद साधन हो भने त्यस उपलक्षणले उपलक्षित निषेधपछि अन्तिम अशेष रहने भने शब्दब्रह्म हो । जुन वेदले लक्षित गरेको अव्यक्त परब्रह्म नै हो ।

वास्तविकरूपमा शब्दब्रह्म उपलक्षणयुक्त शब्दराशि वेदले भविष्यद्वृत्तिद्वारा नै भनेको हो । सृष्टिका शुरुमा वेदका उत्पत्तिबोधक केही मन्त्रहरूले जुन [१८]जीव र परमात्माको भेदको वर्णन गरेका छन्, त्यो भविष्यद्वृत्तिले गरेको हुँदा त्यो गौण हो । त्यसै भनाइलाई मुख्य मान्नु हुँदैन । त्यो [१९]साध्य ब्रह्ममा भविष्यमा पुऱ्याउने साधनका दृष्टिले भनेको हो ।

---

१७ निवृत्तिरात्मा मोहस्य ज्ञातत्वेनोपलक्षितः ।
उपलक्षणनाशेऽपि स्यान्मुक्त पाचकादिवत् ॥ – प्रत्यक्तत्त्वदीपिका ४।८

१८ जीवात्मनोः पृथक्त्वं यत्प्रागुत्पत्तेः प्रकीर्तितम् ।
भविष्यद्वृत्त्या गौणं तन्मुख्यत्वं हि न युज्यते ॥
– माण्डूक्यकारिका ३।१४

१९ यतो वा इमानि भूतानि जायन्ते । (तै.उ.३१) यथाग्नेः क्षुद्रा विस्फुलिङ्गाः । (बृ.उ.२।१।२०) तस्माद् वा एतस्मादात्मना आकाशः सम्भूतः । (तै.उ.२।१।२) तदैक्षत । (छा.उ.६।२।३)तत्तेजोऽसृजत । (छा.उ.६।२।३)

[20]अद्वैत ब्रह्ममा लगेर पर्यवसित गर्ने उद्देश्य भनेको हो, द्वैतको दृष्टिले भनेको होइन भनेर बुझ्नु पर्दछ।

उपर्युक्त कारिकाद्वारा श्रुति अनुसार शुरुमा भेदको वर्णन गरेर अन्त्यमा एकत्वको उपपत्तिपूर्वक प्रमाण समेत देखाएर अर्को कारिका भन्दछ। उपनिषद्मा [21]मृत्तिका, फलामको टुक्रा र आगाको फिलुङ्गो आदिका दृष्टान्तहरूद्वारा थरीथरीका सृष्टिहरूको निरूपण गरेर अन्त्यमा जीव र ब्रह्मको ऐक्यमा बुद्धिलाई प्रवेश गराउनका लागि नै शुरुमा भेदको वर्णन आएको हो। त्यो अध्यारोप मात्र उपनिषद्ले गरेको हो। अपवादद्वारा अध्यारोपलाई हटाएर उपनिषद् आत्मा र परमात्माको ऐक्य नै गराउँछ। वस्तुतः तिनमा कुनै भेद नै छैन।

सामान्यरूपमा शब्दब्रह्म भन्नाले वेदलाई भनिन्छ। यस लेखको प्रारम्भ पनि भागवतमा वर्णित *'शब्दब्रह्मणि निष्णातः'*

---

२० (क) एकमेवाद्वितीयम् तत्सत्यं स आत्मा तत्त्वमसि।
– छान्दोग्योपनिषद् ६।२।२ र ६।१६।३

(ख) यथा सोम्यैकेन नखनिकृन्तनेन सर्वं कार्ष्णायसं विज्ञातं स्याद्वाचारम्भणं विकारो नामधेयं कृष्णायसमित्येव सत्यमेवं सोम्य आदेशो भवतीति। – छान्दोग्योपनिषद् ६।१।६

(ग) यथाग्नेः क्षुद्रा विस्फुलिङ्गा व्युच्चरन्त्येवमेवास्मादात्मनः सर्वे प्राणाः सर्वे लोकाः सर्वे देवाः सर्वाणि भूतानि व्युच्चरन्ति।
– बृहदारण्यकोपनिषद् २।१।२०

२१ मृल्लोहविस्फुलिङ्गाद्यैः सृष्टिर्या चोदितान्यथा।
उपायः सोऽवताराय नास्ति भेदः कथञ्चन। – माण्डूक्यकारिका ३।१५

(क) यथा सोम्यैकेन मृत्पिण्डेन सर्वं मृन्मयं विज्ञातं स्याद्वाचारम्भणं विकारो नामधेयं मृत्तिकेव सत्यम्। – छान्दोग्योपनिषद् ६।१।५

बाट नै शुरु भएको छ। वेद साधन हो साध्यमा पुग्नका लागि। किन्तु अद्वैत दर्शनमा यदाकदा साधनलाई पनि साध्यका रूपमा उल्लेख गरेको देखिन्छ। उदाहरणका लागि गीतामा ज्ञानका साधनका रूपमा [२२]अमानित्व, अदम्भित्वदेखि लिएर तत्त्वज्ञानार्थदर्शनसम्म ज्ञान भनेर उल्लेख गरिएको छ। [२३]समस्त यी साधनसमुदाय ज्ञानका साधन भएका कारण ज्ञान भनिएको हो भनेर श्रीशङ्कराचार्यले आफ्नू भाष्यमा लेख्नुभएको छ।

साधन र साध्य दुवैलाई एउटै जस्तो गरेर व्यवहार गरिए तापनि साधनबाट साध्यमा पुग्न सकिन्छ। वेदादि शास्त्रहरू र त्यसको उपदेश गर्ने आचार्य पनि परम्परया साधन हुन्। मन पनि ज्ञानको साधन हो। किन्तु [२४]शास्त्र र आचार्यको उपदेश तथा शम, दम आदि साधनहरूद्वारा शुद्ध गरिएको मन आत्मदर्शनमा साक्षात् साधन अर्थात् करण हो।

अन्ततोगत्वा शब्दब्रह्मलाई साधन बनाएर साध्य परब्रह्म साक्षात्कार भइसकेपछि साधनको आवश्यकता पर्दैन। नदी पार गरिसकेपछि डुँगाको आवश्यकता नपर्ने र समुद्र तरिसकेपछि पानी जहाजको आवश्यकता नपरे जस्तै

---

२२ अमानित्वंमदम्भित्वं ... तत्त्वज्ञानार्थदर्शनम्। – गीता १३।७–१०

२३ एतदमानित्वादितत्त्वज्ञानार्थदर्शनान्तमुक्तं ज्ञानमिति प्रोक्तं ज्ञानार्थत्वात्।
– गीता १३।११ शाङ्करभाष्य

२४ शास्त्राचार्योपदेशशमदमादिसंस्कृतं मन आत्मदर्शने करणम्।
– गीता २।२१ शाङ्करभाष्य

शब्दब्रह्मात्मक वेदादि शास्त्रहरूको अध्ययन गरेर जीवन्मुक्त अवस्थामा पुगेको मुक्तात्मालाई ब्रह्मचर्यादि आश्रम, ब्राह्मणादि वर्ण, [२५]शमदमादि समाधि पर्यन्तका साधनहरू र कुनै पनि कर्म धर्मादिको आवश्यकता पर्दैन। त्यस्ता जीवन्मुक्त ब्रह्मभूत ज्ञानीका भेद र अभेद समाप्त भइसकेका हुन्छन्। पुण्य र पाप पनि ध्वस्त भइसकेका हुन्छन्। माया र मोह पनि भस्मसात् भइसकेका हुन्छन्। सन्देहात्मक वृत्ति नष्ट भएको हुन्छ। शब्दब्रह्मबाट माथि उठिसकेको ज्ञानीलाई त्रिगुणातीत शुद्धब्रह्मको साक्षात्कार भइसकेको हुन्छ। ब्रह्म नै भइसकेको ब्रह्मज्ञानीलाई कुनै पनि प्रकारका वैदिक तथा लौकिक विधि र निषेधले छुन सक्तैनन्। किनभने त्रिगुणात्मक शब्दब्रह्म अर्थात् वेदादिशास्त्रको विधि र निषेधले [२६]निष्कल, गुणातीत, शब्दातीत र निरञ्जन शुद्ध ब्रह्मभूत मुक्त पुरुषलाई छुन सक्तैन। ॐ ब्रह्मार्पणमस्तु।

❀

२५ भेदाभेदौ सपदि गलितौ पुण्यपापे विशीर्णे
मायामोहौ क्षयमुपगतौ नष्टसन्देहवृत्तिः।
शब्दातीतं त्रिगुणरहितं प्राप्य तत्त्वावबोधं
निस्त्रैगुण्ये पथि विचरतां को विधिः को निषेधः॥
– शुभाष्टकम् १

२६ निष्कलं निष्क्रियं शान्तं निरवद्यं निरञ्जनम्।
अमृतस्य परं सेतुं दग्धेन्धनमिवानलम्॥ – श्वेताश्वतरोपनिषद् ६।१९

# ४४. श्रद्धावान् लभते ज्ञानम्

श्रद्धा शब्द अव्ययपद श्रत्पूर्वक धारणपोषणार्थक डुधाञ् धातुदेखि अङ् र टाप् प्रत्यय भएर बन्दछ। यसका सामान्य अर्थहरू आस्था, निष्ठा, विश्वास, भरोसा आदि हुन्छन्। अद्वैत वेदान्तमा श्रद्धाको अत्यन्त ठूलो महत्त्व छ। यसलाई साधनचतुष्टय मध्येको [१]शमदमादि षट्सम्पत्तिमा एक सम्पत्ति मानिएको छ। श्रोत्रिय ब्रह्मनिष्ठ गुरु र वेदान्तवाक्य समेतमा विश्वास राख्नु श्रद्धा हो। श्रद्धा भन्नाले गुरु, परमात्मा र शास्त्रवचनलाई हृदयमा सम्मानपूर्वक धारण गर्नु भन्ने हुन आउँछ। श्रद्धालाई साक्षात् भगवती र विश्वासलाई साक्षात् भगवान् शङ्करका रूपमा साधारणीकरण गरेर गोस्वामी [२]श्रीतुलसीदासले आफ्नू ग्रन्थ रामचरितमानसको मङ्गलाचरण श्लोकमा व्यक्त गर्नुभएको छ। जसका कृपाविना अन्तःकरणमा विराजमान आफ्नै स्वरूप प्रत्यगात्मालाई पनि मुमुक्षुले साक्षात्कार गर्न सक्तैन।

शास्त्रले साधनचतुष्टयसम्पन्न मुमुक्षुका लागि श्रद्धा

---

१ शमो दम उपरमस्तितिक्षा श्रद्धा समाधानञ्च।
गुरुवेदान्तवाक्यादिषु विश्वासः श्रद्धा ॥ – तत्त्वविवेक

२ पार्वतीशङ्करौ वन्दे श्रद्धाविश्वासरूपिणौ।
याभ्यां विना न पश्यन्ति सिद्धाः स्वान्तःस्थमीश्वरम् ॥ – रामचरितमानस

सम्पन्न हुनु पनि एउटा शर्त अघि सारेको छ। जुन [३]मुमुक्षु श्रद्धावान् छ अर्थात् शास्त्र र गुरुका उपदेशमा सत्यत्व बुद्धि राखेर अत्यन्त श्रद्धा गर्दछ, वेदान्त वाक्यहरूको सधैँ श्रवण गर्दछ, [४]श्रवण गरेपछि ऊहापोहपूर्वक मनन गर्दछ, दायाँ बायाँ नलागेर [५]एकत्वभावले निदिध्यासन समेत विना आलस्य विधिपूर्वक तत्पर भएर अर्थात् ब्रह्मपरक भएर अभ्यास गर्दछ त्यस्ता मुमुक्षुले ब्रह्मसाक्षात्कार गर्न सक्तछ। ऊ ब्रह्म नै हुन्छ।

उपनिषद् लगायतका शास्त्रहरूमा श्रद्धाका विभिन्न अर्थहरू दिएको पाइन्छ। [६]पञ्चाग्निविद्याको प्रसङ्गमा द्युलोकाग्निको वर्णन गर्ने क्रममा द्युलोक अग्नि हो। आदित्य नै त्यसको समिध् अर्थात् इन्धन हो। किरणहरू धूम हुन्। दिन ज्वाला हो। दिशाहरू फिलुङ्गा हुन्। अवान्तर दिशाहरू झिल्का हुन् भन्दै लगेर उपनिषद्ले त्यस प्रकारको अग्निमा देवताहरू श्रद्धा हवन गर्दछन्। त्यस आहुतिबाट [७]सोमराजाको

---

३ श्रद्धावाँल्लभते ज्ञानं तत्परः संयतेन्द्रियः।
ज्ञानं लब्ध्वा परां शान्तिमचिरेणाधिगच्छति ॥ – गीता ४।३९

४ श्रोतव्यः श्रुतिवाक्येभ्यो मन्तव्यश्चोपपत्तिभिः।
मत्त्वा च सततं ध्येयमेते दर्शनहेतवः ॥

५ तच्चिन्तनं तत्कथनं तत्परस्परबोधनम्।
एतदेकपरत्वञ्च ब्रह्माभ्यासं विदुर्बुधाः ॥ – लघुवाक्यवृत्तिः १७

६ असौ वै लोकोऽग्निर्गौतम तस्यादित्य एव समिद्रश्मय धूमोऽहरर्चिर्दिशोऽङ्गारा अवान्तर दिशो विस्फुलिङ्गास्तस्मिन्नेतस्मिन्नग्नौ देवाः श्रद्धां जुह्वति तस्या आहुत्यै सोमो राजा भवति।
– बृहदारण्यकोपनिषद् ६।२।९

७ तस्मिन्नेतस्मिन्नग्नौ देवाः श्रद्धां जुह्वति तस्या आहुतेः सोमो राजा भवति।
– छान्दोग्योपनिषद् ५।४।२

उत्पत्ति हुन्छ भनेको छ। फेरि अर्को उपनिषद्ले भने [८]जलका अर्थमा श्रद्धा शब्द प्रयोग गरेको पाइन्छ।

गुरुले मुमुक्षु शिष्यलाई ब्रह्मोपदेश गर्नुभन्दा पहिले 'श्रद्धस्व तात श्रद्धस्व' भनेर नियमविधिको उपदेश गर्दछन्। जसलाई अद्वैत वेदान्तमा [९]धर्म भनिन्छ। यसमा अष्टाङ्गयोगमा आएको यम, नियम र शमदमादिहरू पनि पर्दछन्। माथि उल्लेख भए अनुसार साधनचतुष्टयसम्पन्न वैराग्यवान् मुमुक्षुले नै ब्रह्मसाक्षात्कार गर्ने कुरा अर्को श्रुतिले पनि भनेको छ। [१०]शम, दम, उपरति, तितिक्षा आदि साधनहरूले युक्त मुमुक्षुले समाहित भएर आत्मामा नै अर्थात् आफ्ना अन्तःकरणमा आत्मा देख्तछ।

मुमुक्षुका निमित्त श्रद्धाभन्दा ठूलो [११]धन केही हुँदैन। [१२]श्रद्धास्वरूपिणी परम्बा भगवती देवी हुनु हुन्छ। श्रद्धा र भक्ति ब्रह्मज्ञानका साधन हुन्। श्रद्धाविना ज्ञान हुन सक्तैन। मोक्षदायिनी श्रद्धा भनेको आफ्नो अन्तरात्माप्रति पूर्ण समर्पण र विश्वास समेत आन्तरिक चक्षु हुन् भन्न सकिन्छ। जसद्वारा साक्षात्कारमा सहजता प्राप्त हुन्छ।

---

८ श्रद्धा वा आपः। – तैत्तिरीय ब्राह्मण ३।२।४।१

९ स्वाध्यायधर्मपठितं निजवेदशाखा। – सङ्क्षेपशारीरकम् ३।२९५

१० शान्तो दान्त उपरतस्तितिक्षुः समाहितो भूत्वात्मनेवात्मानं पश्यति सर्वमात्मानं पश्यति। – बृहदारण्यकोपनिषद् ४।४।२३

११ श्रद्धाधनेन मुनिना मधुसूदनेन। – अद्वैतसिद्धिः, मङ्गलाचरण

१२ या देवी सर्वभूतेषु श्रद्धारूपेण संस्थिता। – दुर्गासप्तसती ५।५२

भगवद्‌गीतामा [१३]श्रद्धा तीन प्रकारका बताइएका छन् । ती हुन् सात्त्विकी, राजसी र तामसी । अद्वैतवेदान्तले सात्त्विकी श्रद्धालाई मात्र साधनका रूपमा लिएको छ । त्यो श्रद्धा प्राणीका संस्कार अनुसार अन्तःकरणमा उत्पन्न हुन्छ । संसारी जीव जे जस्तो श्रद्धाले युक्त हुन्छ त्यसको श्रद्धानुरूप नै उसको स्वरूप हुन्छ भनेर भगवान् श्रीकृष्णले अर्जुनलाई भन्नुभएको तथ्य गीतामा वर्णित छ । श्रद्धायुक्त मुमुक्षुले नै मोक्षको फल प्राप्त गर्न सक्तछ । किन्तु जुन मनुष्य [१४]आत्मज्ञानले रहित छ, श्रद्धाले रहित छ र जसको मन संशयले युक्त छ त्यसको नाश हुन्छ । त्यस्ताको न यो लोक हुन्छ, न परलोक हुन्छ, न त्यस्ता मानिसलाई सुख नै प्राप्त हुन्छ ।

आत्मज्ञान किञ्चित् मात्रामा पनि नभएका श्रद्धारहित अनि शरीरलाई आत्मा हो भनेर सम्झने मनुष्यहरूले कहिल्यै पनि मोक्ष प्राप्त गर्न सक्तैनन् । त्यस्ताले बारम्बार यसै [१५]मृत्युलोकमा विभिन्न योनिमा आउने र जाने अर्थात् जन्मने र मर्ने दुश्चक्रमा परेर घुमिरहनु पर्दछ । त्यस्ताको कहिले पनि

---

१३ त्रिविधा भवति श्रद्धा देहिनां सा स्वभावजा ।
सात्त्विकी राजसी चैव तामसी चेति तां शृणु ।
सत्त्वानुरूपा सर्वस्य श्रद्धा भवति भारत ।
श्रद्धामयोऽयं पुरुषो यो यच्छ्रद्धः स एव सः । – गीता १७।२,३

१४ अज्ञश्चाश्रद्दधानश्च संशयात्मा विनश्यति ।
नायं लोकोऽस्ति न परो न सुखं संशयात्मनः ॥ – गीता ४।४०

१५ अश्रद्दधानाः पुरुषा धर्मस्यास्य परन्तप ।
अप्राप्य मां निवर्तन्ते मृत्युसंसारवर्त्मनि ॥ – गीता ९।३

मोक्ष हुनसक्तैन। यसै कुरालाई श्रीशङ्कराचार्यले अत्यन्त मार्मिक शैलीमा व्यक्त गर्नुभएको छ। यस [१६]मृत्युलोकमा फर्केर फेरि जन्मँदा त्यस्ता पुण्यात्माहरू उत्तम [१७]ब्राह्मण, क्षत्रिय अथवा वैश्य योनिमा जन्मन्छन्। किन्तु अज्ञानी पापीहरू भने नरक गएर दुःख भोगेर फर्केपछि अशुभयोनि कुकुर, सुँगुर अथवा चाण्डालयोनिमा गएर जन्मन्छन्।

उपर्युक्त उत्तम शुभयोनि र अत्यन्न अधम योनिमा पनि जन्मन नपाउने अत्यन्त अज्ञानी, निकृष्ट कर्मयुक्त जीव भने [१८]ती दुवैथरी मार्गहरूबाट जाने र आउने गर्दैनन्। ती क्षुद्र अर्थात् ससाना प्राणीहरू भएर रहन्छन् र यहीँ नै बारम्बार जन्मने र मर्ने गर्दछन्। उत्पन्न हुने र मर्ने तिनको तेस्रो स्थान हुन्छ।

यसरी श्रद्धा शून्य अज्ञानी मनुष्यले कहिल्यै पनि मोक्ष प्राप्त गर्न नसकेर यिनै तीनथरी मार्गको अनवरत पथिक भएर अनन्तकालसम्म घुमिरहनुपर्दछ। ॐ ब्रह्मार्पणमस्तु।

---

१६ पुनरपि जननं पुनरपि मरणं पुनरपि जननी जठरे शयनम्।
इह संसारे खलु दुस्तारे कृपयापारे पाहि मुरारे ॥
– चर्पटपञ्जरिकास्तोत्रम् ८

१७ तद्य इह रमणीयचरणा अभ्याशो ह यत्ते रमणीयां योनिमापद्येरन्ब्राह्मणयोनिं वा क्षत्रिययोनिं वा वैश्ययोनिं वाथ य इह कपूयचरणां अभ्याशो ह यत्ते कपूयां योनिमापद्येरञ्श्वयोनिं वा सूकरयोनिं वा चाण्डालयोनिं वा।
– छान्दोग्योपनिषद् ५।१०।७

१८ अथैतयोः पथोर्न कतरेणं च न तानीमानि क्षुद्राण्यसकृदावर्तीनि भूतानि भवन्ति जायस्य म्रियस्वेत्येतत्तृतीयं स्थानम्। – छान्दोग्योपनिषद् ५।१०।८

# ४५. श्रोतव्यः श्रुतिवाक्येभ्यः

आत्मज्ञान अर्थात् ब्रह्मसाक्षात्कार गर्न इच्छा गर्ने मुमुक्षुले जिज्ञासापूर्वक [1]श्रोत्रिय ब्रह्मनिष्ठ गुरुसमक्ष जानुपर्ने निर्देश श्रुतिले गरेको छ। गुरुसमक्ष ब्रह्मज्ञानका लागि जाने जिज्ञासु मुमुक्षु अत्यन्त योग्य उत्तम अधिकारी हुनुपर्दछ। यसका लागि श्रुतिले योग्यता निर्धारण गरेको छ। जुन मुमुक्षु [2]शम, दम, उपरति, तितिक्षा आदि साधनहरूले सम्पन्न छ, त्यसले समाहित र श्रद्धावान् भएर आफ्ना निर्मल अन्तःकरणमा ब्रह्मसाक्षात्कार गरोस् भन्ने श्रुतिवचन छ।

यसै कुरालाई आचार्य शङ्कराचार्यले वर्गीकरणपूर्वक साधनचतुष्टयका रूपमा आफ्ना ग्रन्थहरूमा उल्लेख गर्नुभएको छ। ती साधनहरू हुन् [3]१.नित्य र अनित्य वस्तुको विवेक गर्नु। २. यस लोकमा र परलोकमा प्राप्त हुने विषयभोगका प्रति विराग हुनु। ३. शम, दम आदि साधनसम्पत्तिले सम्पन्न हुनु र ४. मोक्षको इच्छा हुनु। श्रीसुरेश्वराचार्यले पनि

---

१ तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्।
– मुण्डकोपनिषद् १।२।१२

२ शान्तो दान्त उपरतस्तितिक्षुः समाहितश्श्रद्धावित्तो भूत्वाऽऽत्मन्येवात्मानं पश्येत्। – बृहदारण्यकोपनिषद् ४।४।२३

३ नित्याऽनित्यवस्तुविवेकः, इहामुत्रार्थभोगविरागः, शमदमादिसाधनसम्पत्, मुमुक्षुत्वञ्च। – ब्रह्मसूत्र शाङ्करभाष्य १।१।१।१

ब्रह्मज्ञानका लागि योग्य उत्तम अधिकारीको लक्षण गर्दै [४]सर्वकर्मसन्न्यासपूर्वक संसारप्रति तीव्र वैराग्य भएको मुमुक्षु नै जीव र ब्रह्मको ऐक्यका लागि जिज्ञासापूर्वक गुरुसमक्ष गएर वेदान्तवाक्यको श्रवण गर्ने अधिकारी बन्नसक्तछ भनेका छन् ।

मुमुक्षुले गुरुसमक्ष गएर ब्रह्मसाक्षात्कारका लागि [५]श्रुतिवाक्यहरूको श्रवण गर्ने भनेर शास्त्रले जुन व्यवस्था गरेको छ, त्यस्तो श्रुतिवाक्य कुन हो त्यसतर्फ विचार गर्नुपर्ने देखिन्छ। श्रुतिमा रहेका एक लाख मन्त्रहरूमध्ये ऋग्वेदको शुरुको [६]'ॐ अग्निमीडे पुरोहितम्'देखि लिएर अन्तिम मन्त्र [७]'संज्ञानमुशना'सम्म हो । यजुर्वेदको शुरुको मन्त्र [८]'ॐ इषेत्वोर्ज्जेत्वा'देखि लिएर अन्तिम मन्त्र [९]'हिरण्मयेन पात्रेण'सम्म हो । सामवेदको शुरुको मन्त्र [१०]'ॐ अग्नआ याहि वीतये'देखि अन्तिम मन्त्र [११]'ॐ स्वस्ति न इन्द्रो'सम्म हो र अथर्ववेदको शुरुको मन्त्र [१२]'ॐ त्रिंषप्ता'देखि लिएर

४ त्यक्ताशेषक्रियस्यैव संसारप्रजिहासतः ।
जिज्ञासोरेव चैकात्म्यं त्रय्यन्तेष्वधिकारिता ॥
– बृहदारण्यकोपनिषद्वार्तिक १।१।१२

५ श्रोतव्यः श्रुतिवाक्येभ्यः ।

६ अथर्ववेदः १।१।१

७ अथर्ववेदः ८।८।४५

८ शुक्लयजुर्वेद १।१

९ शुक्लयजुर्वेद ४०।१७

१० सामवेदः १।१

११ सामवेदः ९।३

१२ अथर्ववेदः १।१।१

अन्तिम मन्त्र [१३]'पनायं तदश्विना'सम्म हो । मन्त्रहरूमा कुन वेदशाखाका अध्येताले कुन मन्त्र वा वाक्यको श्रवण गर्दा मोक्ष हुने हो चिन्तनीय विषय भएको देखिन्छ ।

उपर्युक्त अत्यन्त महत्त्वपूर्ण विषयको ज्ञान गर्न ब्रह्मसाक्षात्कार गरेका वेदवेदाङ्ग आदि शास्त्रहरूमा पारङ्गत श्रोत्रिय आचार्यबाट प्रणीत ग्रन्थहरूको शरणमा जानु परम आवश्यक छ। त्यस्ता परम आदरणीय आचार्यहरूमध्ये आचार्य श्रीसर्वज्ञात्ममुनि पनि हुनुहुन्छ । उहाँद्वारा प्रणीत 'सङ्क्षेपशारीरकम्'बाट यो तथ्य सूर्यको प्रकृष्ट प्रकाश जस्तै प्रस्ट हुन्छ। जसबाट मुमुक्षुले स्पष्ट निर्देश प्राप्त गर्न सुगम हुन्छ। जुन [१४]महावाक्य आफ्नू शाखामा आएको हुनुपर्दछ, विधिपूर्वक स्वाध्यायकाद्वारा प्राप्त गरिएको हुनुपर्दछ, त्यो श्रद्धापूर्वक दीर्घ समयसम्म आराधित हुनुपर्दछ र श्रोत्रिय ब्रह्मनिष्ठ आचार्यद्वारा उपदिष्ट पनि हुनुपर्दछ। त्यस्तो वैदिक महावाक्यमात्रै साक्षात् मोक्षको हेतु हुनसक्तछ। अरू सामान्य वैदिक वाक्य वा महावाक्यहरू कुनै पनि अवस्थामा मोक्षका साक्षात् हेतु हुनसक्तैनन् ।

उपर्युक्त सङ्क्षेपशारीरक ग्रन्थ अनुसार *'श्रोतव्यः श्रुतिवाक्येभ्यः'* ले भन्न खोजेको श्रुतिवाक्यको परिसङ्ख्या

---

१३ अथर्ववेदः २।३६।९

१४ स्वाध्यायधर्मपठितं निजवेदशाखावेदान्तभूमिगतमादरपालितञ्च ।
सन्न्यासिना परदृशा गुरुणोपदिष्टं साक्षान्महावचनमेव विमुक्तिहेतुः ॥
– सङ्क्षेपशारीरकम् ३।२९५

विधि अनुरूप सबै वेदका वाक्यहरू श्रवण गर्नु भन्ने नभएर आफ्नू वेदशाखाको मात्रै शुरुदेखि अन्त्यसम्म [१५]वेदाङ्गसहित विनाकारण गुरुबाट विधिपूर्वक अर्थ सहित सबै ब्राह्मणहरूले अध्ययन गर्नुपर्दछ भन्ने हो। यसलाई श्रुतिले नै निर्देश गरेको देखिन्छ। यो नियमको पालना ब्रह्मचारी, गृहस्थ, वानप्रस्थ र सन्न्यासी सबैले समानरूपमा गर्नुपर्ने देखिन्छ। ब्राह्मणले आफ्नू वेद विधिपूर्वक गुरुमुखी भएर अध्ययन नगरेमा र अर्थशास्त्रादि अध्ययन गरेमा त्यस्तो ब्राह्मण ब्राह्मण नभएर छोरानाति सहित बाँच्तैमा [१६]शूद्रत्वमा तुरुन्तै जान्छ भन्ने मनुस्मृतिको भनाइ छ। त्यतिमात्रै होइन, [१७]ब्राह्मणले विधिवत् वेदको अध्ययन गरेपछि वेदान्तको विचार गर्नुपर्ने पनि देखिन्छ। अन्यथा त्यस्तो ब्राह्मणलाई उसका छोरानातिसहित शूद्र समान सम्झनु पर्दछ र त्यसलाई अपवित्र मानिने छ भन्ने अर्को स्मृतिको वचन देखिन्छ।

यसरी वेदको विधिपूर्वक अध्ययन गरिसकेपछि साधनचतुष्टयसम्पन्न र संसारप्रति तीव्र वैराग्य भएको उत्तम अधिकारी ब्रह्मसाक्षात्कारका लागि श्रोत्रिय ब्रह्मनिष्ठ गुरुसमक्ष जीव र ब्रह्मको ऐक्यको साक्षात्कारण भएको वैदिक महावाक्यको

---

१५ ब्राह्मणेन निष्कारणो धर्मः षडङ्गो वेदोऽध्येयो ज्ञेयश्च।

– श्रुतिः

१६ योऽनधीत्य द्विजो वेदमन्यत्र कुरुते श्रमम्।
स जीवन्नेव शूद्रत्वमाशु गच्छति सान्वयः॥ – मनुस्मृतिः २।१६८

१७ योऽधीत्य विधिवद् वेदं वेदान्तं न विचारयेत्।
स सान्वयः शूद्रकल्पः सपद्यं न प्रपद्यते॥ – औशनस्मृतिः ३।८२

श्रवण गर्न अनिवार्य जानुपर्ने व्यवस्था श्रुतिले नै गरेको तथ्य शुरुको पादटिप्पणीमा नै उल्लेख गरिसकिएको छ।

आफ्नू शाखाको वेद षडङ्ग र अर्थसहित विधिपूर्वक योग्य गुरुसँग अध्ययन गरेको उत्तम अधिकारी यदि मोक्षकामी भएमा उसले ब्रह्मसाक्षात्कारका लागि श्रोत्रिय ब्रह्मनिष्ठ गुरुसँग महावाक्यको श्रवण गर्नुपर्दछ। त्यसपछि मनन र निदिध्यासन गर्नुपर्ने कुरा मैत्रेयीब्राह्मणमा गुरु याज्ञवल्क्यले आफ्नी पत्नी मैत्रेयीलाई आत्मज्ञानको उपदेश गर्ने सन्दर्भमा भन्नुभएको देखिन्छ।

उपर्युक्त उपनिषद्‌मा आएको आत्मोपदेशात्मक मन्त्रका शब्दहरूको व्याख्या आचार्य शङ्करले आफ्ना भाष्यमा अत्यन्त स्पष्ट र प्राञ्जलरूपमा गर्नुभएको छ। हे मैत्रेयि ! [१८]आत्मा नै द्रष्टव्य, दर्शन गर्न योग्य अर्थात् साक्षात्कारको विषय गर्न योग्य हो। आत्मा पहिले आचार्य र शास्त्रद्वारा श्रवण गर्न योग्य हो। त्यसपछि त्यो तर्कद्वारा मनन गर्न योग्य हो र निदिध्यासितव्य अर्थात् निश्चयपूर्वक ध्यान गर्न योग्य हो। किनभने यस प्रकार श्रवण, मनन र निदिध्यासनरूप साधनहरूद्वारा सम्पन्न भएपछि आत्माको साक्षात्कार हुन्छ। जुन समयमा यी सबै साधनहरूको एकता हुन्छ, त्यसै समयमा नै ब्रह्मैकत्वविषयविषयक सम्यक् दर्शनको प्रसाद प्राप्त हुन्छ।

---

१८ आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यो मैत्रेय्यात्मनो वा अरे दर्शनेन श्रवणेन मत्या विज्ञानेनेदं सर्वं विदितम्।

– बृहदारण्यकोपनिषद् २।४।५

अन्यथा केवल श्रवण मात्रले आत्मसाक्षात्कार हुनसक्तैन।

विभिन्न दर्शनहरूले श्रवण, मनन र निदिध्यासनसमेतको आ-आफ्ना मति र मत अनुसार अर्थ गरेका छन्। जीव र ब्रह्मको एकता अर्थात् ब्रह्मसाक्षात्कारका लागि आन्तरिक साधनका रूपमा यिनलाई लिइन्छ। श्रवण, मनन र निदिध्यासनका सम्बन्धमा आचार्य शङ्करले गर्नुभएको सङ्क्षिप्त अर्थ माथि उल्लेख गरिसकियो। यिनका विषयमा अद्वैत वेदान्तका विभिन्न आचार्यहरूले विद्वत्तापूर्ण र सटीक व्याख्या गर्नुभएको छ। उहाँहरूमध्ये केही आचार्यहरूले दिनुभएको अर्थ र गर्नुभएको विवेचना यहाँ उद्धृत गर्नु सान्दर्भिक ठान्दछु।

आचार्य श्रीपद्मपादले आत्मज्ञानका लागि वेदान्त वाक्य र ब्रह्मसूत्रको विचार गर्नु [१९]श्रवण हो भन्नुभएको छ। त्यसपछि वस्तुनिष्ठवाक्यापेक्षित दुन्दुभि आदिको दृष्टान्त, सृष्टि, स्थिति, प्रलय, वाचारम्भणत्वादि आदि वाक्यहरूमा आएको अर्थवादको अनुसन्धान गर्नु र ती वाक्यार्थमा आएका विरोधी अर्थहरूको अनुमानद्वारा अनुसन्धान गर्नु [२०]मनन हो। [२१]निदिध्यासन भनेको मननद्वारा निश्चित गरिएको

---

१९ श्रवणं नाम आत्मावगतये वेदान्तवाक्यविचारः शारीरकश्रवणञ्च।
– पञ्चपादिका वर्णक ९, पृ. ६५२

२० मननं वस्तुनिष्ठ वाक्यापेक्षितदुन्दुभ्यादि दृष्टान्तजन्मीतिलयवाचारम्भ-णत्वादियुक्त्यर्थवादानुसन्धानं वाक्यार्थविरोध्यनुमानानुसन्धानञ्च।
– पञ्चपादिका वर्णक ९, पृ. ६५२

२१ निदिध्यासनम्-मननोपबृंहितवाक्यार्थविषये स्थिरीभावः। विधेयस्यो-पासनापर्यायस्य निष्फलत्वात्। – पञ्चपादिका वर्णक ९, पृ. ६५२

[22]वाक्यार्थका विषयमा मनलाई स्थिर गर्नु हो । किन कि विधिद्वारा गरिने उपासना निष्फल हुने हुनाले अन्त्यमा आत्मदर्शनका लागि गुरु र शास्त्रबाट श्रवण गरेपछि मनन र निदिध्यासनद्वारा मन स्थिर भए पश्चात् समस्त प्रपञ्चको नाश हुन्छ। तदुपरान्त आत्मसाक्षात्कार हुन्छ भनेर आफ्नू ग्रन्थ पञ्चपादिकामा उहाँले लेख्नुभएको छ।

यसै विषयलाई आचार्य धर्मराजध्वरीन्द्रले आफ्नू ग्रन्थ वेदान्तपरिभाषामा अत्यन्त स्पष्ट पारेर लेख्नुभएको छ। जस अनुसार [23]श्रवण भनेको अद्वितीय ब्रह्ममा नै वेदान्त वाक्यहरूको तात्पर्य भएको कुराको निश्चय गरिने मानसिक क्रिया हो। [24]मनन भनेको शब्दबाट अर्थको निश्चय भएपछि अरू प्रमाणहरूबाट त्यसका विरोधको शङ्का भएमा त्यसका निराकरणका उपायमा आउने भएको तर्कात्मक ज्ञानलाई उत्पन्न गर्ने भएको मानसिक व्यापार हो । [25]निदिध्यासन

---

२२ अतो वाक्यार्थे स्थैर्यान्निरस्तसमस्तप्रपञ्चावभासविज्ञानघनैकतानुभवः ।
– पञ्चपादिका वर्णक ९, पृ. ६५२

२३ श्रवणं नाम वेदान्तवाक्यानामद्वितीये ब्रह्मणि तात्पर्यावधारणानुकूला मानसी क्रिया । – वेदान्तपरिभाषा, प्रयोजनपरिच्छेद

२४ मननं नाम शब्दावधारितेऽर्थे मानान्तरविरोधशङ्कायां तन्निराकरणानुकूलतर्कात्मकज्ञानजनको मानसो व्यापारः ।
– वेदान्तपरिभाषा, प्रयोजनपरिच्छेद

२५ निदिध्यासनं नाम अनादि दुर्वासनया विषयाष्वाकृष्यमाणचित्तस्य विषयेभ्योऽपाकृष्यात्मविषयकस्थैर्यानुकूलो मानसो व्यापारः ।
– वेदान्तपरिभाषा, प्रयोजनपरिच्छेद

भनेको अनादि दुर्वासनाले गर्दा विषयहरूतर्फ आकर्षित हुने भएको चित्तलाई विषयबाट निवृत्त गरेर आत्मामा स्थिर गर्नका लागि गरिने तदनुकूलको मानसिक क्रिया हो ।

*'द्रष्टव्यः श्रोतव्यः'* आदि ब्रह्मसाक्षात्कारका लागि आन्तरिक साधनका रूपमा उपनिषद्वाक्यहरूमा आएको तव्यत् प्रत्यय विधिमा आएको हुँदा ब्रह्मज्ञान विधिशेष हो, भव्यार्थ हो, सिद्धार्थ होइन । किनभने [२६]वेदवाक्यहरू कर्मका बोधक हुन् । जुन वेदवाक्य कर्मको बोधक हुँदैन, त्यो वेद अर्थहीन हुन्छ र त्यस्तो वेदको मन्त्र अनित्य हुन्छ भन्ने पूर्वमीमांसाको भनाइ देखिन्छ । किन्तु उपर्युक्त *'आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यः'* आदि औपनिषद वाक्यहरूमा आएका तव्यत् आदि प्रत्ययहरू विधिमा होइन, अपितु [२७]'अर्ह' अर्थात् योग्य अर्थमा प्रयुक्त भएका हुन् । यस सम्बन्धमा पाणिनिले अष्टाध्यायीमा अर्ह अर्थमा कृत्य र तृच् प्रत्यय हुन्छ भन्नुभएको छ । अतः द्रष्टव्यः, श्रोतव्यः आदिको अर्थ आत्मा दर्शनार्ह अर्थात् दर्शन गर्न वा साक्षात्कार गर्न योग्य र श्रवणार्ह अर्थात् सुन्न योग्य हो भन्नुभएको छ । किनभने अद्वैत वेदान्तको

---

२६ आम्नायस्य क्रियार्थत्वादानर्थक्यमतदर्थानां तस्मादनित्यमुच्यते ।
– पूर्वमीमांसा, जैमिनिसूत्र १।२।१

२७ अर्हे कृत्यतृचश्च पाणिनिवचः स्पष्टं विधत्ते यतः,
तस्माद्दर्शनयोग्यतां वदति नस्तव्यो न तत्त्वान्तरम् ।
तस्मादात्मपदार्थमात्रनियतं मेयत्वमेकान्ततो
द्रष्टव्यादिवचो वदत्यनुभवादज्ञात आत्मा यतः ।
– सङ्क्षेपशारीरकम् २।५१

मतमा तव्य प्रत्यय आत्मगत दर्शन योग्यतामा लिइन्छ, तत्त्वान्तरमा लिइँदैन। यसकारण 'द्रष्टव्यः' यस वाक्यले नियमतः आत्मपदार्थमात्रमा प्रमेयत्व बताउँछ। किनभने अनुभवका आधारमा एक आत्मा नै अज्ञात हो भन्ने निश्चित हुन्छ। अरू अनात्म ज्ञात नै हुन्। किनकि ती मायिक र दृश्य अनात्म वस्तु हुन्।

'तव्य' प्रत्ययलाई कृत्य संज्ञा हुन्छ। वस्तुतः कृत्य र तृच् प्रत्ययको विधान अर्हार्थ अर्थात् योग्यता अर्थमा हुने पाणिनिले आफ्नू व्याकरणमा स्पष्टैसँग भन्नुभएको तथ्य माथि उल्लेख गरिसकियो। पाणिनिसूत्र *'अर्हे कृत्यतृचश्च ३।३।१६९'* मा आएको चकारले [२८]लिङ्लकारलाई पनि लिएको देखिन्छ। किनभने 'आत्मेत्युपासीत' आदि औपनिषद वाक्यहरूमा लिङ् र लोटादिको प्रयोग विधिमा नभएर प्रार्थनादि अर्थमा मान्न सकिन्छ।

एकातर्फ महर्षि पाणिनिले [२९]लिङ्, [३०]लोट् आदिको प्रयोग प्रार्थना आदि अनेक अर्थमा समेत हुन सक्ने भनेर

---

२८ अर्हाद्यर्थे च कृत्यस्मरणमभिमतं पाणिने प्रार्थनादौ,
लिङ्लोडादेश्च वृत्तिः प्रचुरमभिमता पाणिनेर्जैमिनेश्च।
तस्माद् वेदान्तवाक्ये पठितमपि लिडाद्यन्यथा योजनीयम्,
विध्यर्थासम्भवेन स्फुटमुदितनयादेतदन्यागतार्थम्॥
– सङ्क्षेपशारीरकम् १।६३

२९ विधिनिमन्त्रणामन्त्रणाधीष्टसंप्रश्नप्रार्थनेषु लिङ्। – पाणिनिसूत्र ३।३।१६१

३० लोट् च। – पाणिनिसूत्र ३।३।१६२

आफ्नू अष्टाध्यायी व्याकरणसूत्रमा उल्लेख गर्नुभएको छ भने अर्कातर्फ पूर्वमीमांसा दर्शनका सूत्रकार महर्षि जैमिनिले पनि केवल विधिमा मात्रै लिङादिको प्रयोग हुन्छ भनेर मान्नुभएको देखिँदैन। किनभने उहाँले अरूअरू अर्थहरूमा पनि प्रयोग हुने भनेर सूत्र लेख्नुभएको छ। जस्तै *'विष्णुरुपांसु यष्टव्याः (तै.सं. २।६।६) मा समेत 'जर्तिलयवाग्वा जुहुयात् (जैमिनिसूत्र १०।८।७)'* आदि वाक्यहरूमा विधिको असम्भावना भन्दै प्रशंसा आदि अर्थमा लिङादिको प्रयोग हुने कुराको सङ्केत गर्नुभएको छ। अतः अविधिरूप वेदान्त शास्त्र कहिल्यै पनि विधिविचारात्मक पूर्वमीमांसाद्वारा गतार्थ हुन नसक्ने भनेर सङ्क्षेपशारीरककारले लेख्नुभएकोबाट पनि 'द्रष्टव्यः' आदि औपनिषद वाक्यहरू विध्यर्थक, भव्यार्थक नभएर अर्हार्थक, योग्यार्थक र सिद्धार्थक भएको स्पष्ट हुन्छ।

सारांशमा भन्ने हो भने महर्षि पाणिनिले कृत्य संज्ञा भएको तव्यप्रत्ययको प्रयोगको विधान अर्हादि अनेक अर्थहरूमा गर्नुभएको छ। त्यसै गरेर लिङ्, लोट् आदिको प्रयोग प्रार्थना आदि अर्थहरूमा पनि हुने भन्ने पाणिनि र जैमिनि दुवैजना महर्षिहरूको अभिमत भएको तथ्य उहाँहरूका सूत्रग्रन्थहरूबाट थाहा हुन्छ। अतः वेदान्तशास्त्र सिद्धार्थबोधक शास्त्र हो र पूर्वमीमांशास्त्रद्वारा गतार्थ हुने विधि अर्थपरक र भव्य अर्थपरक पनि होइन।

यसै विषयमा [३१]आचार्य पद्मपादले श्रुतिका विभिन्न वाक्यहरू उद्धृत गर्दै यसलाई विधि नभनेर विधिच्छाया भन्नुभएको छ। महावाक्य श्रवणमा कुनै पनि विधि नभएको तर्क भामतीकार वाचस्पति मिश्रको छ भने विवरणकार प्रकाशात्मयति र सङ्क्षेपशारीरककार सर्वज्ञात्म मुनि भने श्रवणमा नियम विधि भएको अभिमत राख्नुहुन्छ। त्यतिमात्रै होइन श्रवणमा विधि भएको प्रमाण छान्दोग्योपनिषद्, मुण्डकोपनिषद् आदि उपनिषद्हरूमा पाइन्छ। तिनको भाष्य गर्दै आचार्य शङ्करले पनि आफ्नू अभिमति व्यक्त गर्नुभएको छ।

यसरी [३२]श्रुतिवाक्यहरूको श्रवण गरेपछि क्रमशः मनन र निदिध्यासन गरेमा नै ब्रह्मसाक्षात्कार हुन्छ। साक्षात्कारका अन्तरङ्ग साधनहरू यिनै हुन् भन्ने शास्त्रीय वचन भएकाले तदनुरूप माथि उल्लेख गर्ने प्रयास गरिएको हो।

श्रवण गर्ने भनेर जुन शास्त्रहरूले भनेका छन्, त्यस्तो श्रवण गर्ने भनेको के हो ? यो बुझ्नु अत्यन्त आवश्यक छ। किनभने

---

३१ अपि च नैवायं विधौ कृत्यः, किं तर्हि ? अर्हे कृत्यतृचश्च इति अर्हे कृत्यः। एतेन 'आत्मेत्येवोपासीत' 'आत्मानमेव लोकमुपासीत' इत्येवमादीनि वाक्यानि व्याख्यातानि वेदितव्यानि। अतो हानोपादानशून्यात्मावगमादेव कृत्यकृत्यता प्रतीयते। श्रुतिस्मृतिवादानाञ्च तथा प्रस्थितत्वात्। तस्मान्नप्रतिपत्तिविधिविषयतया ब्रह्मणः समर्पणमित्यायसंहरति।

– पञ्चपादिका, नवमं वर्णकम् (पृष्ठ ६५३)

३२ श्रोतव्यः श्रुतिवाक्येभ्यो मन्तव्यश्चोपपत्तिभिः।
मत्त्वा च शततं ध्येयमे दर्शनहेतवः॥

श्रीमद्भागवतको श्रवण गरेर मात्रै सात दिनमा राजा परीक्षित्को मुक्ति भएको प्रसङ्ग अत्यन्त प्रसिद्ध छ। श्रवणपछि मनन र निदिध्यासन गर्ने अवकाश राजा परीक्षित्ले पाएको देखिँदैन। यदि भगवतको कथा सुनेर र भजन गरेर मात्रै ब्रह्मसाक्षात्कार हुने हो भने *'आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यः। (बृ.उ.२।४।५)'* भन्ने श्रुति वाक्यको कुनै अर्थ नरहन सक्तछ। किन कि ब्रह्मसाक्षात्कार वैदिक महावाक्य विधिपूर्वक श्रवण गरेपछि गरिने मनन र निदिध्यासन समेतबाटै हुनसक्तछ। श्रवणबाट मात्र सम्भव छैन।

वस्तुतः मुक्तिको प्रथमद्वार श्रवण नै हो। श्रवण गर्ने वैदिक महावाक्य नै हो। भागवतको श्रवण गरेर नै मुक्ति भयो भन्नु अर्थवाद हो। यसले भागवत सुन्नेतर्फ मानिसलाई प्रेरणा चाहिँ प्रदान गर्दछ। भगवद्भक्ति र भगवान्को गुणानुवाद गर्नाले मानिसको अन्तःकरणको मालिन्य नाश हुन्छ र विक्षेपदोष शान्त हुन जान्छ। यो अत्यन्त आवश्यक छ। *'भक्तिर्ज्ञानाय कल्पते'* भनिएकाले भक्ति र कथा श्रवण परम्परया मोक्षका साधन हुन्, किन्तु साक्षात् मोक्षको साधन वा हेतु भने महावाक्यको श्रवण नै हो भन्ने शास्त्रीय वचन छ। अतः वैदिक महावाक्यको श्रवण नै [३३]मोक्षको साक्षात् साधन हो तर अरू साधनहरू भने परम्परया साधन हुन्, साक्षात् साधन होइनन्। ॐ ब्रह्मार्पणमस्तु।

---

३३ साक्षान्महावचनमेव विमुक्तिहेतुः। – सङ्क्षेपशारीरकम् ३।२९५

# ४६. शृण्वन्तु विश्वे अमृतस्य पुत्राः

उपर्युक्त शीर्षक शुक्लयजुर्वेद संहितामा पठित एकादशौँ अध्यायको पाँचौँ मन्त्र हो। त्यसको सामान्य अर्थ हो, ती मरणरहित प्रजापतिका सम्पूर्ण देवपुत्रहरूले यस यजमानको यशलाई सुनून्। जुन देवताहरू दिव्य स्थानमा अधिष्ठित छन्।

यस अत्यन्त प्रसिद्ध मन्त्रांशलाई अद्वैतवेदान्तका सन्दर्भमा मिलाएर चिन्तन गर्नु श्रेयस्कर हुने देखिन्छ। यस लेखमा उक्त मन्त्रखण्डमा आएका चारोटा शब्दहरू मध्ये केवल 'अमृतस्य पुत्राः' दुई शब्दहरूलाई मात्र लिएर चर्चा गरिने छ। यी शब्दहरू नै प्रकृत सन्दर्भमा प्रासङ्गिक देखिन्छन्। अमृत भनेको ब्रह्म, परमात्मा, मोक्ष हो। अमृत भनेको अमरण हो, नमर्नु हो, नमर्न हुनलाई ब्रह्म नै हुनुपर्दछ। ब्रह्ममात्रै अमृत हो। अरू सबै मृत हुन् र मिथ्या हुन्।

अमृत अर्थात् ब्रह्मका पुत्रहरू भनेर केलाई बुझ्ने ? बिचार गर्नुपर्ने हुन्छ। जुन ब्रह्म मायातीत हो, जुन ब्रह्म [1]निष्कल अर्थात् अवयवरहित हो, जुन ब्रह्म निष्क्रिय अर्थात् आफ्नै महिमामा स्थित कूटस्थ हो, जुन ब्रह्म शान्त अर्थात् जसका

१ निष्कलं निष्क्रियं शान्तं निरवद्यं निरञ्जनम्।
अमृतस्य परं सेतुं दग्धेन्धनमिवानलम्॥ – श्वेताश्वतरोपनिषद् ६।१९

विकारहरूको अन्त भएको छ, जुन ब्रह्म निरवद्य किंवा अनिन्द्य हो, जुन ब्रह्म मोक्षस्वरूप हो, मोक्षको साधन र साध्य समेत हो तथा जुन ब्रह्म स्वप्रकाश ज्ञानस्वरूप हो, उसका पुत्र कसरी हुन सक्तछन् ?

यो सारा चराचर प्रपञ्च ब्रह्मको विवर्त हो। अथवा जसरी घाँटीमाथि रहेको मुख बिम्बस्थानीय हो भने ऐनामा परेको त्यसको छाया प्रतिबिम्ब हो। त्यसै गरेर शुद्ध ब्रह्म बिम्ब हो र त्यसैको प्रतिबिम्ब जगत् हो। बिम्बलाई प्रतिबिम्बमा विवर्तित गर्ने [२]अनादि अविद्या वा अज्ञान नै उपाधि हो। यसै उपाधिमा चिदाभासन नै ईश्वरपदको प्रवृत्तिनिमित्त हो। आभासयुक्त ईश्वररूप प्रतिबिम्ब हो भने शुद्ध चेतन बिम्ब हो। किन्तु शुद्धब्रह्म सबैको आधार मानेर ईश्वर वा साक्षीलाई बिम्ब र जीवात्मालाई प्रतिबिम्ब मान्नु नै प्रकरणगत अर्थ मिल्ने देखिन्छ।

बिम्ब र प्रतिबिम्बका सम्बन्धमा श्रीमधुसूदन सरस्वतीले अज्ञानोपहित बिम्ब चैतन्य ईश्वर हो र अज्ञानप्रतिबिम्बित चैतन्य जीव हो भन्नुभएको छ। अर्कोतर्फ एकजीववादको मुख्य वेदान्त सिद्धान्तमा भने अज्ञान अनुपहित शुद्ध चैतन्य ईश्वर हो र अज्ञान उपहित चैतन्य जीव हो। यस पक्षमा जीव नै आफ्नू अज्ञानद्वारा जगत्को उपादान कारण र निमित्तकारण

---

२ उपाधिरज्ञानमनादिसिद्धमस्मिंश्चिदाभासनमीश्वरत्वम्।
तदन्विता चित्प्रतिबिम्बकं स्यादुदीर्यते शुद्धचिदेव बिम्बम्।
– सङ्क्षेपशारीरकम् २।२७७

बन्दछ। यसै कुरालाई सर्वज्ञात्ममुनिले यसरी व्याख्या गर्नुभएको छ – [३]आफ्ना अज्ञानद्वारा कल्पित जगत्, परमेश्वरत्व र जीवत्वबाट जीवको भूमभाव अर्थात् ब्रह्मभाव कलुषित भएको छ। वस्तुतः जुन आफ्नू स्वाभाविक महिमामा सधैँ रहेको छ, जसको मोह नष्ट भएको छ, त्यो नै भुवनत्रयको एकमात्र कारण प्रत्यक्चिति अर्थात् जीवात्मा वा प्रतिबिम्बभूत चिदाभास हो। अमृत ब्रह्मको सन्तान हो, पुत्र हो र प्रतिबिम्ब हो।

अद्वैतवेदान्तमा आएको चितिशक्ति अर्थात् चैतन्य बिम्ब हो र यस बिम्बको अविद्यात्मक मायामा जुन प्रतिबिम्ब पर्दछ त्यो ईश्वर हो, ईश्वरचैतन्य अर्थात् ईश्वर हो, साक्षी हो। अर्कोतर्फ अन्तःकरणमा प्रतिबिम्बित हुने भएको चैतन्य जीव चैतन्य अर्थात् जीव हो। यसमा [४]जीव अर्थात् प्रतिबिम्ब कार्योपाधि हो अर्थात् अविद्याको कार्य अन्तःकरणमा प्रतिबिम्बित भएकाले जीव कार्य उपाधि युक्त हो। किन्तु ईश्वर अर्थात् साक्षी भने अन्तःकरणको कारण अविद्या नै उपाधि अर्थात् अविद्यामा नै बिम्बित भएकाले कारणोपाधियुक्त हो भनेर श्रुतिले भनेको छ। अविद्यात्मक उपाधि व्यापक भएकाले त्यो उपाधि भएको ईश्वर पनि व्यापक हो। किन्तु अन्तःकरणपरिच्छिन्न वा अव्यापक

---

३ स्वाज्ञानकल्पितजगत्परमेश्वरत्वजीवत्वभेदकलुषीकृतभूमभावा।
स्वाभाविकस्वमहिमस्थितिरस्तमोहा प्रत्यक्चितिर्विजयते भुवनैकयोनिः ॥
– सङ्क्षेपशारीरकम् १।२

४ कार्योपाधिरयं जीवः कारणोपाधिरीश्वरः। – श्रुतिः

भएकाले तदुपाधिक जीव परिच्छिन्न हो।

कतिपय आचार्यहरूले शुद्ध चेतनलाई बिम्ब र ईश्वर तथा जीवलाई प्रतिबिम्ब मानेका छन्। ती दुवैमध्ये ईश्वर मायामा प्रतिबिम्बित चेतन हो भने जीव अन्तःकरणमा प्रतिबिम्बित हो। वस्तुतः प्रकृत विषयमा यही सिद्धान्त समीचीन देखिन्छ। किनभने श्रुतिले 'अमृतस्य पुत्राः' अर्थात् चेतनका सन्तान भनेको छ। यसको अर्थ अमृत चेतन ब्रह्मका पुत्रहरू भन्नाले बिम्बभूत चेतन ब्रह्मको मायामा प्रतिस्फलित प्रतिबिम्ब ईश्वर हो र अन्तःकरणमा प्रतिस्फलित प्रतिबिम्ब जीव हो। यस हिसाबले उपाधिभेदले ईश्वर र जीव अर्थात् सर्वज्ञ र अल्पज्ञका दृष्टिले फरक भए तापनि अमृत ब्रह्मका नै दुवै पुत्र हुन्, दुवै [५]अनादि र विभु हुन् भनेर शास्त्रले भनेको छ। ॐ ब्रह्मार्पणमस्तु।

---

५ जीव ईश विशुद्धाचित् तथा जीवेशयोर्भिदाः।
अविद्या तच्चितेर्योगः षडस्माकमनादयः ॥ – अद्वैतसिद्धिः

# ४७. सदेव सोम्येदमग्र आसीत्

ब्रह्मज्ञानी पिता उद्दालकले आफ्ना स्नातक पुत्र श्वेतकेतुलाई आत्मोपदेश गर्ने सन्दर्भमा [१]'हे सोम्य ! आरम्भमा त्यो एकमात्र सत् नै थियो' भनेर उपदेश गर्नुभएको पावन प्रसङ्ग उपनिषद्मा आएको छ। उपनिषद्मा आएको उक्त 'सत्' शब्द अस्तित्व वा आत्मबोधक शब्द हो। यसलाई सम्पूर्ण [२]वेदान्त अर्थात् उपनिषद् प्रमाणबाट सूक्ष्म, निर्विशेष, सर्वगत, एक, निरञ्जन निरवयव र विज्ञानस्वरूप आत्मा भनेर जानिन्छ। [३]त्यो सत्य नै आत्मा भएको उपदेश उद्दालकले धेरै ठाउँमा गर्नुभएको छ। [४]त्यही सत्य नै ज्ञान स्वरूप अनन्त ब्रह्म हो भनेर श्रुतिले भनेको छ। किन्तु उक्त मन्त्रको उत्तरार्धमा त्यसै विषयमा [५]कसैले आरम्भमा यो एकमात्र असत् नै थियो, त्यसै असत्बाट सत्को उत्पत्ति भएको हो भनेका छन् भनिएको छ।

अर्को उपनिषद्ले सृष्टिभन्दा पहिले असत्मात्रै थियो र त्यसै असत्बाट सत्को उत्पत्ति भयो भनेको छ। उक्त भनाइको

---

१ सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम् । – छान्दोग्योपनिषद् ६।२।१

२ वेदान्तो नाम उपनिषत्प्रमाणम् ।

३ तत्सत्यं स आत्मा । – छान्दोग्योपनिषद् ६।८–१६

४ सत्यं ज्ञानमन्तं ब्रह्म । – तैत्तिरीयोपनिषद् २।१।१

५ तद्धैक आहुरसदेवेदमग्र आसीदेकमेवाद्वितीयं तस्मादसतः सज्जायत ।
– छान्दोग्योपनिषद् ६।२।१

व्याख्या गर्दै सृष्टिभन्दा पहिलो यो जगत् [६]असत् अर्थात् अव्याकृत ब्रह्मरूप अर्थात् सत् आत्मा नै थियो। असत् अर्थात् अव्याकृत सत् आत्माबाट नामरूपात्मक सत्को उत्पत्ति भयो। त्यस असत्ले स्वयं आफूलाई नै नामरूपात्मक जगद्रूपद्वारा रचना गर्‍यो भनेको छ।

वस्तुतः नामरूपात्मक जगत् मायिक सृष्टि हो र मिथ्या हो। यसका बारेमा अर्को उपनिषद्ले [७]ब्रह्मका मूर्त र अमूर्त दुई रूपहरूको उल्लेख गरेको छ। जसमा मर्त्य र अमृत, स्थित र यत् अर्थात् चर अनि सत् र त्यत् भनिएको छ। यस श्रुतिले सत्लाई अर्काको अपेक्षा विशेषरूपबाट निरूपण गरिने असाधारण धर्मविशेषले युक्त भनेको छ। अन्त्यमा यस ब्राह्मणले बह्मलाई 'नेति नेति' बाट मायाको कार्य र मायासमेत निषेध भएपछि शेष रहने सत्यको पनि सत्य परम सत् वा सत्य हो भनेको छ। जुन सत् ब्रह्मको स्वरूप लक्षण नै हो।

पञ्चदशीकारले [८]अस्ति अर्थात् सत्तार्थक सत्, भाति अर्थात् चेतनार्थक चित् र प्रिय अर्थात् आनन्दलाई ब्रह्मरूप र नाम अनि रूपलाई जगत् रूप भनेका छन्। [९]ब्रह्मको सत्तामा

---

६ असद्वा इदमग्र आसीत्। ततो वै सदजायत। तदात्मनः स्वयमकुरुत।
– तैत्तिरीयोपनिषद् २।७।१

७ द्वे वाव ब्रह्मणो रूपे मूर्तञ्चैवामूर्तञ्च।
मर्त्यञ्च स्थितञ्च यच्च सच्च त्यच्च॥ – बृहदारण्यकोपनिषद् २।३।१

८ अस्ति भाति प्रियं रूपं नाम चेत्येव पञ्चकम्।
आद्य त्रयं ब्रह्मरूपं जगद्रूपं ततो द्वयम्॥ – वाक्यसुधा

९ यस्यैव स्फुरणं सदात्मकमसत्कल्पार्थकं भासते। – दक्षिणामूर्तिस्तोत्रम् २

विवर्तित भएर यो मिथ्या जगत् पनि सत् जस्तो भएर देखा परिरहेको छ। वस्तुतः जगत्को आफ्नू कुनै अस्तित्व नै छ। अध्यासद्वारा अधिष्ठान डोरीमा सर्प, सिपीरूपी अधिष्ठानमा चाँदी र मरुभूमिरूपी अर्थात् तातेको बालुवारूपी अधिष्ठानमा जल जस्तो ब्रह्मको अधिष्ठानमा विवर्तद्वारा मिथ्या जगत् यो सारा प्रपञ्च देखा परेको छ भनेर दक्षिणामूर्तिस्तोत्रम्मा आचार्य शङ्करले भन्नुभएको छ।

महाप्रलयको दुई परार्ध अवधि समाप्त भएपछि परमात्मामाले पुनः महासृष्टिको क्रम शुरु गर्दछन्। जसमा मुक्त हुन नसकेका अनुशयी अर्थात् प्रलयकालीन जीवहरू मायाको गर्भमा दुई परार्ध अवधिसम्म अचेत अवस्थामा रहेका हुन्छन्। तिनीहरूले आफ्ना अनन्त जन्मदेखि जम्मा भएका सञ्चितकर्महरू आफैँसँग लिएका हुन्छन्। अनन्त सञ्चित कर्महरूबाट भोगोन्मुख भइसकेको प्रारब्ध कर्म अनुरूपको योनिमा पठाएर अनुशयी जीवहरूको भोग भोगाएर भरसक तिनीहरूलाई मोक्षको बाटोमा अगाडि बढाउने इच्छाले नै परमात्माले यो अनन्त ब्रह्माण्डको सृष्टि शुरु गर्दछन्।

उपर्युक्त सृष्टि प्रारम्भ गर्ने सन्दर्भमा ती 'सत्' नाम परमात्माले सर्वप्रथम [१०]ईक्षण गरेर 'म यस जीवात्मरूपले अण्डज, जरायुज र उद्भिज्जमा अनुप्रवेश गरेर नाम र रूपलाई व्यक्त गरौँ अर्थात्

१० सेयं देवतैक्षत हन्ताहमिमास्तिस्रो देवता अनेन जीवेनात्मनानुप्रविश्य नामरूपे व्याकरवाणीति। – छान्दोग्योपनिषद् ६।३।२

जीवात्माका रूपमा देखा परौँ भने' भन्ने कुरा एउटा उपनिषद्ले भनेको छ। यसमा सर्वप्रथम शुद्ध निष्कल परमात्माले सृष्टिकार्यका लागि मायाको उपाधि स्वीकार गरेर आध्यासिक सम्बन्धजन्य संसर्गाध्यासद्वारा 'अहं' भनेर कर्तृत्वपनको अध्यारोप आफूमा गरेको देखिन्छ। त्यसपछि परमात्मा ब्रह्म नै प्रतिबिम्बरूपले सबै प्राणीहरूमा अनुप्रविष्ट भएको देखिन्छ। अन्यथा कुनै प्राणीमा पनि चेतना रहने थिएन।

उपर्युक्त उपनिषद् अनुरूप पारमार्थिकरूपमा [11]मायारहित, चैतन्यस्वरूप, जगत्‌का कारण, आध्यात्मिक, आधिदैविक र आधिभौतिक तापहरूले रहित, निर्विकार एवं सच्चिदानन्दरूप परब्रह्ममा सर्वप्रथम अध्यासका रूपमा सृष्टिको प्रथम अङ्कुररूप मुख्य अहङ्कार कल्पित भयो भनेर रामगीताले पनि भनेको छ।

सृष्टिको प्रथम प्रहरमा ती [12]परमात्माले 'म धेरै होऊँ' अर्थात् जीवात्मभावले उत्पन्न होऊँ भनेर कामना गरे। उनले तप गरे र यस दृश्य प्रपञ्चको रचना गरे। त्यसरी सम्पूर्ण भूतभौतिक प्रपञ्चको रचना गरेर परमात्मा त्यसैभित्र सत्ता र चित्ताका रूपमा अनुप्रवेश गरे अर्थात् अनुप्रविष्ट भए भनेर

---

११ विकल्पमायारहिते चिदात्मकेऽहङ्कार एषः प्रथमः प्रकल्पितः।
अध्यास एवात्मनि सर्वकारणे निरामये ब्रह्मणि केवले परे॥
– रामगीता ३८

१२ सोऽकामयत बहु स्यां प्रजायेयेति। स तपोऽतप्यत, स तपस्तप्त्वा इदं सर्वमसृजत यदिदं किञ्च। तत्सृष्ट्वा तदेवानुप्राविशत्। तदनुप्रविश्य सच्च त्यच्चाभवत् – तैत्तिरीयोपनिषद् २।६।१

अर्को श्रुतिले पनि भनेको छ।

श्रुतिले अव्याकृत परमात्मा अर्थात् ब्रह्मलाई असत् शब्दद्वारा व्यक्त गरेको छ। कुनै पनि इन्द्रिय र अनुभूति समेतबाट थाहा पाउन नसकिने हुँदा ब्रह्मलाई असत् अर्थात् अव्याकृत भनिएको हो। किन्तु यस्तो गम्भीर तथ्यलाई बुझ्दै नबुझी [13]ब्रह्मको सत्ता पाएर सत्तावान् र ब्रह्मको प्रतिबिम्ब पाएर चैतन्ययुक्त बनेको कुनै व्यक्तिले ब्रह्म छैन भन्दछ भने ऊ आफैँ नहुनु हो भन्ने श्रुतिको उद्घोष उचित देखिन्छ।

वास्तविकरूपमा सत् र असत् दुवै ब्रह्मकै रूप भएको यथार्थता उपनिषद्मा सर्वत्र आएको देखिन्छ। यसै कुरालाई स्पष्ट पार्दै श्रीमद्भगवद्गीतामा भगवान् श्रीकृष्णले [14]'सत् र असत् दुवै म नै हुँ' भन्नु भएको छ। किनभने सत् र असत् दुवै ब्रह्मकै सत्तामा आधारित छन्। शास्त्रले अविद्या, माया, विद्या, अन्धकार, प्रकाश, अमृत र मृत्यु समेत ब्रह्मकै सत्ता पाएर सत्तावान् भएका हुन् भनेको छ। अन्यथा यिनको नाम वा अस्तित्वसम्म पनि अवशेषित हुने थिएन।

परमात्माले जब सृष्टि गर्ने इच्छा गर्दछन्, तब उनको अन्तःकरण खडा हुन्छ। वस्तुतः परमात्मामा मायिक मन, बुद्धि र अहङ्कार केही पनि हुँदैनन्। श्रुतिले परमात्माका

---

१३ असन्नेव स भवति, असद्ब्रह्मेति वेद चेत्।
अस्ति ब्रह्मेति चेद्वेद, सन्तमेनं ततो विदुरिति। – तैत्तिरीयोपनिषद् २।६।१

१४ अमृतञ्चैव मृत्युश्च सदसच्चाहमर्जुन। – गीता ९।२०

१५ अचक्षुष्कमश्रोत्रमवागमनः। – माध्यन्दिनीय वा.श.ब्रा. १४।६।८।८

[15]आँखा, कान, वाणी र मनसमेत केही हुँदैनन् भनेको छ। यही पारमार्थिक तथ्य [16]श्रीमद्भागवतमा पनि आएको छ। रासक्रीडा प्रारम्भ गर्नका लागि मन नभएका भगवान् श्रीकृष्णले मायाको सहायता लिएर मन बनाउनुभएको देखिन्छ।

परमात्माको सत्ता पाएर नै जड मायाले पनि चेतन जस्तो भएर काम गर्दछ। किन्तु त्यसै मायाको सहयोग लिएर परमात्माले आफूलाई सृष्टिकार्यमा संलग्न गराउँदछन्। जसलाई अहं भनिन्छ। अहं नभईकन कर्तृत्वपन तयार हुँदैन। त्यो नभएमा यो विशाल दृश्य प्रपञ्च त के कुरा, सामान्य कार्य पनि हुनसक्तैन।

जड र चेतनको परस्पर [17]अध्यास भएर बनेको अ हं यो सुदृढ गाँठो हो। संसर्गाध्यासद्वारा परमात्माको चैतन्य जड बुद्धिमा सर्दछ भने स्वरूपाध्यासद्वारा जड बुद्धिको भोक्तृत्व, कर्तृत्व आदि निष्क्रिय परमात्मामा सर्दछन्। यसरी निष्कल, अक्रिय, निरञ्जन परमात्मामा पनि कर्तृत्वपन पैदा हुन्छ। यस सम्बन्धमा फलामको डल्लोमा सरेको आगोको तातो र रातोपनलाई उदाहरणका रूपमा दिएको छ। त्यसरी फलाम र आगाको परस्पर अध्यास हुँदा आगाको तातो र रातो सरेर फलाम आगो जस्तो देखा पर्दछ भने विना आकारको आगोले

---

१६ भगवानपि ता रात्रीः शरदोत्फुल्लमल्लिकाः।
वीक्ष्य रन्तुं मनश्चक्रे योगमायामुपाश्रितः॥ – भागवत १०।२९।१

१७ चिद्बिम्बसाक्षात्मधियां प्रसङ्गस्त्वेकत्र वासादनलाक्तलोहवत्।
अन्योऽन्यमध्यासवशात्प्रतीयते जडाजडात्वञ्च चिदात्मचेतसो॥
– रामगीता ४१

फलामको डल्लोपनको आकार प्राप्त गर्दछ। अध्यास भएका ती फलाम र आगो दुवै छुट्याउनै नसकिने भएर एकाकार हुन्छन्। उदाहार्यमा अध्यासद्वारा जड बुद्धि चेतन जस्तो र निष्क्रिय चेतन आत्मा बुद्धिको धर्म लिएर कर्ता जस्तो भएर देखा पर्दछन्।

निर्गुण, निराकार, निष्कल, शुद्ध कारण ब्रह्ममा सिसृक्षाको कामना हुनसक्तैन। सिसृक्षाको कामना सगुण निराकार कार्य ब्रह्ममा मात्रै हुनसक्तछ। [१८]श्रुतिले एक्लै बस्न उसलाई रमाइलो नलागेर सृष्टि गरे भनेको पनि कार्यब्रह्मलाई हो, कारण ब्रह्मलाई होइन। [१९]इन्द्र अर्थात् परमात्मा मायाको उपाधि प्राप्त गरेर त्यसै उपाधिबाट भएर धेरै रूप लिएजस्ता देखिन्छन्। ती परमात्मा आफू निरूप र निराकार भए पनि माया अर्थात् नामरूपजनित मिथ्या अभिमानद्वारा [२०]पुरुरूप अर्थात् अनेक रूपमा परिवर्तित भएजस्ता हुन्छन्। परमात्माको त्यो रूप प्रकट गर्नका लागि हो। परमार्थतः त्यस्तो अनेकरूप हुँदैन भन्ने श्रुतिको मत देखिन्छ।

सगुण निराकार कार्यब्रह्ममा सृष्टिकार्य गर्न समष्टि सात्त्विक अहं रहन्छ, व्यष्टि रजोगुणात्मक अहं रहँदैन। श्रीमद्भगवद्गीतामा भगवान् श्रीकृष्णले यही कुराको उपदेश

---

१८ स वै नैव रेमे तस्मादेकाकी न रमते स द्वितीयमैच्छत्।

– बृहदारण्यकोपनिषद् १।४।३

१९ इन्द्रो मायाभिः पुरुरूप ईयते। – बृहदारण्यकोपनिषद् २।५।१९

२० रूप रूपं प्रतिरूपो बभूव तदस्य रूपं प्रतिचक्षणाय।

– बृहदारण्यकोपनिषद् २।५।१९

अर्जुनलाई गर्नुभएको छ। त्यसैगरेर मायिक उपाधिका कारण उही परब्रह्म व्यष्टिरूपमा सबै प्राणीहरूका अन्तःकरणमा रहेको [२१]आत्मा हुँ भनेर वासनाव्यष्टित चिदचिद्ग्रन्थि निर्मित जीवात्मा भएको परम रहस्ययुक्त उपदेश विभूतियोग नामक अध्यायमा उहाँले गर्नुभएको छ। त्यसभन्दा अघि [२२]वासुदेवात्मक परब्रह्मरूप म नै सम्पूर्ण जगत्को उत्पत्तिको कारण पनि हुँ भनेर परब्रह्मको प्रतिनिधिको रूपमा सगुण साकार भगवान् श्रीकृष्णले अर्जुनलाई उपदेश गरेको गीतामा देखिन्छ।

छान्दोग्योपनिषद्मा 'सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम्' भनेर आएको सत् आत्माको प्रसङ्गलाई पुराणहरूमा अहं शब्दबाट बुझाइएको छ। श्रमद्भागवतमहापुराणमा [२३]सृष्टि हुनुभन्दा पहिले केवल ममात्रै थिएँ। मेरा अतिरिक्त स्थूल, सूक्ष्म र दुवैको कारण अविद्या अर्थात् अज्ञान पनि थिएन। प्रलयकालमा पनि अर्थात् सृष्टि नहुँदा पनि म नै रहन्छु, सृष्टिका रूपमा सम्पूर्ण प्रपञ्चमा पनि म नै प्रतीत हुन्छु र जुन अवशिष्ट रहन्छ त्यो पनि म नै हुँ भनेर सत् आत्मा अहं शब्दबाट बुझिने ब्रह्म विवर्तितरूपमा निखिल ब्रह्माण्डको कणकणमा छु भनेर आफ्नो अत्यन्त गोपनीय परम ब्रह्मस्वरूपको उपदेश भगवान् श्रीनारायणले सृष्टिकर्ता

---

२१ अहमात्मा गुडाकेश सर्वभूताशयस्थितः । – गीता १०।२०

२२ अहं सर्वस्य प्रभवो मत्तः सर्वं प्रवर्तते ॥ – गीता १०।८

२३ अहमेवासमेवाग्रे नान्यद् यत् सदसत्परम् ।
पश्चादहं यदेतच्च योऽवशिष्येत सोऽस्म्यहम् ॥ – भागवत २।९।३२

ब्रह्माजीलाई गर्नुभएको छ।

परब्रह्म परमात्माका प्रतीकका रूपमा सगुण साकाररूपमा आविर्भाव हुनुभएका भगवान् श्रीकृष्णले श्रीमद्भगवद्गीतामा अस्मत् शब्दबाट बनेका अहं, मम, मयि, मह्यम्, माम् मामिकाम्, मामकाः, मत्तः, मया, मामकम् आदि उत्तम पुरुषवाची शब्दहरू आदिदेखि अन्त्यसम्म धेरै पटक बोल्नुभएको छ। जस्तै अहं १०२ पटक, मम २४ पटक, मया २१ पटक, मयि २० पटक र माम् ८४ पटक बोल्नुभएको छ। उहाँले सामान्य संसारी मनुष्यले जस्तो मायिक धरातलमा बसेर अहन्ता र ममतायुक्त बोली नबोलेर परमात्मभावमा उठेर बोल्नु भएको छ। किनभने भगवान् श्रीकृष्णले यही कुराको स्पष्ट सङ्केत गर्दै श्रीमद्भगवद्गीतामा अर्जुनलाई सम्बोधन गर्दै हे [24]अर्जुन ! तीनै लोकमा कुनै प्रयोजन सिद्ध गर्नका निमित्त मेरो कुनै कर्तव्य कर्म छँदैछैन। अर्को तर्फ तीनै लोकमा मलाई कुनै कुरा पनि प्राप्त गर्नुपर्ने छैन र अप्राप्त पनि छैन तापनि केवल निरासक्त भएर लोकसङ्ग्रहका लागि सामान्य मनुष्य जस्तो भएर नित्य र नैमित्तिक कर्म म गर्दै रहन्छु भन्नुभएको छ। परमात्माले सामान्य मान्छेले बोलेजस्तो म, मेरो, मैले, मलाई आदि अहन्ता, ममता, आदि झल्कने भाषा बोले पनि उनलाई बन्धन बन्दैन। किनभने परमात्मामा मान्छेले जस्तो सङ्कल्पविकल्प गर्ने मन, निश्चय गर्ने बुद्धि र अहं

---

२४ न मे पार्थास्ति कर्तव्यं त्रिषु लोकेषु किञ्चन।
नानवाप्तमवाप्तव्यं वर्त एव च कर्मणि ॥ – गीता ३।२२

अर्थात् अन्तःकरण नै हुँदैन।

संसारमा व्यवहार गर्दा [२५]जसको म यस कर्मको कर्ता हुँ भन्ने अहंभाव वा कर्ताभाव छैन र जसको बुद्धि शुभाशुभ कर्मको फलमा लिप्त हुँदैन त्यस्ता अहन्ता र ममताबाट माथि उठेका जीवन्मुक्त ज्ञानीलाई कुनै प्रकारको पापले छुँदैन भनेर गीतामा भगवान्‌को उपदेश आएबाट पनि एषणा र कामनामा लिप्त रजोगुणी र तमोगुणी संसारी मनुष्यलाई मात्रै तल्लो तहको अहंले बन्धनमा पार्दछ र जन्ममरणको कुचक्रमा घुमाउँदछ। किन्तु असंसारी सत्त्वगुणी ज्ञानीलाई भने यसै अहंले अहं ब्रह्मास्मिको ब्रह्मभावमा पुऱ्याउँछ भन्ने गीताबाट देखिन्छ।

अहं शब्द [२६]अस्मद् शब्दको उत्तम पुरुषको एक वचन स्वयं परमात्मा आफूलाई जनाउने शब्द हो। गीतामा *'उत्तमपुरुषस्त्वन्यः परमोत्मेत्युदाहृतः (१५।१७)'* भनेर उत्तम पुरुषवाची शब्दले परमात्मालाई लिएको छ। ब्रह्मसूत्रको शाङ्करभाष्यको उपोद्‌घात भाष्यका रूपमा आएको अध्यासको प्रथम पङ्क्तिका प्रथम शब्दका रूपमा अनात्मवाची युस्मद् र आत्मवाची अस्मद् शब्दको आध्यासिक प्रयोगबाट आफ्नू भाष्य भगवत्पाद आचार्य शङ्करले शुरु गर्नुभएबाट पनि जड र चेतनको आध्यासिक सम्बन्धबाट बनेको चित् र जडको

---

२५ यस्य नाहङ्कृतो भावो बुद्धिर्यस्य न लिप्यते।
हत्वापि स इमाँल्लोकान्न हन्ति न निबध्यते ॥ – गीता १८।१७

२६ युस्मदस्मत्प्रत्ययगोचरयोविषयविषयिणोस्तमः प्रकाशवदविरुद्धस्वभाव-योरितेतरभावानुपपत्तौ। – ब्रह्मसूत्र अध्यास

संयुक्त गाँठो नै अहं रहेछ भन्ने थाहा हुन्छ।

जीवात्माको आफ्नै कर्मफलबाट छुट्याउनै नसकिने गरी तयार भएको अचेतन युस्मद् र चेतन अस्मद्को गाँठोलाई सधैँका लागि छिन्नभिन्न पारेर र समाप्त गरेर मुक्त हुनु नै मनुष्य जीवनको सार्थकता छ। यसका लागि मुमुक्षुले सर्वप्रथम आत्मचिन्तन र आत्मविश्लेषण गरेर अहन्ता र तज्जन्य ममतालाई त्याग्ने प्रयास गर्नुपर्दछ। शरीर नै आत्मा हो भन्ने अविवेकवती पशुबुद्धिलाई हटाएर [२७]म नै ब्रह्म हुँ भन्ने भावना राख्नु पर्दछ। यस सन्दर्भमा श्रीमद्भागवत महापुराणले मुमुक्षु मरणासन्न राजा परीक्षित् जस्ता तीव्र वैराग्यसम्पन्न मुमुर्षुहरूका लागि उपदिष्ट दिव्य उपदेश अत्यन्त मननीय छ। अर्थात् मुमुक्षुले रजोगुणी अहन्ता र ममताबाट माथि उठेर शुद्ध सत्त्वगुण सम्पन्न अवस्था पुगेर म नै सर्वाधिष्ठान परब्रह्म हुँ र सर्वाधिष्ठान ब्रह्म म नै हुँ भन्ने भावना राखेर आफैँलाई आफैँले वास्तविक एकरस अनन्त अखण्ड ब्रह्मस्वरूपमा स्थित गर्नुपर्दछ। त्यसपछि अहं शब्द वाची मुमुक्षु पहिले [२८]ब्रह्म नै भएझैँ फेरि ब्रह्म नै बन्दछ।

भागवतमा उपर्युक्त अनुसार आएको उपदेशलाई श्रीधरस्वामीले आफ्नू टीकामा प्रथम 'अहं ब्रह्म' भावनाले

---

२७ अहं ब्रह्म परं धाम ब्रह्माहं परम पदम्।
एवं समीक्षन्नात्मानमात्मन्याध्याय निष्कले॥ – भागवत १२।५।११

२८ ब्रह्मैव सन् ब्रह्माप्येति। – बृहदारण्यकोपनिषद् ४।४।६

जीवात्माको शोकादिको निवृत्ति हुन्छ र दोस्रो 'ब्रह्माहम्' भावनाले ब्रह्मको पारोक्ष निवृत्ति हुन्छ भनेर लेख्नु भएको छ। पहिलो अहं ब्रह्मबाट शोकादिको निवृत्ति हुने भनेको जीवको अन्तःकरणमा रहेको मायिक मलदोष र विक्षेपदोषको निवृत्ति हुनु हो र दोस्रो व्यत्ययरूपबाट आएको 'ब्रह्माहं' बाट ब्रह्मलाई ढाकेर बसेको जीवात्माको मायिक आवरण भङ्ग हुनु भनेको हो। यसपछि मुमुक्षु साधक अहं र ममरूपी मायिक बन्धनबाट निर्मुक्त भएर सदात्मा अर्थात् ब्रह्म नै बन्दछ। ॐ ब्रह्मार्पणमस्तु।

# ४८. समाधि र साक्षात्कार

[१]शम, दम, उपरति, तितिक्षा आदि साधनहरूले सम्पन्न सर्वकर्मसन्न्यास गरेको तीव्र वैराग्ययुक्त मुमुक्षुले नै समाधिद्वारा अन्तःकरणमा आत्माको साक्षात्कार गर्दछ भन्ने श्रुतिको भनाइ देखिन्छ। यसबाट ब्रह्मसाक्षात्कारका लागि समाधि अभ्यर्हित निकटतम साधन हो भन्ने बुझिन्छ। श्रुतिमा आएको 'समाहितो भूत्वा' को अर्थ आचार्य शङ्करले आफ्नू भाष्यमा [२]इन्द्रिय र अन्तःकरणलाई रोकेर एकाग्ररूपबाट समाहित भएर भन्ने गर्नुभएको छ।

उपर्युक्त श्रुतिवचनको व्याख्या गर्दै आफ्नू ग्रन्थ विवेकचूडामणिमा भने यसलाई समाधि भनेर शङ्करले लेख्नु भएको छ। यति अर्थात् जुन मुमुक्षुको चित्त [३]शान्त भइसकेको छ, इन्द्रियहरू पूर्ण वशमा छन्, जो विषयबाट सर्वथा उपरत

---

१ शान्तो दान्त उपरतस्तितिक्षुः समाहितो भूत्वात्मन्येवात्मानं पश्यति।
— बृहदारण्यकोपनिषद् ४।४।२३

२ इन्द्रियान्तःकरणचलनरूपाद् व्यावृत्या एकाग्ररूपेण समाहितो भूत्वा।
— शाङ्करभाष्य, बृहदारण्यकोपनिषद् ४।४।२३

३ शान्तो दान्तः परमुपरतः क्षान्तियुक्तः समाधिं
कुर्वन्नित्यं कलयति यति : स्वस्थ सर्वात्मभावम्।
तेनाविद्यातिमिरजनितान्साधु दग्ध्वा विकल्पान्
ब्रह्माकृत्या निवसति सुखं निष्क्रियो निर्विकल्पः॥
— विवेकचूडामणि ३५६

छ, त्यति मात्रै नभएर क्षमाशील पनि छ भने निरन्तर समाधिका अभ्यासमा रहेर उसले सर्वात्मभावको अनुभव गर्दछ। यसबाट अविद्यारूपी अन्धकारबाट उत्पन्न भएका समस्त विकल्पहरूलाई ध्वंस गरेर निष्क्रिय र निर्विकल्प भएर आनन्दपूर्वक ऊ ब्रह्माकारवृत्तिले अवस्थित रहन्छ। यसलाई स्पष्ट गर्दै अगाडि श्रीशङ्कराचार्य भन्नुहुन्छ – [४]*'शान्तो दान्तः'* सन्न्यासी किं वा मुमुक्षुले वेदान्त श्रवण गरिसकेपछि सर्वात्मभावका सिद्धिका निम्ति समाधिको अभ्यास गर्नु पर्दछ भन्ने श्रुतिले आदेश दिएको छ।

अद्वैत वेदान्तमा आत्मसाक्षात्कारका लागि निष्काम कर्म र अहैतुकी उपासना बाहिरी साधन हुन् भने अन्तरङ्ग साधनमा श्रवण, मनन र निदिध्यास नै श्रुतिसम्मत विधान भएको विषयमा अद्वैत वेदान्तका आचार्यहरू प्रायः सहमत देखिनुहुन्छ। यसै विषयलाई लिएर ब्रह्मसूत्र र योगदर्शनमा वर्णित अष्टाङ्गयोगलाई ब्रह्मसाक्षात्कारको साधन मान्ने कि नमान्ने भन्ने सम्बन्धमा भगवान् व्यासले [५]'साङ्ख्यस्मृतिका निराकरणबाट योगस्मृतिको पनि निराकरण हुन्छ' भनेर सूत्रकै रचना गर्नुभएको छ।

---

४ सर्वात्मसिद्धये भिक्षोः कृतश्रवणकर्मणः ।
समाधिं विदधात्येषा शान्तो दान्त इति श्रुतिः । – विवेकचूडामणि ३४३

५ एतेन योगः प्रत्युक्तः । – ब्रह्मसूत्र २।१।२।३

ब्रह्मसूत्रमा अवैदिक मत निरसन गर्ने सन्दर्भमा जड प्रधानलाई जगत्‌को उपादान कारण मान्ने साङ्ख्यको मत श्रुतिसम्मत नभएकाले अवैदिक हो भनेर खण्डन गरेपछि योगले पनि प्रधानलाई साङ्ख्यका सरह नै जड प्रधानलाई नै जगत्सृष्टिको उपादान कारण मान्ने भएकाले योगको पनि खण्डन हुन्छ भनेर ब्रह्मसूत्रमा *'एतेन योगः प्रत्युक्तः'* भन्ने सूत्र आएको देखिन्छ। किनभने साङ्ख्यदर्शन जस्तै योगदर्शन पनि अप्रमाण नै हो। किन्तु साङ्ख्यीय पदार्थ वेदमा उपलब्ध हुँदैनन् तापनि योगदर्शनका प्रायः धेरैजसो भाग वेदबाट समर्थित देखिन्छन्। उपनिषद्‌हरूमा प्रतिपादित तत्त्वज्ञानलाई योगको पूर्णतया अपेक्षा भएको कुरा उक्त सूत्रको भाष्य र भामतीटीकामा समेत देखिन्छ।

उपर्युक्त सम्बन्धमा भाष्य र टीकामा समेत योगशास्त्रमा विहित यमनियमादि बहिरङ्ग र धारणा, ध्यान र समाधिलाई भने अन्तरङ्ग साधन मानिएको छ। यसलाई जोड दिने यी अन्तरङ्ग साधन विना औपनिषद ज्ञान आत्मतत्त्वको साक्षात्कार कहिल्यै पनि हुनसक्तैन भनेर पनि उल्लेख गरिएको छ। जति अंशमा साङ्ख्य र योगस्मृतिको श्रुतिसँग विरोध छैन, त्यति अंश तिनको प्रामाण्य मान्नु ठीक हुन्छ। किनभने औपनिषद ज्ञान आत्मतत्त्वका साक्षात्कारमा अपेक्षित हुनाले र वेदसँग संवादित हुनाका कारण योगस्मृति त्यसै रूपबाट प्रमाणभूत हो जुन रूपबाट अष्टकादि स्मृतिमा यसको विधान गरिएको छ। उक्त विषय वेदमा विहित

नभएकाले यसलाई स्मार्त भनिन्छ। [६]अष्टकाविधायक आश्वलायनादि स्मृतिवचनहरूलाई प्रमाण मान्नुको कारण ती वेदविरुद्ध नहुनु हो। त्यसै गरेर वेद अविरुद्ध जति अंश छ, त्यतिमात्रै योगशास्त्रको अंशलाई स्वीकार गर्नुपर्ने कुरा पनि पूर्वपक्षीको पाइन्छ।

उक्त कुरालाई आंशिकरूपमा स्वीकार गर्दै यदि योगशास्त्रको मुख्य तात्पर्य प्रधानादिको सत्तामा हुन्थ्यो त त्यो त्यस अवस्थामा प्रत्यक्ष वेदान्तश्रुतिसँग बाधित भएर योगशास्त्र अप्रमाण्य हुन्थ्यो। त्यतिमात्रै होइन, त्यस शास्त्रद्वारा विहित यमनियमादिमा पनि अविश्वास हुन्थ्यो। किन्तु योगदर्शनमा आएको अष्टाङ्गयोगलाई भने वेद अनुकूल आत्मसाक्षात्कारका लागि साधन मानिएको छ। प्रधानलाई सृष्टिको उपादानकारण मान्ने आदि केही अंशहरू द्वैतपरक भएकाले अद्वैतश्रुति अनुकूल देखिँदैनन् तापनि अष्टाङ्गयोग आदिलाई भने साधनतया लिइएको छ।

योगदर्शनमा आएको योगशब्दले ध्यानलाई बुझाउँछ। योगलाई [७]चित्तवृत्तिनिरोध भनिएको छ। त्यो प्रत्ययैकतानता-रूप ध्यानको उपाय हो। उपाय र उपेयको अभेदविवक्षामा यस्तो भनिएको हो। केवल चित्तवृत्तिनिरोधमात्रै ध्यानको

---

६ मंसिर, पौष, माघ र फाल्गुणका कृष्णपक्षीय चार अष्टमी तिथिहरूमा गरिने श्राद्धलाई अष्टका श्राद्ध भनेर आश्वलायनगृह्यसूत्र २।४।१ मा उल्लेख भएको पाइन्छ।

७ योगश्चित्तवृत्तिनिरोधः। – योगसूत्र १।२

उपाय होइन। अपितु यमनियमादि बाह्य र धारणादि आन्तरिक उपाय पनि योग अर्थात् ध्यानका साधन हुन्। भाष्यकारले उपान्तमा यदि सबै दर्शन तत्त्वज्ञानको विविध उपाय प्रस्तुत गर्दछन् भने त्यो राम्रो हो। किन्तु मोक्षप्रद तत्त्वज्ञान केवल वेदवेदान्तबाट नै हुन्छ, अरू शास्त्रबाट हुनसक्तैन भन्नुभएको छ। किनभने [८]वेद नपढेकाले त्यस ब्रह्मको ज्ञान गर्न सक्तैन भन्ने एउटा श्रुतिको वाक्य र अर्को श्रुतिमा आएको [९]म त्यस उपनिषद्बाट जान्न सकिने आत्मा अर्थात् ब्रह्मका बारेमा सोध्दछु भन्ने वाक्यबाट पनि यो कुरा ज्ञात हुन्छ।

अद्वैतवेदान्तदर्शन बाहेक अरू कुनै पनि दर्शनको श्रवण, मनन र निदिध्यासनबाट जीव र ब्रह्मको ऐक्य अर्थात् ब्रह्मसाक्षात्कार हुनसक्तैन। अरू दर्शन र शास्त्रहरू ब्रह्मसाक्षात्कारका लागि बहिरङ्ग र परम्परया अन्तरङ्ग-साधनसम्म हुनसक्तछन्। परन्तु साक्षात् साधन भने वैदिक अर्थात् औपनिषद महावाक्यको श्रवणबाट मात्र हुन सक्तछ। यस सम्बन्धमा श्रुति, स्मृति आदि वाक्यहरूबाट थाहा पाइन्छ। [१०]मोक्षका लागि मुमुक्षुले ब्रह्मज्ञान गर्नुपर्दछ। त्यसका लागि मुमुक्षु सर्वप्रथम श्रोत्रिय ब्रह्मनिष्ठ गुरुका समक्ष समित्पाणि भएर जाओस् भन्ने श्रुतिवाक्य छ। ब्रह्मसाक्षात्कारका लागि

---

८ नावेदविन्मनुते तं बृहन्तम्। – तैत्तिरीय ब्राह्मण ३।१२।९।७

९ तं त्वौपनिषदं पुरुषं पृच्छामि। – बृहदारण्यकोपनिषद् ३।९।२६

१० तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्।
– मुण्डकोपनिषद् १।२।१२

साक्षात्साधन वैदिक महावाक्य भएको कुरा [११]आचार्य श्रीशङ्करले पनि भन्नुभएको छ।

उपर्युक्त महावाक्यका सम्बन्धमा विस्तृत चर्चा गर्दै सङ्क्षेपशारीरककार आचार्य सर्वज्ञात्ममुनिले आफ्नू ग्रन्थमा साक्षात् मुक्तिको हेतु वैदिक महावाक्य नै हो भन्नुभएको छ। किन्तु यसमा केही विशिष्ट विचारणीय कुराहरू पनि भएकाले उहाँले यसको पनि अत्यन्त सङ्क्षिप्त तर सारगर्भित चर्चा गर्नुभएको छ। मोक्षमार्गतर्फ प्रवृत्त भएको मुमुक्षुले यसलाई शुरुमा नै संवेदनशील भएर विचार गर्नु अति आवश्यक छ। अन्यथा यो प्रत्युत्पादक पनि हुनसक्तछ।

मुमुक्षुले श्रोत्रिय ब्रह्मनिष्ठ गुरुका साक्षात् मुखबाट वैदिक महावाक्य श्रवण गरेमात्र ब्रह्मसाक्षात्कार हुने तथ्य श्रुतिले सर्वत्र उद्घोष गरेको छ। त्यो महावाक्य कस्तो हुनुपर्दछ र कस्तो गुरुबाट श्रवण गर्नुपर्दछ भन्ने आदिका सम्बन्धमा आचार्य मुनिले स्पष्टैसँग भन्नुभएको छ। त्यो श्रवण गरिने महावाक्य [१२]आफ्नै वेदशाखामा हुनुपर्दछ, विधिपूर्वक स्वाध्यायद्वारा श्रवण गरिएको हुनुपर्दछ, श्रद्धापूर्वक लामु समयसम्म मनन र निदिध्यासन गरिएको हुनुपर्दछ र शब्दब्रह्म र परब्रह्ममा निष्णात आचार्य अर्थात् गुरुबाट श्रवण गरिएको

---

११ तत्त्वमस्यादिवाक्योत्थं यज्जीवपरमात्मनोः ।
तादात्म्यविषयं ज्ञानं तदिदं मुक्तिसाधनम् ॥ – वाक्यवृत्तिः ६

१२ स्वाध्यायधर्मपठितं निजवेदशाखा वेदान्तभूमिगतमादरपालितञ्च ।
सन्न्यासिना परदृशा गुरुणोपदिष्टं साक्षान्महावचनमेव विमुक्तिहेतुः ॥
–सङ्क्षेपशारीरकम् ३।२९५

हुनुपर्दछ। त्यस्तो वैदिक महावाक्य मात्रै साक्षात् मुक्तिको साधन हुनसक्तछ। अरू अष्टाङ्गयोग आदि साक्षात् मुक्तिका साधन नभएर परम्परया साधन हुन सक्ने विषय श्रुतिसम्मत नै देखिन्छ।

अद्वैत वेदान्तले समाधिलाई शमदमादि षट्सम्पत्तिमध्ये छैटौं सम्पत्तिका रूपमा [१३]समाधानका नामबाट लिएको छ। समाधानको अर्थ चित्तैकाग्रता भनिएको छ। योगदर्शनले पनि अष्टाङ्गयोगलाई चित्तवृत्तिको निरोधको साधनकै रूपमा वर्णन गरेको छ। अतः समाधि वा समाधानलाई साधनकै रूपमा लिनुपर्दछ। ॐ ब्रह्मार्पणमस्तु।

१३ शमो दम उपरमस्तितिक्षा श्रद्धा समाधानञ्च चेति समदमादिसाधन-षट्सम्पत्तिः। समाधानं चित्तैकाग्रता। – तत्त्वबोधः

# ४९. महावचनमेव विमुक्तिहेतुः

[1]तत्त्वमसि आदि वाक्यले जीव र ब्रह्मको तादात्म्य अर्थात् एकताको प्रतिपादन गर्दछ। त्यस्तो एकत्वको प्रतिपादन गर्ने वाक्यको श्रवण गरेपछि मुमुक्षुले त्यसै वाक्यलाई मुक्तिको साधन भनेर जान्दछ भन्ने आद्य जगद्गुरु श्रीशङ्कराचार्यको उपदेश भएको कुरा उहाँको रचना वाक्यवृत्तिबाट अवगत हुन्छ। त्यसपछि उहाँका मुख्य शिष्य सुरेश्वराचार्यले पनि [2]तत्त्वमसि आदि वाक्यको श्रवण गरेपछि मुमुक्षुले ब्रह्मसाक्षात्कार गर्दछ, तत्पश्चात् अविद्या र त्यसका कार्यहरू समेतको भूत, वर्तमान र भविष्य तीनै कालमा निषेध हुन्छन् भन्नुभएको छ।

माथि उल्लेख भएका दुवै आचार्यहरूले तत्त्वमसि आदि वाक्यको श्रवण गर्ने भनेर लेख्नुभएको छ। तत्त्वमसिका साथ लागेर आएको आदि शब्दले तत्त्वमसि जस्तै श्रवणात्मक महावाक्यहरू चार वेदका शाखाका उपनिषद्हरूमा अरू पनि छन्। ती मध्ये आफ्नो अधिकार भएका वेदका शाखाको उपनिषद्मा पठित श्रवणात्मक महावाक्य मुमुक्षुले श्रोत्रिय

---

१ तत्त्वमस्यादिवाक्योत्थं यज्जीवपरमात्मनोः।
तादात्म्यविषयं ज्ञानं तदिदं मुक्तिसाधनम् ॥ – वाक्यवृत्तिः ६

२ तत्त्वमस्यादिवाक्योत्थसम्यग्धी जन्ममात्रतः।
अविद्या सहकार्येण नासीदस्ति भविष्यति ॥ – बृहदारण्यकोपनिषद्वार्तिक

ब्रह्मनिष्ठ गुरुबाट श्रवण गर्नुपर्दछ। त्यसबाट ब्रह्मसाक्षात्कार गर्न सकिन्छ भन्ने तात्पर्य उक्त आदि शब्दले बुझाउँछ। यो कुरा शङ्कराचार्यका प्रशिष्य तथा सुरेश्वराचार्यका शिष्य आचार्य [३]सर्वज्ञात्ममुनिले आफ्नू ग्रन्थ 'सङ्क्षेपशारीरकम्' मा स्पष्ट पारेर लेख्नुभएको छ। त्यसको गहन अध्ययन गर्न सके कुन वेदका अध्येताले कुन शाखाको महावाक्य सुन्ने र अनधिकार महावाक्यको श्रवण गर्ने धृष्टता गरेमा त्यसको [४]प्रत्यवाय के कस्तो लाग्छ भन्ने कुरा थाहा पाइन्छ। यस सम्बन्धमा यस लेखकले यसै ग्रन्थमा समाविष्ट *'तद्विज्ञानार्थं गुरुमेवाभिगच्छेत्' 'अखण्डार्थबोधकं वाक्यम्' 'अहं ब्रह्म परं धाम'* र *'स्वाध्यायोऽध्येतव्यः'* भन्ने निबन्धहरूमा उल्लेख गरिसकेको हुँदा यसमा पुनः उल्लेख गरिएन।

तत्त्वमसि महावाक्य कुन परिप्रेक्ष्यमा, के उद्देश्यले पिता उद्दालकले आफ्नू छोरा श्वेतकेतुलाई उपदेश गरेका थिए सो कुरा बुझ्नु अत्यन्त आवश्यक छ। सो कुराको उपक्रम र उपसंहार बुझेपछि मात्रै तत्त्वमसि महावाक्यको सान्दर्भिकता बुझ्न सहज हुनजान्छ। वस्तुतः श्वेतकेतुले साधनचतुष्टय-सम्पन्न मुमुक्षु भएर ब्रह्मसाक्षात्कार गर्नका लागि गुरूपसत्तिपूर्वक

---

३ स्वाध्यायधर्मपठितं निजवेदशाखावेदान्तभूमिगतमादरपालितञ्च।
सन्न्यासिना परदृशा गुरुणोपदिष्टं साक्षान्महावचनमेव विमुक्तिहेतुः॥
– सङ्क्षेपशारीरकम् ३।२९५

४ हित्वा स्वस्य द्विजो वेदं यस्त्वधीते परस्य तु।
शाखारण्डः स विज्ञेयः सर्वधर्मबहिष्कृतः॥
– लघ्वाश्वलायनस्मृतिः २४।१९

गुरु उद्दालकसँग ब्रह्मजिज्ञासा गरेको प्रसङ्ग छान्दोग्योपनिषद्मा देखिँदैन। किनभने [५]कर्मद्वारा प्राप्त भएका लोकलाई परीक्षा गरेर अर्थात् देखेर मुमुक्षु ब्रह्मज्ञानी विरक्त बनोस्। किनकि संसारमा सबै पदार्थ क्षणभङ्गुर छन्। ती क्षणभङ्गुर अनित्य वस्तुहरूले हामीहरूलाई नित्य आनन्द दिन सक्तैनन् भन्ने जानेर एकमात्र नित्य वस्तु ब्रह्मको ज्ञान गर्नका लागि हातमा समिधा लिएर श्रोत्रिय ब्रह्मनिष्ठ गुरु समक्ष मुमुक्षु पुरुष जाओस् भनेर मुण्डकोपनिषद्ले भनेको छ भने अर्को उपनिषद् छान्दोग्यले पनि [६]जसरी यस लोकमा कर्मद्वारा प्राप्त गरिएको लोक क्षीण हुन्छ, त्यसै गरेर पुण्योपार्जित परलोक पनि क्षीण हुन्छ भनेको छ। यसै कुरालाई बुझेर तीव्र वैराग्य भएको मुमुक्षु ब्रह्मज्ञानका लागि गुरु समक्ष जान्छन्। किन्तु त्यसको प्रतिकूल गुरुकुलमा १२ वर्षसम्म वेद र वेदाङ्ग अध्ययन गरेर स्नातक भएपछि चौबीस वर्षको उमेरमा उपकुर्वाण ब्रह्मचारीका रूपमा गुरुकुलबाट बिदा भएर गृहस्थाश्रममा प्रवेश गर्न आएका श्वेतकेतुलाई अत्यन्त अविनीत, स्तब्ध, महामना र आफूलाई अनूचानमानी अर्थात् ठूलो प्रवक्ता ठान्ने घमण्डी भएर घर फर्किएको व्यक्तिका रूपमा उपनिषद्ले उनको चित्रण गरेको देखिन्छ।

---

५ परीक्ष्य लोकान्कर्मचितान्ब्राह्मणो निर्वेदमायान्नास्त्यकृतः कृतेन।
तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्॥
– मुण्डकोपनिषद् १।२।१२

६ तद्यथेह कर्मजितो लोकः क्षीयत एवमेवामुत्र पुण्यजितो लोकः क्षीयते।
– छान्दोग्योपनिषद् ८।१।६

उपर्युक्त परिप्रेक्ष्यमा छोरा अर्थात् शिष्य श्वेतकेतुले पिता अर्थात् गुरुसँग जिज्ञासा राख्नुको साटो धृष्ट छोरालाई तह लगाउन पिताले नै आदेशका बारेमा प्रश्न गरेको देखापर्दछ। जुन [७]आदेशका द्वारा अश्रुत श्रुत हुन्छ, अमत मत हुन्छ र अविज्ञात विशेषरूपले ज्ञात हुन्छ। यस प्रकारको अत्यन्त गूढ अद्वैतवेदान्तगत प्रश्न पिताबाट आएपछि मात्रै आश्चर्यचकित हुँदै केही विनीत भएर छोरा श्वेतकेतु पितासँग प्रतिप्रश्न गर्दछन् हे भगवन् ! त्यो आदेश के हो भनेर।

त्यसपछिमात्रै पिता र पुत्रका बीचमा जिज्ञासा अनि उत्तर शुरु हुन्छ। पिता उक्त आदेशका रूपमा [८]एउटा माटाको डल्लो जानेमा माटाबाट बनेका सम्पूर्ण पदार्थ अर्थात् विकारहरूको ज्ञान हुन्छ, त्यसै गरेर एउटा सुनका डल्लाको ज्ञान भएमा सुनबाट बनेका सम्पूर्ण सुवर्णमय पदार्थ अर्थात् विकारहरूको ज्ञान हुन्छ र एउटा नङ काट्नेको ज्ञान अर्थात् फलामका धाउको ज्ञानबाट फलामबाट बनेका सम्पूर्ण पदार्थ वा विकारहरूको ज्ञान हुन्छ। किन कि सबै विकारहरू वाणीमा अवलम्बित केवल नाम हुन्। सत्य चाहिँ माटो, सुन र फलाममात्रै हुन्। आदेश यही हो, जुन एउटा जानेपछि त्यसबाट बनेका त्यसका विकारहरू सबै जानिन्छन्। जान्नु पर्ने त्यही

---

७ येनाऽश्रुतं श्रुतं भवत्यमतं मतमविज्ञातं विज्ञातमिति। कथं नु भगवः स आदेशो भवतीति। – छान्दोग्योपनिषद् ६।१।३

८ यथा सोम्यैकेन मृत्पिण्डेन..., लोहमणिना..., नखकृन्तनेन...., इत्येव सत्यमेवं... सोम्य स आदेशो भवतीति। – छान्दोग्योपनिषद् ६।१।४–६

विकारको कारण अविकृत वस्तु हो भनेर जबाफ दिन्छन् ।

पिताको उपर्युक्त कथनपछि अति नम्र भएर [९]'अवश्य पनि गुरुकुलमा मेरा आदरणीय गुरुदेव यस आदेशलाई जान्नु हुन्नथ्यो होला, यदि जानेका भए म जस्तो विद्यार्थीलाई भन्नु पर्ने थियो भनेर श्वेतकेतुले फेरि गुरुकुलमा जानु पर्छ कि भन्ने डरले त्यस्तो बनावटी कुरा गरे । त्यसपछि श्वेतकेतुले मलाई तपाईंले नै उपदेश गर्नुहोस् भनेर मौखिक उपसत्ति गरेपछि उद्दालकले उनलाई उपदेश दिने क्रम शुरु गरेको देखिन्छ ।

यसरी उपर्युक्त अनुसार पिता उद्दालक र पुत्र श्वेतकेतुका बीचमा संवाद देखाएर भूमिकाका रूपमा व्यावहारिक सत् माटो, सुन र फलामको उदाहरण दिएर तीबाट बनेका यावत् पदार्थहरू वाणीबाट भनिने विकार मात्र हुन् । सत्य भनेका ती विकार पदार्थहरूका उपादान कारण माटो, सुन र फलाम मात्रै हुन् भनेर उपनिषद्ले सामान्य व्यक्तिले पनि सजिलै बुझ्न सक्ने गरी उद्दालकलाई निमित्त बनाएर आख्यायिकाका माध्यमबाट अत्यन्त दुरूह तथा जगत् प्रपञ्चको एकमात्र अभिन्ननिमित्तोपादान कारण सत्को उपदेश गरेको छ ।

सत्को उपदेश गर्ने क्रममा प्रारम्भमा उपनिषद् [१०]'हे सोम्य ! यो एकमात्र अद्वितीय सत् नै थियो' भनेर शुरु गर्दछ ।

---

९ न वै नूनं भगवन्तस्त एतदवेदिषुयद्ध्येतदवेदिष्यन् कथं मे नावक्ष्यन्निति भगवाँस्त्वेव मे तद्ब्रवीत्विति तथा सोम्येति होवाच ।

– छान्दोग्योपनिषद् ६।१।७

१० सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम् । – छान्दोग्योपनिषद् ६।२।१

उपक्रमका रूपमा आएको यस मन्त्रमा केवल अद्वितीय सत्‌को उपदेश पिता उद्दालकबाट पुत्र श्वेतकेतुलाई भएको छ। प्रथम खण्डमा एउटा वस्तु जानेपछि अरू सबै वस्तुको ज्ञान हुने आदेशका बारेमा प्रसङ्ग उठेको हुँदा त्यसै एक परम कारण सत् वस्तुलाई जानेपछि त्यसबाट विवर्तित अरू सम्पूर्ण मायिक वस्तु वा विकार जानिन्छन् भन्न नै एक मात्र अद्वितीय सत्‌बाट उपदेश शुरु भएको छ।

त्यसपछि सत्‌मा विवर्तित सृष्टिको क्रमिकरूपले वर्णन गर्दै विभिन्न उदाहरणहरू दिँदै उपनिषद्‌को ६।८।७ मा गएर सबैमा अनुस्यूत [११]सत्य नै आत्मा हो। हे श्वेतकेतो ! तिमी त्यही हौ भनेर प्रथम पटक उद्दालक श्वेतकेतुलाई उपदेश दिन्छन्। यो क्रम नौपटकसम्म चल्दछ। अन्तिम उपदेश उपनिषद्‌को ६।१६।३ मा पुगेर उद्दालकले यो [१२]सबै एतद्रूप नै हो, त्यो सत्य हो, त्यो आत्मा हो। हे श्वेतकेतो ! त्यो तिमी हौ, भनेर श्वेतकेतुलाई उपदेश दिन्छन्। नवौँ पटकको उपदेशपछि श्वेतकेतुले त्यसलाई बुझे अर्थात् उनले आफू सत् आत्मा नै हुँ भनेर जाने।

उपर्युक्त अनुसार नौ नौ पटकसम्म पिता र पुत्रका बीचमा सत् आत्माका बारेमा प्रश्न र उत्तर भएर अन्तिम नवौँ पटकमा

---

११ स य एषोऽणिमैतदात्म्यमिदं सर्वं तत्सत्यं स आत्मा तत्त्वमसि श्वेतकेतो इति भूय एव मा भगवान्विज्ञापयत्विति तथा सोम्येति होवाच।
– छान्दोग्योपनिषद् ६।८।७

१२ स यथा तत्र नादाह्येतैतदात्म्यमिदं सर्वं तत्सत्यं स आत्मा तत्त्वमसि श्वेतकेतो इति तद्धास्य विजज्ञाविति विजज्ञाविति।
– छान्दोग्योपनिषद् ६।१६।३

गएर श्वेतकेतुले त्यस सत्यलाई जाने भन्ने वर्णन उपनिषद्ले गरेको छ। जुन आत्माको अभिसन्धि र अनभिसन्धिका कारण मोक्ष र बन्धन हुन्छ। जुन संसारको मूल हो, सम्पूर्ण प्रजा जसमा आश्रित र प्रतिष्ठित छन्, सारा संसार जुन रूपयुक्त हो, जुन अजन्मा, अमृत, अभय, शिव र अद्वितीय हो, त्यही सत्य हो र हे श्वेतकेतो ! तिमी त्यही हौ।

पिता उद्दालकले जिज्ञासा नै नभएको आफ्नू अज्ञानी छोरा श्वेतकेतुलाई शुरुदेखि नै जिज्ञासा जगाएर बारम्बार सत् आत्माको उपदेश गरेका थिए। पिताको उक्त उपदेश श्रवण गर्नुपूर्व श्वेतकेतु आफूलाई प्रमाता, कर्ता र भोक्ता ठान्दथे। उनी आफूलाई देह र इन्द्रियभन्दा पृथक सद्रूप सर्वात्मा भनेर जान्दैनथे। अब तिमी त्यही हौ भनेर अनेकौँ दृष्टान्तहरूका साथ हेतुपूर्वक पिताले सम्झाएपछि श्वेतकेतुले आफू सत् आत्मा भएको जाने। सद्रूप सत्य र अद्वितीय आत्माको ज्ञान भएपछि विकाररूप मिथ्या जीवात्मबुद्धिको निवृत्ति हुन्छ भनेर श्रीशङ्कराचार्यले भाष्यमा लेख्नुभएको छ।

उपक्रमको सन्दर्भमा उद्दालकले श्वेतकेतुलाई मृत्तिकाका समान एकमात्र अद्वितीय सत् नै सत्य हो भनेर व्यावहारिक विज्ञानका द्वारा उपदेश गरे। लामो उपदेशपछि तत्त्वमसि वाक्यद्वारा विकाररूप मिथ्या देहादिमा अधिकृत जीवात्मभावको निवृत्ति हुन्छ भन्ने कुरा सिद्ध हुन्छ।

यसबाट तत्त्वमसि महावाक्यले सत् आत्माको उपदेश गरेर आत्मा तीनै कालमा सत्य हो र अरू विकारहरू मिथ्या

हुन् भन्ने उपदेश गरेको छ। यस वाक्यले जीव र ब्रह्मको सोझै एकत्वको उपदेश नगरेर सत् आत्माको उपदेश गरेको देखिन्छ। यदि जीवात्मा र ब्रह्मको एकत्वका लागि श्रुतिले उपदेश गरेको भए अन्त्यमा 'तद्धास्य विजज्ञौ' अर्थात् तब श्वेतकेतुले त्यस सत्यलाई जानेँ भन्ने नै थिएनन्। यसबाट के थाहा हुन्छ भने 'सत्' 'चित्' 'आनन्द' ब्रह्मका तीन स्वरूपहरू मध्ये जड र चेतन सबैको सत्ताका रूपमा रहेको विभु सत्तत्त्वको नै यस तत्त्वमसि महावाक्यद्वारा उपदेश भएको देखिन्छ। यसैकारण नै शुक्लयजुर्वेदमा आएको *'अहं ब्रह्मास्मि'* जस्तो जीव र ब्रह्मको ऐक्यको बोध वा अनुभूति गराउने वाक्यको प्रयोग नगरेर केवल *'तद्हास्य विजज्ञौ'* भन्ने वाक्यको प्रयोग छान्दोग्योपनिषद्ले गरेको हुनसक्ने देखिन्छ।

यो *'तत्त्वमसि'* महावाक्यको श्रवण गर्ने अधिकार सामवेदाध्यायीको मात्रै भएको शास्त्रीय वचन धेरै पटक उल्लेख भइसकेको छ। अधिकारप्राप्त द्विजातिले उक्त वाक्य श्रवण गरेपछि ब्रह्मसाक्षात्कार हुन्छ वा हुँदैन ? सम्बन्धित मुमुक्षुले अनुभूति गर्ने विषय हो। अनुभव गर्ने कुरा अरूले भन्ने र थाहा पाउने हुनै सक्तैन। साधनचतुष्टयसम्पन्न अधिकारीले अत्यन्त व्यक्तिगतरूपमा एक्लै एकान्त स्थलमा योग्य ब्रह्मज्ञानी गुरुबाट महावाक्य सुन्नुपर्ने हुँदा एकजनाभन्दा बढी समूहमा श्रवण गर्न नमिल्ने कुरा पनि बुझ्नु आवश्यक छ।

बृहदारण्यकोपनिषद्मा गुरु याज्ञवल्क्यले अभय ब्रह्मको उपदेश मुमुक्षु राजा जनकलाई गरेका हुँदा 'अहं ब्रह्मास्मि'

भन्ने जीव र ब्रह्मको ऐक्य वा साक्षात्कार भएको देखिन्छ। किन्तु छान्दोग्योपनिषद्मा भने उपक्रममा आएको *'सदेव सोम्येदमग्र आसीद्'* को सत्लाई तत्त्वमसिमा आएको तत् सर्वनामले देखाएको छ। त्वं सर्वनाम श्वेतकेतुवाचक हो। विजज्ञौले त्यसै सत्लाई जाने भन्ने जनाउँछ, जीव र ब्रह्मको एकत्व भएको भने देखाउँदैन। किनभने चित्ब्रह्मको उपदेशबाट मुमुक्षुले जति सहजरूपमा साक्षात्कार गर्न सक्तछ तर सत् ब्रह्मको उपदेशबाट सक्तैन भन्ने पनि यस विवेचनाबाट थाहा हुन्छ। किनभने 'तत्त्वमसि'मा श्रवण गरिने सत्तत्त्व अधिष्ठानत्वेन अनुष्ठीयमान हो भन्ने बुझिन्छ। त्यसैकारण उपनिषद्ले विजज्ञौ अर्थात् ज्ञातवान् भनेको देखिन्छ भने 'अभयं वै जनक प्राप्तोऽसि' मा श्रवण गरिने चित्तत्त्व चेतनत्वेन प्रतीयमान अर्थात् अनुभूयमान हो। त्यसै कारण उपनिषद्ले अहं ब्रह्मास्मि भन्ने शब्दावली प्रतीकको रूपमा प्रयोग गरेको देखिन्छ। त्यसबाट जीव र ब्रह्मको एकत्वको बोध हुन्छ जसलाई शब्दान्तरमा ब्रह्मसाक्षात्कार वा मोक्षावस्था भनिन्छ।

उपर्युक्त दुई वेदहरूका महावाक्यहरू श्रोत्रिय ब्रह्मनिष्ठ गुरुहरूबाट उपदेश भएको देखिन्छ। किन्तु ऋग्वेद अन्तर्गत ऐतरेयोपनिषद्मा आएको 'प्रज्ञानं ब्रह्म' को कुनै योग्य शिष्यलाई कुनै ज्ञानी गुरुले उपदेश गरेको आख्यायिका वा व्यक्ति पाइँदैनन्। त्यतिमात्रै होइन, ती वाक्यहरू उपदेशात्मक हुन् कि अनुभवात्मक हुन् त्यो कुरा पनि स्पष्ट बुझ्न सकिँदैन। आख्यायिका वा कुनै व्यक्तिका माध्यमबाट ती वाक्यहरू

उपदिष्ट नभएर सोझै उपनिषद्हरूले उपदेश गरेका हुँदा त्यस्तो दुरूह भएको देखिन्छ।

अन्त्यमा अत्यन्त गहिरो अध्ययन, चिन्तन र मनन गरेर आत्मसात् गर्नुपर्ने मोक्षका साक्षात् साधन भएका वेदका महावाक्यहरू मध्ये कुन वेदाध्यायीले कुन महावाक्यको श्रवण गर्नु पर्दछ भन्ने पनि विचार गरेर उपदेश गर्नु राम्रो हुनेछ, अन्यथा प्रत्यवाय लाग्न सक्ने कुरा शास्त्रहरूबाट थाहा हुन्छ। ॐ ब्रह्मार्पणमस्तु।

# ५०. सर्वं खलु इदं ब्रह्म

यो सम्पूर्ण प्रपञ्च [1]ब्रह्म हो, यो सम्पूर्ण दृश्यमान् प्रपञ्च शुरुमा त्यसै ब्रह्मबाट उत्पन्न हुन्छ, अन्त्यमा त्यस ब्रह्ममा लीन हुन्छ र त्यसैमा चेष्टा गर्दछ भन्ने जानेर मुमुक्षुले शान्त भएर अर्थात् रागद्वेषरहित भएर उपासना अर्थात् चिन्तन गरोस् भनेर श्रुतिले भनेको छ। उपाधिमुक्त विशुद्ध चैतन्य सत्य हो। त्यही वस्तु प्रकारान्तरको अपेक्षाविना नित्य प्रकाशमान चित् हो। त्यही वस्तु विषयसम्बन्धबाट निरपेक्ष, दुःखले सर्वथा असंसृष्ट आनन्द हो। त्यही वस्तु नै कुनै सीमाले नबाँधिएको अनन्त पनि हो।

*‘सर्वं खल्विदं ब्रह्म’* भन्ने श्रुतिको यो उद्घोषलाई सामान्यरूपमा यो सारा जगत् ब्रह्म हो या यो ब्रह्म नै सारा जगत् हो भनेर कुन रूपमा बुझ्ने हो भन्ने जिज्ञासा उत्पन्न हुन सक्ने देखिन्छ। यो त यसको बाहिरी वाच्य अर्थ मात्रै हो। यसको वास्तविक अर्थ त लक्ष्य नै हो। अझै यस कुरालाई स्पष्टरूप्मा उल्लेख गर्ने हो भने पद अथवा वाक्यको वाच्य अर्थ त्यो हो जसका व्यवहारबाट पद अथवा वाक्यको शक्तिको ज्ञान हुन्छ, जसलाई शक्यार्थ पनि भनिन्छ। व्यवहार सर्वदा संसृष्ट अर्थको हुन्छ। किनभने शुद्ध अर्थ व्यवहारको विषय हुन सक्तैन।

---

१ सर्वं खल्विदं ब्रह्म तज्जलानिति शान्त उपासीत।
– छान्दोग्योपनिषद् ३।१४।१

साधनचतुष्टय सम्पन्न मुमुक्षुले ब्रह्मज्ञानी गुरुसमक्ष उपसन्न भएर ब्रह्मजिज्ञासा गरेपछि गुरुले सर्वप्रथम ब्रह्मको लक्षण बताउँदछन्। ब्रह्मका [२]तटस्थलक्षण र [३]स्वरूपलक्षण समेत दुवैथरी लक्षणहरू गुरुले आफ्नो मुमुक्षु शिष्यलाई विस्तारपूर्वक भन्दछन्। मुमुक्षुले ब्रह्मका दुवै लक्षण बुझिसकेपछि त्यसको [४]प्रमाण पनि गुरुबाट सुन्दछन्। लक्षण र [५]प्रमाण समेतबाट ब्रह्मको बाहिरी वृत्त्यात्मक ज्ञान मुमुक्षुलाई हुन्छ। वृत्त्यात्मक ज्ञान भएपछि [६]ब्रह्मसाक्षात्कार गर्न गुरुबाट आन्तरिक साधनका रूपमा श्रुतिमा आएको महावाक्यको श्रवण गरेर मनन र निदिध्यासनपूर्वक ब्रह्मचिन्तन गर्नुपर्दछ।

माथि उल्लेख भएका बहिरङ्ग साधन र अन्तरङ्ग साधनपछि मुमुक्षुले मोक्षको साक्षात् साधन भएको वैदिक महावाक्य श्रवण गर्दछन्। जुन [७]महावाक्य आफ्ना वेद शाखाको वेदान्तभागमा अर्थात् उपनिषद्मा आएको छ, जसलाई विधिपूर्वक पढिएको र आदरपूर्वक परिपालन पनि गरिएको

---

२ यतो वा इमानि भूतानि जायन्ते येन जातानि जीवन्ति यत्प्रयन्त्यभिसंविसन्ति। – तैत्तिरीयोपनिषद् ३।१

३ सत्यं ज्ञानमनन्तं ब्रह्म – तैत्तिरीयोपनिषद् २।१।१

४ नावेदविन्मनुते तं बृहन्तम्। – तैत्तिरीयोपनिषद् ब्राह्मण ३।१२।३

५ वेदहेतुरपि ब्रह्म तद्वेदादेव मीयते। – लघुवार्तिक १।१।३

६ आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्य ः।
– बृहदारण्यकोपनिषद् २।४।५

७ स्वाध्यायधर्मपठितं निजवेदशाखावेदान्तभूमिगतमादरपालितञ्च।
सन्न्यासिना परदृशा गुरुणोपदिष्टं साक्षान्महावचनमेव विमुक्तिहेतुः।
– सङ्क्षेपशारीरकम् ३।२९५

छ। आफ्नै वेदशाखाको महावाक्य श्रोत्रिय र ब्रह्मनिष्ठ गुरुबाट नियमविधिपूर्वक श्रवण पनि गरिएको छ भने मात्रै त्यो ब्रह्मसाक्षात्कारको साधन हुनसक्तछ, तर अरू वेदशाखाका वेदान्तभागमा अर्थात् उपनिषद्मा आएको वैदिक महावाक्यको श्रवणबाट हुनसक्तैन।

ब्रह्मज्ञानीले सकाम कर्ममा आसक्त अज्ञानीको मनमा कर्म नगरे पनि हुने रहेछ भन्ने गलत धारणा सिर्जना गर्नु हुँदैन। किनभने ब्रह्मज्ञान भइसकेपछि ब्रह्मज्ञानीले नित्य, नैमित्तिक आदि सकाम र निष्काम कर्मसमेत गर्दैनन्। त्यसकारण अज्ञानी कर्मीहरूलाई कर्मबाट विरत भएर दिग्भ्रमित हुन नदिनका लागि सर्वकर्मसन्न्यास गरिसकेका ज्ञानीले नै समाहितचित्त भएर अज्ञानीलाई कर्म गरिरहनु पर्दछ भनेर देखाएर सुबाटोमा ल्याउने उद्देश्यले कर्म गर्दै गरोस् र तिनीहरूलाई कर्म गर्न प्रोत्साहन दिँदैरहोस् भनेर [८]श्रीमद्भगवद्गीताले भनेको छ।

जुन [९]मान्छे संसारलाई र संसारका विषयहरूलाई सत्य मान्दछ त्यो मान्छे अज्ञानी हो। त्यस्ता अज्ञानीलाई श्रुतिले [१०]कृपण हो भनेको छ। किनभने मानिसको जुनि पाएर पनि

---

८ न बुद्धिभेदं जनयदज्ञानां कर्मसङ्गिनाम्।
जोषयेत्सर्वकर्माणि विद्वान्मुक्तः समाचरन्॥ – श्रीमद्भगवद्गीता ३।२६

९ न वेद कृपणः श्रेय आत्मनो गुणवस्तुदृक्।
तस्य तानिच्छतो यच्छेद् यदि सोऽपि तथाविधः॥
– श्रीमद्भागवत ६।९।४९

१० यो वा एतदक्षरं गार्ग्यविदित्वाऽस्माल्लोकात्प्रैति स कृपणः
– बृहदारण्यकोपनिषद् ३।८।१०

जो ब्रह्मज्ञान नगरीकनै मरेर जान्छ र आफ्नो वास्तविक कल्याणलाई बुझ्दैन भने त्यो संसारी कृपण हो। यसै कारणले नै ऊ संसार र संसारका विषयलाई चाहन्छ। यस्ता अज्ञानीलाई कसैले उसले मन पराएको मिथ्या संसारी वस्तु दिन्छ भने त्यो पनि उस्तै अज्ञानी नै हो। जुन [११]मानिसले मुक्तिको स्वरूप जानेको छ त्यसले अज्ञानीलाई पनि सकाम कर्ममा लाग्ने उपदेश अवश्य दिँदैन। उदाहरणका लागि असल चिकित्सकले रोगीले इच्छा गऱ्यो भने पनि रोगीलाई अहित गर्ने कुपथ्य कुनै हालतमा पनि दिँदैन।

त्यो ब्रह्म [१२]निष्कल हो, निष्क्रिय हो, निरवद्य हो र निरञ्जन हो भनेर श्रुतिले भनेको छ। किनभने ब्रह्मका कला अर्थात् अवयव हुँदैनन्। ब्रह्म आफ्नै महिमास्थित कूटस्थ हो। ब्रह्म विकाररहित, अनिन्द्य, निर्लेप, मोक्षको हेतु र इन्धनरहित झलझलाउँदो आगाको फिलुङ्गो जस्तो स्वयं प्रकाशस्वरूप हो भन्ने वेदको उद्घोष छ।

वस्तुतः ब्रह्मदेखि अतिरिक्त संसारमा अरू वस्तु छँदै छैन सर्वत्र ब्रह्म मात्रै छ। ब्रह्म नै विवर्तित भएर यो मिथ्या जगत् देखा पर्दछ र अन्त्यमा उसैमा मिल्दछ, जसरी बालुवा सूर्यको किरण नै पानी भएर देखा पर्दछ र त्यो प्रातिभासिक

---

११ स्वयं निःश्रेयसं विद्वान् न वक्त्यज्ञाय कर्म हि।
न राति रोगिणोऽपथ्यं वाञ्छतो हि भिषक्तमः ॥ – श्रीमद्भागवत ६।९।५०

१२ निष्कलं निष्क्रियं शान्तं निरवद्यं निरञ्जनम्।
अमृतस्य परं सेतुं दग्धेन्धन इवानलम् ॥ – श्वेताश्वतरोपनिषद् ६।१९

पानी सूर्यका किरणमा नै विलीन हुन्छ। महाकालरूप ब्रह्मले [13]ब्राह्मण अर्थात् चिदाभास चेतनतत्त्व र क्षत्र अर्थात् चिदाभासको आधार जड शरीर वा मिथ्या प्रपञ्चलाई पनि भात खाएझैँ गरेर खान्छ। त्यसपछि महासृष्टिका प्रथम प्रभातमा उदाएको समय अर्थात् काललाई पनि ब्रह्मले आफैँमा समेट्तछ। यस्तो परब्रह्मलाई अज्ञानीले जान्न सक्तैन, ज्ञानीले मात्रै जान्न सक्तछ।

[14]ब्रह्ममात्रै सत्य हो, यो दृश्यमान् जगत् मिथ्या हो र जीवात्मा नै परं ब्रह्म हो भनेर जसले जान्दछ त्यस पुरुषले वेदान्त अर्थात् उपनिषद् जान्यो, अरू शास्त्र पढ्नु आवश्यक छैन भन्ने उद्घोष वेदान्त गर्दछ भनेर भगवत्पाद श्रीशङ्कराचार्यले आफ्नू ग्रन्थमा उल्लेख गर्नुभएको छ।

यो जगत् आदिमा अर्थात् सृष्टिभन्दा पहिले पनि थिएन र प्रलयपछि पनि रहँदैन, [15]केवल वर्तमान कालमा मात्रै देखिन्छ। अतः जुन वस्तु पहिले अर्थात् भूतकालमा पनि थिएन र पछि अर्थात् भविष्यत्कालमा पनि रहँदैन त्यो बीचमा मात्र मुलुक्क देखा परेको हो भने त्यसलाई नभएकै सरह मिथ्या मान्नु पर्दछ। किन्तु ब्रह्म भने भूत, वर्तमान र भविष्यत्

---

१३ यस्य ब्रह्म च क्षत्रञ्च उभे भवत ओदनः।
मृत्युर्यस्योपसेचनं क इत्था वेद यत्र सः॥ – कठोपनिषद् १।२।२५

१४ ब्रह्म सत्यं जगन्मिथ्या जीवो ब्रह्मैव नापरः।
अनेन वेद्यं सच्छास्त्रमिति वेदान्तडिण्डिमः॥ – ब्रह्मज्ञानावलीमाला २०

१५ आदावन्ते च यन्नास्ति वर्तमानेऽपि तत्तथा।
वितथैः सदृशाः सन्तोऽवितथा इव लक्षिताः॥ – माण्डूक्यकारिका २।६

तीनै कालमा यथावत् रहने हुँदा ब्रह्म सत्य भएको र जगत् मिथ्या भएको श्रुति र युक्तिसमेत प्रमाणित हुन्छ।

यसलाई अझै स्पष्ट गर्दै आचार्य गौणपादले न [१६]प्रलय नै छ, न सृष्टि नै छ, न कोही बाँधिएको छ, न कुनै साधना गर्ने साधक छ, न कोही मुमुक्षु छ र न कोही मुक्त छ, यही परम सत्य हो भनेर आफ्नू माण्डूक्यकारिकामा भन्नुभएको छ। किनभने यो जगत् जन्मेकै छैन, केवल अद्वितीय ब्रह्ममात्रै तीनै कालमा बाधित नभएर सबै कालमा एकनास रहने सत्य हो। यो सबै आत्मा मात्रै हो।

अन्त्यमा [१७]परमार्थज्ञानद्वारा संस्कारित मनले नै आचार्योपदेशपूर्वक ब्रह्मसाक्षात्कार गर्नुपर्दछ। त्यस विशुद्ध तथा अद्वितीय ब्रह्ममा नाना अर्थात् जगत् रत्ति मात्रामा पनि छँदैछैन। किन्तु ब्रह्ममा नानात्व नभएर पनि जुन अज्ञानीले ब्रह्ममा नानात्वको अर्थात् मिथ्या जगत्को आरोप गर्दछ, त्यसले यस मिथ्या जगत्मा बारम्बार जन्मने र मर्ने काम अनन्त कालसम्म गरिरहनुपर्दछ। अतः ब्रह्म मात्रै सबै हो र त्यस अतिरिक्त अरू मायिक वस्तु किञ्चित् मात्रामा छैनन्।

ॐ ब्रह्मार्पणमस्तु।

---

१६ न निरोधो न चोत्पत्तिर्न बद्धो न च साधकः।
न मुमुक्षुर्न वै मुक्त इत्येषा परमार्थता ॥ – माण्डूक्यकारिका २।३२

१७ मनसैवानुद्रष्टव्यं नेह नानास्ति किञ्चन।
मृत्योः स मृत्युमाप्नोति य इह नानेव पश्यति ॥
– बृहदारण्यकोपनिषद् ४।१९

# ५१. स्वाध्यायोऽध्येतव्यः

वेदको महावाक्य शब्द *'महत् च तद् वाक्यम्'* यस व्युत्पत्तिबाट बन्दछ। जीव र ब्रह्मको एकत्व बुझाउने वाक्यलाई महावाक्य भनिन्छ। किन्तु ब्रह्मको स्वरूपलाई बुझाउने वेदवाक्यलाई स्वरूपलक्षण र तटस्थ अवस्थालाई बुझाउने लक्षणलाई तटस्थ लक्षण भनिन्छ।

यस महावाक्यलाई स्पष्टरूपमा बुझ्नका लागि मैले धेरै मिहिनेत गर्नु परेको थियो। जसको बेलीविस्तार मैले पराविद्याको सिद्धवस्तुमा दिएको छु। ६ दशकदेखि अद्वैत वेदान्तको विद्यार्थी पनि भएको हुँदा म वेदान्तका अरू महत्त्वपूर्ण विषयका साथै महावाक्यको गूढ अर्थ बुझ्न चाहन्थेँ। बुझ्ने सन्दर्भमा मैले के कस्तो प्रयास गरेँ भन्ने कुराका साक्षी त्यसै विषयमा घुमाइफिराई लेखेका लेखहरू नै हुनसक्तछन्। उदाहरणका लागि परमसत्य २०६९ मा 'तत्त्वमसि', 'अहं ब्रह्मस्मि', 'पिताको उपदेश पुत्रलाई' आदि लेखहरू परेका छन्। 'ब्रह्मविद्या' २०७० मा 'प्रज्ञानं ब्रह्म' 'अयमात्मा ब्रह्म', 'महावाक्य', 'आत्मा नै ब्रह्म' आदि लेखहरू समाविष्ट छन्। त्यसै गरेर पराविद्या २०७१ मा 'अधिष्ठानसाक्षात्कार', 'प्रतिपाद्यवस्तु', 'स्वस्वरूपानुभूति' आदि निबन्धहरूमा पनि यी विषय दिएको छु।

उपर्युक्त अनुसार बारम्बार विभिन्न शीर्षक दिएर विभिन्न

शैलीमा महावाक्यका विषयमा मैले गरेको जिज्ञासाको एउटा कारण अद्वैतवेदान्त पढेर पनि मैले महावाक्यको अर्थ नै नबुझ्नु ठुलो विडम्बना हो भने अर्को कारण महावाक्य नबुझीकन कसरी मुमुक्षु आफू ब्रह्म भएको अनुभव गर्न सक्तछ ? भन्ने प्रश्न पनि हो ।

केही वर्ष अघि अध्ययनका सन्दर्भमा महावाक्य बुझ्न मैले मानिआएका र पत्याएका एक जना गुरुलाई सोध्न पुगेँ महावाक्य कुन हो ? भनेर । उहाँले सहजरूपमा भनिदिनु भयो – गुरुबाट उपदेश सुन्ने महावाक्य *'तत्त्वमसि' (छा.उ.६।८।७)* हो र आफैँ अनुभूति गर्ने महावाक्य *'अहं ब्रह्मास्मि' (बृ.उ.१।४।१०)* हो । खास गुरुले उपदेश गर्ने वेदवाक्य नै महावाक्य मानिन्छ भन्दै उहाँले प्रमाणका रूपमा श्रीशङ्कराचार्यले उपदेशसाहस्रीमा 'तत्त्वमसि' लाई महावाक्य भनेर लेख्नुभएको छ र उहाँका अरू ग्रन्थहरूमा पनि 'तत्त्वमसि' लाई महावाक्य भनिएको छ भनेर सशक्तरूपमा भन्नुभयो । आफूले पत्याएका विद्वान् गुरुको उक्त भनाइलाई नै मैले विश्वास गरेँ र तदनुरूप म अध्ययन र लेखन पनि गर्दै गएँ । अध्ययनको सन्दर्भमा शङ्कराचार्यको [1]दक्षिणामूर्तिस्तोत्रमा 'तत्त्वमसि' महावाक्यको उल्लेख भएको पाएँ । यसबाट गुरुको

---

१ यस्यैव स्फुरणं सदात्मकमसत्कल्पार्थकं भासते,
साक्षात्तत्त्वमसीति वेदवचसा यो बोधयत्याश्रितान् ।
यत्साक्षात्करणाद्भवेन्न पुनरावृत्तिर्भवाम्भोनिधौ,
तस्मै श्रीगुरुमूर्तये नम इदं श्रीदक्षिणामूर्तये ॥
– श्रीदक्षिणामूर्तिस्तोत्रम् २।३

भनाइको अझै पुष्टि भएको सम्झिएर मैले त्यसैलाई आधार मानेर आफ्ना लेखहरूमा पनि सोही कुरा लेखेँ।

उपर्युक्त अनुसार मलाई गुरुवाक्यमा विश्वास थियो तापनि शास्त्रको अध्ययन गर्दै जाँदा श्रीसुरेश्वराचार्यको बृहदारण्यकोपनिषद्वार्तिकमा 'तत्त्वमसि'लाई मात्रै महावाक्य नभनेर [२]तत्त्वमसि आदि अरू महावाक्यहरूबाट जीव र ब्रह्मको एकत्व हुने कुरा आएपछि एउटै मात्र उपदेशात्मक महावाक्य नभएर अरू पनि रहेछन् भन्ने मलाई लाग्यो। खोजी गर्ने मेरो काम जारी नै रह्यो। मलाई के पनि लाग्यो भने आचार्य श्रीशङ्करले 'तत्त्वमसि' भनेर लेख्नु भएको छ, तर आदि भनेर लेख्नुभएको छैन। किन्तु श्रीसुरेश्वराचार्यले भने बृहदारण्यकोपनिषद्वार्तिकमा धेरै ठाउँमा र नैष्कर्म्यसिद्धि आदि ग्रन्थहरूमा पनि 'तत्त्वमसि' आदि लेख्नुभएको भए तापनि मैले शिष्यको भनाइ भन्दा गुरुको नै भनाइ प्रामाणिक हुने ठानेँ र त्यसैमा विश्वास गरिरहेँ। किन्तु महावाक्यको खोज गर्ने सन्दर्भमा एक दिन आचार्य श्रीशङ्करको ग्रन्थ वाक्यवृत्ति

---

२ तत्त्वमस्यादिवाक्योत्थसम्यग्धीजन्ममात्रतः।
अविद्यासह कार्येण नाऽऽसीदस्ति भविष्यति॥
– बृहदारण्यकोपनिषद्वार्तिक १।१।३

३ तत्त्वमस्यादिवाक्योत्थं यज्जीवपरमात्मनोः।
तादात्म्यविषयं ज्ञानं तदिदं मुक्तिसाधनम्॥ – वाक्यवृत्तिः ६
तत्त्वमस्यादिवाक्योत्थं वाक्यश्रवणजन्यं जीवब्रह्मतादात्म्यविषयमुभयोरपि स एवाऽऽत्मा जीवस्य य आत्मा स्वरूपं स एव परमात्मनः परमात्मनो य आत्मा स्वरूपं स एव जीवस्येति तदात्मा तस्य भावस्तादात्म्य-मेकत्वमित्यर्थः। – विश्वेश्वरविरचितटीका, वाक्यवृत्तिः

पल्टाउन पुगेँ। त्यस ग्रन्थमा उहाँले [३]तत्त्वमसि आदि वाक्यको उल्लेख गरेको पाएँ। त्यसपछि श्रीशङ्करले पनि एउटा मात्रै उपदेशात्मक वाक्य नमानेर अरू पनि मान्नुभएको रहेछ। यसै अनुसार उहाँका शिष्य श्रीसुरेश्वराचार्यले पनि लेखेका रहेछन् भन्ने मलाई ज्ञान भयो। मलाई एकजना गुरुले तत्त्वमसिमात्रैलाई महावाक्य भनेर आचार्य श्रीशङ्करका आधारमा भन्नुभएको पनि प्रमाणित हुन आएन। मेरो भ्रम पनि समाप्त भयो।

त्यसपछि मेरो आश्रममा नियमितरूपमा हुने ब्रह्माभ्यासका समयमा मैले उपस्थित विद्वान्हरूका बीचमा उक्त कुराको उत्थापन गरेँ। छलफलका क्रममा उक्त तत्त्वमसि महावाक्य सामवेदीहरूको भएकाले वेदका अरू शाखाका अध्येताहरूका लागि यो वाक्य उपदेशात्मक महावाक्य हुन नसक्ने कुरामा हामीहरू सहमत भयौँ। किनभने आचार्य श्रीशङ्करले पनि तत्त्वमसिमात्रै उपदेशात्मक महावाक्य नभनेर आदि भन्नुभएको हुँदा अरू वेदका शाखाहरूमा पनि हुनुपर्ने ठहर भयो। यसका लागि अद्वैतवेदान्तका विद्वान्हरूले आ-आफ्ना सम्बन्धित वेदका शाखाहरूमा खोजेर निक्यौल निकाल्नुपर्ने भन्ने ब्रह्माभ्यासका सहभागी विद्वान्हरूको मत थियो। उक्त कुरा आचार्य श्रीशङ्करको ग्रन्थ वाक्यवृत्तिका टीकाकार आचार्य विश्वेश्वरको टीकामा पनि पाइन्छ।

उपर्युक्त ब्रह्माभ्यासको निर्णयपछि यो लेखक आफ्नू वेदका शाखामा निहित उपदेशात्मक महावाक्यको अन्वेषण

तर्फ प्रवृत्त भयो। जिज्ञासा राख्ता धेरै विद्वान्हरू तर्कन खोज्ने, अनभिज्ञता देखाउने र झर्को पनि मान्ने गरेको मैले पाएँ। किन्तु मेरो अन्वेषणको क्रम भने रोकिएन। एकदिन अद्वैतवेदान्तका स्वनामधन्य, प्रवचनपटु, शिष्यशिष्या धेरै भएका र आफूभन्दा जान्ने अर्को वेदान्ती नेपालमा नभएको भनेर घोषणा गर्दै हिँड्ने विद्वान् समक्ष यो प्रश्न लिएर म उपस्थित हुन पुगेँ। किन्तु दुर्भाग्य त्यति महत्त्वपूर्ण प्रश्नको स्वागत गर्नुको साटो उल्टै रिसाउँदै त्यस्तो खोजी गर्दै नहिँडेर जे छ त्यसैबाट ज्ञान गर्नु भन्ने रुखो जबाफ उहाँले दिनुभयो। अर्का विद्वान्ले भने नरिसाइकन उल्टो अशास्त्रीय जबाफ दिनुभयो।

यसरी शास्त्रीय प्रश्न गर्दाखेरि अशास्त्रीय उत्तर दिएपछि मैले उहाँहरूबाट अरू अपेक्षा गर्नु अर्थहीन सम्झेर आफैँ नै यस विषयमा अन्वेषण गर्न थालेँ। त्यस क्रममा मैले श्रीसर्वज्ञात्ममुनिको सङ्क्षेपशारीरकम्मा सम्बन्धित आफ्नो वेदशाखाको [४]वेदान्तभागमा आएको, स्वाध्याय मर्यादाले पढिएको, सादर परिपालना गरिएको र संन्यासी अर्थात् तत्त्वदर्शी ब्रह्मज्ञानी गुरुद्वारा उपदिष्ट महावाक्य नै साक्षात् मोक्षको हेतु हो भनेर स्पष्ट उल्लेख भएको पाएँ। यसबाट आफ्ना शुक्लयजुर्वेद अन्तर्गतका उपनिषद्मा पठित

४ स्वाध्यायधर्मपठितं निजवेदशाखावेदान्तभूमिगतमादरपालितञ्च।
सन्न्यासिना परदृशा गुरुणोपदिष्टं साक्षान्महावचनमेव विमुक्तिहेतुः॥
– सङ्क्षेपशारीरकम् ३।२९५

उपदेशात्मक महावाक्यहरू खोज्न मलाई दिग्दर्शन प्राप्त भयो ।

सङ्क्षेपशारीरकम्‌को उपर्युक्त श्लोकमा सर्वप्रथम उपदेशात्मक महावाक्य आफ्नै वेदशाखाको वेदान्तभागमा आएको हुनुपर्दछ भनेर उल्लेख भएको छ । मैले माथि उल्लेख गरेका महात्मा गुरुको भनाइ अनुसार अरू नै वेदशाखाको महावाक्य अर्थात् सामवेद अन्तर्गतको प्रचलित र प्रसिद्ध 'तत्त्वमसि' महावाक्य गुरुबाट सुनेर ब्रह्मज्ञान गरेमा [५]शाखारण्ड भनिने शास्त्रीयवचन भएकाले त्यसो हुन नदिन प्रयास गरेँ । आचार्य मुनिले पनि किटेरै आफ्नै वेदशाखाको वेदान्त भागमा आएको उपदेशात्मक महावाक्य हुनुपर्दछ भन्नुभएको रहेछ भन्ने मलाई लाग्यो ।

दोस्रो कुरा [६]स्वाध्याय गर्दा गुरुसँग विधिपूर्वक सुनेर प्राप्त गरेको हुनुपर्दछ। यसमा 'स्वाध्यायोऽध्येतव्यः' भनेको आफ्नै वेदको अध्ययन गर्ने भनेको हो। यसै कारण वेदमा आफ्नै वेदको शाखा नै पढ्ने पढाउने गर्नुपर्छ, प्रमाद गर्नु हुँदैन भनिएको हो । यस कुरालाई मुनिले स्पष्टसँग नै लेख्नुभएको छ। [७]ब्राह्मणले

---

५ हित्वा स्वस्य द्विजो वेदं यस्त्वधीते परस्य तु ।
शाखारण्डः स विज्ञेयः सर्वधर्मबहिष्कृतः ॥
– लघ्वाश्वलाययनस्मृतिः २४।१९

न जातु परशाखोक्तं बुधः कर्म समाचरेत् ।
आचरन् परशाखोक्तं शाखारण्डः स उच्यते ॥
– वसिष्ठवचन, संस्कारगणपति पृ.१०

६ स्वाध्यायमधीयीत – तैत्तिरीय आरण्यक २।१०।१२
स्वाध्यायोऽध्येतव्यः – शतपथब्राह्मण १५।५।७।२१

७ स्वाध्यायप्रवचनाभ्यां न प्रमदितव्यम् । – तैत्तिरीयोपनिषद् १।११
ब्राह्मणेन निष्कारणो धर्मः षडङ्गो वेदोऽध्येयो ज्ञेयश्च । – श्रुतिः

विनाकारण नै वेद धर्म अर्थात् नियमपूर्वक षडङ्गसहित पढ्नु पर्दछ र वेदको अर्थ तात्पर्य सहित जान्नु पर्दछ भनेर वेदले नै भनेको हुँदा आचार्यले *'स्वाध्यायधर्मपठितम्'* भनेर लेख्नुभएको हो भनेर बुझ्नुपर्दछ।

तेस्रो कुरा विधिपूर्वक गुरुसँग सुनेर प्राप्त गरेपछि श्रद्धापूर्वक दीर्घ समयसम्म मनन गरेर आराधित हुनुपर्दछ। अत्यन्त उपेक्षा र अश्रद्धा गरिएमा महावाक्य श्रवणबाट प्राप्त हुनुपर्ने ब्रह्मसाक्षात्कार मुमुक्षुलाई हुन नसक्ने कुराको सङ्केत पनि मुनिले आदरपालितञ्च भन्ने वाक्यांश दिएर गर्नुभएको छ।

चौथो कुरा कस्तो र को गुरुबाट उक्त महावाक्य सुन्ने भन्ने सम्बन्धमा 'सन्न्यासिना परदृशा' भन्ने वाक्य दिनु भएको छ। त्यसमा आएको सन्न्यासी शब्दको अर्थ [८]मुण्डकोपनिषद्मा आएको श्रोत्रिय ब्रह्मनिष्ठ गुरु भन्ने बुझ्नुपर्दछ। गेरुवा वस्त्रधारी लिङ्ग सन्न्यासी भनेर बुझ्नु हुँदैन। सो कुरा [९]मधुसूदन सरस्वतीले सङ्क्षेपशारीरकम् ग्रन्थको आफ्नू टीकामा सङ्केत गर्नुभएको छ।

उपर्युक्त अनुसार सुनिएको र श्रद्धापूर्वक आराधना गरिएको, आफ्नो वेदशाखामा आएको उपदेशात्मक महावाक्यबाट मात्रै ब्रह्मको साक्षात्कार वा अपरोक्षबोध हुनसक्तछ। अन्यथा हुन नसक्ने कुरा स्पष्टसँग मुमुक्षुले बुझ्नु पर्दछ।

---

८ सन्न्यासिना ब्रह्मनिष्ठाया सन्न्यासिन एव सम्भवादेवमुक्तम्।
– सङ्क्षेपशारीरकम् टीका ३।२९५

९ तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत्समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्।
– मुण्डकोपनिषद् १।२।१२

आफ्नै वेदशाखाको वेदान्तभागमा पठित उपदेशात्मक महावाक्य म जस्तो माध्यन्दिनीयवाजसनेयिशुक्लयजुर्वेद-शाखाध्यायीका लागि कुन हुनसक्तछ ? भन्ने प्रश्न मेरा अगाडि उपस्थित हुने देखिन्छ । यसका लागि यस शाखा अन्तर्गतको शतपथब्राह्मण र त्यस अन्तर्गत बृहदारण्यकोपनिषद् हो । अर्को उपनिषद् शुक्लयजुर्वेदको संहिता भागको अन्तिम चालीसौँ अध्यायमा पर्ने ईशावास्योपनिषद् हो ।

उपर्युक्त दुवै श्रुतिमा धेरै महावाक्यहरू पाइन सक्तछन् गहिरो अध्ययन र अनुशीलन गर्दै जाँदा । किन्तु खोजिएको भने आत्मा र परमात्माका बीचमा अर्थात् जीव र ब्रह्मका बीचमा सोझै [10]एकता वा अभेदको उपदेश गर्ने महावाक्य हो । यस क्रममा बृहदारण्यकोपनिषद् अन्तर्गत श्रोत्रिय ब्रह्मनिष्ठ गुरु याज्ञवल्क्यले शिष्य राजा जनकलाई तिमी [11]अभय ब्रह्म हौ वा भयौ भनेर उपदेश गरेको देखिन्छ । यसैलाई उपदेशात्मक महावाक्यका रूपमा माध्यन्दिनीयवाजसनेयिशुक्लयजुर्वेद-शाखाध्यायीले लिनु उपयुक्त हुने देखिन्छ । यो भन्दा उपयुक्त अर्को उपदेशात्मक महावाक्य विद्वान्हरूको सूक्ष्म दृष्टिले पत्ता लगाएर अगाडि प्रस्तुत हुन सके सबै कृतार्थ हुने थियौँ ।

उपर्युक्त अनुसार उपदेशात्मक महावाक्य आफ्नै वेदको शाखाबाट प्रस्तुत गर्दा विद्वान्हरूबाट अनुभवात्मक महावाक्य

---

१० अखण्डबोधकं वाक्यं महावाक्यम्, यद्वा अभेदबोधकं वाक्यं महावाक्यम् ।
– सङ्क्षेपशारीरकम् ।

११ अभयं वै जनक प्राप्तोऽसि । – बृहदारण्यकोपनिषद् ४।२।४

'म [12]ब्रह्म हुँ' भन्ने पहिले र 'तिमी [13]ब्रह्म हौ' भन्ने वाक्य पछि आएको हुँदा यो मिल्न सक्तैन भन्ने तर्क प्रस्तुत हुन सक्ने देखिन्छ। किनभने सामान्यतया उपदेश पहिले र अनुभव पछि हुने 'तत्त्वमसि' को [14]उपदेश पहिले र [15]विजज्ञौ पछि आएको हुँदा त्यस्तो भनाइ आउनु स्वाभाविक नै हो। किन्तु मीमांसादर्शनले वाक्यक्रमलाई नमानेर अर्थक्रमलाई मान्यता दिएको छ। जस्तै पहिले 'अग्निहोत्रं जुहोति' आएको छ र पछि 'यवागूं पचति' भनेर आएकोमा यवागूपाक भन्दा पहिले अग्निहोत्रकर्म हुनै सक्तैन। अतः अर्थक्रम अनुसार 'यवागूं [16]पचति' लाई पहिले मानेर 'अग्निहोत्रं जुहोति'लाई पछि मानिए जस्तै यहाँ पनि पछि आएका 'अभयं वै जनक प्राप्तोऽसि'लाई पहिले मानेर अर्थक्रम अनुसार 'अहं ब्रह्मास्मि' लाई पछि मान्नु पर्दछ। यस सम्बन्धमा जैमिनिदर्शनको तृतीयाध्यायमा विनियोगबोधक श्रुति [17]लिङ्ग आदि छ थरी प्रमाणहरू दिइएका छन्। त्यसको अर्थ अनुसार उत्तरभन्दा पूर्व प्रबल भएकाले वाक्यभन्दा श्रुतिले जीव र आत्माको

---

१२ अहं ब्रह्मास्मि। – बृहदारण्यकोपनिषद् १।४।१०

१३ अभयं वै जनक प्राप्तोऽसि। – बृहदारण्यकोपनिषद् ४।२।४

१४ स य एषोऽणिमैतदात्म्यमिदं सर्वं तत्सत्यं स आत्मा तत्त्वमसि श्वेतकेतो इति। – छान्दोग्योपनिषद् ६।८।७–६।१६।३

१५ तद्धास्य विजज्ञाविति विजज्ञाविति। – छान्दोग्योपनिषद् ६।१६।३

१६ अग्निहोत्रं जुहोति। यवागूं पचति। – तैत्तरीयसंहिता १।५।९।१

१७ श्रुतिलिङ्गवाक्यप्रकरणस्थानसमाख्यानां समवाये पारदौर्बल्यमर्थविप्रकर्षात्। – जैमिनिसूत्र ३।३।१३

एकत्व प्रतिपादन गर्न खोजेको हुँदा श्रुति अनुसार अर्थ बलवान् हुन्छ भन्ने हो। अतः उपदेशात्मक वाक्यको क्रम पछि भए पनि अर्थक्रम अनुसार उपदेशात्मक वाक्यको प्राधान्य हुन्छ। उपदेश नै गुरुबाट नसुनीकन अनुभूति नहुने भएकाले यहाँ पनि *'अग्निहोत्रं जुहोति यवागूं पचति'* को क्रम अनुसार गर्नु पर्ने देखिन्छ। यसबाट श्रुतिको प्रकरण अनुसारको क्रम पनि मिल्न जाने देखिन्छ। अतः शुक्लयजुर्वेद-शाखाध्यायीहरूले गुरुबाट श्रवण गर्नुपर्ने उपदेशात्मक महावाक्य 'अभयं वै जनक प्राप्तोऽसि' नै हुने देखिन्छ।

उपर्युक्त भनाइमा आद्यजगद्गुरु श्रीशङ्कराचार्यको पनि सहमति देखिन्छ। किनभने उहाँले पाठक्रमाद् अर्थक्रमो बलीयान्' अर्थात् पाठक्रमभन्दा अर्थक्रम बलियो हुन्छ भन्ने सिद्धान्त अनुसार बृहदारण्यकोपनिषद्को ४।२।४ मा पठित 'अभयं वै जनक प्राप्तोऽसि' उपदेशात्मक महावाक्यलाई प्रथमक्रममा राखेर बृहदारण्यकोपनिषद्को १।४।१० मा शुरुमा पठित *'तदात्मानमेवावेदहं ब्रह्मास्मीति तस्मात्तत्सर्वम-भवत्'* भन्ने अनुभवात्मक महावाक्यलाई ब्रह्मसूत्रको *'तत्तु समन्वयात् १।१।४।४'* सूत्रको शाङ्करभाष्यमा पाठक्रमलाई छोडेर अर्थक्रमलाई प्राथमिकता दिएर लेख्नुभएको छ। उहाँले यस्तो गर्नुको तात्पर्य गुरुको तिमी ब्रह्म हौ भन्ने उपदेश गरेपछि मुमुक्षुमा मनन, निदिध्यासन र ब्रह्माभ्यास-पछिमात्रै आफू ब्रह्म भएको अनुभूति अर्थात् ब्रह्मसाक्षात्कार हुनसक्तछ भन्ने हो।

जीव र ब्रह्मको एकताबोधक महावाक्यमा आएको शुद्धसत्त्वविशिष्ट संवित्लाई बुझाउने पद वा शब्दहरू[१८]संसर्ग वा विशिष्ट अर्थात् एक पदार्थभन्दा विशिष्ट अपरपदार्थलाई वाक्यार्थ मान्न विद्वान्हरूलाई स्वीकार्य छैन। परन्तु अखण्ड एकरूप चैतन्य नै उक्त वाक्यको अर्थरूप मान्न स्वीकार्य छ भनेर आचार्य श्रीशङ्करले वाक्यवृत्तिमा लेख्नुभएको छ।

वाक्यवृत्तिको उक्त कारिकाको व्याख्या प्रत्यक्तत्त्व-प्रदीपिकामा यसरी गरिएको छ – [१९]शब्दहरूको जुन संसर्गागोचर प्रमा ज्ञानको हेतुता या एक प्रातिपदिकार्थमात्रको बोधकता हो त्यसैलाई अखण्डार्थकत्व भनिन्छ।

जीव र ब्रह्मको अखण्डार्थबोधक संवित्लाई प्रातिपदिकार्थ भनिन्छ। जुन वस्तुको नियत उपस्थिति हुन्छ, त्यही नै [२०]प्रातिपदिकार्थ हो। त्यो नै महावाक्यको अखण्डार्थकत्व हो। यस परिभाषा अनुसार 'अभयं वै जनक प्राप्तोऽसि' महावाक्यमा असि नामपद हो र त्यसैमा प्रातिपदिकार्थता छ। अभय नै [२१]ब्रह्म हो भनेर श्रुतिमा आएको देखिन्छ।

---

१८ संसर्गो वा विशिष्टो वा वाक्यार्थो नात्र सम्मतः।
अखण्डैकरसत्वेन वाक्यार्थो विदुषां मतः ॥ – वाक्यवृत्तिः ३८

१९ संसर्गासङ्गिगम्यग्धीहेतुता या गिरामियम्।
उक्ताखण्डार्थता यद्वा तत्प्रातिपदिकार्थता ॥ – प्रत्यक्तत्त्वप्रदीपिका १।१९

२० प्रातिपदिकार्थलिङ्गपरिमाणवचनमात्रे प्रथमा।
(क) नियतोपस्थितिकः प्रतिपादिकार्थः।
(ख) नियतोपस्थितः प्रातिपदिके उच्चारिते यस्यार्थस्य नियमेन उपस्थितिः स प्रातिपदिकार्थ इत्यर्थः। – सिद्धान्तकौमुदी २।३।४६

२१ अभयं हि ब्रह्म। – माध्यन्दिनीय शतपथ ब्राह्मण १४।७।२।२१,३१

अतः अभय पद सर्वज्ञत्वविशिष्ट चैतन्य हो भने जनक पद अल्पज्ञत्वविशिष्ट चैतन्य हो। दुवै पदमा नियत उपस्थिति चैतन्यस्वरूपवाचक असि नामपदमा छ। यसै कारण प्रातिपदिकार्थता असि नामपदमा छ र अखण्डार्थबोधकता पनि त्यसैमा छ।

उपर्युक्त अनुसार छोटो विश्लेषण गर्दा माध्यन्दिनीय-वाजसनेयिशुक्लयजुर्वेदशाखाध्यायी द्विजहरूको शाखारूप वेदको उपदेशात्मक महावाक्य 'अभयं वै जनक प्राप्तोऽसि' लाई मुमुक्षुले मानेर त्यसपछि श्रवण, मनन, निदिध्यासन र ब्रह्माभ्यास गरेमात्रै ब्रह्मसाक्षात्कार हुनसक्तछ। श्रुतिको आदेश *'स्वाध्यायोऽध्येतव्यः' (शतपथब्राह्मण १५,५।७।२)* यही नै हो।

एउटा ब्रह्माभ्यासको सत्रमा महावाक्यको सन्दर्भमा एकजना सहभागी विद्वान्‌ले महावाक्य भन्ने शब्द कुन शास्त्रमा उल्लेख भएको छ भन्ने जिज्ञासा प्रकट गर्नु भयो। त्यसका बारेमा अन्वेषण गर्ने उत्तरदायित्व ममा पर्न आयो। आफ्नू क्षमता अनुसार खोज्दै जाँदा आचार्य श्रीशङ्करले आफ्ना [२२]ग्रन्थहरूमा पनि महावाक्य शब्द प्रयोग गरेको पाइयो। त्यसपछि शङ्करका प्रमुख [२३]शिष्यहरूले आफ्ना ग्रन्थहरूमा

---

२२ महावाक्यस्य वाच्यार्थो विविक्तं लक्ष्य इष्यते।

– सर्ववेदान्तसिद्धान्तसारसङ्ग्रह ३२९

२३ महावाक्यप्रयोगेऽपि पदार्थप्रविवेचने।
पुम्प्रवृत्तिस्तु दृष्टेयं लोडादेरेव नान्यतः।

– बृहदारण्यकोपनिषद्वार्तिक १।१।९४

महावाक्यको विशदरूपमा उल्लेख गरेको देखिन्छ। सुरेश्वराचार्यपछि उहाँकै शिष्य [24]सर्वज्ञात्ममुनिले आफ्ना ग्रन्थहरूमा महावाक्य उल्लेख गरेको देखिन्छ। त्यसपछि भने अद्वैतवेदान्त ग्रन्थहरूमा सर्वत्र नै कृष्णयजुर्वेदीय शुकरहस्यो-पनिषद्मा षडङ्गन्यास सहित चारै वेदका महावाक्यहरूको सङ्क्षिप्त वर्णन गरिएको छ। त्यसमा अल्पज्ञ जीव र सर्वज्ञ ब्रह्मको विशेषण हटाएर अर्थात् जीवको अल्पज्ञत्व विशेषण र ब्रह्मको सर्वज्ञत्व विशेषण हटाएपछि चैतन्य अर्थात् संवित् मात्र रहने हुँदा दुवैको एकत्व प्रतिपादन गरिएको छ। कुन वेदको शाखा भनेर स्पष्ट नखुलाएको छोटो महावाक्योपनिषद्ले पनि 'ब्रह्मैक्यं तत्' भनेर विशेषणरहित जीवात्मा र परमात्माको ऐक्य देखाएको छ। त्यसै क्रममा आचार्य श्रीशङ्करले पनि आफ्नो मठाम्नायमा चारै वेदका महावाक्यहरूको उल्लेख गर्नुभएको छ। विद्यारण्यस्वामीले त आफ्नू ग्रन्थ पञ्चदशीमा महावाक्यविवेक प्रकरण नै दिएका छन्। मधुसूदन सरस्वतीले आफ्नो ग्रन्थ अद्वैतसिद्धिमा अकाट्य प्रमाण र युक्तिसहित नव्यन्यायको शैलीमा विद्वतापूर्ण रूपमा महावाक्यको अतीव विशद चर्चा गर्नुभएको छ। महावाक्यको अत्यन्त सङ्क्षिप्त इतिवृत्त यही हो। ॐ ब्रह्मार्पणमस्तु।

२४ साक्षान्महावचनमेव विमुक्तिहेतुः। – सङ्क्षेपशारीरकम् ३।२९५

# ५२. ज्ञान नै प्रायश्चित्त हो

वैदिक सनातन धर्ममा नित्य, नैमित्तिक, काम्य र प्रायश्चित्त कर्मसमेत गरेर चारथरी कर्महरू पर्दछन् । यस निबन्धमा केवल प्रायश्चित्त कर्मको मात्र चर्चा गरिने छ। वैदिक धर्मशास्त्र अनुसार मानिसहरूबाट हुन गएका थरीथरीका पापहरूको छुटकाराका लागि गरिने दान, चान्द्रायण व्रत, तीर्थाटन, अश्वमेधादि यज्ञसमेलाई [१]प्रायश्चित्त कर्म भनिन्छ। यसलाई परिशोध, पापनिष्कृति र क्षतिपूर्ति पनि भनिन्छ। जैनमतमा प्रायश्चित्त कर्म नौ थरी मानिन्छन्। जस अनुसार यी कर्म गर्नाले गरिएका पापहरू नाश हुन्छन्। जसमा आलोचना, प्रतिक्रमण, आलोचनाप्रतिक्रमण, विवेक, व्युत्सर्ग, तप, छेद, परिहार र उपस्थानसमेत पर्दछन् । त्यसै गरेर केही धर्ममा गरेको पापको प्रायश्चित पश्चात्ताप गरेर नाश हुन्छ र कुनैमा भने पुण्य गरेमा पापको प्रायश्चित्त हुन्छ भन्ने छ। आ-आफ्ना संस्कार, संस्कृति, परम्परा र धर्मशास्त्र अनुसार सबैथरी धर्महरूले कुनै व्यक्तिबाट हुन गएका पाप वा अपराधको प्रायश्चित्तको व्यवस्था गरेको पाइन्छ। त्यसै पापको परिमार्जनका लागि गरिने [२]कर्म प्रायश्चित्त हो। यसमा प्रायः

१ प्रायस्य पापस्यचितं विशोधनं यस्मात् । – संस्कृत हिन्दीकोशः ।

२ प्रायो नाम तपः प्रोक्तं चित्तं निश्चय उच्यते ।
तपोनिश्चयसंयोगात् प्रायश्चित्तमितीर्यते ॥ – हेमाद्रि

भनेको तप हो र चित्त भनेको निश्चय हो। तप र निश्चय मिलेर बनेको शब्दलाई प्रायश्चित्त भनिन्छ।

महाभारत, पुराण र धर्मशास्त्रहरूमा यसको विशद चर्चा पाइन्छ। पूर्वजन्ममा प्रारब्ध वा [३]प्रमादवश गरिएको पापले क्षयरोगादि ठूला रोग लाग्दछन्। त्यसबाट पूर्व जन्ममा गरिएका पापहरूको सूचना प्राप्त हुन्छ। प्रायश्चित्त नगरीकन त्यस्ता ब्राह्मणले सज्जन पुरुषको संसर्गमा रहेर यज्ञादि शुभकाममा जानु हुँदैन।

स्मृति र धर्मशास्त्रहरूमा महापातकदेखि लिएर अरू पातकहरूको प्रायश्चित्तको व्यवस्था गरिएको छ। यस छोटो लेखमा ती सबैको चर्चा गर्न सम्भव छैन। अतः केही मात्र उल्लेख गरिन्छ। शास्त्रमा [४]ब्राह्मण अर्थात् ब्रह्मज्ञानीको हत्या गर्ने, रक्सी खाने, सुन चोर्ने र गुरुपत्नी गमन गर्ने यी सबै महापातकी हुन् भनिएको छ। यी चारैथरीले यथोचित [५]प्रायश्चित्त नगरेमा यिनलाई धर्मको उलङ्घन नहुने गरी सर्वस्वसहित प्राणको दण्ड दिनु पर्दछ। अथवा यिनीहरूमध्ये

---

३ प्रायश्चित्तीयतां प्राप्य दैवात्पूर्वकृतेन वा।
न संसर्गं व्रजेत्सद्भिः प्रायश्चित्तेऽकृते द्विजः ॥ – मनुस्मृतिः ११।४७

४ ब्रह्महा च सुरापश्च स्तेयी च गुरुतल्पगः।
एते सर्वे पृथग्ज्ञेया महापातकिनो नराः ॥ – मनुस्मृतिः ९।२३५
ब्रह्महत्या सुरापानं स्तेयं गुर्वङ्गनागमः।
महान्ति पातकान्याहुः संसर्गाश्चापि तैः सह ॥ – मनुस्मृतिः ११।५४

५ चतुर्णामपि चैतेषां प्रायश्चित्तमकुर्वताम्।
शारीरं धनसंयुक्तं दण्डं धर्म्यं प्रकल्पयेत् ॥ – मनुस्मृतिः ९।२३६

[६]गुरुपत्नीगामीको निधारमा कहिल्यै पनि नमेटिने गरी तातो फलामले भगको चिह्न बनाएर दण्ड दिनुपर्छ। रक्सी खानेको निधारमा रक्सी राख्ने बोतलको आकारको डामेर चिन्ह बनाइदिनुपर्छ। ब्राह्मणको सुन चोर्नेको निधारमा नै कुकुरको पाइलाको चिन्ह डामेर बनाइदिनुपर्छ र ब्रह्महत्या गर्नेको भने शिर नै छेदन गर्नुपर्दछ। यिनीहरूको प्रायश्चित्त यही हो । यिनीहरूको संसर्ग गर्ने पनि महापातकी हुन्छ। त्यसले तदनुरूप प्रायश्चित्तस्वरूप दण्ड पाउनुपर्छ भनेर शास्त्रहरूमा उल्लेख गरिएको छ।

उपर्युक्त महापातकहरूको प्रायश्चित्त रामेश्वर आदि धामहरू र पवित्र तीर्थहरूको यात्रा, स्नान, दर्शन, स्पर्शन, दानादिबाट पनि हुनसक्ने कुरा [७]शास्त्रहरूमा पाइन्छ। यी भए महापातकहरू र तिनको प्रायश्चित्त सारांशमा। अब सामान्य गृहस्थहरूबाट अनजानमा गरिने पापहरू र तिनको प्रायश्चित्तको समेत छोटो विवेचना गर्नु सान्दर्भिक हुने देखिन्छ।

सदाचारी गृहस्थहरूबाट दैनिक जीवनयापनका सन्दर्भमा नियमित काम गर्दा पनि जीवहरूको हिंसा हुने देखिन्छ। जसलाई [८]पञ्चसूना भनिन्छ। चूल्हामा आगो बाल्दा वा

---

६ गुरुतल्पे भगः कार्यः सुरापाने सुराध्वजः ।
स्तेये च श्वपदं कार्यं ब्रह्महण्यशिराः पुमान् ॥ – मनुस्मृतिः ९।२३७

७ ततश्च भारतं वर्षं परीत्य सुसमाहितः ।
चरित्वा द्वादश मासांस्तीर्थस्नायी विशुद्धयसे ॥ – भागवत १०।७८।४०

८ पञ्चसूना गृहस्थस्य चुल्ली पेषण्युपस्करः ।
कुण्डनी चोदकुम्भश्च बध्यते यत्र वाहयन् ॥ – मनुस्मृतिः ३।६८

भोजन तयार गर्दा, मसला पिँध्दा, कुचो लगाउँदा, ढिकी कुट्ता र गग्रेटामा गाग्राबाट पानी सार्दा किचिएर हुने क्षुद्र जीवको हिंसा पर्न आउँछ। अनजानमा नै भएको यी जीवहरूको हत्याको प्रायश्चित्त पनि [९]क्रमैसँग मनु आदि महात्माहरूले बताएका छन्। यसलाई गृहस्थहरूले प्रतिदिन गर्नुपर्ने पञ्चमहायज्ञ भनिएको छ। जसमा [१०]पढ्नु र पढाउनुलाई ब्रह्मयज्ञ भनिन्छ। प्रतिदिन बिहान पितृहरूलाई तर्पण दिनु पितृयज्ञ हो। हवन गर्नु देवयज्ञ हो। भूतप्राणीलाई खान दिनु भूतयज्ञ हो। पाँचौँ महायज्ञ अतिथिसत्कार हो। यी पाँच [११]महायज्ञहरू दैनिकरूपमा घरमा नै बसेर सम्पादन गर्ने सद्गृहस्थलाई पञ्चसूना अर्थात् दैनिकरूपमा घरमा हुने प्राणीहत्याको पाप लाग्दैन। त्यही नै प्रायश्चित्त हो भनेर मनुले भन्नुभएको छ।

वेददेखि लिएर स्मृतिशास्त्र, धर्मशास्त्र, पुराण आदि ग्रन्थहरूमा पनि कर्म, विकर्म र अकर्मका साथै विधि र निषेधका कुराहरू प्रशस्त पाइन्छन्। गर्नुपर्ने अर्थात् वेदबाट गर्नु भनिएको काम विहित हो भने वेदले नगर्नु भनेर निषेध

---

९ तासां क्रमेण सर्वासां निष्कृत्यर्थं महर्षिभिः ।
पञ्च क्लृप्ता महायज्ञाः प्रत्यहं गृहमेधिनाम् ॥ – मनुस्मृतिः ३।६९

१० अध्यापनं ब्रह्मयज्ञः पितृयज्ञस्तु तर्पणम् ।
होमो दैवो बलिर्भौतो नृयज्ञोऽतिथिपूजनम् ॥ – मनुस्मृतिः ३।७०

११ पञ्चैतान्यो महायज्ञान्न हापयति शक्तितः ।
स गृहेऽपि वसन्नित्यं सूनादोषैर्न लिप्यते ॥ – मनुस्मृतिः ३।७१

गरेको काम निषिद्ध कर्म हो। जस्तै [12]स्वर्ग जान इच्छा गर्नेले यज्ञ गरोस् भन्ने आदि यो वेदद्वारा विधान गरिएको विहित कर्म हो। यसबाट मनुष्यको ऊर्ध्वगति हुन्छ। अर्कोतर्फ [13]ब्राह्मणको हत्या नगरोस्, रक्सी नखाओस् भन्ने आदि वेदद्वारा निषेध गरिएका कर्महरू निषिद्ध हुन्। यी कर्महरू गरेमा माथि ४ र ५ मा बताइए अनुसारको प्रायश्चित्त कर्म गर्नुपर्दछ। अन्यथा त्यस्तो कर्ता नरक जान्छ। वेदद्वारा विहित कर्मलाई कर्म, वेदद्वारा निषिद्ध कर्मलाई विकर्म र केही पनि कर्म नगर्नुलाई [14]अकर्म भनिन्छ। ती सबैलाई कर्म गर्नेले जान्नुपर्छ। किनभने कर्मको महिमा गहन छ, जानिसक्नु छैन भन्ने गीताको भनाइ छ।

विकर्मबाट उत्पन्न हुने अर्थात् वेदले नगर्नु भनेर निषेध गरेको ब्राह्मण हत्यादि महापातकहरू महापातक बाहेक उपपातक, [15]सङ्करीकरणपातक, अपात्रीकरणपातक, मलिनीकरणसमेतका अरू पातकहरूबाट समेत उत्पन्न हुने नरकगमनादिको निवरणार्थ नै शास्त्रहरूले अश्वमेधादि यज्ञको विधानका साथै तीर्थाटनादि यात्रा र कृच्छ्रचान्द्रायणादि व्रतको

---

१२ स्वर्ग कामो यजेत। – ताण्डिश्रुतिः १६।१५।५

१३ ब्राह्मणो न हन्तव्यः ब्राह्मणः सुरां नपिबति। – काठक १२।१२

१४ कर्मणो ह्यपि बोद्धव्यं बोद्धव्यञ्च विकर्मणः।
अकर्मणश्च बोद्धव्यं गहना कर्मणो गतिः॥ – श्रीमद्भगवद्गीता ४।१७

१५ उपपातक मनुस्मृतिः ११।५९ देखि ६६ सम्म, सङ्करीकरण पातक मनुस्मृतिः ११।६८ मा, अपात्रीकरणपातक मनुस्मृतिः ११।६९ मा र मलिनीकरणपातक मनुस्मृतिः ११।७० मा छ।

पनि विधान गरेका छन् । शास्त्रहरूमा यसलाई प्रायश्चित्तकर्म भनिएको छ । अपौरुषेय अर्थात् वेदशास्त्रादि र पौरुषेय अर्थात् मान्छेले बनाएका शास्त्रहरूद्वारा मानिसको कुनै विषयमा [१६]प्रवृत्ति र कुनै विषयबाट निवृत्ति हुन्छ। त्यस्ता पदसन्दर्भलाई शास्त्र भनिन्छ।

वेदादि शास्त्रहरूबाट निषेध गरिएका उपर्युक्त पापहरूमध्ये कतिपय पापहरू प्रायश्चित्तकर्मद्वारा पखालिने हुन्छन् । तर कुनै पाप भने पाप अनुसारका नरकहरू र योनिहरू समेतमा गएर दुःख भोग्नुपर्ने कुरा पुराणादि शास्त्रहरूमा वर्णित छ। त्यस्ता पापीहरूले भोग्नु पर्ने नरकहरूमा [१७]तामिस्र, अन्धतामिस्र, रौरव, महारौरव आदि मुख्य २१ छन् । यस बाहेक अरू सयौँ हजारौँ [१८]नरकहरूको वर्णन श्रीमद्भागवत-महापुराणमा पाइन्छ। अरू विभिन्न पुराण र धर्मशास्त्रहरूमा पनि विभिन्न साना र ठूला पापहरू गर्ने पापीहरूले भोग्नुपर्ने नरकहरूको वर्णन पाइन्छ। ती नरकहरूमा परेर दुःख र कष्ट भोगिसकेपछि पापहरूको प्रायश्चित्त हुन्छ भन्ने शास्त्रहरूले विधान गरेको पाइन्छ।

---

१६ प्रवृत्तिर्वा निवृत्तिर्वा नित्येन कृतकेन वा ।
पुंसां येनोपदिश्येत तच्छास्त्रमभिधीयते ॥ – श्लोकवार्तिक ४०६

१७ तत्र हैके नरकानेकविंशतिं गणयन्ति । अथ तांस्ते राजन्नामरूपलक्षण्यतोऽनुक्रमिष्यामस्तामिस्रोऽन्धतामिस्रो रौरवो महारौरवः । – भागवत ५।२६।७

१८ अधुनेह महाभाग यथैव नरकान्नरः ।
नानोग्रयातनान्नेयात्तन्मे व्याख्यातुमर्हसि ॥ – भागवत ६।१।६

पापीहरूले भोग्नुपर्ने उपर्युक्त अनुसारका डरलाग्दा नरकहरूको वर्णन श्रीशुकदेव स्वामीबाट सुनिसकेपछि त्यस्ता भयङ्कर नरकहरूमा नपर्न र यातना नभोग्न मनुष्यले के कस्ता अनुष्ठानहरू गर्नुपर्दछ भनेर श्रीशुकदेव स्वामीसँग राजा परीक्षित्‌ले सोधे । यसको उत्तरमा श्रीशुकदेव स्वामी भन्नुहुन्छ– मनुष्य मन, वाणी र शरीरले पाप गर्दछ । यदि मनुष्यले ती पापहरूको यसै जन्ममा प्रायश्चित्त गरेन भने मरिसकेपछि उसले अवश्य नै ती भयङ्कर यातनापूर्ण नरकहरूमा जानु पर्दछ । अतः सबै प्रकारका पापहरूको शास्त्रले भने अनुसार प्रायश्चित्त शीघ्र गरिहाल्नुपर्दछ । अन्यथा पाप गर्ने मनुष्यले नरकमा गएर भयङ्कर यातना भोग्नु नै पर्दछ ।

उक्त उत्तर सुनेपछि राजालाई चित्त बुझेन र फेरि जिज्ञासापूर्वक सोधे हे गुरो ! [१९]मनुष्यले राजदण्ड, समाजदण्ड आदि लौकिक र शास्त्रोक्त नरकगमन आदि पारलौकिक दुःखकष्ट भोग्नु पर्दछ । पाप गर्नु हुँदैन भनेर जान्दा जान्दै पनि पापवासनाबाट विवश भएर मान्छे बारम्बार तिनै पाप कर्महरूमा प्रवृत्त भइरहन्छ । यस्तो अवस्थामा मनुष्यका पापहरूको प्रायश्चित्त कसरी हुन सक्तछ ? त्यतिमात्रै होइन, मनुष्य कहिले प्रायश्चित्त कर्म आदिद्वारा पापबाट मुक्त हुन्छ, तर फेरि त्यही

---

१९ दृष्टश्रुताभ्यां यत्पापं जानन्नप्यात्मनोऽहितम् ।
करोति भूयो विवशः प्रायश्चित्तमथो कथम् ॥
क्वचिन्निवर्ततेऽभद्रात् क्वचिच्चरति तत्पुनः ।
प्रायश्चित्तमथोऽपार्थं मन्ये कुञ्जरशौचवत् ॥ – भागवत ६।१।९,१०

पाप गरिहाल्दछ। यसरी ऊ प्रायश्चित्त र पाप बारम्बार गरिरहन्छ भने यस्तो अवस्थामा त्यस्तो प्रायश्चित्त कर्म हात्तीले स्नान गरे जस्तै व्यर्थ हुन्छ। किनभने हात्तीले नुहाउने बित्तिकै आफ्नो शरीरमा धूलो छर्किन्छ र फेरि नुहाउँछ। यो हात्तीले स्नान गर्ने र धूलो छर्किने कामजस्तै बारम्बार पाप गरिरहने पापीले गर्ने पापको प्रायश्चित्त पनि त्यस्तै व्यर्थ हुन्छ। अतः प्रायश्चित्त कर्मबाट पापको प्रायश्चित्त हुनु सम्भव छैन।

उपर्युक्त अनुसार तत्त्वबुभूत्सापूर्वकको आफूले खोजे अनुरूप राजाको जिज्ञासा आएपछि खुशी हुँदै स्वामीले अद्वैत वेदान्तपरक उत्तर उनलाई दिनुभयो। वस्तुतः कर्मका द्वारा अर्थात् प्रायश्चित्त कर्मद्वारा पापरूपी कर्म निर्बीज भएर सम्पूर्ण रूपमा नाश हुँदैन। स्थूलपाप नाश भए पनि सूक्ष्म पाप नाश हुँदैन। कर्मको अधिकारी अज्ञानी भएकाले प्रायश्चित्तद्वारा पाप नाश हुन्छ भनिएको हो। किनभने अज्ञानीले कर्म भन्दा अरू कुरा जानेको हुँदैन। अज्ञान अर्थात् अविद्या रहुन्जेल पापवासना सर्वथा नष्ट हुनसक्तैन। अविद्यारूपी अज्ञान अर्थात् लेशाविद्या नष्ट नहोउन्जेल बारम्बार थरीथरीका पापहरूको उत्पत्ति भइरहन्छ। पापलाई जरोमूलो सहित नष्ट गर्ने मूल गाँठी प्रायश्चित्त भनेको [२०]ब्रह्मज्ञान नै हो। प्रायश्चित्तकर्मबाट त्यो सर्वथा सम्भव छैन।

अरू शास्त्रहरूले पनि पापकर्मबाट जन्मिएको

---

२० कर्मणा कर्मनिर्हारो न ह्यात्यन्तिक इष्यते।
अविद्वदधिकारित्वात्प्रायश्चित्तं विमर्शनम्॥ – भागवत ६।१।११

नरकगमनादि अदृष्ट पाप अर्को कर्म अर्थात् प्रायश्चित्तबाट सर्वथा नाश हुँदैन भनेका छन् । ती दुवै अज्ञान अर्थात् अविद्याबाट जन्मिएका हुन् । यस जन्ममरणरूपी दुश्चक्रको सर्जक मूलकारण नै [21]अज्ञान हो । यस दुश्चक्रलाई नाश गर्न ब्रह्मविद्या मात्रै समर्थ छ । जब ज्ञानरूपी प्रकाशपुञ्ज सूर्यको उदय हुन्छ, तब अज्ञानरूपी महाअन्धकार समूल नष्ट हुन्छ । प्रायश्चित्त कर्म पनि काम्यकर्म जस्तै अविद्यारूपी अज्ञानबाट उत्पन्न भएको हुँदा यसको अज्ञानसँग विरोध नभएकाले प्रायश्चित्त कर्मबाट निषेधित कर्मबाट जन्मिएको पापको सर्वथा नाश हुन सक्तैन । अतः पापको समूल विनाश ब्रह्मज्ञानद्वारा सम्भव भएकाले ब्रह्मज्ञान नै प्रायश्चित्त भनिएको हो ।

सबै कर्म र कर्मसंस्कारहरू ज्ञानबाटै समूल नष्ट हुन्छन् । प्रायश्चित्त भनेको ज्ञान हो, प्रायश्चित्त कर्म होइन । किनभने जसरी [22]दाउराको डङ्गुरलाई दन्किएको आगोले भस्म गरेर खरानी पारिदिन्छ त्यसै गरेर सम्पूर्ण अज्ञानजन्य सञ्चित आदि कर्महरूलाई ज्ञानरूपी अग्निले डढाएर भस्म गरिदिन्छ । अतः प्रायश्चित्त कर्मले कर्मजन्य पापहरू नष्ट गर्न सक्तैन । त्यसैकारण प्रायश्चित्त गर्न ब्रह्मज्ञानमात्रै समर्थ छ । अर्को

---

२१ अज्ञानमेवास्य हि मूलकारणम् तद्धानमेवात्र विधौ विधीयते ।
विद्यैव तन्नाशविधौ पटीयसी न कर्म तज्जं सविरोधमीरितम् ॥
– रामगीता ९

२२ यथैधांसि समिद्धोऽग्निर्भस्मसात्कुरुतेऽर्जुन ।
ज्ञानाग्निः सर्वकर्माणि भस्मसात्कुरुते तथा ॥ – श्रीमद्भगवद्गीता ४।३७

शब्दमा भन्ने हो भने ज्ञान नै पापनाशक प्रायश्चित्त हो।

पूर्वमीमांसामा पठित प्रायश्चित्त कर्मले एकातर्फ स्थूल पापको एकपटक मात्रै नाश गर्दछ भने अर्को तर्फ जुन पापको प्रायश्चित्तका लागि सङ्कल्प गरिन्छ त्यस पापको मात्रै त्यसले नाश गर्दछ। त्यही पाप फेरि त्यस मनुष्यले गरेमा फेरि प्रायश्चित्त कर्म गर्नु पर्दछ। पाप गऱ्यो, प्रायश्चित्त गऱ्यो, फेरि पाप गऱ्यो फेरि प्रायश्चित्त गऱ्यो, यो क्रम अनन्तकालसम्म चलिरहन्छ। यसैलाई शास्त्रमा 'यथा कुञ्जरशौचवत्' भनिएको हो। किन्तु ज्ञानरूपी प्रायश्चित्तले सबै पाप एकैचोटि सधैँका लागि नाश गरिदिन्छ। यसै जन्ममा गरिएका केही पापहरू मात्रै प्रायश्चित्त कर्मले नाश गर्दछ भने प्रायश्चित्तरूपी ब्रह्मज्ञानले पहिले गरिएका अनन्त जन्मदेखि लिएर ब्रह्मज्ञान हुनुभन्दा पूर्वसम्मका पछि गरिने समेत सम्पूर्ण पापहरूलाई एकै पटक खरानी पारेर डढाइदिन्छ। त्यतिमात्रै होइन, ब्रह्मज्ञान भइसकेपछि ब्रह्मज्ञानीका पापहरू कमलका पातमा पानी नटाँसिएझैँ गरेर टासिन नसक्ने तथ्य [२३]श्रुतिहरूमा र [२४]ब्रह्मसूत्रमा पनि आएको छ।

---

२३ यथा पुष्करपलाश आपो न श्लिष्यन्ते एवमेवांविदि पापं कर्म न श्लिष्यते।
– छान्दोग्योपनिषद् ५।२४।३

२४ तदधिगम उत्तरपूर्वाघयोरश्लेषविनाशौ तद्व्यपदेशात्।
– ब्रह्मसूत्रम् ४।१।९।१३

प्रायश्चित्तको कुरा ब्रह्मसूत्रको तेस्रो अध्यायको [२५]अधिकाराधिकरणका दुइटा सूत्रहरूमा र [२६]बहिराधिकरणको एउटा सूत्रमा आएको छ। यिनमा पनि धर्मशास्त्र र स्मृतिहरू अनुसार पूर्वमीमांसा अनुकूल सामान्यरूपमा उल्लेख गरेको पाइन्छ, पारमार्थिकरूपमा ज्ञानमार्गीका लागि उल्लेख गरेको भने पाइँदैन। उदाहरणका लागि जुन ब्रह्मचारी [२७]नैष्ठिक धर्ममा आरूढ भएर फेरि भ्रष्ट हुन्छ, त्यस आत्मघाती मनुष्यको शुद्ध हुने कुनै प्रायश्चित्त म देख्तिन भन्ने इत्यादि कुरा स्मृति शास्त्रहरूमा आएको देखिन्छ। त्यस भनाइबाट पापको सर्वथा नाश हुने देखिँदैन।

अरू काम्यकर्महरू जस्तै प्रायश्चित्त कर्म पनि अज्ञानजन्य हो। अज्ञानबाट जन्मेको प्रायश्चित्तकर्मले आफ्नै सजातीय अविद्या वा अज्ञानलाई नष्ट गर्न सक्तैन। अज्ञान अत्यन्त बलिष्ट हुन्छ। अन्धकारले अन्धकारलाई जसरी नाश गर्न सक्तैन, त्यसरी नै अज्ञानबाट जन्मिएको [२८]प्रायश्चित्तरूपी कर्मले जन्मदिने अविद्यारूपी आफ्नी अज्ञानात्मक आमाको नाश गर्न सक्तैन। अन्धकारको नाश गर्न प्रकाश मात्रै समर्थ भएझैँ गरेर अविद्याको नाश गर्न विद्या र अज्ञानको नाश गर्न

---

२५ न चाधिकारिकमपि पतनानुमानात्तदयोगात्।
उपपूर्वमपि त्वेके भावमशनवत्तदुक्तम्। – ब्रह्मसूत्रम् ३।४।११।४१, ४२

२६ बहिस्तूभयथापि स्मृतेराचाराच्च। – ब्रह्मसूत्रम् ३।४।१२।४३

२७ आरूढो नैष्ठिकं धर्मं यस्तु प्रच्यवते पुनः।
प्रायश्चित्तं न पश्यामि येन शुध्येत्स आत्महा॥ – स्मृतिः

२८ न कर्म तज्जं सविरोधमीरितम्। – रामगीता ९

ब्रह्मज्ञान मात्रै समर्थ छ। अतः यसबाट पाप नाश गर्न ब्रह्मज्ञान मात्रै समर्थ छ, प्रायश्चित्तकर्म समर्थ छैन भन्ने थाहा हुन्छ।

अज्ञानलाई अविद्या भनिन्छ। अविद्या अत्यन्त बलवती छ। सम्पूर्ण चराचर प्राणी, जगत् र त्रिदेव समेत अविद्या वा मायाका आधारमा सञ्चालित छन्। माया वा अविद्या विना कुनै काम हुन सक्तैन। अरू त के कुरा, परमात्माको सृष्टि, स्थिति र संहार समेतको सृष्टिचक्र अविद्या विना चल्न सक्तैन तापनि त्यो केवल परमात्मा परब्रह्मको अगाडि पर्न सक्तिन र [२९]परपरै भाग्दछे तर अरूलाई भने फनफनी घुमाउँछे।

अज्ञानात्मक [३०]अनिर्वाच्या अविद्या दुई थरी छन् – मूला अविद्या र अन्तःकरणावच्छिन्न अविद्या। जुन अविद्यालाई अज्ञान पनि भनिन्छ। यी दुईथरी अविद्याको सहायताबाट सम्पूर्ण सृष्टिचक्र परमात्माले विवर्तित गर्दछ। परमात्माले विवर्तद्वारा नै सारा सृष्टि गर्दछ। सत्, चित् र आनन्द स्वरूप ब्रह्माधिष्ठानभन्दा विपरीत असत्, जड र दुःखस्वरूप भएकाले यस जड प्रपञ्चलाई [३१]ब्रह्मको विवर्त भनिएको हो। यसको [३२]विस्तृत चर्चा ब्रह्मसूत्रमा भगवान् वेदव्यासले गर्नुभएको छ।

---

२९ माया परैत्यभिमुखे च विलज्जमाना। – भागवत २।७।४७

३० अनिर्वाच्याऽविद्या द्वितय सचिवस्य प्रभवतो,
विवर्ता यस्यैते वियदनिलतेजोऽबवनयः।
यतश्चाभूत् विश्वं चरमचरमुच्चावचमिदम्,
नमामस्तद्ब्रह्मापरिमित सुखज्ञानममृतम्॥ – भामती १

३१ अधिष्ठानविपरीतरूपेण वर्तते इति विवर्तः। – सङ्क्षेपशारीरकम् २

३२ आत्मनि चैवं विचित्राश्च हि। – ब्रह्मसूत्रम् २।१।९।२८

यस सम्पूर्ण सृष्टिचक्रको सञ्चालन अविद्या अर्थात् अज्ञानबाट नै हुन्छ। त्यसले ब्रह्मको [३३]आश्रय लिन्छ र ब्रह्मलाई विषय गर्दछ। यसैकारण त्यसलाई अत्यन्त शक्तिशाली भनिन्छ। यसलाई कसैले पनि छुन चलाउन सक्तैन। किनभने यसै अज्ञानका कारण अर्थात् [३४]आफ्नै अज्ञानद्वारा कल्पित जगत्, परमेश्वरत्व र जीवत्वका द्वारा भूमभाव अर्थात् ब्रह्मभाव कलुषित भएको छ। त्यस्तो जीवात्माले त्यस शक्तिशाली अज्ञानबाट सिर्जित कर्मजन्य पापलाई अज्ञानजन्य सजातीय प्रायश्चित्त कर्मबाट कसरी नाश गर्न सक्तछ ? अर्थात् सर्वथा नाश गर्न सक्तैन। अतः निषिद्ध कर्मबाट उद्भूत पाप ज्ञानरूपी प्रायश्चित्त अर्थात् ब्रह्मज्ञानबाट मात्रै नाश हुन्छ, अन्यथा सम्भव छैन।

व्यावहारिकरूपमा पनि लोकमा प्रत्येक राष्ट्रमा आफ्नू समाजलाई स्वच्छ र सुरक्षित राख्न आफ्नू संस्कार, संस्कृति, धर्म र परम्परा अनुसार ऐन, कानुन, नियम, आचारसंहिता र विधिशास्त्रहरू आदि निर्माण गरेर अपराधीहरूलाई जेल, नेल, आर्थिक, शारीरिक आदि दण्ड सजाय गरेर वा दिएर शुद्ध गराउने वा प्रायश्चित गराउने गरिन्छ। किन्तु त्यो बाहिरी समाजको दृष्टिमा शुद्ध भएको देखिए तापनि भित्रीरूपमा

---

३३ आश्रयत्वविषयत्वभागिनी निर्विभागचितिरेक केवला।
– सङ्क्षेपशारीरकम् १।३१९

३४ स्वाज्ञानकल्पितजगत्परमेश्वरत्व –
जीवत्वभेदकलुषीकृतभूमभावा ॥ – सङ्क्षेपशारीरकम् २

अन्तःकरणमा पापात्मक संस्कार टाँसिएर बसेको हुन्छ। त्यसको प्रायश्चित्त तप, दान, यज्ञ, पूजाआजा, व्रत, उपवास कुनै पनि कर्मबाट हुनसक्तैन, ब्रह्मज्ञानरूपी अग्निबाट त्यसको समूल नाश गरेर मुक्त हुन ब्रह्मज्ञानबाहेक अर्को [३५]बाटो छैन भनेर श्रुतिले पनि भनेको छ। ॐ ब्रह्मार्पणमस्तु।

---

३५ नान्यः पन्था विद्यते ऽयनाय। – श्वेताश्वतरोपनिषद् ३।८, ६।१५

# ५३. ज्ञानं विज्ञानसहितम्

ज्ञान शब्द ज्ञा अवबोधने धातुबाट ल्युट् प्रत्यय भएर बन्दछ। यसका सामान्य अर्थहरू जान्नु, संझिनु, सिक्नु, आदि हुन्छन्। किन्तु अद्वैत वेदान्तमा ज्ञान शब्द ब्रह्मवाचक शब्द हो। जसलाई ब्रह्मको [1]स्वरूपलक्षणमा उपनिषद्ले लिएको छ। अर्को विज्ञान शब्द वि+ज्ञा+ल्युट् भएर ज्ञा अवबोधने धातुबाटै बन्दछ, ज्ञान शब्द जस्तै। यसका सामान्य अर्थहरू पनि ज्ञान, बुद्धिमत्ता, प्रज्ञा, समझ, विवेचन, अन्तर जान्नु, कुशलता, प्रवीणता, प्रयोगात्मक विज्ञान, संसारी वा व्यावहारिक ज्ञान, व्यवसाय, नियोजन आदि हुन्छन्। किन्तु वेदान्तमा भने अनुभूति, विज्ञानमय कोश, आत्मा, चिदाभास आदि हुन्छन्।

उपर्युक्त दुवै शब्दहरूको अर्थ विभिन्न [2]कोशहरूले विभिन्न प्रसङ्ग र विधाहरू अनुसार भिन्नभिन्न ढङ्गले दिएका छन्। मोक्षफलिका धीलाई ज्ञान भनिन्छ। जुन बुद्धि मोक्षको साधन हुन्छ त्यसलाई ज्ञान भनिन्छ। अन्य फलिका अर्थात् शिल्पशास्त्रपरक बुद्धिलाई विज्ञान भनिन्छ। कर्म बुझाउने

---

१ सत्यं ज्ञानमनन्तं ब्रह्म। – तैत्तिरीयोपनिषद् २।१

२ मोक्षे धीर्ज्ञानमन्यत्र विज्ञानं शिल्पशास्त्रयोः – अमरकोशः १।५।६
विज्ञानं कार्मणे ज्ञाने – हैमकोशः।

ज्ञान विज्ञान हो। [३]जानकारी, विद्वत्ता, विवेक, आत्मज्ञान, ज्ञानेन्द्रिय, अकल आदि ज्ञानका अर्थ हुन् भने विज्ञानका अर्थहरू विज्ञानशास्त्र, अनुभवबाट उत्पन्न व्यावहारिक संसारी ज्ञान, अविद्या वा माया नामको वृत्ति, विज्ञानवादी बौद्धहरूको आत्मा हो । आत्मा, ब्रह्म, मोक्ष, आकाश, निश्चयात्मिका बुद्धि, आत्मज्ञान, लौकिक विषयको ज्ञान आदि पनि ज्ञानका अर्थ हुन्छन् ।

ज्ञान र विज्ञानका उपर्युक्त अनुसार कोशानुसारी अर्थहरू दिइयो । अब वेदान्तपरक अर्थ दिने प्रयास गरिन्छ । श्रीमद्भगवद्गीतामा भगवान् श्रीकृष्णले अर्जुनलाई गुह्य ब्रह्मज्ञानको उपदेश गर्ने क्रममा [४]ज्ञान र विज्ञानसहितको ज्ञान भन्छु भन्ने प्रतिज्ञा गर्नुभएको देखिन्छ। यसमा उहाँले त्यस्तो ज्ञान म तिमीलाई भन्नेछु, त्यो ज्ञान अनुभवसहितको विशिष्ट ज्ञान विज्ञान हुनेछ भनेर आचार्य शङ्करले आफ्नो भाष्यमा लेख्नुभएको छ।

उक्त भाष्यको टीका गर्दै आनन्द गिरिले *'ज्ञानं ब्रह्मचैतन्यं तद्विषयं वा प्रमाणं ज्ञानं, विज्ञानमनुभवः साक्षात्कारस्तेन सहितम्'* भनेर ज्ञानलाई ब्रह्मचैतन्य र विज्ञानलाई साक्षात्कार भनेर लेखेका छन्। त्यसरी नै अर्का टीकाकार नीलकण्ठले *'ज्ञानं ज्ञप्तिमात्रस्वरूपं ब्रह्म'* भनेर ज्ञानको अर्थ र *'विज्ञानेनानुभवेन*

---

३ संस्कृत–नेपाली बृहत् शब्दकोशः । – महेन्द्र संस्कृत विश्वविद्यालय

४ इदं तु ते गुह्यतमं प्रवक्ष्याम्यनुसूयवे ।
ज्ञानं विज्ञानसहितं यज्ज्ञात्वा मोक्ष्यसेऽशुभात् । – श्रीमद्भगवद्गीता ९।१

*सहितं न तु केवलं पारोक्षेण'* भनेर विज्ञानको अर्थ दिएका छन् । अर्का टीकाकार मधुसूदन सरस्वतीले ज्ञानको अर्थ 'ज्ञानं शब्दप्रमाणकं ब्रह्मतत्त्वविषयकम्' र विज्ञानसहितंको अर्थ 'ब्रह्मानुभवपर्यन्तम्' भनेर दिएका छन् ।

उपर्युक्त अनुसार श्रीमद्भगवद्गीतामा आएको ज्ञान र विज्ञानको सामान्य चर्चापछि अब [५]श्रीमद्भागवतमहापुराणमा आएका ज्ञान र विज्ञान शब्दहरूको केही चर्चा गरिन्छ । राजा परीक्षित्लाई अन्त्यतिर गएर ब्रह्मज्ञान भयो । राजा ब्रह्मज्ञानी गुरुप्रति अन्त्यमा अत्यन्त कृतज्ञता प्रकट गर्दै हजुरद्वारा उपदिष्ट ब्रह्मज्ञानबाट म ज्ञान र विज्ञानमा परिनिष्ठित भएको छु । यसले गर्दा मेरो सर्वदाका लागि अज्ञान नष्ट भएको छ । हजुरले भगवान्को अर्थात् ब्रह्मको कल्याणमय स्वरूप मलाई साक्षात्कार गराइदिनुभयो भनेर आफूले गरेको ब्रह्मानुभूतिको अनुभव राजा परीक्षित्ले सुनाए । त्यसपछि उनको देहपात भयो । उनले कैवल्य मुक्ति प्राप्त गरे ।

भागवतको उपर्युक्त श्लोकमा आएको ज्ञान शब्दले ब्रह्मको स्वरूपभूत ज्ञानको सङ्केत गर्दछ भने विज्ञानशब्दले ब्रह्मको साक्षात्कार अर्थात् राजा परीक्षित् आफ्ना अन्तःकरणका सम्पूर्ण मल र आवरणदोष समेत हटेर शुद्ध ब्रह्म नै भएको अनुभूतिको द्योतन गर्दछ । ब्रह्म साक्षात्कार गर्नु भनेको ब्रह्म जस्तै अत्यन्त निर्मल, अत्यन्त स्वच्छ र अत्यन्त सूक्ष्म

---

५ अज्ञानञ्च निरस्तं मे ज्ञानविज्ञाननिष्ठया ।
भवता दर्शितं क्षेमं परं भगवतः पदम् ॥ – श्रीमद्भागवत १२।६।७

अन्तःकरण हुनु भनेको हो। ब्रह्मज्ञानद्वारा अन्तःकरण अर्थात् बुद्धि ब्रह्म जस्तै उपाधिरहित भएर उनी मुक्त भए। ब्रह्मज्ञान भएपछि ब्रह्मज्ञानीको मुक्ति हुन [६]त्यति समयमात्रै ढिलो हुन्छ, जबसम्म उसको शरीरपात हुँदैन भनेर श्रुतिले भनेको छ। श्रुतिले भने जस्तै गरेर राजा परीक्षित् मुक्त भए।

श्रीधरस्वामीले आफ्नू टीकामा श्लोकमा आएको [७]अज्ञानं पछिको चकारको अर्थ गर्दै अन्तःकरणमा रहेको अविद्याको लेश समेत समाप्त हुनु भन्नुभएको छ। ज्ञानलाई श्रीकृष्णको अनुभव र विज्ञानलाई उहाँका ऐश्वर्यको अनुभव भनेर आफ्नू टीका भावार्थदीपिका प्रकाशिकामा पण्डित वंशीधरले अर्थ लेख्नुभएको छ।

माथि उल्लेख गरिएका केही पङ्क्तिहरूमा श्रीमद्भगवद्गीतामा आएका ज्ञान र विज्ञान शब्दका अर्थहरूको उल्लेख गरियो। जसमा ज्ञानलाई उपदेश र विज्ञानलाई अनुभव भनिएको छ। त्यतिमात्रै होइन, ज्ञानलाई ब्रह्मचैतन्य र विज्ञानलाई साक्षात्कार भनिएको छ। ज्ञानलाई ब्रह्मतत्त्व विषयक र विज्ञानलाई ब्रह्मानुभव भनिएको छ।

अर्कोतर्फ श्रीमद्भागवत महापुराणको अन्त्यतिर राजा परीक्षित्लाई ब्रह्मज्ञान भएपछि ब्रह्मज्ञले अनुभव गरेर व्यक्त गरेका ज्ञान र विज्ञान शब्दहरूको अर्थ द्योतन हुन्छ। राजा

---

६ तस्य तावदेव चिरं यावन्न विमोक्ष्येऽथ सम्पत्स्य इति।

– छान्दोग्योपनिषद् ६।१४।२

७ अज्ञानञ्चेति – चकारात्तत्संस्कारश्च। – भावार्थदीपिका भा.१२।६।७

परीक्षित् आफ्नो अज्ञान सधैँका लागि नाश भएको र ब्रह्मसाक्षात्कार भएको अनुभव नै सुनाउँछन् । त्यसमा राजाको अज्ञानको निवृत्ति हुँदा उत्पन्न प्रतियोगी र लेशाविद्याको निर्बीज भएर नाश भएको भागवतबाट देखिन्छ ।

गीतामा आएका ती शब्दहरू भगवान् श्रीकृष्णले अर्जुनलाई गीताशास्त्रको उपदेश गर्ने क्रममा भगवान् श्रीकृष्णबाट आएका थिए भने श्रीमद्भागवतमा श्रीशुकदेव स्वामीबाट श्रीमद्भागवतशास्त्रको उपदेशको श्रवण गरिसकेपछि राजा परीक्षित्लाई ब्रह्मानुभूति भएपछि व्यक्त अनुभवात्मक वाक्यहरू थिए । पहिलो गीतामा उपदेशात्मक ज्ञान र विज्ञान शब्दहरू केवल शब्दमा मात्र आएका छन् भने दोस्रो भागवतमा चाहिँ परीक्षित्ले अनुभव नै गरेका ज्ञान र विज्ञान शब्दहरू आएका छन् । यही नै दुवै शास्त्रहरूमा आएका ज्ञान र विज्ञान शब्दहरूको पार्थक्य देखिन्छ ।

ज्ञान र विज्ञान शब्दहरूको प्रयोग वेद, ब्राह्मण, आरण्यक, उपनिषद्, स्मृति, दर्शन, पुराण, धर्मशास्त्रहरूमा विभिन्न अर्थलाई प्रकट गर्ने सन्दर्भमा गरिएको छ । ती सबैको विवेचना गरेर साध्य छैन । अब पुराण र उपनिषद् आदिका केही शब्दहरूको मात्रै उल्लेख गरेर यसको समापन गरिनेछ । मननशील पुरुष उपासनाको धार लगाएर [८]ज्ञानको तरबारलाई

---

८ आमूलमेतद् बहुरूपरूपितं मनोवचः प्राणशरीरकर्म ।
ज्ञानासिनोपासनया शितेनच्छित्वा मुनिर्गां विचरत्यतृष्णः ॥
– भागवत ११।२८।१७

अत्यन्त तीखो बनाएर त्यसद्वारा अहङ्कारको समूल उच्छेद गर्दछ। त्यसपछि त्यो ब्रह्मज्ञानी वासनाशून्य जीवन्मुक्त भएर पृथ्वीमा विचरण गर्दछ।

यो [९]दृश्यमान् जगत् मनको विलास मात्र हो। देख्ताखेरि नष्ट प्रायः अलातचक्र अर्थात् आगाको अगुल्टाका सरह यो जगत् अत्यन्त चञ्चल छ। त्यो भ्रममात्र हो भनेर सम्भनुपर्दछ। ज्ञाता र ज्ञेयदेखि शून्य अद्वितीय एक ज्ञानस्वरूप आत्मा नै अनेकरूपमा देखा पर्दछ। यो स्थूल शरीर, इन्द्रिय र अन्तःकरणरूप तीन प्रकारको विकल्प गुणका परिणामको रचना हो। त्यो सपना सरह मायाको खेल हो। अज्ञानद्वारा कल्पित हो।

ब्रह्माजीलाई चतुःश्लोकी भागवत उपदेश गर्ने क्रममा भगवान् श्रीनारायणले [१०]ज्ञान र विज्ञानको महत्त्व बताउनु भएको छ। त्यहाँ प्रयुक्त ज्ञान शब्दलाई श्रीधरस्वामीले आफ्नू भावार्थदीपिका टीकामा 'ज्ञानं = शास्त्रोत्थम्' र 'विज्ञानं = अनुभवम्' भनेर अर्थ गर्नुभएको छ। अर्को प्रसङ्गमा भगवान्ले [११]ज्ञानलाई श्रुतिका तात्पर्यको यथार्थ ज्ञान र विज्ञानलाई साक्षात्कारको अर्थमा उद्धवलाई उपदेश गर्ने क्रममा बताउनु

---

९ ईक्षेत विभ्रममिदं मनसो विलासं दृष्टं विनष्टमतिलोलमलातचक्रम्।
विज्ञानमेकमुरुधेव विभाति माया स्वप्नस्त्रिधा गुणविसर्गकृतो विकल्पः॥
– भागवत ११।१३।३४

१० ज्ञानं परमगुह्यं मे यद् विज्ञानसमन्वितम्। – भागवत २।९।३०

११ सर्वभूतसुहृच्छान्तो ज्ञानविज्ञाननिश्चयः॥ – भागवत ११।७।१२

भएको छ। त्योभन्दा अघि भगवान्‌ले उद्धवलाई वेदको मुख्य तात्पर्य अर्थात् निश्चयरूप [१२]ज्ञान र अनुभवरूप विज्ञान भनेर पनि उपदेश गर्नुभएको छ।

उपनिषद्‌हरूमा धेरै ठाउँमा ज्ञान र विज्ञान शब्दहरू आएका छन्। [१३]विज्ञान नै ब्रह्म हो। [१४]विज्ञानवान् पुरुषले यज्ञको विस्तार गर्दछ। उपनिषद्‌ले [१५]ब्रह्मलाई विज्ञान र आनन्द पनि भनेको छ।

उपनिषद्‌हरूमा विज्ञान शब्दसँग अरू शब्द मिलेर बनेका शब्दहरू पाइन्छन्। जस्तै पञ्चकोश मध्येको चारौँ कोश विज्ञानमयकोश। यो [१६]आत्मा ब्रह्म हो, यो विज्ञानमय हो आदि उपनिषद्‌मा आएका छन्। व्याकरण अनुसार शब्द पछाडि मयट् प्रत्यय लागेर आउँदा विकार वा प्रचुर भन्ने अर्थ हुन्छ। किन्तु यहाँ विज्ञानका साथ जोडिएर आएको मयट्‌ले प्रायः भन्ने अर्थ बुझाउँछ। जस्तै जो [१७]आत्मा यस प्रकार संसरित हुन्छ त्यो यो परब्रह्म नै हो। यो क्षुधापिपासादि

---

१२ ज्ञानविज्ञानसंयुक्त आत्मभूतशरीरिणम् ॥ – भागवत ११।७।१०

१३ विज्ञानं ब्रह्मेति व्यजानात्। – तैत्तिरीयोपनिषद् ३।५

१४ विज्ञानं यज्ञं तनुते। – तैत्तिरीयोपनिषद् २।५।१

१५ विज्ञानं आनन्दं ब्रह्म। – बृहदारण्यकोपनिषद्

१६ स वा अयमात्मा ब्रह्म विज्ञानमयः। – बृहदारण्यकोपनिषद् ४।४।५

१७ स वा अयम्, य एवं संसरत्यात्मा, ब्रह्मैव पर एव, योऽशनाद्यतीतः। विज्ञानमयो विज्ञानं बुद्धिस्तेनोलक्ष्यमाणस्तन्मयः। कतम आत्मेति योऽयं विज्ञानमय प्राणेषु (बृ.उ.४।३।७) इति ह्युक्तम्। विज्ञानमयो विज्ञानप्रायः। यस्मात्तद्धर्मत्वमस्य विभाव्यते – "ध्यायतीव लेलायतीव"

– बृ.उ.४।३।७, शा.मा. बृ.उ.४।४।५

धर्मदेखि पर छ। त्यो विज्ञानमय भनेर विज्ञान अर्थात् बुद्धिलाई भनिएको हो। त्यसद्वारा उपलक्षित हुने भएको हुँदा त्यसलाई तन्मय भनिन्छ। त्यसका विषयमा त्यो आत्मा कुन हो भनेर आएको प्रश्नमा उपनिषद्ले जुन यो प्राणमा विज्ञानमय हो भनेर जबाफ दिएको छ। विज्ञानमय भनेको विज्ञानप्रायः भनेको हो। किनभने चिन्तन गरेझैँ गर्दछ, चेष्टा गरेझैँ गर्दछ इत्यादि वाक्यहरूबाट यसको विज्ञानधर्मत्व प्रतीत हुन्छ।

यसरी ज्ञान शब्द र विज्ञान शब्दहरूको विभिन्न प्रसङ्गमा विभिन्न शैली र भङ्गीबाट अर्थ गरिएको छ। वस्तुतः ज्ञान शब्दले स्वप्रकाश, चिन्मय र संविद् ब्रह्मलाई बुझाउँछ। ज्ञान ब्रह्म स्वरूपभूत लक्षणमा पर्दछ। विज्ञान भनेको बुद्धि हो जहाँ ब्रह्मको, चेतनको प्रतिबिम्ब पर्दछ र जड बुद्धि पनि चेतन जस्तो भएर चिदाभास, जीव वा जीवात्माको आश्रयस्थल बनेर आध्यासिक सम्बन्धद्वारा चेतन जस्तो बन्दछ।

अर्को शब्दमा ज्ञान सिद्धान्त हो, भावनात्मक हो भने बुद्धि व्यावहारिक धरातल हो। ज्ञान उपदेश हो भने विज्ञान साक्षात्कार हो। ज्ञान चेतन हो भने विज्ञान जड हो। ज्ञान प्रकाश हो भने विज्ञान अन्धकार हो। सम्पूर्ण सृष्टिको संरचना ज्ञान र विज्ञानमा अडिएको छ। विज्ञान पदार्थ हो र ज्ञान शक्ति हो। विज्ञान आधार हो र ज्ञान आधेय हो।

अन्त्यमा जतिसुकै मायिक शब्दहरूद्वारा ज्ञान र विज्ञानको विश्लेषण गर्न प्रयास गरे पनि अपूर्ण नै रहन्छ। विज्ञान पनि

ज्ञानकै विस्तार हो। त्यो ज्ञानरूप [१८]परमात्मा रूप रूपको प्रतिरूप भयो, त्यो ब्रह्म विज्ञानरूप मायाद्वारा अनेक रूप प्रतीत हुन्छ आदिद्वारा उपनिषद्ले मायामय विज्ञानमा ज्ञानरूप ब्रह्म भास्तछ भन्न खोजेको देखिन्छ। यी सम्पूर्ण संसारी कर्महरू ज्ञान भएपछि शान्त हुन्छन्। ज्ञानरूपी अग्निमा परेर सारा कर्महरू भस्मीभूत बन्दछन्। [१९]मोक्षसाधनीभूत ज्ञानमा सम्पूर्ण कर्महरू निःशेषरूपले परिसमाप्त हुन्छन् भनेर श्रीमद्भगवद्गीताले उद्घोष गरेको छ। ॐ ब्रह्मार्पणमस्तु।

❁

---

१८ रूपं रूपं प्रतिरूपो बभूव। इन्द्रो मायाभिः पुरुरूप ईयते।
– बृहदारण्यकोपनिषद् २।५।१९

१९ सर्वं कर्माखिलं पार्थ ज्ञाने परिसमाप्यते। – श्रीमद्भगवद्गीता ४।३३

# औपनिषद पुरुष




भगवान् श्रीवेदव्यास




भगवत्पाद श्रीशङ्कराचार्य

अनुक्रमणिका

# अनुक्रमणिका

## आ

## ना



## नि



## ने



## नै



## प



## प्र



## पा

# लेखकका प्रकाशित ग्रन्थहरू

## आध्यात्मिक

| | | |
|---|---|---|
| १. | ज्ञान र भक्ति | – २०६३ |
| २. | रासपञ्चाध्यायी | – २०६४ |
| ३. | ब्रह्मसाक्षात्कार | – २०६५ |
| ४. | उपनिषत्सार | – २०६७ |
| ५. | ब्रह्मसूत्रसार | – २०६७ |
| ६. | मणिरत्नमाला अनुवाद | – २०६७ |
| ७. | अध्यास र चतुःसूत्री | – २०६८ |
| ८. | वेदान्तपरिभाषासार | – २०६८ |
| ९. | श्रीकृष्णाय वयन्नुमः | – २०६९ |
| १०. | परमसत्य | – २०६९ |
| ११. | अध्यास | – २०६९ |
| १२. | अद्वैतसिद्धिः १ खण्ड | – २०६९ |
| १३. | अद्वैतसिद्धिः २ खण्ड | – २०७० |
| १४. | अन्तिम उपदेश | – २०७० |
| १५. | ब्रह्मविद्या | – २०७० |
| १६. | अजातवाद | – २०७१ |
| १७. | पराविद्या | – २०७१ |
| १८. | अपरोक्षाऽनुभूति | – २०७२ |
| १९. | औपनिषद पुरुष | – २०७२ |

## लौकिक

| | | |
|---|---|---|
| १. | उसैको लागिको समीक्षा | – २०२६ |
| २. | ऋतुमन्थन, समीक्षा | – २०४४ |
| ३. | सिर्जनाका फूलहरू, कविता | – २०५१ |
| ४. | बहादुर शाह, खण्डकाव्य | – २०५२ |
| ५. | श्रद्धाञ्जलि, शोककाव्य | – २०५२ |
| ६. | गीत तथा भजनहरू | – २०५२ |
| ७. | अमरसिंहको चिट्ठी, काव्य | – २०५३ |
| ८. | क्रान्तिदूत, खण्डकाव्य | – २०५३ |
| ९. | विविधयात्रा, कविता | – २०५५ |
| १०. | यात्रैयात्रा, कविता | – २०५८ |
| ११. | पत्रैपत्र, कविता | – २०५९ |
| १२. | पृथ्वीविजय, काव्य | – २०६२ |
| १३. | तीर्थहरूको यात्रावृत्तान्त | – २०६४ |
| १४. | अनुस्मृति (जीवनयात्रा) | – २०६७ |
| १५. | वन्दना | – २०६८ |
| १६. | कविशतक | – २०६८ |
| १७. | अष्ट्रेलियाको दैनिकी | – २०६९ |
| १८. | आभास | – २०७२ |

9 789937 299558